# भक्तपुरको विश्वयात्रा (बिस्केट) को सामाजिक र सांस्कृतिक अध्ययन

त्रिभुवन विश्वविद्यालय
मानविकी तथा सामाजिक शास्त्र सङ्काय अन्तर्गत
इतिहास विषयमा विद्यावारिधि (पिएच.डी.) उपाधिका लागि
प्रस्तुत

# शोध प्रबन्ध

शोधकर्ता


**बलराम कायस्थ**
विद्यावारिधि दर्ता नं. ५/०६५ श्रावण
त्रि.वि. दर्ता नं. १०३०४-८५

मिति २०७०/१/१५


भक्तपुरको विश्वयात्रा (बिस्केट) को सामाजिक र सांस्कृतिक अध्ययन
बलराम कायस्थ
मिति २०७०/१/१५

# शोध प्रबन्ध समितिको सिफारिस

त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक शास्त्र सङ्काय अन्तर्गत इतिहास विषयमा विद्यावारिधि उपाधि हासिल गर्ने प्रयोजनका लागि **श्री बलराम कायस्थ**ले **भक्तपुरको विश्वयात्रा (बिस्केट) को सामाजिक र सांस्कृतिक अध्ययन** शीर्षकको प्रस्तुत शोध प्रबन्ध परिश्रमपूर्वक तयार पार्नु भएको हो । यो शोधार्थी कायस्थको मौलिक शोधकार्य हो । अतः यस शोध प्रबन्धलाई विद्यावारिधि उपाधिका निमित्त आवश्यक मूल्याङ्कन प्रक्रिया अगाडि बढाइ दिन सिफारिस गर्दछौं ।

प्रा.डा. शङ्कर थापा
शोध निर्देशक

प्रा.डा. भवेश्वर पंगेनी
शोध विशेषज्ञ

मिति २०७०/१/१५

# प्रतिबद्धता पत्र

त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक शास्त्र सङ्काय, डीनको कार्यालय अन्तर्गतको अनुसन्धान समिति समक्ष विद्यावारिधि उपाधिका निम्ति प्रस्तुत भक्तपुरको विश्वयात्रा (बिस्केट) को सामाजिक र सांस्कृतिक अध्ययन शीर्षकको यो शोध प्रबन्ध मैले प्रा.डा. शङ्कर थापाज्यूको निर्देशनमा सम्पन्न गरेको मौलिक कार्य हो । यस शोध प्रबन्धको लेखनका क्रममा विभिन्न स्रोतबाट सामग्री संकलन गरिएको छ र ती सामग्रीका स्रोत व्यक्ति तथा संस्थाप्रति म कृतज्ञ छु । यो शोध प्रबन्धमा प्रस्तुत निष्कर्षलाई मैले यस अघि कहीँ पनि कुनै उपाधिका निम्ति प्रस्तुत गरेको छैन । साथै यस शोध प्रबन्धको कुनै पाठ/अंश वा पुस्तक वा पुस्तकका अंशका रूपमा प्रकाशित गरे/गराएको छैन । मैले यहाँ प्रस्तुत गरेका यी प्रतिबद्धताका बिरुद्ध कुनै प्रमाण भेटिएमा म त्यसप्रति पूर्णतः जिम्मेवार हुनेछु ।

बलराम कायस्थ

मिति २०७०/१/१५

# कृतज्ञता ज्ञापन

प्रस्तुत शोधप्रबन्ध **भक्तपुरको विश्वयात्रा (बिस्केट) को सामाजिक र सांस्कृतिक अध्ययन** त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र सङ्काय डीनको कार्यालय, कीर्तिपुर अन्तर्गत इतिहास विषयमा विद्यावारिधि उपाधि प्राप्त गर्ने प्रयोजनका निम्ति तयार पारिएको हो । यस शोधकार्यलाई पूर्णता दिन मैले धेरैतिरबाट धेरै किसिमको सहयोग र सुझाव लिएको छु । यसका निम्ति आआफ्नो ठाउँबाट सहयोग गर्नु हुने सबैप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु ।

यस शोधकार्यका लागि मलाई आवश्यक सल्लाह र सुझाव प्रदान गर्नुको साथै लेखन कार्यमा आवश्यक मार्गनिर्देशन प्रदान गर्नु हुने शोधनिर्देशक गुरु प्रा.डा. शङ्कर थापाज्यू प्रति आभार व्यक्त गर्दछु । साथै प्रस्तुत अध्ययन कार्यमा मेरा कमीकमजोरीहरू औंल्याएर सदैव उचित राय, सुझाव दिनु हुने शोध विशेषज्ञ गुरु डा. भवेश्वर पंगेनीज्यू प्रति पनि आभार व्यक्त गर्दछु । यसै गरेर प्रस्तुत अध्ययनका सन्दर्भमा सुरुदेखि नै आवश्यक सल्लाह, सुझाव, प्रेरणा र प्रोत्साहन प्रदान गर्नुहुने इतिहास केन्द्रीय विभागका श्रद्धेय गुरुहरू प्रा.डा. तुल्सीराम वैद्य, प्रा.डा. त्रिरत्न मानन्धर, प्रा.डा. विजयकुमार मानन्धर, प्रा.डा. तीर्थप्रसाद मिश्र, प्रा.डा. सुरेन्द्र के.सी. ज्यू प्रति पनि कृतज्ञता व्यक्त गर्न चाहन्छु । विशेषगरी लेखन कार्यमा सदा लागीरहने उत्साह दिनु हुने विभागीय प्रमुख विजयकुमार मानन्धरज्यू प्रति हार्दिक आभार व्यक्त गर्दछु । प्रा.डा. पुरुषोत्तम लोचन श्रेष्ठ, क्याम्पस प्रमुख शङ्कर कुमार उपाध्याय, सहायक क्याम्पस प्रमुख रामकृष्ण श्रेष्ठ र सह–प्रशासक ताराचन्द्र प्रधानाङ्ग (भक्तपुर बहुमुखी क्याम्पस) लाई पनि धन्यबाद दिन चाहन्छु । साथै यस विषयको शोध लेखन कार्यलाई अभिप्रेरित गर्दै उत्साह पैदा गराउनु हुने आदरणिय प्रा.डा. डिल्लीराम दाहाल, पूर्व सहायक डीन डा. शिशिर सुब्बाज्यू प्रति पनि आभार व्यक्त गर्न चाहन्छु ।

प्रस्तुत शोधकार्यलाई अघि बढाउने सिलसिलामा आवश्यक विद्वत्वृत्तिको अवसर प्रदान गर्ने विश्वविद्यालय अनुदान आयोग, सानोठिमीका पदाधिकारीहरू, विशेष गरेर प्रमुख प्रशासकीय अधिकृत सुवास चन्द्र ढुङ्गेलज्यू प्रति हार्दिक कृतज्ञता व्यक्त गर्न चाहन्छु । यसैगरेर शोधकार्य गर्ने क्रममा अनेक नयाँ नयाँ कुराहरूको जानकारी प्रदान गर्नु भइ सहयोग गर्नु हुने विभिन्न महानुभावहरू विशेषतः गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख अच्युतानन्द पोखरेल (सूर्यबिनायक), संस्कृतिविद् तेजेश्वरबाबु ग्वङ्ः(जेसीज माध्यमिक विद्यालय, इन्द्रायणी स्थान), संस्कृतिविद् काशीनाथ तमोट (शान्तिनगर, बानेश्वर), बिस्केटजात्रासंग सम्बध्द मानन्धर गुठीका नाइके पद्म बहादुर मानन्धर (मूलढोका), संस्कृतिविद् नारायण हाडा (इच्छुटोल), भैरवनाथ गुठीका मूल नाइके ज्ञान बहादुर छुकाङ (भैरवनाथ मन्दिर, टौमढी टोल), भैरवनाथ गुठीका नाइके मोती बहादुर सुवाल (लाकोलाछैं), भैरवनाथ गुठीका नाइके नारायण प्रसाद घेमोसु (बुलुचा), भद्रकाली गुठीका मूल नाइके माइला जढारी (लय्को), भद्रकाली गुठीका नाइके इन्द्र लिवी (लय्को), भैरवनाथ मन्दिर टौमढीका पुजारी गणेश कर्माचार्य (कोलाछैं), तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्य

(कमलविनायक हाल क्यानाडा), पासुका पत्रिकाका प्रबन्धक हृदयकृष्ण हाडा (इच्छुटोल)लाई हार्दिक आभार सहित कृतज्ञता प्रकट गर्दछु ।

शोधकार्य गर्ने क्रममा आवश्यक सामग्री उपलब्ध गराउने ज्ञानकर बज्राचार्य (साकोथा), विदुर डङ्गोल (बज्र बुक सप, ज्याठा ठमेल), राष्ट्रिय अभिलेखालय, पुरात□व विभाग काठमाडौं, आशा सफूकुथी काठमाडौं, लाइब्रेरियन भुपाल मूल, जनज्योति पुस्तकालय भक्तपुर नगरपालिका, भक्तपुर बहुमुखी क्याम्पस पुस्तकालय, त्रि.वि. केन्द्रीय पुस्तकालय कीर्तिपुर, नेपाल तथा एशियाली अनुसन्धान केन्द्र त्रि.वि. कीर्तिपुर, रत्न पुस्तक भण्डार माइतीघर मण्डला, नेपाल–भारत सांस्कृतिक केन्द्र काठमाडौं, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान पुस्तकालय काठमाडौं, भृकुटी मण्डप पुस्तकालय काठमाडौं, नेपाल राष्ट्रिय पुस्तकालय, पुल्चोक ललितपुर आदिलाई पनि धन्यबाद दिन चाहन्छु । यसैगरेर बिस्केट जात्रा सम्बन्धी हस्तलिखित ग्रन्थहरूको भावार्थबारे जानकारी गराउनु हुने विनोद बाजे (विनोदराज शर्मा) प्रति पनि कृतज्ञता व्यक्त गर्दछु । साथै विभिन्न महानुभावहरूसंग अन्तरवार्ता लिन जांदा साथ दिनु हुने मित्रहरू विशेषतः रामकृष्ण श्रेष्ठ (तुलाछैं), नरेन्द्र मानन्धर (दत्तात्रय सकुलाने), राजेन्द्र कुमार चित्रकार (तचपाल टोल), ई. नारायण सुन्दर श्रेष्ठ (सूर्य विनायक), योगेन्द्र श्रेष्ठ (थालाछैं), शिव प्रसाद ह्योजु (क्वाछैं), कृष्णप्रसाद मठ्यादुवाल (ल्योसींखेल) आदि पनि धन्यवादका पात्र हुनुहुन्छ । यसैगरेर यस शोधकार्यका क्षेत्रमा सुरुदेखि नै हरतरहले सहयोग गर्दै आउनु भएका तथा यस शोध प्रबन्धको भाषिक शुद्धता समेत हेरिदिनु भइ अमूल्य गुण लगाउनु हुने मित्र डा. नारायण प्रसाद गड्तौला (नेपाली केन्द्रीय विभाग त्रि.वि. कीर्तिपुर)प्रति पनि हार्दिक आभार व्यक्त गर्दछु । त्यस्तै यस शोधप्रबन्धको प्रुफ हेरिदिई सहयोग गर्नुहुने शिक्षणसहायक रामबहादुर थापा (नेपाली शिक्षण समिति, भक्तपुर ब. क्याम्पस) प्रति पनि आभार व्यक्त गर्दछु । प्रस्तुत अध्ययनका सन्दर्भमा सहायक सामग्रीका रूपमा प्रयोग गर्न सकेका प्राप्त कृतिहरूका लेखक, प्रकाशकहरूलाई पनि धन्यवाद दिन चाहन्छु । यो शोधप्रबन्धलाई यस रूपमा ल्याउन विशेषगरेर टङ्कण कार्यमा सहयोग गर्ने रत्नेश्वरी कर्माचार्य, इन्द्रश्याम बल्ल (दूधपाटी), त्रैलोक्यमान बनेपाली (इताछैं), भोला कार्की (सैनिक समाचार शिक्षालय, लप्टनडाँडा, खरिपाटी, भक्तपुर) आदि पनि धन्यवादका पात्र हुनुहुन्छ । अन्त्यमा यस शोधकर्ताको व्यक्तिगत र घरायसी वातावरणलाई सहज र सन्तुलित बनाइ शोधअध्ययनका क्षेत्रमा सदैव उत्प्रेरित गरिरहने जीवनसाथी कृष्णशोभा कायस्थलाई साधुवाद सहित धन्यवाद दिन्छु ।

शोधकर्ता
**बलराम कायस्थ**
उपप्राध्यापक इतिहास
भक्तपुर बहुमुखी क्याम्पस, भक्तपुर

# शोधसार

## परिचय

बिस्केट भक्तपुरको एउटा प्रख्यात जात्रा हो । बाहिरबाट हेर्दा यो जात्रा स्थानीयवासी नेवारहरूको मात्र जात्रा हो कि जस्तो लाग्दछ, तर वास्तवमा यसमा गरिने पूजापाठ, जपतप, होम, यज्ञयज्ञादि जस्ता विधिविधानहरूलाई केलाएर हेर्दा यो जात्रा सम्पूर्ण हिन्दुहरूको जात्रा हो भन्ने देखिन्छ । वस्तुतः बिस्केट भन्ने शब्द नै संस्कृतको “विश्वकेतु” शब्दको अपभ्रंश भई आएको शब्द मानिन्छ । “विश्वकेतु” को अर्थ हुन्छ : विश्वध्वजा । प्रत्येक वर्ष चैत्र मसान्तका दिन विश्वध्वजा उत्थान गरी मेष संक्रान्तिका दिन जात्रा गर्ने प्रथा वैदिककालदेखि सुरु भएको प्रथा हो । यसरी उक्त दिन ध्वजोत्थान गरी जात्रा मनाउनाले सर्वत्र सुख, शान्ति, समृद्धि फैलिने, जीव र जगतको कल्याण हुने, शत्रु क्षय हुने जस्ता कुराहरू मनुको वचन भनेर गौतमीतन्त्र नामक प्राचीन ग्रन्थमा उल्लेख भएको पाइन्छ तर आज यो प्रथा नेपाल एक ठाउँ बाहेक अन्त कहीँ पनि अस्तित्वमा रहेको देखिँदैन ।

अतः यसै जात्राको बारेमा विस्तारका साथ खोज अनुसन्धान गर्नु यस शोधकार्यको उद्देश्य हो ।

## समस्या कथन

(१) बिस्केट जात्राको ऐतिहासिक पृष्ठभूमि के कस्तो छ ?

(२) बिस्केट जात्रा के कसरी सम्पादन वा सम्पन्न गरिन्छ ?

(३) बिस्केट जात्रामा भक्तपुरको नेवार समाजका दायित्व र भूमिका के कस्ता छन् ?

(४) बिस्केट जात्रा के कति कारणले भक्तपुरको नेवार समाजमा लोकप्रिय हुन पुगेको हो ?

(५) प्राचीन समयदेखि वर्तमान समयसम्म आउँदा यस जात्रामा के कस्ता परिवर्तनहरू आएका छन् ?

## उद्देश्य

(१) बिस्केट जात्राको ऐतिहासिक पृष्ठभूमिको सर्वेक्षण गर्दै त्यसको ऐतिहासिक पक्ष पहिचान गर्नु ।

(२) बिस्केट जात्रा सम्पन्न गर्दा प्रयोग हुने विधिविधानहरूको खोज अनुसन्धान गरी पहिचान गर्नु ।

(३) बिस्केट जात्रामा स्थानीय नेवार समाजको विविध भूमिकालाई केलाउनु ।

(४) भक्तपुरमा बिस्केट जात्रा लोकप्रिय हुनुका कारण पत्ता लगाउनु ।

(५) बिस्केट जात्राको ऐतिहासिक विकासको सर्वेक्षण गर्दै यसमा देखिएका परिवर्तित पक्षहरूलाई केलाउनु ।

**शोध विधि**

प्रस्तुत अध्ययनलाई तथ्यमा आधारित र प्रामाणिक बनाउन निम्नलिखित सामग्री संकलन विधि र अध्ययन विधि प्रयोग गरिएको छ ।

**(१) सामग्री संकलन विधि**

यसमा प्राथमिक र द्वितीयक गरेर दुई प्रकारका स्रोत सामग्रीहरू उपयोग गरिएको छ :

(क) प्राथमिक स्रोत अन्तर्गत अवलोकन र अन्तर्वार्ता विधि अनि अप्रकाशित ग्रन्थहरूको अध्ययन गरिएको छ ।

(ख) द्वितीयक स्रोतका रूपमा विद्वान्हरूद्वारा लेखिएका यस जात्रासित सम्बन्धित पुस्तक तथा शास्त्रीय ग्रन्थ लगायत चाडपर्वका पुस्तकहरू समेत अध्ययन गरिएको छ । साथै यस विषयमा लेखिएका विभिन्न पत्रपत्रिकाहरूमा प्रकाशित लेखहरू पनि अध्ययन गरिएको छ ।

**(२) अध्ययन विधि**

प्राप्त स्रोत सामग्रीहरूलाई अध्ययन गर्नका लागि विश्लेषणात्मक, वर्णनात्मक, ऐतिहासिक र तुलनात्मक विधिहरूलाई उपयोग गरिएको छ ।

**अध्ययनको क्षेत्र र सीमा**

प्रस्तुत अध्ययनको क्षेत्र प्राचीन नगर भक्तपुर रहेको छ । भक्तपुरलाई केन्द्रबिन्दु बनाएर गरिउको यस अध्ययनमा खास गरेर बिस्केट जात्रा हुने मुख्य स्थान ल्योसीं खेल ( चुपींघाट) अनि भैरव भद्रकालीको रथ तान्ने जात्राको केन्द्रस्थल टौमढी चोक, गाहिटी, लाकोलाछें त्यसपछि स्थानीय जात्राहरू संचालन हुने नगरका सम्बन्धित टोल इलाकाहरू रहेका छन् । यस अतिरिक्त भक्तपुर वरपरका थिमी, बोडे, नगदेश, सांगा, खड्पु, धुलिखेल, टोखा क्षेत्रमा मनाइने बिस्केट जात्रालाई पनि तुलनात्मक रूपमा अध्ययन गरिएको छ । यी उल्लेखित क्षेत्रमा मनाइने बिस्केट जात्राको ऐतिहासिक, धार्मिक, सामाजिक, सांस्कृतिक अध्ययन नै यसको विषयगत सीमा हो ।

**निष्कर्ष**

बिस्केट भक्तपुरको एउटा प्रसिद्ध र महत्वपूर्ण जात्रा हो, जुन अद्यावधि मनाइँदै आइरहेको पाइन्छ । यो जात्रा मूल रूपले लिंगो जात्रा हो, जसलाई विश्वयात्रा, विश्वध्वज

जात्रा पनि भन्ने गरिन्छ, जुन चैत्र मसान्तका दिन उभ्याएर मेष संक्रान्तिका दिन सम्पन्न गरिन्छ । यसरी उक्त दिन लिंगो ठड्याई जात्रा गर्नाले सुख, शान्ति, समृद्धि मिल्ने कुरा तन्त्रमा उल्लेख छ । प्रकारान्तरले यसमा अनेक उपजात्राहरू थपिए । यस्ता जात्राहरूमा भैरव भद्रकालीको रथयात्रा निकै प्रसिद्ध रहेको छ । जुन जात्रा मूल जात्राको चार दिन अघिबाट प्रारम्भ भई मूल जात्रा सकिएको चारदिन पछिसम्म चल्ने गर्दछ । साथै बिस्केटकै अवसरमा यहाँ स्थापित अष्टमातृका लगायत अन्य देवदेवीका स्थानीय स्तरका अनेक जात्राहरू पनि हुने गर्दछन् ।

यो जात्रा विशेष गरेर विश्वनाथ भैरवको जात्राका रूपमा प्रसिद्ध रहेको छ । किनकि भैरवको प्रतीकको रूपमा चैत्र मसान्तका दिन ठडिने लिंगोको टुप्पोमा फहराइने जोडी ध्वजालाई अभिलेखीय प्रमाणका आधारमा विश्वध्वजा, वीरध्वजा, विश्वकेतु आदि भनिएबाट यस तथ्यको पुष्टि हुन्छ । सो जोडी ध्वजालाई भैरव र शक्तिको प्रतीकको रूपमा मानिन्छ । अनि जात्रा हुने मूल स्थान भद्रकाली पीठ नै रहेबाट यो कुरा स्पष्ट हुन्छ । लिंगो ठडिने खाल्डोलाई प्रतीकात्मक रूपमा भद्रकालीको योनी र लिंगोलाई भैरवको लिङ्ग मानिन्छ । जब त्यस खाल्डोमा परेर लिंगो ठडिन्छ तब वातावरण रोमान्चक बन्न पुग्छ । किनकि त्यस क्रियालाई भैरव र भद्रकाली बीचको समागम वा शिव र शक्ति आपसमा एकाकार भएको प्रतीक अर्थमा लिने गरिन्छ । यसबाट समस्त जगतमा सुख, शान्ति र समृद्धि फैलिने जनविश्वास रहेको पाइन्छ । यताबाट यस जात्राको खास अभिप्राय लिंगो ठड्याएर आम दर्शकलाई मनोरन्जन मात्र पुऱ्याउने नभएर भैरव र भद्रकालीलाई आपसमा समागम गराउनु पनि रहेको देखिन्छ, जुन क्रिया तान्त्रिक दृष्टिकोणले निकै महत्वपूर्ण मानिन्छ । तर यहाँनेर एकथरी मानिसहरू नागनागिनी सम्बन्धी किम्बदन्तीलाई नै प्रमाण मानेर लिंगोमा फहराउने ध्वजालाई नागनागिनीको मृत शरीर मानेर त्यसैको स्मृतिमा वर्षेनी यो जात्रा प्रदर्शन गरिएको हो भन्ने भनाई राख्दछन् । तर यो भनाई गलत छ । प्रचार प्रसारले वास्तविक कुरालाई विस्थापित गरी बिस्यातः (सर्प मारेको) जात्रा भनेर आम सञ्चार माध्यम तथा इतिहासकारहरूले समेत गलत जानकारी सम्प्रेषण गरेर इतिहास बङ्ग्याउने काम गरिरहेका छन् । यथार्थमा बिस्यातः बाट बिस्केट भएको नभई विश्वकेतुबाट बिस्केट भएको र भाषिक दृष्टिले पनि उपरोक्त तथ्यको पुष्टि हुन आउँछ ।

यथार्थमा किम्बदन्तीमा वर्णित नागनागिनीलाई यस ध्वजामा दर्शाइएको छैन । यसर्थ यो जात्रा नागनागिनी सम्बन्धी जात्रा होइन भन्ने पुष्टि हुन्छ । यस ध्वजामा आकाश भैरवको

मूर्ति चित्र अंकित रहेको छ । आकाश भैरव नै टौमढी टोलको विश्वनाथ भैरव भएकोले यो ध्वजा विश्वनाथ भैरवको ध्वजा हो । यस अर्थमा यो बिस्केट जात्रा पनि विश्वनाथ भैरवकै जात्रा हो भन्ने कुरा स्पष्ट हुन्छ ।

यस जात्रासँग सम्बन्धित विधिविधान वा क्रियाकलापहरूको अध्ययन विश्लेषण गर्दा पनि यो जात्रा पूर्ण रूपले धार्मिक पुष्ठभूमिमा आधारित तान्त्रिक विधिले सम्पन्न हुने जात्रा रहेको तथ्य स्पष्ट हुन आउँछ । यस जात्राका मुख्य नायक भैरव हुन् ।

यथार्थमा भैरव किसानहरूका देवता र भक्तपुर किसान बाहुल्य सहर भएकोले यहाँ यस किसिमको जात्रा गर्ने परम्परा चलेको देखिन्छ । समयमा पानी परोस्, कृषि बाली सप्रियोस्, रोगव्याधि नफैलियोस्, कुनै किसिमको दुर्भिक्ष नहोस्, सबैतिर सुख शान्ति र समृद्धि फैलियोस् भन्ने कामनार्थ प्रत्येक वर्ष वर्षारम्भ हुनु अघि मेष संक्रान्तिका दिन सहकालका देवता आकाश भैरव र उनकी शक्ति भद्रकालीप्रति सम्मान दर्शाउनका निम्ति नै यहाँ यो लिंगो जात्रा संस्कृतिको विकास भएको हो ।

# विषय सूची



## अध्याय एक
## शोध परिचय



## अध्याय दुई
## भक्तपुर शहरको समाज र संस्कृति



## अध्याय तीन
## चाडपर्वको सैद्धान्तिक र वैचारिक पक्ष

## अध्याय चार
## नेवार समाजमा प्रचलित चाडपर्व



## अध्याय पाँच
## बिस्केट जात्रा



## अध्याय छ
## जात्राका प्रमुख देवीदेवता र पूजाका विधिविधान

## अध्याय सात
## बिस्केट जात्राको सामाजिक पक्ष



## अध्याय आठ
## बिस्केट जात्राको सांस्कृतिक पक्ष

## अध्याय नौ
## बिस्केटजात्राको तुलनात्मक अध्ययन



## अध्याय दश
## उपसंहार

## बिस्केट सम्बन्धी लोकजीवनमा प्रचलित रहेका शब्द र तिनका अर्थ

| शब्द | भावार्थ |
| --- | --- |
| बिस्कः, बिस्का– | बिस्केट । |
| भैलः द्यः– | भैरवनाथ, काशीविश्वनाथ, श्री ३ आकाशभैरव । |
| नकिंजु अजिमा– | भद्रकाली, भैरवी (भैरवकी शक्ति), आठ अजिमा(अष्टमातृका) मध्येकी मुख्य अजिमा । |
| बेतः द्यः– | बेताल देवता, भैरवनाथको बाहन । |
| भैलः खः– | भैरवनाथको तीनतल्ले मन्दिर आकारको रथ । |
| नकिंजु खः(चा)– | भद्रकालीको दुई तल्ले रथ । |
| वँलः– | रथ वा लिंगो तान्ने धागोका डोरी । |
| भैलः गाः– | मुख्य जात्रास्थल ल्योसींखेलस्थित लिंगो उभ्याउने खाल्डो । |
| हलिंपताः– | विश्वध्वजा, लिंगोको टुप्पोमा फहराउने एक जोडी ध्वजा । |
| ल्योसिंद्यः, योसिंद्यः– | लिंगो देवता । |
| तःमारी– | भक्तपुर नगरको केन्द्रबिन्दु टौमढी चोक, बिस्केटजात्राको आदि र अन्त्य यसै स्थानमा हुने गर्छ । |
| गाःहिटी– | टौमढी र ल्योसींखेल (मुख्यजात्रास्थल) को बीचमा पर्ने बिसौनी, जहाँ आएर पहिलो दिनको जात्रा सम्पन्न हुने गर्छ, जसलाई "द्यः थाते लाकेगु" भनिन्छ । साथै भैरव र भद्रकालीको रथ जुधाउने जात्रा पनि यहीं हुन्छ । |
| चपाल सत्तल– | बिस्केटजात्राभरि भैरवनाथ मूलदेवगृहवाट निस्केर आठ दिन विराजमान हुने लाकोलाछें टोलस्थित विशेष देवगृह । |
| लय्को देगल– | बिस्केट पर्वका अवसरमा नकिंजु अजिमा विराजमान हुने गाःहिटी मुनिको लिवीचोकस्थित विशेष देवगृह । |
| समुंगा भैलःद्यः– | भक्तपुरको जात्रा हेर्न आएका काशी विश्वनाथको शिरछेदन भएपछि उक्त शिर भकुण्डो झैं उफ्रँदै उफ्रँदै आएर यसै स्थानमा रोकिन पुगेको भन्ने स्थानीय जनविश्वास रहेको पाइन्छ । यो स्थान समुंगा भैरवको रूपमा प्रसिध्द छ । यी भैरव नरसिंहमन्दिरको दाहिने र जंगम मठको अगाडिपट्टि रहेका छन् । |
| ल्योसिंगाः– | लिंगो राख्ने घर, जात्रामा एउटा मात्र लिंगो उठाए पनि वनवाट भने एकैपल्ट दुईवटा लिंगो ल्याइन्छ । साथै एक पटक उठाएको लिंगो फेरि–फेरि पनि उठाउने चलन पाइन्छ । अतः काठका लिंगोहरू घामपानीबाट सुरक्षित राख्न छुट्टै घरमा राख्ने चलन छ, जुन ठाउँलाई ल्योसिंगा भनिन्छ । |
| ओसीं– | काठका विशालपांग्रा अडिने रथका धुरा (एक्सल) । |

| | |
|---|---|
| बेतासीं– | रथको अगाडिपट्टि बांगिएर माथि उठेको हिटीमङ्गः जस्तै देखिने काठ, जसको टुप्पोमा वीर बेताल आसिन हुने भएकोले यसलाई बेतासीं भनिएको हो । |
| गजु– | गजूर । |
| पौँलः– | छाना । |
| त्वानासीं– | टुँडाल । |
| पुथं चियेगु– | बेतले बाँध्ने, रथका विभिन्न अवयवहरूलाई बेतको डोरीले बाँध्ने गरिन्छ । |
| द्यः क्वाँहा बिज्याकिगु– | देवता तल सवारी हुने, भैरवनाथ जात्रामा सार्वजनिक रूपमा सहभागी हुने, यसलाई बिस्केट जात्राको शुभारम्भको रूपमा हेरिन्छ । |
| द्यः थाँहा बिज्याकिगु– | देवता माथि सवारी हुने, भैरवनाथ जात्रा सम्पन्न गरेर स्वस्थान फर्कने, यसलाई जात्रा समापनको रूपमा हेरिन्छ । |
| द्यः सगं बियेगु– | देवतालाई सगुन चढाउने, बिस्केट जात्रामा सहभागी हुन आएका सम्पूर्ण देवीदेवताहरूलाई जात्रा समापनको पूर्वसन्ध्यामा (वैशाख ४ गते) स्वस्थानमा फर्किनु अघि बिदाइ स्वरूप नगरबासीले नगरव्यापीरूपमा सगुन चढाउन जाने गर्छन् । |
| बोः छायगु– | द्यः सगं बियेगुकै क्रममा सम्बध्द देवतालाई विविध परिकारका खाद्य वस्तु चढाउने सांस्कृतिक कार्य । |
| द्यः लितः यंकेगु– | जात्रा समापन पश्चात् देवता फिर्ता लाने कार्य । |
| स्याकोत्याको– | बिस्केट पर्वको तेश्रो दिन (चैत्र २९ गते) लाई सम्बोधन गरिने शब्द । यसको शाब्दिक अर्थ जति बलि दिन सक्यो त्यति फाइदा भन्ने हुन्छ । बडादशैंको महानवमीको दिनलाई पनि स्थानीयबासीहरू "स्याकोत्याको" नै भन्ने गर्छन् । |
| ल्योसीं थनिगु जात्रा– | लिंगो उभ्याउने जात्रा । |
| ल्योसीं कोथलिगु जात्रा– | लिंगो ढाल्ने जात्रा । |
| खःल्वाकिगु जात्रा– | भैरव भद्रकालीको रथ जुधाउने जात्रा । |
| भाजं खः जात्रा– | मुर्दा खट जात्रा, यो जात्रा चैत्र मसान्तका दिन बेलुका लिंगो उभिएपछि टौमढी बहतालबाट सुरु गरी ल्योसींखेल पुर्‍याइन्छ । |
| घासापालु– | जोगीचक्रपूजा, अकालमा मरेका मानिसहरूको आत्माको शान्तिकालागि राज्यको तर्फबाट वर्षको एकपटक विस्केट पर्वका अवसरमा तान्त्रिक विधिले गरिने भैरवको पूजा । |
| ननदेव जुजुया तर्‌व– | राजकीय प्रतीक रूपमा मान्य खड्ग, जुन जात्राका प्रमुख विधिविधानहरूमा आवश्यक मानिन्छ । |

| | |
|---|---|
| ल्हाः मदु ल्योसींद्यः– | हात नभएको लिंगो देवता, यो तालाक्व टोलको जेठा गणेशको लिंगो देवतालाई भनिन्छ । यो लिंगो चैत्र मसान्तका दिन उभ्याएर वैशाख ५ गते ढालिन्छ । |
| हाजिलँ गुजिलँ– | मुजामुजा परेको एकप्रकारको जामा, सुरुवाल, भोटो र पगरी । यो परम्परागत पोशाक भैरवको रथजात्राका अवसरमा राजा र मंत्रीको भूमिकामा प्रस्तुत हुने तलेजुका ब्राम्हणहरू तथा भैरव नाइकेहरूले लगाउने गर्दछन् । |
| भैलः नायो– | जात्रा संचालन गर्ने भैरवनाथ गुठीका नाइकेहरू । |
| माहाँ– | रथमा बसेर रथजात्रा संचालनको निम्ति हप्पा (निर्देशन) दिने नाइकेहरू, यस्ता माहाँहरू २ जना हुन्छन्, जो जात्राका बेला रथको अगाडि पछाडि रहन्छन् । |
| आचाजु– | भैरवनाथ मन्दिरका कर्माचार्य पुजारी । |
| जुशी– | जात्राको औपचारिक साइत जुराउने तलेजुका जोशी । |
| भुजिंकपः– | जाकिग्वः (चामलकोदाना) । यसलाई स्थानीयबासिन्दाहरू सहकालको अन्नको प्रतीक मान्ने गर्छन् । यसलाई भैरवनाथ मन्दिरमा देवतासंगै दाँया खोपामा राखिएको हुन्छ । देवताको नित्य पूजा गर्दा यसको पनि पूजा गर्ने गरिन्छ । जात्राका बेला देवतासंगै यसलाई पनि रथमा आरोहण गराइन्छ । |
| द्यः थाते लाकिगु– | देवतालाई ठाउँमा पुर्‍याउने, यो पहिलो दिनको रथजात्राको समापनलाई सम्बोधन गरिने शब्द हो । |
| थःने– | भक्तपुर शहरको माथिल्लो टोल, टौमढी चोकदेखि उत्तरपूर्वी क्षेत्र । |
| क्वःने– | भक्तपुर शहरको तल्लो टोल, टौमढी चोकदेखि दक्षिण पश्चिमी क्षेत्र । |
| लागा– | इलाका । |
| चण्डिका भुजिंकोखा– | टौमढी चोकको उत्तरपश्चिमी कुना । |
| खःमा– | टोल विशेषको नाम, बिस्केट जात्राकालागि सर्वप्रथम रथ (सानो आकारको) बनाएको ठाउँ भएकोले यस ठाउँलाई खःमा भनिएको हो । किनकि नेवारीमा रथलाई पनि "खः" नै भन्ने गरिन्छ । हाल यस टोललाई खौमा भन्ने गरिन्छ । |
| लाकोलाछैं– | टोल विशेषको नाम, चैत्र २९ गते स्याकोत्याकोका दिन यहाँ भैरवनाथको सम्मानमा लाकोफेतु साइत भन्ने पूजा हुन्छ, पूजा पश्चात् बलि दिएको राँगोको मासुको चोक्टा बाँड्ने गरिन्छ । यसरी मासुको चोक्टा पाइने ठाउँ भएकोले यसलाई नेवारीमा "लाकोलाछैं" भनिएको हो । |
| योसींखेल, ल्योसींखेल– | लिंगो उभ्याउने मुख्य जात्रास्थल । |

| | |
|---|---|
| भेलुखेल– | लिंगोलाई विश्वनाथ भैरवको प्रतीक मानिने भएकोले लिंगो जात्रा हुने मुख्य स्थानलाई भेलुखेल पनि भन्ने गरिएको हो, किनकि नेवारीमा भैरवलाई "भेलु" पनि भन्ने गरिन्छ । |
| चुपींघाट– | लिंगो उभ्याउने जात्रास्थल समिपको घाट, जहाँ हरेक वर्ष मेष संक्रान्तिको बिहान स्नान गरी भैरव भद्रकालीको दर्शन पूजन गर्ने कार्य हुन्छ । |
| ल्योसिंद्यःया कपाले पू गागु– | लिंगो देवताका शिरमा तुषारो परेको, यस लोकोक्तिबाट वैशाखको प्रारम्भिक दिनमा पनि यहाँ शीतकालको असर हराएको हुँदैन भन्ने थाहा हुन्छ, अर्थात् यतिबेला पनि यहाँको वायुमण्डल चिसो नै रहेको महसुस हुन्छ । |

# अध्याय एक

# शोध परिचय

## १.१ परिचय

नेपाल उपत्यकाका तीन प्राचीन नगरहरू मध्येको एउटा प्रमुख नगर भक्तपुर आफ्ना ऐतिहासिक वैभव, सांस्कृतिक सम्पदा र मौलिक परम्पराहरूद्वारा सुसम्पन्न छ । त्यस्ता मौलिक परम्पराहरूमा बिस्केट जात्रा पनि एक हो । बिस्केट मह□वपूर्ण र प्रसिद्ध जात्रा हो । यस जात्राको बारेमा यथाशक्य शोध खोज गरी यस विषयको इतिहास, धर्म, संस्कृतिलाई प्रकाशमा ल्याउनु यस शोध कार्यको मूल प्रयोजन हो । साथै लोप हुने अवस्थातर्फ विस्तारै ओरालो लाग्न थालिसकेको राष्ट्रिय मह□वका स्थानीय इतिहास संस्कृतिको जगेर्नाका लागि यस किसिमको शोध कार्य पनि आवश्यक छ भन्ने अभिप्रायले यो शोधकार्य गरिएको हो ।

भक्तपुरमा बसोबास गर्ने लगभग ९९% बासिन्दा नेवार हुन् । तिनमा लगभग ९२% मानिसहरू हिन्दु धर्म मान्दछन् । अनि अधिकांश बासिन्दा खेती किसानी गर्ने किसानहरू हुन् । बाह्य प्रभावबाट हुने सांस्कृतिक अतिक्रमण आधुनिकतातिर लम्केको जुनसुकै समाजमा पनि परेको हुन्छ । तर यहाँ त्यस्तो अतिक्रमण सामान्य मात्र छ अर्थात् काठमाडौं र ललितपुरको तुलनामा यहाँ कमै मात्र छ, त्यसैले आधुनिकताको प्रभावले विकृत नपारेको, देशमा भित्रिएका असंख्य राजनैतिक, सामाजिक, आर्थिक परिवर्तनले पनि त्यति उथलपुथल नपारेको यस सुन्दर नगरी भक्तपुर र यहाँका बासिन्दाहरूमा थुप्रै पुराना कुराहरू प्रचलित रहेका पाइन्छन् । यसैको फलस्वरूप यहाँका बासिन्दाहरूमा दैनिक क्रियाकलापदेखि चाडपर्व जात्रा उत्सवहरू समेत निर्वाध रूपमा संचालन हुँदै आएका छन् ।

भक्तपुरका नेवारहरूले वर्षभरि मनाउने अनेक साना ठूला जात्राहरूमा एउटा प्रमुख र मह□वपूर्ण जात्राको रूपमा बिस्केट जात्रा रहेको छ । यो जात्रा नौ दिनसम्म धुमधामले मनाइन्छ ।बिस्केट मूल रूपले लिंगोजात्रा हो, जसलाई विश्वयात्रा, विश्वध्वजजात्रा पनि भन्ने गरिन्छ, जुन चैत्र मसान्तका दिन लिंगो उभ्याएर मेष संक्रान्तिका दिन सम्पन्न गरिन्छ । यसरी उक्त दिन लिंगो ठड्याई जात्रा गर्नाले सुख, शान्ति, समृद्धि मिल्ने कुरा तन्त्रमा उल्लेख छ । प्रकारान्तरले यसमा अनेक उपजात्राहरू थपिए । यस्ता जात्राहरूमा भैरव भद्रकालीको रथयात्रा निकै प्रसिद्ध रहेको छ । जुन जात्रा मूल जात्राको चार दिनअघिबाट प्रारम्भ भई

मूल जात्रा सकिएको  चारदिन पछिसम्म चल्ने गर्दछ । यसकाअतिरिक्त बिस्केटकै अवसरमा यहाँ स्थापित अष्टमातृका लगायत अन्य देवदेवीका स्थानीय स्तरका अनेक जात्राहरू पनि हुने गर्दछन् ।

बिस्केट यसभेककै एउटा महत्वपूर्ण र रोमान्चकारी जात्रा हो । जात्रा त काठमाडौँमा पनि हुने गर्छ, पाटनमा पनि हुने गर्छ , बनेपा, पनौतितिर पनि हुने गर्छ । तर यो जात्रा जस्तो भव्य र रोमान्चकारी जात्राअन्त कहिँ पनि छैन भन्दा अत्युक्ति नहोला । किनकि यसमा एकातिर विशाल ध्वजा सहितको लिंगो उभ्याएर जात्रा गरिन्छ भने अर्कोतिर स्थानीयवासीहरू दुई समूहमा विभाजित भएर भैरवभैरवीका रथयात्रा पनि गरिन्छ । यस्तो रोचक र कौतुहलपूर्ण जात्रा भक्तपुरमा मात्र पाइन्छ । यसैकारण एकपल्ट मल्लकालमा कान्तिपुरका राजा प्रताप मल्लले एकसाल भक्तपुरमा यो बिस्केट जात्रा हुन दिएन । यताबाट आफूकहाँ यस्तो जात्रा नभएको कारणले गर्दा छिमेकी राज्यका राजाहरू समेत भक्तपुरको बिस्केटजात्रा देखि इर्ष्या गर्दथे र त्यसलाई बिथोल्ने प्रयास गर्दथे भन्ने कुरा थाहा लाग्दछ । यसरी यस जात्राको सांस्कृतिक महत्व कतिसम्म उच्च छ भन्ने कुरा स्पष्ट हुन्छ ।

नववर्षको आगमनसँगै बडो धुमधामले मनाइनेबिस्केटजात्राको आफ्नै विशिष्ट पहिचान रहेको छ । नेपालकै एउटा प्रमुख सांस्कृतिक सम्पदाको रूपमा यसलाई लिन सकिन्छ । ध्वजा उत्थान गरी जात्रा गर्ने चलन नेपालमा बाहेक अन्त कहीं पनि बाँकी छैन । यसले प्राचीन समयमा युरोपमा हुने May pole जात्राको झझल्को दिन्छ । यस किसिमको जात्राले संसार भरिकै जात्रा परम्परालाई संकेत गर्दछ । बिस्केट जात्रा पनि यस्तै किसिमको एउटा महत्वपूर्ण परम्परा हो । यो प्राचीन समयदेखि वर्तमान समयसम्म निरन्तर चल्दै आएको छ । यसैको विस्तारका साथ खोज अनुसन्धान गर्नु यस शोध कार्यको उद्देश्य हो ।

## १.२ समस्या कथन

बिस्केटजात्रा परम्परागत रूपमा धार्मिक, सांस्कृतिक दृष्टिले मनाइँदै आएपनि यसमा निहित रहेका धार्मिक, सांस्कृतिक, सामाजिक, आर्थिक, पुरातात्विक आदि पक्षको वास्तविक महत्व प्रष्ट हुन सकेको छैन । यसलाई आदिमकालको रोचक किम्बदन्तीसंग जोडेर हेर्ने गरिएको पाइन्छ । तसर्थ बिस्केट जात्राका विषयमा शोध, अनुसन्धान गर्दा विभिन्न

समस्याहरू रहेका छन् । यसको अध्ययनमा आएका प्रमुख समस्याहरूलाई निम्नलिखित रूपमा बुँदागत ढंगले प्रस्तुत गर्न सकिन्छ ।

(१) बिस्केट जात्राको ऐतिहासिक पृष्ठभूमि के कस्तो छ ?

(२) बिस्केट जात्रा के कसरी सम्पादन वा सम्पन्न गरिन्छ ?

(३) बिस्केट जात्रामा भक्तपुरको नेवार समाजका दायित्व र भूमिका के कस्ता छन् ?

(४) बिस्केट जात्रा के कति कारणले भक्तपुरको नेवार समाजमा लोकप्रिय हुन पुगेको हो ?

(५) प्राचीन समयदेखि वर्तमान समयसम्म आउँदा यस जात्रामा के कस्ता परिवर्तनहरू आएका छन् ?

मूलतः यी उल्लिखित समस्याहरूमा केन्द्रित रहेर प्रस्तुत अध्ययन कार्यलाई अघि बढाइएको छ ।

## १.३ उद्देश्य

भैरवभद्रकाली लगायतका अन्य देवीदेवताको शास्त्रीय विधिविधानपूर्वक गरिने पूजा र लोकपरम्परा अनुसार मनाइने चाड उत्सवको सम्मिश्रित रूपमा देखिने बिस्केटजात्रा आफैंमा गम्भीर र अनुसन्धान योग्य बन्न पुगेको छ । यो कहिलेदेखि मानिँदै आएको छ ? यसमा के कस्ता विधिविधानहरूको उपयोग गरिएको छ ? साथै प्राचीन समयदेखि अहिलेसम्म आइपुग्दा यसमा देखिएका परिवर्तित पक्षहरू के–के छन् ? भनेर खोज गर्नका निम्ति निर्धारित समस्यामा केन्द्रित रहेर निम्नलिखित उद्देश्यहरू निर्धारित गरिएका छन् ।

(१) बिस्केट जात्राको ऐतिहासिक पृष्ठभूमीको सर्वेक्षण गर्दै त्यसको ऐतिहासिकपक्ष पहिचान गर्नु ।

(२) बिस्केट जात्रा सम्पन्न गर्दा प्रयोग हुने विधिविधानहरूको खोज अनुसन्धान गरी पहिचान गर्नु ।

(३) बिस्केट जात्रामा स्थानीय नेवार समाजको विविध भूमिकालाई केलाउनु ।

(४) भक्तपुरमा बिस्केट जात्रा लोकप्रिय हुनुका कारण पत्ता लगाउनु ।

(५) बिस्केट जात्राको ऐतिहासिक विकासको सर्वेक्षण गर्दै यसमा देखिएका परिवर्तित पक्षहरूलाई केलाउनु ।

यसप्रकार यी उल्लिखित उद्देश्यहरूमा केन्द्रित रहेर प्रस्तुत अध्ययन कार्यलाई अघि बढाइएको छ ।

## १.४ पूर्वकार्यको समीक्षा

भक्तपुरको बिस्केट जात्राको सामाजिक र सांस्कृतिक पक्षहरूको विश्लेषण, यसको तुलनात्मक अध्ययन, यसका प्रमुख देवदेवी र तिनका पूजा विधानहरू, यसको संरक्षण, सम्बर्द्धन आदिबारे आजसम्म कतैबाट चासो लिएर गहनतम अध्ययन भएको पाइँदैन । यस जात्राबारे भएका पूर्व कार्यहरूको विवरण र त्यसको समीक्षा निम्न अनुसार गरिएको छ ।

### १.४.१ अंग्रेजी भाषामा उपलब्ध पूर्वकार्य

**गोपालसिंह नेपाली**,*दि नेवार्स,* रिप्रिन्ट, बम्बई : युनाइटेड एशिया पब्लिकेसन्स, ई.सं.१९८८, पृ.सं.४७६+१४ ।

लेखक गोपालसिंह नेपालीले प्रस्तुत पुस्तकको भूमिकामा समग्र काठमाडौं उपत्यका नै आफ्नो अध्ययनको विषयवस्तु भएतापनि विशेष गरेर उपत्यकाको केन्द्रविन्दु काठमाडौं शहर र त्यसदेखि केही पर दक्षिण भेगको नेवार गाउँ पाँगाका ३०० घर परिवारलाई आधार बनाई नेवार जातिको विविध पक्षको बारेमा अध्ययन गरेको कुरा व्यक्त गरेका छन् । गोरखाका राजा पृथ्वीनारायण शाहको एकीकरण अभियानमा विलय हुनु भन्दा अघि वास्तविक नेपाल भन्नाले काठमाडौं उपत्यका बुझिने र त्यतिखेर यसले समग्र मुलुककै राजनैतिक, सांस्कृतिक जीवनमा ठूलो भूमिका खेलेको हुनाले यहाँका बासिन्दा नेवारहरूको यो देशको इतिहास निर्माणमा मह□वपूर्ण स्थान रहेको छ भन्ने अभिव्यक्ति यस पुस्तकमा पाइन्छ ।

यसरी नेपाल उपत्यकाका मूल बासिन्दा नेवारहरूको सभ्यता, संस्कृति, इतिहास, परम्परा आदिबारे लेखिएको प्रस्तुत पुस्तकमा उपत्यकाका प्रमुख चाडपर्वहरूको पनि सामान्य चर्चा गरिएको छ । विशेष गरेर प्रस्तुत पुस्तकको तेह्रौं र चौधौं अध्यायमा नेवारहरूले वर्षभरि मनाउने चाडपर्वहरूलाई समग्र रूपमा सामुदायिक चाडपर्व र पारिवारिक चाडपर्व गरी दुई भागमा विभाजन गरी अध्ययन गरिएको छ ।

सामुहिक चाडपर्व नेवार समाजका समस्त जाति उपजातिहरूले धार्मिक, सामाजिक भेदभावलाई बिर्सेर, अघिपछिको रिसरागलाई नसम्झेर, आपसमा मिलेर सामुहिक रूपमा सबै सहभागी भइ मनाउने गरिन्छ भने पारिवारिक चाडपर्व नेवार समाजका एउटै परिवार भित्रका सदस्यहरू, आफन्त, नाता कुटुम्ब, गुठी (देवाली) का सदस्यहरू मात्र सहभागी भएर

मनाउने गरिन्छ । लेखकका अनुसार उपत्यकाका सम्पूर्ण हिन्दु चाडपर्वहरू यो दोस्रो वर्गमा पर्न आउँछ । तर बौद्धमार्गी नेवारहरूले पनि वर्षेनी पारिवारिक चाडपर्व मनाउने गर्छन्, जुन यसमा उल्लेख छैन ।

पहिलो वर्गको चाडपर्वहरूमा प्रमुख रूपमा भैरव, भैरवी जात्रा, घण्टाकर्ण, गाईजात्रा, बाँडाजात्रा, इन्द्रजात्रा, कुमारी जात्रा, मच्छेन्द्रनाथको जात्रा, नारायण जात्रा, गणेश जात्रा, भीमसेन जात्रा, कृष्ण जात्रा आदि पर्दछन् । र दोस्रो वर्गको चाडपर्वहरूमा म्हः पूजा, किजा पूजा, सकिमना पुन्ही, योमरी पुन्ही, घ्यो चाकु सँल्हु, श्री पंचमी, सिलाचऱ्हे, पाँहा चऱ्हे, राम नवमी, सिठी नखः, दिगु पूजा, गुंपुन्ही, कृष्णाष्टमी, मोहनी आदि पर्दछन् ।

प्रस्तुत पुस्तकमा भैरवनाथ र उनकी शक्ति भैरवी अर्थात् भद्रकालीको सम्मानमा नेवार सामाजिक जीवनमा असंख्य जात्राहरू परापूर्वकालदेखि प्रचलित हुँदै आएको पाइन्छ । यी जात्राहरू पशुलाई बलि दिएर, शास्त्रोक्त विधि अनुसार जाँडरक्सी चढाएर, देउतालाई खटमा राखेर स्थान विशेष परिक्रमा गराउनु नै जात्राको प्रमुख विशेषता मानिन्छ भन्ने उल्लेख छ । यस सन्दर्भमा प्रस्तुत पुस्तकको तेह्रौं अध्यायमा भक्तपुरको प्रसिद्ध जात्रा बिस्केटको पनि सामान्य चर्चा गरिएको छ । बिस्केटको चर्चा गर्दा यस जात्राले प्राचीन युरोपमा मनाइनेMay Poleजात्राको झझल्को दिन्छ भनेर भक्तपुरको जात्रालाई युरोपको जात्रासँग तुलना गरेर एउटा नयाँ कुरा यसमा दिइएको छ, तर उक्त जात्रा कस्तो हो ? त्यो खुलाइएको छैन । लेखकका अनुसार बिस्केट जात्रा सिक्काको दुई पाता झैं लाग्दछ किनकि यसबेला एकातिर विश्वध्वजोत्थान पनि अर्कोतिर विक्रम संवत्‌को नववर्षको पहिलो दिन पनि पर्ने भएकोले सर्वत्र उत्साह उमंग फैलेको हुन्छ ।

बिस्केट जात्राका दुई भाग छन् । पहिलो भाग अन्तर्गत चैत्र मसान्तको दिन लिंगो ठड्याएर त्यसको भोलिपल्ट लिंगो ढाल्ने गरिन्छ भने अर्को भागमा भैरव, भद्रकालीको रथलाई नगरको मध्यविन्दु (टौमढी चोक) बाट तानेर माथिल्लो वा तल्लो टोलमा पुऱ्याइन्छ । यसरी बिस्केट जात्राको वर्णन यस पुस्तकमा गरिएको छ । तर बिस्केट जात्राको वर्णन गर्ने क्रममा यसमा तथ्य भन्दा फरक केही कुरा उल्लेख भएको छ । जस्तो – लिंगोका लागि सल्लाको रुख ल्याइन्छ, तर यसमा सालको रुख भनेर उल्लेख छ । लिंगो ल्योसींखेलस्थित भद्रकाली पीठ नजिक ल्योसिंगाः (खाल्डो) मा ठड्याइन्छ, तर यसमा इन्द्रायणी मन्दिर अगाडि लिंगो ठड्याइन्छ भनिएको छ । साथै यसमा भौगोलिक रूपमा भक्तपुर

काठमाडौँबाट निकै टाढा पर्ने भएकोले काठमाडौं र पाटनका जात्राहरूमा भन्दा यस जात्रामा जात्रालुहरूको संख्या ज्यादै न्यून रहन्छ भन्ने उल्लेख गरिएको छ । तर यो कुरा वास्तविकतासंग मेल खांदैन ।

**डि.आर.रेग्मी**,*मिडियभल नेपाल,* कलकत्ता: के.एल. मुखोपाध्याय, ई.सं. १९६६,दोस्रो भाग पृ.सं. १०७६, तेस्रो भाग पृ.सं. १६३ + १५६ + ८,चौथो भाग पृ.सं. ३५९ + ४४ ।

डिल्लीरमण रेग्मीद्वारा लिखित *मिडियभल नेपाल*को विशेष गरेर दोस्रो भागमा मध्यकालीन नेपालमा मनाइने विभिन्न जात्राहरूको संक्षिप्त वर्णन गरिएको छ । त्यसै क्रममा बिस्केट जात्राको पनि उल्लेख गरिएको छ । यस जात्राको उत्पति सम्बन्धमा वर्णन गर्दा दुईवटा किंबदन्तीहरूलाई अघि सारेका छन् । पहिलोमा–भक्तपुरका राजाकी छोरीको नाकबाट निस्कने एक जोडी नागनागिनीलाई मारेको र दोस्रोमा–राजगुरु शेखर आचार्यको दम्पतिले नागनागिनीको रूपमा आत्महत्या गर्नु परेको घटनालाई प्रस्तुत गरिएको छ । यस ग्रन्थमा काशीबाट विश्वनाथ भैरवले भक्तपुरको विश्वजात्रा अवलोकन गर्न आएको घटनालाई पनि प्रस्तुत गरिएको छ । नेपालमा विक्रम संवत्‌को प्रचलन पूर्व मध्यकालतिरै भएको र सोही संवत् अर्थात् सौर्य पात्रोको आधारमा मनाइने यो जात्रा भक्तपुरका तात्कालीन राजा जगज्योतिर्मल्लको पालादेखि भएको मानिन्छ । तापनि लेखकले आफूसँग रहेको एउटा वंशावलीका आधारमा यस जात्राको प्रारम्भ राजा विश्वमल्लको पालादेखि भएको वर्णन गरेका छन् । अर्कोतिर बिस्केट शब्द संस्कृतको विश्वकेतु (विश्वध्वज) बाट अपभ्रंश भएर आएको भन्ने लेखकको भनाइ छ । यो विश्वध्वज उत्थान गरी जात्रा मनाउने चलन नेपालमा परापूर्वकालदेखि नै प्रारम्भ भएको भनेर यसको प्राचीनतालाई वैदिक कालसम्म पुऱ्याउने प्रयास गरेपनि जात्राका अन्य पक्षबारे यो ग्रन्थ मौन छ ।

*मिडियभल नेपाल*को तेस्रो भागमा ई.सं. ७४० देखि ई.सं. १७६८ सम्मको नेपाली इतिहास र संस्कृतिका स्रोत सामग्रीहरू विशेष गरेर अभिलेख, वंशावली र थ्यासफूहरूको परिशिष्ट प्रस्तुत गरिएको छ । जस्तो– परिशिष्ट ए मा नेपाल संवत् १२५ देखि ६६८ सम्मका उपत्यका र उपत्यका वरपर छरिएर रहेका शिलालेख, ताम्रपत्रहरू प्रस्तुत गरिएको छ भने परिशिष्ट बी मा गोपालराज बंशावली र परिशिष्ट सी मा फिल्ड मार्शल केशर शम्शेरको संग्रहमा रहेको वंशावली र परिशिष्ट डीमा सात वटा थ्यासफूहरू, त्यसपछि नेवारी भाषामा लेखिएको एउटा वंशावली र त्यसपछि भूमि सम्बन्धी ताडपत्रहरू उद्धृत गरिएको छ । यस ग्रन्थमा प्रस्तुत गरिएका विभिन्न स्रोत सामग्रीहरू मध्ये हाम्रो अध्ययनलाई उपयोगी हुने अभिलेखहरूमा निम्न मह□वपूर्ण छन् ।

(१) टौमढीको तील माधव नारायण मन्दिर अगाडिको ने.सं. २८३ को भक्तपुरलाई राजधानी नगरको रूपमा स्थापित गर्ने राजा आनन्ददेवले राखेको शिलास्तम्भ सहितको अभिलेख ।

(२) सूर्यमढी टोलको नारायण मन्दिरको ने.सं. ५२८ को अभिलेख ।

(३) टौमढी टोलको भैरवनाथ मन्दिरको दक्षिण कुनामा रहेको यक्ष मल्लको ने.सं. ५६१ को अभिलेख, जुन अभिलेखमा बिस्केट जात्रालाई विश्वजात्रा भनेर उल्लेख गरिएको र अभिलेखको आरम्भमा नै "ऊँ नमः शिवाय ॥ देवदेवं विश्वेश्वरायनमः,महेश्वरायनमः" भनिएबाट यो अभिलेख बिस्केट जात्रा र विश्वनाथ भैरवसँग सम्बन्धित अभिलेख हो भन्ने बुझिन्छ । यस जात्राको बारे वर्णन गर्ने यो पहिलो प्रामाणिक स्रोत हो ।

(४) ने.सं. ५७३ को पशुपति ताम्रपत्र र ने.सं. ५७३ कै भक्तपुर राजदरवारको ताम्रपत्र यक्षमल्लको विजय अभियानसँग सम्बन्धित छन् ।

*मिडियभल नेपाल*को चौथो भागमा पनि परिशिष्टको रूपमा ने.सं. ६४४ देखि ने.सं. ८८९ सम्मका अभिलेखहरूका साथै एउटा थ्यासफू प्रस्तुत गरिएको छ । यसमा प्रस्तुत अभिलेखहरूमा ने.सं. ८०८ को जितामित्र मल्लको भक्तपुर सुनधारा अभिलेख अनि ने.सं. ८१८ को भूपतीन्द्र मल्लको मालती चोक अभिलेख मह□वपूर्ण रहेका छन् । किनभने यी अभिलेखहरूमा बिस्क्याट शब्दको उल्लेख परेको छ ।

**नील गुत्सो र वर्नहार्ड कोल्वर**,*भक्तपुर,* वेसवडेन : कमीशन्स भर्लाग फ्रान्ज स्टेनर, ई.सं. १९७५, पृ.सं. ५८ ।

नील गुत्सो र वर्नहार्ड कोल्वरद्वारा संयुक्त रूपमा लिखित पुस्तक *भक्तपुर*मा पश्चिमीकरणको बढ्दो प्रभावबाट अझै पनि मुक्त रहेको एउटा हिन्दु नगर भक्तपुरको परम्परागत धारणा र परिवर्तनशील क्रियाकलाप बीचको अन्तर सम्बन्धलाई चित्रण गरिएको छ ।

नगर राजधानीको रूपमा विकसित हुनु भन्दा पहिले भक्तपुर संभवत दुईवटा गाउँहरूमा विभक्त रहेको हुनुपर्छ, जसको केन्द्रविन्दु टौमढी टोल थियो र यो तथ्य हालसम्म पनि कायमै रहेको पाइन्छ । अर्थात् टौमढी चोक नगरको तटस्थ वा मध्यविन्दु हो, जहाँदेखि दक्षिण पश्चिमी इलाका तल्लो टोल र त्यसदेखि उत्तर पूर्वी इलाका माथिल्लो टोल भन्ने

जनिन्छ । यसैकारण यहाँको प्रसिद्ध जात्रा बिस्केट लगायत अन्य जात्राहरू यही ठाउँ (टौमढी चोक) भएर प्रारम्भ गरिन्छ । बिस्केट जात्राको बेला भैरवको रथलाई आ-आफ्नो इलाकातिर लैजान तल्लो र माथिल्लो टोलकाले अगाडि र पछाडिबाट रथ तान्ने प्रतिस्पर्धापूर्ण शुभ कार्यको प्रारम्भ यहींबाट गर्ने गर्छन् । प्रस्तुत पुस्तक “भक्तपुर” मा पनि लेखकद्वयले टौमढी चोकलाई मेरुदण्ड मानेर त्यसदेखि दक्षिण पश्चिमतिर क्रमशः गाःहिटी, लय्को, खलँा, चुपींघाट, भेलुखेल आदि बस्तीहरूलाई जातीयताका आधारमा क्रमशः छ थरिया नेवारहरूको घर, पाँच थरिया नेवारहरूको घर, त्यसपछि ज्यापूहरूको अनि आखिरमा खोला तीरैतीर पोडे टोल आउँछ भनी सामाजिक वर्गीकरणको आधारमा नगरको बस्ती बसाइएको तथ्य खुलाइएको छ । अनि यी उल्लिखित टोल र बस्ती (इलाका) हरू भनेका बिस्केट जात्रा हुने मुख्य स्थल वा मार्गहरू हुन् । वास्तवमा नेवार समाजको विद्यमान जातीय विविधता र पृथकीकरणको सिद्धान्तलाई नेवार नगर रचनाले पनि पुष्टि गर्दछ भन्ने तथ्य यस पुस्तकले प्रस्तुत गरेको छ । यस्तो नगर बस्तीमा नगर द्वारहरू, केन्द्रविन्दु झैं बनेको लायकू (राजप्रासाद) त्यस विन्दुदेखि क्रमिक दूरीमा भारदार र उच्च जातदेखि क्रमशः अन्य विभिन्न जातिहरूको आवासीय खण्ड अनि कसाई देखि अन्य अछुत पोडे, च्यामे जस्ता जातलाई मुख्य बस्ती बाहिर राख्ने कार्य यही नेवार नगरीय विधान भित्र पर्दछ ।

प्रस्तुत पुस्तकको पृ.सं. ४६ देखि ५० सम्म बिस्केट जात्राको बारेमा पनि उल्लेख गरिएको छ । हुनतः जात्रा हुने मुख्य स्थल टौमढी चोकदेखि चुपींघाट सम्मको विस्तृत सामाजिक अध्ययन पुस्तकभरि नै गरिएको छ ।

यस पुस्तकमा बिस्केट जात्रा दुई प्रकारले मनाइन्छ भनिएको छ । पहिलो लिंगो उठाएर, दोस्रो भैरव र भद्रकालीको रथ तानेर । जात्राको बेला समग्र भक्तपुर नगर क्षेत्रगत आधारमा दुई प्रतिस्पर्धी समूहमा बाँडिएका हुन्छन् । भैरवको रथ नगरको केन्द्रविन्दु टौमढी चोकमा राखिएको हुन्छ, जहाँबाट दुवैतिरकाले रथलाई आ–आफ्नो इलाकातिर तानेर लाने भरमग्दूर प्रयास गर्छन् । रथ तान्ने जात्राको मुख्य अभिप्राय देवता विराजमान रथलाई आफ्नो इलाकातिर लान सकेमा वर्षभरि सौभाग्य प्राप्त हुने, गरेका काम सफल हुने, कृषि उत्पादन राम्रो हुने जनविश्वास भएकोले ठूलो हर्ष र उल्लासमय वातावरण अनि विशाल जन समुदायका बीच दुवै पक्ष (समूह) का मानिसहरूले रथलाई तानेर आ–आफ्नो गन्तव्यतिर लाने प्रयास गर्छन् ।

तर यसमा उल्लेख गरिएका केही कुराहरू यथार्थतासंग मेल खाएको देखिंदैन । जस्तो– रथ तान्ने जात्रामा दुवै पक्षका सहभागीहरू ज्यापू समुदायका हुन्छन र रथ तान्नेहरू रथको दुवैतिर २५, २५ जना मात्र हुन्छन् । तर भैरवको रथ तान्ने जात्रामा जो कोही पनि सहभागी बन्न सक्छन् । यही जात र यति नै संख्या हुनुपर्छ भन्ने छैन । जोश जांगर भएका तन्नेरी, युवा, केटाकेटीहरू जो कोही पनि डोरी समातेर रथलाई आफनो क्षेत्रतिर लाने प्रयास गर्दछन् ।

समग्रमा प्रस्तुत पुस्तकले भक्तपुरको जातीय संरचना, सामाजिक स्थिति, नगरको अवस्थिति, विभिन्न चोकहरू, गल्लीहरू, मूल बाटो, बहीबहाल, मठमन्दिर आदिबारे तस्वीर, मानचित्र, तथ्याङ्क चित्र समेत दिएर विविध तथ्यलाई प्रष्ट पार्न सकेको छ ।

**मिलन रत्न शाक्य**,*दि कल्ट अफ भैरव इन नेपाल,* दिल्ली : रूपा कम्पनी, ई.सं. २००८, पृ.सं. २८९ + १५।

मिलन रत्न शाक्यद्वारा लिखित र रूपा कम्पनी दिल्ली भारतबाट ई.सं. २००८ मा प्रकाशित *दि कल्ट अफ भैरव इन नेपाल* नामक पुस्तकमा नेपाल उपत्यकाका स्थानीय बासिन्दा नेवारहरूका आफ्ना बन्दव्यापार, खेतीपाती, टोलबस्ती आदिको संरक्षण गर्ने संरक्षक देवता श्री भैरवनाथबारे विविध तथ्यपरक जानकारी प्रस्तुत गरिएको छ । यो पुस्तक ६ वटा अध्यायहरूमा विभाजित गरिएको छ, जसमध्ये पहिलो अध्यायमा भैरव सम्बन्धी धारणा र विश्वास, दोस्रोमा भैरवपूजा विधान, तेस्रोमा भैरव सिद्धान्त, चौथो अध्यायमा आकृत र अनाकृत स्वरूपमा भैरव, पाँचौ अध्यायमा नेपाल मण्डलमा भैरव र अन्त्यमा छैठौं अध्यायमा भैरव मूर्तिका स्वरूप, लक्षण र आयुध आदि छन् ।

यसप्रकार प्रस्तुत पुस्तकमा नेपालमा भैरवनाथको इतिहास, भैरवनाथ सम्बन्धी जनधारणा, भैरव शैव सम्प्रदाय हिन्दुका अतिरिक्त बौद्ध नेवारहरूले पनि पुज्ने गरेको जस्ता तथ्य यसमा उल्लेख गरिएको छ । वास्तवमा तान्त्रिक दृष्टिले हरेक टोल बस्तीको रक्षार्थ टोल, चोक, दोबाटो, चौबाटो आदि स्थानहरूमा छत्रपालको रूपमा भैरव रहने गरेको देखिन्छ । अनि नगर (देश) रक्षाका लागि नगर वरिपरि तान्त्रिक दृष्टिबाट प्रतिस्थापित अष्टमातृका गणका पीठ सँगसँगै तिनका पतिका रूपमा हरेक पीठमा एक–एक गरी अष्ट भैरवहरू पनि प्रतिष्ठापन गरिएको तथ्य यसमा उल्लेख गरिएको छ । यस अतिरिक्त समग्र नेपाल मण्डललाई बाह्य अनिष्टबाट रक्षा गर्न उपत्यका वरिपरिका प्रमुख स्थानहरूमा बाटुलो घेराको साङ्लो बनाएर विविध नामका भैरवहरू प्रतिष्ठापित छन् । जस्तो कि पूर्वी

नाकामा साँगा भैरव, त्यसपछि दक्षिण पूर्वमा अथवा कटुञ्जेमा सुशील भैरव, त्यसभन्दा अलि पश्चिममा टिका भैरव (चापागाउँ) त्यसपछि अझ पश्चिममा हेग्रीव भैरव (बुंगमती), दक्षिण पश्चिममा बाघ भैरव (कीर्तिपुर) अनि पश्चिममा हल्चोक भैरव, त्यस्तै उत्तर पश्चिममा नुवाकोट भैरव (त्रिशुली) अनि उत्तरमा साँखुको क्षेत्रपाल भैरव प्रतिष्ठापित रहेका छन् ।

उपत्यकाका प्रसिद्ध भैरवहरूमा हनुमानढोकाको श्वेत भैरव, भक्तपुर टौमढीको विश्वनाथ भैरव, इन्द्रचोकको आकाश भैरव, टेकुको पचली भैरव, कीर्तिपुरको बाघ भैरव, लगनखेलको बटुक भैरव, भक्तपुरको बक्रनाथ भैरव, हनुमानढोकाको काल भैरव आदि रहेको जानकारी यसमा दिइएको छ । तर यसमा पशुपतिनाथ परिसरको उन्मत्त भैरवको वर्णन छैन ।

संस्कृत शब्द "भाया" र "रब" बाट भैरव भएको र नेवारहरू यसलाई भेलु वा भैलः द्यः भन्दछन् भनिएको छ । भैरव शिवकै अर्कोरूप हो । शिवलाई भव, रुद्र, सव, पशुपति, कपर्दो, शम्भु, शंकर आदि पनि भनिन्छ । शिवलाई दुई प्रकारले व्याख्या गरिएको छ । (१) सृष्टिकर्ता (२) संहारकर्ता अर्थात् एउटा सौम्य र अर्को भयावह अथवा विध्वंसक रूप । भयावह, विध्वंसक र उग्र रूपको शिवलाई भैरव भनिन्छ । भैरव शिवकै एक रूप हो भन्ने सम्बन्धमा विभिन्न पौराणिक कथाहरूको वर्णन यस पुस्तकमा गरिएको छ । भेरुतन्त्र नामक ग्रन्थमा ५२ लाख भैरव भैरवीहरूको यस क्षेत्रमा बास हुने कुरा उल्लेख गरिएको छ ।

यसरी यो भैरव संस्कृतिबारे विस्तृत जानकारी दिन सफल छ । यद्यपि बिस्केट जात्राबारे यसमा केही पनि लेखिएको छैन । तर पनि बिस्केट जात्राका प्रमुख देवता भैरव भएकोले भैरवबारे जानकारी लिन यसबाट मद्दत मिल्ने विश्वास गर्न सकिन्छ ।

**मेरी एम. एण्डरसन**,*दि फेष्टिबल्स अफ नेपाल,* लण्डनः जर्ज एलेन एण्डवीन, ई.सं. १९७१, पृ.सं. २८८ ।

मेरी एम. एण्डरसनद्वारा लिखित र जर्ज एलेन एण्डवीन लण्डनद्वारा ई.सं. १९७१ मा प्रकाशित *दि फेष्टिबल्स अफ नेपाल* विदेशी लेखकद्वारा नेपालका चाडपर्वबारे सर्वप्रथम लेखिएको पहिलो पुस्तक हो । यस पुस्तकमा जम्मा ३६ वटा चाडपर्व र जात्राबारे विश्लेषण गरिएको छ । विवाह पंचमी एउटा बाहेक बाँकी सबै काठमाडौं उपत्यका र त्यस वरपरका बासिन्दाले मनाउने चाडपर्वहरू छन् । ती चाडपर्वहरूलाई अंग्रेजी महिनाको आधारमा वर्गीकरण गरी April-Mayमहिनामा मनाइने पर्वको रूपमा पहिलो अध्यायमा नै नववर्ष र बिस्केट जात्राको उल्लेख गरिएको छ ।

जनमानसमा प्रचलित किम्बदन्तीहरूलाई नै आधार मानेर बिस्केट जात्राको उत्पति भएको भन्दै “बी” (सर्प) र “स्याको” (मार्नु) को अपभ्रंशबाट नै बिस्केट भएको उल्लेख यस पुस्तकमा गरिएको छ । अर्थात् भक्तपुरका राजकुमारीको नाकबाट निस्केका एक जोडी नागनागिनी मारिएपछि त्यसैको सम्भना वा खुसीयालीमा वर्षेनी मनाइँदै आएको जात्रा नै बिस्केट जात्रा हो । नागनागिनी मार्ने परदेशी राजकुमारको नाम भद्रमल्ल भएको र भद्रमल्ल भक्तपुरका राजा भएपछि उनी र उनका उतराधिकारीहरू नाग जातिका मल्ल भन्न थालियो भनिएको छ । तर भक्तपुरको समग्र इतिहास अध्ययन गर्दा पनि भद्र मल्ल भन्ने राजाको नाम कहिं कतै उल्लेख भएको पाइँदैन ।

दोस्रो कुरा काशीबाट विश्वनाथ भक्तपुरको बिस्केट जात्रा हेर्न आउँदा यहाँका तान्त्रिकहरूले सो कुरा थाहा पाइ उनलाई मन्त्रशक्तिबाट समात्न खोज्दा उनी आफू उभिएकै ठाउँबाट लोप हुन खोज्दा तान्त्रिकहरूले हतपत टाउको मात्रै बाँकी रहँदै गर्दा हँसियाले काटेर लिए । यसरी काटेर लिएको विश्वनाथ भैरवको टाउको मन्दिरको गुह्य स्थानमा तान्त्रिक विधिपूर्वक रहने र वर्षको एक पटक बिस्केट जात्राको बेला भैरवनाथको रथारोहणको बेला धातुको मूर्तिसँगै यो पनि राखेर जात्रा चलाइन्छ भनेर जुन कुरा यसमा उल्लेख गरिएको छ, त्यो पनि तथ्य भन्दा फरक रहेको देखिन्छ किनभने जात्राको बेला भैरवको धातुको मूर्तिँसँगै रथमा राखिने धातुको पाताले मोडिएको ठूलो अण्डा आकारको बस्तु (भुजिंकप) जाकीग्व अर्थात् सहकालको प्रतीक चामलको दाना हो, न कि वास्तविक भैरवको शिर राखिएको बाकस । यस्तै गरेर जात्राको मुख्य आकर्षण लिंगो बारे पनि यसमा संक्षेपमा मात्र वर्णन गरिएको छ ।

**रवर्ट आई. लेभी**, *मेसोकज्म,* दिल्लीः मोतीलाल बनारसी दास पब्लिसर्स प्रा.लि, ई.सं. १९९२, पृ.सं. ८२९ + २२ ।

अमेरिकाको क्यालिफोर्निया विश्वविद्यालयका प्राध्यापक डा. रवर्ट आई. लेभीद्वारा लिखित र मोतीलाल बनारसी दास पब्लिसर्स दिल्लीद्वारा ई.सं. १९९२ मा प्रकाशित लगभग ८५० पृ.सं. रहेको *मेसोकज्म* नामक पुस्तकमा हिन्दुतन्त्रमा आधारित नेपालको एउटा प्राचीन नगर भक्तपुर र त्यहाँका मुख्य बासिन्दा नेवारहरूको विस्तृत खोजी नीति तथा तिनका विविध सामाजिक, सांस्कृतिक पक्षलाई केन्द्रविन्दु बनाइएको छ । यस पुस्तक

लेखनमा भक्तपुर तलेजुका तात्कालीन मूल पुरोहित श्री केदारराज राजोपाध्यायको सहयोग रहेको बुझिन्छ ।

लेखकको निष्कर्ष अनुसार भक्तपुर एक उन्नत मानव समूहको सुव्यवस्थित तथा स्वयं शासित नगर हो । यो नगर हिन्दु धर्म अनुसार नेवार संस्कृतिको आधारमा कुशलतापूर्वक निर्माण गरिएको मध्यकालीन सभ्यताको एक सजीव चित्र हो, एक किसिमले पृथ्वी भित्रको अन्तरिक्षमा अवस्थित एक रहस्यमय तर वास्तविक क्षेत्र हो । शताब्दीयौं देखि निरन्तर रूपमा चल्दै आइरहेको आफ्नै संस्कृतिबाट उब्जेको भक्तपुरको सुव्यवस्थित जनजीवनले आज आधुनिकीकरणतिरको फड्को लिंदैछ । सन् १९५० को पूर्वकालको यस शहरको भौतिक बनावट, नागरिक सुविधाहरू तथा सामन्जस्यपूर्ण सामाजिक संरचना एकदम उन्नत तथा उच्च स्तरका हुन् भन्ने उनको भनाइ यथार्थ र स्वाभाविक लाग्दछ ।

प्रस्तुत पुस्तकको १२, १३, १४ अध्यायहरूमा चान्द्रमान र सौर्यमान अनुसारका चाडपर्वहरूको विश्लेषण गरिएको छ । भक्तपुरका नेवारहरूको आफ्नै किसिमको चाडपर्व, जात्रा, उत्सव, रीतिस्थिति आदि बारेको वार्षिकक्यालेण्डर (पात्रो) हुने गर्दछ । जबकि यसबारे अन्यत्रका नेवारलाई केही पनि थाहा हुँदैन । यसै विषयमा यी अध्यायहरूमा विश्लेषण गरिएको छ ।

चान्द्रमान अनुसारको चाडपर्वलाई यसमा स्वन्ती नखः बाट शुरु गरेर इन्द्रजात्रासम्म पुऱ्याई वर्णन समाप्त गरिएको छ । तर मोहनी (दशैं) पनि चान्द्रमान अनुसार कै चाड हो, जुन कुरा यसमा उल्लेख छैन । अर्को कुरा तीज पर्व नेवार महिलाले नमान्ने भएपनि यसमा उल्लेख छ । यसरी नेवारहरूको वर्षभरिको चाडपर्व गथामुगःबाट शुरु भई सिठी नखःमा आएर सकिनेमा यसमा चाहिं स्वन्ती नखःबाट शुरु गरी इन्द्रजात्रामा ल्याएर समाप्त गरिएको छ ।

सौर्यमान अनुसारका चाडपर्वहरूमा घ्यो चाकु सल्हुँ र बिस्का जात्राको चर्चा गरिएको छ । बिस्केटको बेला जति पनि ठाउँमा, जति पनि देवदेवीका खटजात्रा वा पूजाहरू हुने गर्छ, ती सबै सौर्यमान (विक्रम संवत्) पात्रो अनुसार निश्चित् दिनहरूमा हुने गर्छ । जस्तो– लिंगो उठाइ भोलिपल्ट ढाल्ने जात्रा जहिले पनि चैत्र मसान्त र वैशाख संक्रान्तिको दिनमा सम्पन्न हुन्छ । थिमीमा ३२ वटा खटको जात्रा, बोडेमा जिब्रो छेड्ने जात्रा र नगदेशमा सिद्धिविनायक जात्रा वैशाख २ गते हुने गर्छ अनि भक्तपुरमा स्थानीय जात्राहरू वैशाख २, ३, ४ गते निर्धारित दिनहरूमा हुने गर्छ । यसरी यहाँका नेवारहरूका सबैजसो

जात्राहरू चान्द्रमान तिथि अनुसार हुने गरेकोमा अपवादको रूपमा यो बिस्केट जात्रा चाहिं सौर्यमान अनुसार हुने गर्छ भनी उल्लेख गरिएको छ ।

यसरी भक्तपुरको सामाजिक सांस्कृतिक पक्षलाई केन्द्रविन्दु बनाइ विदेशी लेखकद्वारा लेखिएको प्रस्तुत पुस्तकले विविध तथ्यगत कमीकमजोरीका बाबजुद भक्तपुरबारे जानकारी लिन चाहने जो कोहीलाई मद्दत गर्नेछ भन्ने कुरामा आशा गर्न सकिन्छ ।

### १.४.२ नेपालीभाषामा उपलव्ध पूर्वकार्य

**गोपाल धौबन्जार**,*बिस्केट जात्रा अष्ट प्रदेश उत्सव,* ललितपुर : जोशी रिसर्च सेन्टर, वि.सं. २०६५, पृ.सं. १०८+१० ।

गोपाल धौबन्जारद्वारा लिखित र जोशी रिसर्च सेन्टर ललितपुरद्वारा २०६५ सालमा प्रकाशित बिस्केट जात्रा अष्ट प्रदेश उत्सव नामक पुस्तकमा बिस्केट जात्रा मनाउने चलन भक्तपुर बाहेक अन्यत्र (विशेष गरेर उपत्यका र उपत्यका वरपरका केही पुराना नेवार बस्तीहरूमा) पनि रहेको तथ्य प्रस्तुत गरिएको छ । तर अन्यत्रको बिस्केट जात्राको चर्चा गर्ने सन्दर्भमा बिस्केट जात्रा हुने मूलस्थान भक्तपुर र त्यहाँको बिस्केट जात्राबारे यसमा गहिरिएर अध्ययन भएको छैन ।

प्रस्तुत पुस्तकको पृ.सं. ३९ मा बिस्केट जात्राको प्रचलन जयस्थिति मल्लको राज्यकाल भन्दा पछिमात्र प्रारम्भ भएको थियो भनेर यस जात्राको ऐतिहासिक मह□वलाई पनि कम दर्शाउन खोजिएको छ । लेखकका अनुसार मल्लकालीन सशक्त शासक यक्ष मल्लले आफ्नो राज्यको सीमाना टाढा–टाढा सम्म पुऱ्याई दिग्विजय गरेको उपलक्ष्यमा राजधानी भक्तपुरमा विश्वकेतु फहराएर लिंगो उभ्याउने जात्राको प्रचलन प्रारम्भ गरे र यस जात्रालाई विश्वजात्रा भन्ने नाम दिइयो भन्ने एउटा नयाँ धारणा यसमा प्रस्तुत गरिएको छ । तर तिथिमितिका दृष्टिले उनको यो भनाइ तथ्यसंगत देखिंदैन । किनकि लेखकले आफ्नो भनाइलाई पुष्टि गर्ने प्रमुख आधार यक्ष मल्लको ने.सं. ५६१ (वि.सं. १४९७) को "विश्वयात्रा" शब्द उल्लेखित टौमढी टोलको शिलालेखलाई बनाएका छन् । तर यस अभिलेखलाई आधार मानेर यक्ष मल्लले दिग्विजय हासिल गरेपछि नै यो जात्राको प्रचलन शुरु भयो भन्ने लेखकको भनाइलाई यक्ष मल्लकै ने.सं. ५७३ (वि.सं. १५१०) को पशुपति ताम्रपत्र र भक्तपुर राजदरवारको अभिलेखले गलत सावित गर्दछ । किनभने यी दुई अभिलेखहरू यक्ष मल्लले आफू विजय अभियानमा लाग्नु भन्दा पहिले वरपरका सामन्त

शासकहरूलाई केन्द्रको विरुद्ध लाग्ने छैनौं भनी गराएको धर्मपत्र र राजधानी नगर भक्तपुरलाई सामरिक दृष्टिले सुरक्षित किल्लाका रूपमा परिणत गरेको बर्णन परेका अभिलेख हुन् । यसबाट ने.सं. ५७३ पश्चात् नै यक्ष मल्ल विजय अभियानमा लागेको देखिने हुनाले ने.सं. ५६१ मा उनले दिग्विजय हासिल गरी विश्वजात्रा गर्ने परम्पराको थालनी गरे भन्ने भनाइ कालक्रमका दृष्टिले सत्य सावित हुँदैन ।

यसप्रकार तिथिमितिका आधारमा पनि यक्ष मल्लले आफ्नो विजय अभियान सफल भएको खुसीयालीमा यो जात्राको चलन चलाए भन्ने लेखकको आफ्नो धारणा तर्क संगत देखिंदैन । अर्को कुरा यक्ष मल्लले विजय अभियान सम्पन्न गरेर विशाल राज्य निर्माण गरे भन्ने विषय नै नेपालको इतिहासमा विवादास्पद छ । कतिपय आधुनिक विद्वानहरू यसलाई दन्त्यकथा जस्तो सम्झन्छन् ।

यसका अतिरिक्त अर्को कुरा यो विश्वजात्रा भक्तपुरमा प्राचीनकालदेखि नै प्रचलित हुँदै आएको थियो भन्ने तथ्य जनमानसमा प्रचलित किम्बदन्ती, लोककथन, जनश्रुतिहरूका अतिरिक्त विभिन्न लिखित प्रमाणहरूले पनि पुष्टि गर्दछ । जस्तो कि गोपाल राज वंशावलीमा स्पष्ट शब्दमा बिस्केटको उल्लेख नगरिएता पनि उक्त ग्रन्थको ५६ (क) पत्रमा चपाले आकाश भैरव भन्ने शब्द उल्लेख परेको छ । चपाले भन्ने त्यही स्थान हो, जहाँ बिस्केट जात्राको दौरान श्री ३ विश्वनाथ भैरव आफ्नो मूल देवगृह टौमढीबाट द्यः क्वहाँ बिज्याकिगु सांस्कृतिक कार्यसँगै रथारोहण गरी जात्रा अवधिभरि विराजमान हुने विशेष देवगृह हो, जुन भक्तपुर वडा नं. ११ लाकोलाछें टोलमा पर्दछ ।

त्यस्तै लिच्छवीकालका अभिलेखहरूमा स्पष्ट शब्दमा बिस्केटको उल्लेख भएको नपाइएता पनि लिच्छवी राजा नरेन्द्रदेवको अनन्त लिंगेश्वरको अभिलेखमा वराहयात्राको उल्लेख परेको छ । यो वराहयात्रा वर्तमान बिस्केट जात्राको क्रममा विश्वनाथ भैरवको लिंगो उभ्याइसकेपछि वाराही देवतालाई मूल देवगृहबाट दक्षिण हनुमन्ते नदी पारीको पीठमा लगिने खटजात्रा हो । यसो भन्नुका पछाडि निम्न दुई बलियो आधार प्रस्तुत गर्न सकिन्छ । पहिलोमा वाराही (पीठ) स्थान र अनन्तलिङ्गेश्वर भेक (मन्दिर परिसर) भौगोलिक दृष्टिले ज्यादै सन्निकट हुनु, दोस्रो कुरा लिच्छवीकालका पुरुष देवतालाई मल्लकालमा आएर स्त्री देवीको रूपमा पुजिने उदाहरण मानेश्वरको मानेश्वरी पनि एक हो । त्यस्तै वराहको वाराही हुन गयो भन्ने अनुमान गर्न सकिन्छ ।

तसर्थ लेखक धौबन्जारद्वारा प्रस्तुत बिस्केट जात्राको चलन राजा यक्ष मल्लले शुरुवात गरे भन्ने भनाइ स्वीकारयोग्य ठहरिदैंन ।

**लीलाभक्त मुनंकर्मी**,*हाम्रा सांस्कृतिक पर्व र जात्राहरू*,काठमाडौं : दयारत्न शाक्य, वि.सं. २०४३, पृ.सं. १५८ ।

यस पुस्तकमा काठमाडौं उपत्यकामा वर्षभरि मनाइने विभिन्न चाडपर्व जात्राहरूको उल्लेख गर्ने सन्दर्भमा नै भक्तपुरको बिस्केट जात्राको पनि वर्णन गरिएको छ । लेखकले यस जात्राको उत्पति जनमानसमा प्रचलित किम्बदन्तीहरूबाट भएको कुरा प्रस्तुत गरेका छन् । विशेष गरेर बिस्केटको बेला भक्तपुर राजदरवारभित्र तलेजु मन्दिर परिसरमा रहेको दुमाजु देवीको खटजात्राको उल्लेख यस पुस्तकमा गरिएको छ ।

**लीलाभक्त मुनंकर्मी**, *बिस्केट जात्राको संस्कृति*, भक्तपुर : भक्तपुर नगरपालिका, वि.सं. २०५३, पृ.सं.६७ ।

भक्तपुरका बयोवृद्ध संस्कृतिविद् लीलाभक्त मुनंकर्मीले भक्तपुर नगरपालिकाको भक्तपुरको संस्कृति संरक्षण गर्ने विशेष कार्ययोजना अन्तर्गत तयार पार्नु भएको प्रस्तुत पुस्तक बिस्केट जात्राको संस्कृति वि.सं. २०५३ सालमा भक्तपुर नगरपालिकाले प्रकाशित गरेको छ । यसमा जात्रा उत्पति सम्बन्धी चारवटा किम्बदन्ती तथा बिस्केटका अवसरमा गरिने मूल जात्रा र स्थानीय जात्राहरूको परिचय प्रस्तुत गरिएको छ । बिस्केट जात्राबारे सिंगो पुस्तकका रूपमा प्रकाशित भएको यो नै पहिलो पुस्तक हुनुपर्छ । तर प्रस्तुत पुस्तकमा अनुसन्धान विधि अपनाएर पादटिप्पणी र स्रोत सामग्री जस्ता प्रामाणिकता मापन गर्ने आधारहरू दिइएको छैन । जात्राबारे आफूले देखी, सुनी, जानी आएका कुराहरू उल्लेख गरिएका छन् । साथै पुस्तकको भूमिकामा नै लेखकले छोटो समयमा तयार गर्नु परेकोले ज्यादा अनुसन्धान गर्न नपाएकोले यो पुस्तक लेखनबाट आफू सन्तुष्ट नभएको तथ्य व्यक्त गरेका छन् । र भक्तपुर नगरपालिकाले पनि प्रकाशकीय मन्तव्यद्वारा यसमा बिस्केट जात्रासँग सम्बन्धित जात्राहरूको संक्षिप्त विवरण मात्र दिइएको र पछिल्ला दिनहरूमा अझ विस्तृत जानकारी दिंदै जाने विश्वास दिलाएर यो अध्ययन आफैमा पूर्ण नरहेको स्पष्ट पारेको छ ।

तर बिस्केटको समयमा तलेजु मूलचोकको नैऋत्य कोणमा प्रतिष्ठापित स्नेह मण्डपमा हरेक वर्ष गरिने जोगी चक्र पूजा (घासापाःलु) का लागि राजा जगतप्रकाश मल्लले २४ रोपनी जग्गा गुठी राखेर त्यसको आयस्ताबाट खर्च धान्ने उल्लेख परेको दुईवटा

अभिलेखहरू मध्येको एउटा अभिलेखलाई यसमा उल्लेख गरी त्यसको नेपाली सारांश पनि दिइएको छ, जुन मह□वपूर्ण छ र साथै हिजो आज गुठी संस्थानले सो अवसरमा गर्ने खर्चको विवरण पनि प्रस्तुत गरी तुलनात्मक अध्ययन गरिएको छ ।

प्रस्तुत पुस्तकमा यस जात्राको उत्पति सम्बन्धमा चारवटा लोकोक्ति उल्लेख गरिएको छ । जसमध्ये पहिलो र दोस्रो लोकोक्तिहरू अन्य पुस्तकहरूमा पनि आइसकेका छन् भने तेस्रो लोकोक्ति हरिदत्त र पता मैजुलाई भोगबली चढाएपछि सिद्धपोखरीमा पानी जम्न थालेको, तर मृत्यु संस्कार विधिपूर्वक नगरी दिंदा दुवैले प्रेतरूपी अजिंगर, अजिंगरनी (नाग नागिनी) भइ पोखरीमा आउने जानेलाई दुःख दिइरहँदा एक जना सिद्धबाबा त्यहाँ आई दुवैसँग भिडन्त गर्दा दुवै अजिंगर अजिंगरनी पराजित भई चासुखेल स्थित गलसी नामको पोखरीमा बस्न लागेको र एकपल्ट एकजना राजकुमार शिकारको क्रममा प्यास लागेर त्यहाँ आई पानी पिउन खोज्दा दुवै अजिंगरले राजकुमारमाथि आक्रमण गरे । राजकुमारले पनि तुरुन्तै म्यानबाट तरवार निकाली दुवैलाई काटेर मुक्त गरिदिए । यसपछि भद्रकाली पीठनेर दुवैको अवशेषलाई एउटा लामो रुखको टुप्पामा झुण्ड्याई सबैले देख्ने गरी प्रदर्शन गरियो । यो अवशेष प्रदर्शन बर्षे पिच्छे विधि पुऱ्याई गर्न थालियो । ती अजिंगरका अवशेषलाई उनेर माला बनाई लामो काठको टुप्पोमा झुण्ड्याइ देखाउनेलाई हरिपता भन्ने गरिन्छ । हरिदत्तको अगाडिको हरि र पता मैजुको अगाडिको पता मिलाई हरिपता भएको हो । अजिंगर (नाग) को अवशेष धेरै वर्षपछि जीर्ण भएकोले पछि त्यसको चित्र मात्र राखेर पताका (ध्वजा) नाम हुन गएको हो । चौथो लोकोक्ति स्वर्गबाट आएका इन्द्र तथा अन्य देवताले यहाँ झण्डा गाडेर गएको, जुन झण्डालाई हरिपत्तो वा हरिको झण्डा भनिने गरेको र त्यसैको सम्झनामा यो जात्रा मनाइने गरेको भन्ने भनाइसित सम्बन्धित छ । तर लेखकले उल्लिखित चारवटा लोकोक्तिहरू मध्ये कुन चाहिं सत्य हो, त्यसको निर्क्यौल गर्ने काम पाठकको जिम्मा लगाई बिस्केट जात्राको प्रारम्भ भक्तपुरले शहरको रूप लिनु भन्दा अगाडि भक्तग्राम रहेकै बेलादेखि चलेको भनेर यसको प्राचीनतालाई लिच्छवीकालसम्म पुऱ्याएको देखिन्छ ।

तर पनि पुस्तकमा यस जात्राको यथार्थ इतिहासलाई स्पष्ट पार्ने कुनै प्रयास भएको देखिंदैन । जात्राको परम्परा कहिलेदेखि थालनी भएको हो ? यसको ऐतिहासिक, सामाजिक, सांस्कृतिक पक्षहरू के के हुन् ? आदिबारे यो पुस्तक मौन रहेको देखिन्छ । यसैले यो पुस्तक जात्राबारे सामान्य परिचय दिने खालको मात्र देखिन्छ । जात्राका सम्बन्धमा विस्तृत रूपमा अध्ययन अनुसन्धान भएको छैन ।

**लक्ष्मी श्रेष्ठ**,*बिस्केट जात्रा : एक अध्ययन*,(अप्रकाशित स्नातकोत्तर तहको शोध प्रबन्ध),काठमाडौं : नेपाली इतिहास, संस्कृति तथा पुरात□व केन्द्रीय विभाग,त्रिवि, कीर्तिपुर, वि.सं. २०५१ ।

त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र संकाय, नेपाली इतिहास, संस्कृति तथा पुरात□व केन्द्रीय विभाग कीर्तिपुरमा वि.सं. २०५१ मा स्नातकोत्तर तहको आंशिक आवश्यकता परिपूर्ति गर्ने प्रयोजनका निम्ति सोही विभागका स्नातकोत्तर तहका विद्यार्थी लक्ष्मी श्रेष्ठद्वारा प्रस्तुत "बिस्केट जात्रा : एक अध्ययन" एउटा अप्रकाशित शोध प्रबन्ध हो । यसलाई सात अध्यायहरूमा विभाजन गरिएको छ, जसमध्ये पहिलोमा परिचय, दोस्रोमा नेपालका चाडपर्व, तेस्रोमा बिस्केट जात्राको उत्पति र प्राचीनता, चौथोमा जात्राका प्रमुख देवदेवी, पाँचौंमा विधिविधान, छैठौंमा भैरव र भद्रकालीको रथ र विश्वध्वजाको परिचय र अन्त्यमा सातौं अध्यायमा उपसंहार रहेको छ ।

नेपाली संस्कृति, इतिहास र चाडपर्वका पुस्तकहरूमा मात्र चर्चा हुने यस जात्रालाई पहिलो पल्ट सिंगो शोध ग्रन्थको रूपमा प्रस्तुत गरिएको छ । हालसम्मका अध्ययनहरूमा यो केही तथ्यगत देखिए पनि यसमा केही ऐतिहासिक त्रुटिहरू पनि रहेका छन् । जस्तो – कान्तिपुरका राजाको तरबार भक्तपुर ल्याएपछि मात्र भक्तपुरको बिस्केट जात्रा शुरु गरिन्छ भनेर भक्तपुरको प्रसिद्ध जात्रामाथि कान्तिपुरको प्रभाव देखाउन खोजिएको छ, जुन तथ्य वास्तविकता भन्दा फरक देखिन्छ । किनकि मल्लकालमा कान्तिपुर र भक्तपुरबीच शत्रुतापूर्ण सम्बन्ध रहेको तथ्य ऐतिहासिक  प्रमाणहरूले पुष्टि गर्दछ ।

विषयवस्तुको अध्ययन प्रकाशित स्रोत सामग्रीहरूमाथि बढ्ता भर गरिएको र जुन स्रोत सामग्रीहरू पहिले नै अरुद्वारा प्रयोग गरिएको हुँदा यो पूर्व कार्य पूर्णतः अनुसन्धानात्मक हुन सकेको छैन । किनभने लेखकले यो शोधकार्य गर्दा एउटा पनि मौलिक स्रोतको प्रयोग गरेका छैनन । साथै लेखक संस्कृति विषयका विद्यार्थी भएकाले प्रस्तुत ग्रन्थमा ऐतिहासिक तथ्यहरूलाई पनि त्यति समेटेको देखिंदैन । जस्तो – विश्वयात्रा उल्लिखित यक्ष मल्लको ने.सं. ५६१ को अभिलेख, बिस्क्यात उल्लिखित जितामित्र मल्ल र भूपतीन्द्र मल्लका अभिलेख लगायत अन्य स्रोतहरूको बेवास्ता गरिएको छ ।

**पुण्यरत्न बज्राचार्य**,*हाम्रो चाडपर्व*, काठमाडौंः रत्न पुस्तक भण्डार, वि.सं.२०४३, पृ.सं.१०४ +१६ ।

पुण्यरत्न बज्राचार्यद्वारा लिखित र रत्न पुस्तक भण्डार काठमाडौँद्वारा वि.सं. २०४३ मा प्रकाशित *हाम्रो चाडपर्व* नामक पुस्तकमा मेष संक्रान्ति शीर्षकको पहिलो अध्यायमा बिस्केट जात्राको उत्पति सम्बन्धमा दुईवटा बहुचर्चित किम्बदन्तीहरूको चर्चा गरिएको छ ।

पहिलो किम्बदन्ती राजकुमारीको नाकबाट निस्कने एक जोडी नागलाई एक परदेशी राजकुमारले मारेपछि त्यसैको सम्झनामा यो जात्रा मनाउन थालिएको भन्नेमा राजकुमारीको ठाउँमा रानी र परदेशी राजकुमारको सट्टामा राजा भनिएको र नाकको सट्टामा नाभिबाट सर्प निस्केको वर्णन गरिएको छ । यसरी मरेको सर्पको शव प्रदर्शन गर्ने यो जात्रा हेर्न धेरै मानिस, तेतीसकोटी देवताहरूका अतिरिक्त काशीका विश्वनाथ भैरव पनि मानिसको रूप लिई आए । तर यो कुरा स्थानीय तान्त्रिक मुनि आचार्यले थाहा पाइ उनलाई पक्रन खोज्दा नसकेपछि हँसियाले शिर छेदन गरी लिए । यसपछि काल भैरवको रूपमा उनलाई भक्तपुरमा नै प्रतिस्थापन गरियो । राजा आनन्ददेवले भक्तपुर शहर निर्माण गर्दा भैरवनाथको मूर्तिलाई देशको मध्य भागमा पारे र यिनै राजाका सन्तान जगज्योतिर्मल्लले ने.सं. ६९० मा काल भैरवको रथ बनाई मेष संक्रान्तिको दिन शत्रुहन्ता योगले लिंगो ढाल्ने रीत गरी भैरव र कालीको रथयात्रा गर्ने चलन चलाए । यस आधारमा यस जात्राको नाम विश्वख्वाल यात्रा अर्थात् विश्वनाथको अनुहारको जात्रा रहेछ र यसको प्रचलन  पनि ३९१–९२ वर्ष अघिदेखि मात्र भएको भनी किटान गर्न सकिन्छ भन्ने यसमा उल्लेख गरिएको छ, तर ऐतिहासिक प्रमाणहरू अनुसार त्यसभन्दा शताब्दीयौं अघिदेखि यो जात्रा भक्तपुरमा चलिआएको थियो भन्ने देखिन्छ । किनकि यक्ष मल्लको ने.सं. ५६१ को अभिलेखमा नै यसको उल्लेख पाइन्छ । अर्को कुरा राजा आनन्ददेवका सन्तानका रूपमा मल्लवंशी राजा जगज्योतिर्मल्लको उल्लेख हुनुपनि ऐतिहासिक दृष्टिले अमिल्दो छ । अनि भक्तपुरको भैरवनाथलाईश्री ३ आकाश भैरव, विश्वनाथ भैरव भनिएको पाइन्छ तर कालभैरव भनेको कतै पाइँदैन ।

दोस्रो किम्बदन्ती लिच्छवी राजा शिवदेवको पालामा भक्तपुरका प्रसिद्ध तन्त्रविद् शेखर आचार्य र उनकी पत्नी नररूपाले आफ्नै कारणले अजिंगर अजिंगरनी भई आत्महत्या गर्नुपरेको र सोही घटनाको सम्झनामा यो जात्रा चलेको भन्ने भनाइसित सम्बन्धित छ । यस किम्बदन्तीमा उल्लेख गरिए अनुसारका कुरासँग बिस्केटको लिंगो उभ्याउने व्यावहारिक कार्य मिल्छ र यो जात्रा गर्ने प्रथा लिच्छवी राजाहरूले राज्य गर्न थालेको समयदेखि चलेको अनुमान यसमा गरिएको छ ।

साथै अर्को एक ठाउँमा लेखकले गौतम पुराण मनुवचनमा चैत्र मसान्तको दिन विश्वध्वजोत्थान गरी पताका फर्फराएर उत्सव मनाउनाले देशमा शान्ति र सुभिक्ष हुन्छ र यस वचनमा विश्वध्वजोत्थान गरी यात्रा गर्ने प्रथा वैदिककालदेखि शुरु भएको भनेर यसको प्राचीनतालाई वैदिककालसम्म पुऱ्याइएको छ ।

यसप्रकार बिस्केट जात्राको उत्पति वा प्रचलन कहिलेदेखि भएको भन्ने बारेमा यसमा कुनै ठोस निर्क्यौल दिइएको छैन । केवल तीनवटा संभावनाहरू मात्र दिइएका छन् – पहिलो वैदिककालदेखि, दोस्रो लिच्छवीकालदेखि, तेस्रो पछिल्लो मल्लकालदेखि । यो जात्राको उत्पति बारेमा अनेक लोककथनहरू प्रचलित भएकाले कुन चाहिं सत्य हो, त्यो छुट्याउन नसकिने भएकोले खोज र अनुसन्धान गर्न बाँकी रहेको तथ्य लेखकले स्वीकारेका छन् । यसैकारण प्रस्तुत पुस्तकमा बिस्केटको बारेमा कुनै नयाँ कुरा उल्लेख छैन र यो एउटा सामान्य वर्णन मात्र भएको बुझिन्छ ।

**पुरुषोत्तम लोचन श्रेष्ठ**,*भक्तपुरको नवदुर्गा गण,* भक्तपुर : बबिता श्रेष्ठ, वि.सं. २०६०, पृ.सं.२०८ + १८ ।

भक्तपुरवासीहरूको वर्ष छापाखानाको पात्रोमा हैन, नवदुर्गाको नाचमा बाँधिएको हुन्छ । नवदुर्गा नाचको शहर परिक्रमाले नै भक्तपुरवासीहरूको वर्ष, महिना, पक्ष, तिथि र चाडबाड बाँधिएको हुन्छ । त्यसैगरेर मध्यकालीन भक्तपुरको मूलनगर बस्तीको सीमाना, टोलहरू, टोलको इलाका, नगरको मध्यभाग, नगरका परम्परागत मूल मार्गहरू लगायत तात्कालिक भक्तपुर राज्य अन्तर्गतका विभिन्न प्रदेशहरूबारे वैज्ञानिक ढंगले जान्न सकिने एउटा सजीव प्रमाण हो – भक्तपुरको नवदुर्गा नाच ।

पुरुषोत्तमलोचन श्रेष्ठद्वारा लिखित भक्तपुरको नवदुर्गा गण नामक पुस्तकमा भक्तपुरवासीहरूका संरक्षक देवता नवदुर्गा गण, त्यसको उत्पति, इतिहास, वर्ष क्रिया, नाच आदिबारे वर्णन गरिएको छ । हुनतः भक्तपुरको नवदुर्गा विषयमा वर्षौं पहिले नील गुत्सो र गणेशमान बासुकलाले The Navadurga of Bhaktapur भन्ने पुस्तक लेखिसकेका छन् । तर पनि यस पुस्तकमा भक्तपुरका सर्वोच्च देवता भैरवनाथलाई समेत नवदुर्गा गणकै रूपमा पूजा चलाइने नयाँ कुरा उल्लेख गरिएको छ । लेखकले यसको उदाहरण बिस्केट जात्राको बेला भैरवनाथको रथ तान्ने आठवटा डोरी अनि लिङ्गो ठड्याउन त्यसमा बाँधिने आठवटा डोरीलाई अष्टमातृकाको प्रतीकका रूपमा र ती आठवटा डोरी र लिंग बीचको संख्यात्मक

विशिष्टतालाई एकीकृत रूपमा सर्वोच्च देवी नवदुर्गा भवानीको प्रतीकको रूपमा दर्शाउन खोजेका छन् ।

आठवटा डोरीलाई अष्टमातृकाको प्रतीक मानेपछि त्यसको एकीकृत शक्तिले तानेपछि आकाश भैरव वा विश्वनाथ भैरवको लिंगो ठड्निे गरिन्छ । लिंगोका टुप्पामा एक जोडी ध्वजा पनि सोही नाम विशेषताका आधारमा विश्वध्वजा वा विश्वकेतु वा वीरध्वजा नामले प्रचलित रहँदै आएको कुरा ध्वजा अभिलेख प्रमाणका आधारमा समेत थाहा हुन्छ । लिंगो उभ्याउने र ढाल्ने दुईदिने जात्रा विशेष गरेर पूर्वमध्यकालमा विश्वजात्रा नामले प्रख्यात रहेको र यसको पुष्टि हालसम्म प्राप्त प्रमाणका आधारमा यक्ष मल्लको ने.सं. ५६१ को टौमढी टोलको अभिलेखमा परेको छ । ने.सं. ५०० को नेवारी ग्रन्थ अमरकोषमा 'विश्वकेतु' शब्दको पर्याय 'बिसिक' दिइएको भेटिन्छ । अनि ने.सं. ६४१ को भूमि सम्बन्धी एउटा तमसुक ताडपत्रमा 'बिसक जात्रा' त्यस्तै क्रमशः भक्तपुर राजदरवारस्थित ने.सं. ८०८ र ने.सं. ८१८ को जितामित्र मल्ल र भूपतीन्द्र मल्लका अभिलेखहरूमा "बिस्क्यात" शब्द उल्लेख छ ।

यसरी प्रारम्भमा दुई दिन मात्र हुने उक्त जात्रा मल्लकालको अन्त्यतिर आइपुग्दा यसमा अनेक उपजात्राहरू विभिन्न कालका राजाहरूद्वारा थपिंदै गएपछि यो जात्राले आठ रात नौ दिनको लामो जात्राको रूप लिन पुगेको कुरा प्रस्तुत पुस्तकमा उल्लेख गरिएको छ । तर कुन–कुन राजाका पालामा के के उपजात्राहरू थपिए ? ती उपजात्राका जात्रा विधानहरू के के हुन् ? आदि बारे स्पष्ट पारिएको छैन ।

**रवि चालिसे**,*हाम्रा चाडपर्व,* काठमाडौं : सूचना विभाग, वि.सं. २०३९, पृ.सं. १०७+ ८ ।

रवि चालिसेद्वारा लिखित र श्री ५ को सरकार सूचना विभाग काठमाडौँद्वारा वि.सं. २०३९ मा प्रकाशित *हाम्रा चाडपर्व* नामक पुस्तकमा पनि बिस्केट जात्राको बारे छोटो चर्चा गरिएको छ । प्रस्तुत पुस्तकको पहिलो अध्यायमा नै नववर्ष र बिस्केट जात्रा शीर्षकमा बिस्केट जात्राको सामान्य जानकारी गराउने प्रयास गरिएको छ । विशेष गरेर विक्रम सम्वत् अनुसार नववर्षको पहिलो दिन वैशाख १ गते देशका विभिन्न ठाउँमा विभिन्न जात्रा, उत्सव, मेला लाग्ने गरेको र त्यस्ता उत्सवहरूमा सबैभन्दा प्रख्यात उत्सव वा जात्रा भक्तपुरको बिस्केट जात्रा हो भनिएको छ । यस पुस्तकमा एउटा मह□वपूर्ण कुरा के लेखिएको छ भने यो बिस्केट जात्रा निश्चित् रूपमा भक्तपुरमा मनाइने भएपनि यो नेपाली मात्रका लागि

मह□वपूर्ण मानिएको छ । किनकि यो जात्राको हाम्रो सांस्कृतिक जीवनमा मह□वपूर्ण स्थान छ । यसैकारण बिस्केटको लिंगो ढालेको नहेरी कुनै नेपालीको मृत्यु भएमा चित्रगुप्तको दरवारमा पनि प्रश्न सोधिन्छ रे – तैंले बिस्केटको जात्रा हेरेको छस् ? यसरी मृत्युपश्चात् यमलोकमा सोधिने यस धारणाले गर्दा यो अधिराज्य भर सबै जाति र वर्गको पर्व जनाउँछ । अझ त्यसमाथि क्षेत्री बाहुन (नेवारेत्तर) समाजमा चलेको वैशाख संक्रान्तिका दिन शिवपुरी शिखरस्थित बागमतीको उद्‌गम बागद्वार र टोखा नजिक सपनतीर्थमा स्नान–पूजा गरेर अनि मध्यान्हमा बिस्केट जात्रा हेर्न जाने चलनले पनि यस पर्वलाई केवल एक स्थान र एक समाजको घेरामा रहन नदिएर राष्ट्रिय पृष्ठभूमिमा देखाउँदछ भनी यसलाई राष्ट्रिय पर्वको रूपमा प्रस्तुत गर्न खोजिएको छ ।

यस पुस्तकमा बिस्केट जात्राको उत्पति कसरी भयो भन्ने सम्बन्धमा अन्य पुस्तकहरूमा पहिले नै उल्लेख भइसकेका किम्बदन्तीहरूलाई नै आधार बनाइएको छ अर्थात् राजकुमारीको नाकबाट निस्कने एक जोडी नागनागिनीलाई एक परदेशी युवकद्वारा मारिएपछि नै यस जात्राको प्रचलन शुरु भएको वा एकजना स्थानीय तान्त्रिक र उनकी पत्नीको आफ्नै कारणले नागनागिनी भई आत्महत्या गर्नु परेको दारुणिक घटना स्मरण गर्न यो जात्रा मनाउने प्रचलन शुरु भएको भनिएको छ । तर यी किम्बदन्ती नै हुन्, जसमा कुनै सत्यता छैन किनकि यो नागनागिनीसँग सम्बन्धित जात्रा नै होइन । यसको स्पष्ट प्रमाण के छ भने बिस्केटको लिंगोमा फहराइने एक जोडी ध्वजालाई नागनागिनीको प्रतीक भन्ने आधारमा यसमा उल्लेख गरिएको जुन वर्णन छ, त्यो सत्य होइन किनकि त्यस ध्वजामा नागनागिनीको कुनै संकेतसम्म पनि पाइँदैन । बरु त्यसमा आकाश भैरवको चित्र अंकित भएकोले त्यसलाई वीरध्वजा वा विश्वध्वजा आदि भन्ने गरिएको आधारमा यो जात्रा विश्वनाथ भैरवको जात्रा हो भन्ने स्पष्ट हुन्छ ।

अतः सर्प मरेको घटनासँग गाँसिएर यस जात्राको जुन परिभाषा गरिएको छ, अर्थात् बी–स्याको (सर्प मार्नु) शब्दको अपभ्रंश भएर नै बिस्केट भएको भन्ने लेखकको धारणा तथ्यपरक लाग्दैन । यसैले प्रत्येक वर्ष बिस्केटको मैदानमा दुईवटा लिंगो ठड्याई त्यसका टुप्पामा (ठुलो सर्प) का प्रतीक स्वरूप दुईवटा विशाल सर्प ध्वज झुण्ड्याई प्रदर्शन गरिन्छ भन्ने भनाइ वास्तविकतासँग मेल खाँदैन । अर्को कुरा यसमा दुईवटा लिंगो उभ्याइन्छ भनेर उल्लेख गरिएको भएतापनि वास्तवमा एउटा मात्र लिंगो उभ्याइन्छ र त्यही लिंगो नै जात्राको मुख्य आकर्षण हुन्छ ।

**हरिराम जोशी**, *नेपालका चाडपर्व,* ललितपुर : जोशी रिसर्च सेन्टर, वि.सं. २०६०, पृ.सं. ३०८+ ८ ।

संस्कृतिविद् हरिराम जोशीद्वारा लिखित र जोशी रिसर्च सेन्टर ललितपुरद्वारा वि.सं. २०६० मा प्रकाशित प्रस्तुत पुस्तक *'नेपालका चाडपर्व'*मा नेपालमा मनाइने ७१ वटा चाडपर्व, जात्रा उत्सवहरूको विवेचना गरिएको छ, जसमध्ये अधिकांश उपत्यका र त्यस वरपर मनाइने चाडपर्वहरू मात्र छन् ।

यस पुस्तकको प्रारम्भमा नै (पृ.सं. १४–१७ मा) बिस्केट जात्राको उत्पति सम्बन्धमा पनि विवेचना गरिएको छ । यस सन्दर्भमा लेखकले नेवारहरूका प्रायःजसो जात्रापर्वहरू चान्द्रमान अनुसार संचालन हुने तर अपवादको रूपमा यो बिस्केट जात्रा चाहिं सौर्यमान अनुसार विक्रम संवत्को वर्षको अन्तिम दिन (चैत्र मसान्तको दिन) लिंगो उभ्याएर त्यसको भोलिपल्ट नववर्षको पहिलो दिन (वैशाख संक्रान्तिको दिन) लिंगो ढालेर जात्रा सम्पन्न गरिने भएकोले कहीं नेपालमा विक्रम संवत्सँगै यो जात्राको पनि प्रारम्भ भएको हो कि भन्ने अनुमान गरेका छन् । यदि यसो हो भने यो जात्राको प्रचलन निक्कैपछि मात्र शुरु भएको देखिन्छ किनकि लिच्छवीकालीन अभिलेखहरूबाट प्राचीन समयमा यहाँ शक संवत् चलेको भन्ने देखिन्छ र शक संवत् ८०१ (विक्रम संवत् ९३७) पुगेपछि नेपालमा नेपाल संवत् प्रारम्भ भयो, जुन संवत् मल्लकालभरि प्रचलित रह्यो । (यी दुवै सम्बत् चान्द्रमान अनुसार चल्ने गर्दछ ।) मल्ल शासनकालपछि मात्रै विक्रम संवत्को प्रचलन शुरु हुन लागेकोले लेखकको उल्लेखित अनुमान गलत देखिन्छ ।

त्यस्तै पुरातन व्यवस्थाको अन्त्य भइ नयाँ व्यवस्था थालनी भएको खुसीयालीमा यो जात्रा मनाउन थालिएको भन्ने तर्क पनि उहाँले यस पुस्तकमा दिनु भएको छ । विशेष गरेर मातृसत्ताको अन्त्य भएर पितृसत्ता स्थापना भएको अर्थात् प्राचीन समयमा हिमाली भेगका अन्य राज्यहरूमा जस्तै यहाँपनि स्त्रीको शासन चलेको थियो । स्त्रीको हातबाट शासन सत्ता फुत्काउन अनेक प्रयास भएको, यसका लागि महारानीसँग सुहागरात बिताउन जाने हरेक पुरुषको मृत्यु हुने र अन्त्यमा महारानीको शक्तिको स्रोतको रूपमा रहेको एक जोडी नागनागिनीलाई एक परदेशी पुरुषद्वारा मारिदिएपछि यहाँ पितृसत्ता स्थापना भएको र त्यसै खुसीयालीमा यो जात्रा मनाउन थालिएको भन्ने तर्क पनि दिनु भएको छ । अर्थात् मातृसत्ताको लासमाथि उठेको पुरुष सत्ताको प्रतिरूप नै यो बिस्केट जात्रा हो भन्न

खोजिएको देखिन्छ । तर यदि यो जात्राको प्रचलनलाई मातृसत्ताको अन्त्यको प्रतिरूप मान्ने हो भने जात्राकै दौरानमा अष्टमातृका देवीगणहरूको स्थानीय जात्राहरू किन गरियो ? मल्लकालीन राजाहरूले श्री श्वेतदेवी, मानेश्वरी, तुलजाभवानी, दुमाजुदेवीहरूलाई किन आफ्ना ईष्टदेवीको रूपमा मान्न थाले ? नवदुर्गा भवानीलाई किन सबैले आजसम्म पनि मातृशक्तिको रूपमा पुज्ने गरे ? आदि प्रश्नहरू खडा हुन्छन् ।

यसका अतिरिक्त प्रस्तुत पुस्तकमा लेखकले यस जात्राको उत्पति सम्बन्धमा एउटा अर्को तर्क के राख्नु भएको छ भने नेपालमा प्राचीनकालदेखि नै शक संवत् व्यवहृत थियो । शक संवत् ८०१ ताका शंखधर भन्ने एक जना व्यक्तिले नेपाल संवत् चलाए । यस पछि मध्यकालको पूर्वाद्धमा आएर विक्रम संवत् प्रचलनमा ल्याइएको थियो । यो संवत्मा नववर्षको थालनी सौर्यमान अनुसार वैशाख १ गते हुने हुन्छ । जबकि शक संवत् एवं नेपाल संवत्मा नववर्षको थालनी चान्द्रमान अनुसार हुने हुन्छ । यसैले चान्द्रमानको बदला सौर्यमान अनुसार चल्ने संवत् भनौं विक्रम संवत्को प्रचलन नेपालमा भएको उपलक्ष्यमा सो संवत्को नववर्षको आरम्भको दिन विगतमा प्रचलित संवत्लाई ढालेको प्रतीकको रूपमा लिंगो ढाली उत्सव मनाउने परम्परा चलेको हो । यसरी नेपालमा बिस्केट जात्राको प्रारम्भ भयो । तर लेखकको यो अनुमान पनि तर्कपूर्ण देखिंदैन । किनकि हाल पनि हाम्रो समाजमा नेपाल संवत् अस्तित्वमा नै रहेको, यस संवत् अनुसार नववर्षको पहिलो दिन म्हःपूजा गरेर भव्य रूपमा मनाउने अनि हाम्रा जति पनि सामाजिक संस्कार कर्महरू छन् ती सबै चन्द्रतिथि (चान्द्रमान) अनुसार गरिने भएकोले नेपाल संवत् प्रचलनबाट हटेको छैन । यसर्थ नेपाल संवत् ढालेर विक्रम संवत् प्रचलनमा ल्याएको उपलक्ष्यमा यो जात्रा मनाउन थालियो भन्ने भनाइ पनि सत्य देखिंदैन ।

**सत्यमोहन जोशी**,*नेपाली चाडपर्व,* काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३९, पृ.सं. १३८ + १६।

संस्कृतिविद् सत्यमोहन जोशीद्वारा लिखित र नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान काठमाडौँद्वारा वि.सं. २०३९ सालमा प्रकाशित *नेपाली चाडपर्व* नामक पुस्तकमा नेपाल उपत्यकामा हरेक वर्ष मनाइने बीसवटा प्रमुख चाडपर्वहरूको वर्णन गरिएको छ । प्रस्तुत पुस्तकको नववर्ष र बिस्केट जात्रा शीर्षकको अध्यायमा नेपालको राष्ट्रिय संवत्को रूपमा रहेको विक्रम संवत् अनुसारको नववर्षको पहिलो दिनको मह□व र त्यस दिन कुन–कुन ठाउँमा मेला लाग्दछ भन्ने सन्दर्भमा नै भक्तपुरको बिस्केट जात्राको सामान्य चर्चा गरिएको

छ । विशेष गरेर बिस्केट जात्राको उत्पत्ति सम्बन्धमा राजा शिवदेवको पालाको भनिएको प्रसिद्ध तन्त्रविद् शेखर आचार्य र उनकी पत्नी नररूपा सम्बन्धी लोकोक्ति प्रस्तुत गरिएको छ । बिस्केटको अवसरमा भक्तपुरमा लिंगो उभ्याउने र ढाल्ने अनि भैरव–भद्रकालीको रथजात्रा, ठिमीमा बालकुमारी जात्रा, बोडेमा जिब्रो छेड्ने जात्राबारे सामान्य प्रकाश पारिएको छ, । साथै उपत्यकाका तीनवटै शहरका पुराना राजप्रासाद रहेका ठाउँमा प्रतिस्थापन गरि राखेको दुमाजु देवीहरूको खटजात्रा हुने कुरा पनि यसमा उल्लेख गरिएको छ । यसरी यो एउटा सामान्य वर्णन मात्र भएको, यसमा नयाँ कुरा केही नभएको, स्रोत सामग्रीहरू नखुलाइएको हुनाले यसले प्रस्तुत जात्राका सम्बन्धमा केवल सामान्य जानकारी मात्र दिन सक्दछ ।

### १.४.३ लेखहरू

**केदारनाथ प्रधान**, "भक्तपुरको बिस्केट जात्रा र यसको प्राग ऐतिहासिक मह□व", *प्राचीन नेपाल,* संख्या १०९ (पुष–माघ २०४५)

केदारनाथ प्रधानद्वारा लिखित र पुरात□व विभागद्वारा प्रकाशित प्राचीन नेपालको संख्या १०९ (२०४५ पुष–माघ अंक) मा "भक्तपुरको बिस्केट जात्रा र यसको प्राग ऐतिहासिक मह□व" शीर्षकको लेखमा बिस्केट जात्राको प्राचीनतालाई किम्बदन्ती र अनुश्रुतिका आधारमा प्राग ऐतिहासिक कालसम्म पुऱ्याउने प्रयास गरिएको छ ।

यस्तो आधारलाई विश्वास गर्न सकिँदैन, त्यसो भए पनि विगतमा तिनकै आधारमा स्वदेशी, विदेशी विद्वानहरूले नेपालको इतिहास लेख्न पुगेका छन् । तर केही समय यतादेखि अनुश्रुतिका सही र गलत पक्षबारे विश्लेषण हुन थालेका छन् र यसै सन्दर्भमा बिस्केट जात्राको पनि विश्लेषण गर्ने प्रयास यसमा गरिएको छ ।

प्रस्तुत लेखको विषय प्रवेशमा नै लेखकले यो लेख बिस्केट जात्रा सम्बन्धी पूर्ण र समग्र लेख होइन र यसलाई मुख्यतयाः प्राग ऐतिहासिक चर्चामा सीमित गरिएको छ भनिएबाट यस लेखले बिस्केट जात्राको समग्र पक्षलाई नभएर कुनै एउटा पक्ष (ऐतिहासिक पक्ष) लाई मात्र समेट्न सकेको देखिन्छ । बिस्केट जात्रा सम्बन्धी प्रचलित विभिन्न अनुश्रुतिहरू मध्येको मुख्य दुईवटा अनुश्रुतिलाई उल्लेख गरी विवेचना गरिएको छ ।

पहिलो अनुश्रुति अनुसार भक्तपुरका प्रसिद्ध तन्त्रविद् शेखर आचार्य र उनकी पत्नी नररूपाले आफ्नै जिद्दीपनको कारणले गर्दा अजिंगर अजिंगरनी (नागनागिनी) भएर आत्महत्या गर्नु परेको र त्यसैको सम्झनामा यो जात्राको प्रचलन शुरु भएको भनिएको छ ।

दोस्रो अनुश्रुति राजकुमारीको नाकबाट निस्कने एक जोडी नागनागिनीलाई एक परदेशी राजकुमारले मारेपछि त्यसैको सम्झना स्वरूप यो जात्रा मनाउन थालिएको भन्ने भनाइ सित सम्बन्धित छ ।

यसरी उल्लिखित दुवै अनुश्रुतिको विवेचना गर्दा दुवैमा जात्राको सम्बन्ध नाग दम्पतीको मृत्यु र लाससित रहेको र तिनै लासलाई सार्वजनिक प्रदर्शन गर्ने र प्रदर्शन स्थल एउटै रहेकोमा सामन्जस्यता देखिए पनि जात्रा उत्पतिको घटना, समयकाल आदिमा भने भिन्नता रहेको देखिन्छ । पहिलो अनुश्रुति लिच्छवी राजा शिवदेव द्वितीयको पालामा भएकोले यो लिच्छवीकालको भएको र दोस्रो अनुश्रुति त्यसभन्दा पनि पुरानो प्राग ऐतिहासिक कालको अनुमान हुन्छ । साथै पहिलो भन्दा दोस्रो अनुश्रुति जात्राको परम्परासित मिलेको देखिन्छ भनिएको छ । किनकि नाग दम्पतीको लास टौमढी टोलबाट योसिंख्यः मा लाने, खड्ग वा चुपी प्राप्त भएको ठाउँलाई अद्यावधि चुपींघाट भन्ने गरेको र त्यहाँ स्नान गर्नुपर्ने, राजकुमारले बुढी भेटेको स्थाननेर लिंगो उभ्याउने जस्ता परम्परा मिल्नुले यी कुराको पुष्टि हुन्छ भनिएको छ ।

अनुश्रुतिमा वर्णित नाग दम्पतीको अहं भूमिकाले ती नाग अन्य कुनै जातिका नभएर मानव जातिकै हुनुपर्ने संभावना औंल्याउँदै नेपालमा प्रकृति पूजाको रूपमा गाई, गोरु, चन्द्र, सूर्य, बरपीपल, तुलसी जस्तै नागलाई पनि मान्ने गरिन्छ भन्दै ती जीव प्राग ऐतिहासिककालीन मानवका विभिन्न शाखाका परिचय वा गण चिन्ह हुन् भनिएको छ । त्यसबेला नाग पशु नभएर मानव नै रहेको तथ्य निम्न उदाहरणबाट स्पष्ट हुन्छ । जस्तो – नागसित युद्ध र विवाह, महाभारतकालका परिक्षितलाई नागमानवले बचाएपछि सोही घटनाको सम्झनामा नाग पंचमी पर्वको शुरुवात भएको, बुङमतीमा कर्कोटक नागले मानवको रूप लिनु, मानवले जस्तै बोल्नु, मत्स्येन्द्रनाथको जात्रामा देखाइने नागले दिएको रत्न जडित भोटो मानवले लगाउने खालको हुनु आदि प्रसङ्गबाट नाग पशु जातिका नभएर मानव जातिको रहेको कुरा अझ बढी स्पष्ट हुन्छ ।

अनुश्रुतिमा राजाको उल्लेख भएता पनि मुख्य पात्र नारी रहेको र उनी राजाकी छोरी नभएर नाग जातिकी नायिका वा छोरी हुन् भनिएको छ । नाग जाति भित्र संभवतः आन्तरिक संघर्ष भएको, जसमा मारिएको नागदम्पती एउटा पक्षको र परदेशी राजकुमारलाई राजकुमारीको रहस्य र खड्गबारे बताउने वृद्धा अर्को पक्षको हुनु र यी दुई भिन्न समूहका बीच संघर्ष भइ एउटा पक्षले राजकुमारीसित मिली अर्को पक्षका विरुद्ध

प्रतिरोध संघर्ष चलाएको र त्यस प्रतिरोधलाई संभवत अर्को पक्षका वृद्धाले नयाँ जातिका एउटा पुरुष (परदेशी राजकुमार) लाई पहिलो पक्षको गोप्य सूचना एवं हतियार (खड्ग) समेत उपलब्ध गराइ पहिलो पक्षलाई सहयोग गरेको हुनुपर्छ । नयाँ जातिका राजकुमारले समाजको हैकम प्राप्त गरेपछि नाग जातिले पुनः संघर्ष चलाउने साहस नगरुन् भनी आतङ्कित पार्न विद्रोहीको गति यस्तै मृत्यु हुन्छ भनी सार्वजनिक प्रदर्शन गरेको हुन सक्ने अनुमान हुन्छ भनिएको छ । वास्तवमा खोज र अनुसन्धान गर्दै जाने हो भने नाग जातिको अस्तित्वका थुप्रै प्रमाणहरू भेटिने छन् । संभवतः काठमाडौं उपत्यकाका विभिन्न देवदेवीहरूको रथयात्रा र कतिपय नृत्यहरू पनि भक्तपुरको बिस्केट जात्रा जस्तै नाग जातिसित सम्बन्धित रहेको र तिनको उत्पति स्रोत प्राग ऐतिहासिककाल हुन सक्ने अनुमान यसमा गरिएको छ ।

यसरी प्रस्तुत लेखमा जात्रा उत्पति वा जात्राको ऐतिहासिकताबारे स्थानीय समाजमा परापूर्व कालदेखि प्रचलित अनुश्रुतिलाई आफ्नै ढंगले विवेचना गरेपनि त्यसलाई पुष्टि गर्न लेखकले तर्क बाहेक ऐतिहासिक प्रमाण प्रस्तुत गर्न सकेका छैनन् । साथै त्यस बेला समाजमा स्वच्छन्द यौन सम्पर्क हुने गरेको भावलाई सांकेतिक अर्थमा अहिलेका विविध देवीदेवताको पूजा र जात्रा उत्सवहरूले पुष्टि गरिरहेका छन् भनिएको छ । तर त्यसबेलाका जात्राहरूले अहिलेसम्म निरन्तरता पाएका उदाहरण पाइँदैन ।

**तीर्थलाल नःघःभनी (राजभण्डारी)**, "भक्तपुरको लिंगो जात्रा", *अभिलेख,*वर्ष १६, अंक १६, (वि.सं. २०५५)

तीर्थलाल नःघःभनी (राजभण्डारी)द्वारा लिखित र राष्ट्रिय अभिलेखालय काठमाडौँद्वारा प्रकाशित अभिलेख वर्ष १६, अंक १६ मा "भक्तपुरको लिंगो जात्रा" शीर्षकको एउटा लेख छापिएको छ । नेपालमा अहिलेसम्म प्रकाशित वंशावलीहरूमा सबैभन्दा प्रामाणिक र भरपर्दो वंशावली गोपालराज वंशावली भएको र त्यस वंशावलीमा नेपालको प्राचीन कालदेखि विशेष गरेर गोपालवंश देखि जयस्थिति मल्लको पालासम्मका ऐतिहासिक घटनाहरू लिपिबद्ध छन् र यहाँ सोही वंशावलीको मूल पत्रसंख्या २६ (ख) र २७ (क) मा वर्णित "जौराजिनी श्री बिरमदेवीनाकृ(त्य) एन्द्रकूट सम्बच्छर चारिसय चबुद्रह । वैशाख मासः तस्य पुत्र श्री जयशक्ति देवनः एन्द्रकुट ध्वज मारोहनम् ॥" लाई आधार मानेर लेखकले बिस्केट जात्राबारे बिश्लेषणात्मक ढंगले आफ्ना तर्कहरू प्रस्तुत गरेका छन् ।

माथि उल्लेखित संस्कृत मूलपाठको नेपाली सांराशको भाव यस्तो हुन्छ । ने.सं. ४१४ अर्थात् वि.सं. १३५१ वैशाख महिनामा युवराज्ञी श्री बिरमदेवीले इन्द्रकुट बनाइन् र तिनका छोरा (नवयुवराज) श्री जयशक्तिदेवले इन्द्रकुट ध्वजको आरोहण गरे । सोही वंशावलीको पृष्ठ संख्या ४३ को आधारमा युवराज्ञी बिरमदेवी युवराज आदित्यकी रानी तथा राजा भीमदेवमल्लकी बुहारी थिइन् भने जयशक्तिदेव युवराज आदित्यका छोरा तथा राजा भीमदेवमल्लका नाति थिए भन्ने देखिन्छ । अनि उक्त वंशावलीकै ५२ पृष्ठका आधारमा ने.सं. ४१३ (वि.सं. १३५०) फागुणमा आदित्यमल्ल स्वर्ग भएपछि उनकी पत्नी तथा युवराज्ञी बिरमदेवीले आफ्ना पतिको नामबाट इन्द्रकुट (इन्द्रडाँडा) बनाइन् । आदित्य पनि इन्द्र कै एउटा नाम भएकोले पछि त्यसै डाँडामा उनका छोरा जयशक्तिदेवले आफ्ना बाबुको नाम कीर्ति फहराउने हेतुले इन्द्रकुट ध्वजारोहण गरे अथवा इन्द्रध्वज गाडे । यसैको स्मृतिमा वर्षेनी लिंगो उभ्याउने परम्परा चलिआएको हो भन्ने प्रतीत हुन्छ भनिएको छ । तर वैशाखमा उभ्याउनु पर्ने लिंगोलाई चैत्र मसान्तमा उभ्याई वैशाख संक्रान्तिमा ढाल्नुको पछाडि गौतम पुराण र मनुवचनलाई आधार बनाइएको छ । साथै यस ध्वजालाई शक्रध्वज, देवध्वज, महेन्द्रध्वज, ऐन्द्रध्वज आदि नामले पनि पुकारिएको र लिच्छवीकालको अभिलेख ग्रन्थको पृष्ठ संख्या ५९ को टेबहाल अभिलेखका आधारमा भगवान इन्द्रको नाम दिवाकर (सूर्य) पनि भएको र सूर्यको नाम विश्व पनि भएको र यही सूर्यले मेष राशिदेखि मीन राशिसम्म १२ राशि चाहारिंदा एक वर्ष लाग्छ र यही परिक्रमालाई बिश्वयात्रा भनिएको भन्ने उहाँको तर्क छ । मेष राशिदेखि यात्रा गरिने हुँदा सालभर अनिष्ट, अनिकाल, दुर्भिक्ष नहोस् भन्ने हेतुले संक्रान्तिका दिनमै इन्द्रध्वज ढाल्ने र विश्व (सूर्य) चैत्र मसान्त (मीन राशि अन्त्य) सम्म निर्विघ्नपूर्वक यात्रा समाप्त गरिने हुँदा खुसीयालीको रूपमा शक्र ध्वजोत्थान गरी आएको हो भन्ने ज्ञात हुन्छ भनिएको छ ।

अर्को कुरा गौतमी पुराणमा "बिश्वयात्रांया ध्वजस्योत्थान भनिएको तात्पर्य सूर्य मीन राशिबाट मेष राशिमा पर्दापण गर्ने बेला ध्वजा गाड्नु अर्थात् लिंगो गाड्नु भनेको र सूर्य मीन राशिबाट मेष राशिमा प्रवेश गरिनेलाई विश्वयात्रा भनिएको भन्ने प्रष्ट हुन आएकोले विश्वयात्रामा उभ्याउने ध्वजालाई विश्वकेतु भनिएको हो ।

तर जयशक्तिदेवले ने.सं. ४१४ वैशाखमा उभ्याउने गरी इन्द्रध्वज प्रतिस्थापित गरेकोलाई गौतमी पुराण तथा राजमार्तण्डका आधारमा सूर्य मीन राशिबाट सर्ने दिन (चैत्र

मसान्तमा) लिंगो उभ्याउने र मेष राशिमा प्रवेश भएको दिन (वैशाख संक्रान्तिमा) ढाल्ने गरी परिवर्तन कसले किन र कहिले देखि गरेको थाहा हुनसकेको छैन भनिएको छ ।

यसप्रकार यस लेखको मूलभाव के देखिन्छ भने भक्तपुरको लिंगो जात्रा मूल रूपमा इन्द्रध्वज जात्रा हो । तर अब यहाँनेर प्रश्न के उब्जन्छ भने गोपालराज वंशावलीमा स्पष्ट शब्दमा "ऐन्द्रकूट ध्वज मारोहनम्" भनी उल्लेख भएकोले यो ध्वज भगवान इन्द्र अथवा इन्द्रजात्रासँग सम्बन्धित ध्वज भन्ने देखिन्छ, जुन जात्रा हरेक वर्ष भाद्र महिनामा काठमाडौँका अतिरिक्त भक्तपुरमा पनि अद्यावधि प्रचलित छ । तर यस लेखमा लेखकले बलजफ्ती आफ्नै तर्कहरू अघि सारेर इन्द्रध्वज नै भक्तपुरको विश्वनाथ भैरवको ध्वज भएको निस्कर्ष निकाल्नु भएको छ । यसरी भक्तपुरको प्रसिद्ध बिस्केट जात्रालाई देवराज इन्द्रसँग सम्बन्धित जात्रा ठहर गरेर तथ्यलाई बंग्याउने प्रयास गरिएको देखिन्छ । तर यसमा एउटा मह□वपूर्ण कुरा के उल्लेख गरिएको छ भने जनमानसमा प्रचलित किम्बदन्ती जेसुकै भएपनि यो जात्रा कदापि नागनागिनीसँग सम्बन्धित छैन ।

**पुरुषोत्तम लोचन श्रेष्ठ**, "भक्तपुरमा वीर शैव मतको विकास र प्रभाव", *खोपृङ*,वर्ष ८, अंक ८ (वि.सं. २०५६)

पुरुषोत्तम लोचन श्रेष्ठद्वारा लिखित र भक्तपुर विकास सहयोग संघ काठमाडौँद्वारा वि.सं. २०५६ मा प्रकाशित खोपृङ ८–८ स्मारिकामा प्रस्तुत गरिएको "भक्तपुरमा वीर शैव मतको विकास र प्रभाव" शीर्षक लेखमा नेपालमा शैव धर्म मान्ने विविध सम्प्रदायहरूमध्येको एउटा सम्प्रदाय वीर शैव सम्प्रदायबारे विस्तृत चर्चा गरिएको छ । यस सम्प्रदायलाई लेखकले आफ्नो शरीरमा शिवलिङ्ग धारण गर्ने अर्थात् लिंगायत मतालम्बी भनेका छन् र विश्वयात्रा पनि वीर शैव सम्प्रदायसँग सम्बन्धित जात्रा भएको तथ्य यस लेखमा उल्लेख गरेका छन् । यस परिप्रेक्ष्यमा भक्तपुर टौमढी टोलस्थित जङ्गम मठ वीर शैवहरूको प्रमुख मठको रूपमा प्रसिद्ध रहेको र यिनीहरूका आचार्यलाई जङ्गम वा लिंगो ब्राम्हण भनिन्छ भनिएको छ ।

नेपालमा वीर शैव मत कहिलेदेखि चलेको थियो भन्ने कुरा थाहा पाउन नसकिएता पनि भारतमा भने यो मत विक्रमको सातौं शताब्दीतिर लोकप्रिय थियो र दक्षिण भारत यस मतको प्रमुख प्रचार स्थलको रूपमा रहेको बुझिन्छ । त्यसै शताब्दीमा नेपालमा पनि यो मत लोकप्रिय थियो वा त्यताको प्रभाव यता पनि परेको थियो भन्ने कुरा लेलेको शिवदेव

अंशुबर्माको संवत् ५२६ (वि.सं. ६६१) को अभिलेखमा विश्वेश्वर देवताको उल्लेख भएबाट स्पष्ट हुन्छ । किनकि विश्वेश्वर वा विश्वनाथलाई वीर शैवहरू प्रमुख देवताको रूपमा मान्दछन् । यद्यपि अंशुवर्मा धर्म सहिष्णु थिए तर व्यक्तिगत रूपमा उनी शिवका परम भक्त थिए, यसो हुँदा उनकै समयदेखि विशेष गरी शैव सम्प्रदायले राष्ट्रिय स्तर मै लोकप्रियता पाउँदै आएको सन्दर्भमा यस मत वा सम्प्रदायको उन्नति भइरहेको बुझिन्छ । विशेष गरी भक्तपुरको टौमढी टोल र त्यस आसपासका क्षेत्र (भैरवनाथ र जङ्गम मठ रहेको स्थान, विश्वजात्रा हुने स्थान अनि कुलमा, सुलमा र थलमा नामका शिवलिङ्गहरू आदि त्यस परिसरमा रहेको आधारमा) वीर शैव सम्प्रदायको विकास र लोकप्रियताको दृष्टिले मह□वपूर्ण मूल थलोको रूपमा रहेको बुझिन्छ । भैरवनाथ मन्दिर परिसरमा पाइएका केही अभिलेखहरूबाट त्यो क्षेत्र पछिसम्म पनि प्रसिद्ध शैव क्षेत्रको रूपमा रहेको बुझिन्छ । जस्तो कि संवत् ८८ कुँदिएको एउटा लिच्छवीकालीन अभिलेखमा कुनै एउटा दाताले पुण्य प्राप्तिका लागि ललित महेश्वरलाई ताम्रकलश दान गरेको कुरा परेको छ भने ने.सं. १२५ को निर्भय देवको पालाको अभिलेखमा देवस्थलको लागि खेत चढाएको कुरा परेको छ ।

मध्यकालमा धार्मिक सम्प्रदायहरूमा तन्त्र सिद्धान्तले प्रश्रय पाएकोले अनेक नामका भैरव मूर्तिहरू स्थापना भए । यसको एउटा उदाहरण टौमढीको भैरवनाथ पनि हो । यी भैरवनाथ काशी विश्वनाथकै रूप हो, जो विश्वनाथ भैरवका नामले आजपनि यहाँको लौकिक जीवनमा प्रसिद्ध छ । यी भैरवनाथको स्थापना विक्रमको तेह्रौं शताब्दीको पूर्वाद्धमा भक्तपुरलाई राजधानी नगरको रूपमा प्रतिस्थापित गर्ने राजा आनन्ददेवले गरेका हुन् भनी वंशावलीले उल्लेख गरे पनि पुरातात्विक प्रमाण पाइएको छैन । तर पनि पहिलेदेखि नै शैव क्षेत्रको रूपमा प्रसिद्ध रहँदै आएको त्यस क्षेत्रमा उनले भैरवनाथको स्थापना गरेका हुन् भन्ने कुरा अप्रत्यक्ष रूपमा अन्य प्रमाणहरूका आधारमा पनि थाहा हुन्छ । वीर शैव सम्प्रदायको प्रभावका कारणले यहाँका तात्कालीन शासकहरूले प्रचलित धार्मिक सांस्कृतिक गतिविधिलाई विस्तृत पार्दै लगे । विशेष गरेर भक्तपुर नगरको धार्मिक सांस्कृतिक गतिविधि एवं विकासमा यस सम्प्रदायको प्रत्यक्ष र अप्रत्यक्ष रूपमा अत्यधिक प्रभाव परेको दृष्टान्त विश्वजात्रा, घण्टाकर्ण, काशी जाने चलन आदिबाट स्पष्ट हुन्छ भनिएको छ ।

सातौं शताब्दीदेखि अनेक शैव सम्प्रदायहरू लोकप्रिय अवस्थामा रहेकाले नै अनेक शैव जात्राहरू पनि चलेका थिए । द्वारोद्घाटनजात्रा, कैलाशयात्रा यसका उदाहरण हुन् । लिंगो खडा गरी ध्वजोत्थान गरिने प्राचीन प्रमुख जात्राहरूमा इन्द्रजात्रा, हाँडीगाउँको जात्रा र भक्तपुरको

विश्वजात्रालाई उदाहरणको रूपमा लिन सकिन्छ । विश्वेश्वर देवताको नाम परेको शिवदेव अंशुवर्माको वि.सं. ६६१ को लेले अभिलेखमा विविध गोष्ठीका अतिरिक्त ध्वज गोष्ठीको पनि उल्लेख हुनआएको र ध्वजाको बन्दोवस्तका लागि खडा गरिएको ध्वज गोष्ठीको व्यवस्थाले लिंगोमा ध्वजा फहराइ जात्रा गर्ने चलन त्यसबेला लोकप्रिय थियो भन्ने कुरा यसबाट पनि थाहा पाइने हुनाले सातौं शताब्दीतिर नै यहाँ विश्वजात्रा लोकप्रिय रहेको जानिन्छ ।

वैशाख संक्रान्तिको दिनमा मनाइने विश्वजात्राका प्रमुख देवता लिंगो (विश्वनाथ भैरव) र त्यस लिंगोमा फहराइने एक जोडी ध्वजा विश्वध्वजा, वीरध्वजा, विश्वकेतु नामले प्रसिद्ध रहँदै आएको कुरा यस विषयका अभिलेखीय प्रमाणका आधारमा पनि थाहा हुन्छ । लिंगोमा फहराइने ती एक जोडी ध्वजा भैरव र शक्तिको प्रतीक मानिन्छ । यो कुरा लिंगो जात्रा हुने स्थान भद्रकाली पीठ नै रहेको आधारमा खुल्छ भनिएको छ ।

यसप्रकार यस जात्राको प्रमुख देवता विश्वनाथ भैरव (लिंगो) र लिंगोको टुप्पामा फहराइने ध्वजा पनि विश्वनाथ भैरवकै ध्वजाहरू हुन भन्ने आधारमा यस जात्राको नाम विश्वजात्रा रहन गएको पुष्टि हुन्छ । विश्वजात्रासँग जङ्गम मठको गहिरो सम्बन्ध रहेको तथ्य यसकारणबाट पनि थाहा पाइन्छ कि चुपींघाटमा लिंगो जात्रा सम्पन्न भइसकेपछि भैरवको रथ माथि ल्याउँदा जङ्गम मठभित्र स्थापित नन्दीसित बेताल सन्मुख भएपछि मात्र रथ लाने चलन हुनु अनि मकर संक्रान्तिमा मठभित्र वीरभद्र विश्वेश्वरलाई घिउले छोपेर राख्नु र पछिबाट शिवरात्रीमा त्यही घिउले रोटी पकाउनु र यसरी रोटी पकाउँदाको बेलाको गोल र वीरभद्रको जलले दही चिउरा मुछेर भैरवनाथको रथ तान्ने बेला (बिघ्न बाधा पन्छाउन) छर्ने चलन छ । साथै वैशाख संक्रान्तिमा लिंगो ढाल्ने विधान सकिएपछि जंगममठ अगाडि गा:हिटी टोलमा भैरव भद्रकालीको रथ जुधाउने जात्रा (समागम) चलाउँदा यो जात्रा नियन्त्रित रूपले संचालन होस् भन्नाका लागि जंगम मठबाट गुह्य विधि प्रयोगमा ल्याइएको हुन्छ । यसरी विश्वजात्रा सञ्चालनमा जंगम मठको तान्त्रिक दायित्व अत्यावश्यक र मह□वपूर्ण भएको तथ्य यसमा खुलाइएको छ ।

**विनोदराज शर्मा**, “भक्तपुरको बिस्केट जात्रा : जात्रा एक नाम अनेक”, *खोपृङ*, वर्ष १४, अंक १३, (वि.सं. २०६२)

विनोदराज शर्माद्वारा लिखित खोपृङ, वर्ष १४, अंक १३ मा प्रकाशित प्रस्तुत लेखमा भक्तपुरमा हरेक वर्ष मनाइने बिस्केट जात्राको नामकरण सम्बन्धमा विवेचना गरिएको छ ।

जात्रा एउटै भएता पनि यसलाई विविध नामद्वारा सम्बोधन गरिने तथ्यलाई यसमा प्रकाश पारिएको छ । जस्तो कि ख्वपः जात्रा, नववर्षारम्भ, विश्वजात्रा, विश्वकेतु, विशक जात्रा, विस्क्याट, बिस्केट वावैशाख संक्रान्ति, योसिंजात्रा आदि । यसरी उल्लिखित विविध नामद्वारा यस जात्रालाई सम्बोधन गरिएको भएपनि सबै भन्दा व्यापक अर्थ बोकेको नाम चाहिं विश्व जात्रा नै हो भन्ने धारणा लेखकको रहेको पाइन्छ किनकि व्यापक विश्व शान्तिको कामना गर्दै आयोजना हुने यात्रा (जात्रा) भएकोले यसको नाम विश्व जात्रा रहन गएको हो । यसका साथै जात्राको मुख्य आकर्षण ५५ हाते लामो लिंगोलाई विश्वनाथ भैरवको ध्वजाको रूपमा लिइने भएकोले यसलाई विश्वध्वजा पनि भन्ने गरिन्छ । यसको पुष्टि पंचाङ्ग पात्रो वा भित्तेपात्रोहरूमा 'विश्व ध्वजोत्थानम्' र 'विश्वध्वजापातनम्' भनी उल्लेख भएबाट हुन्छ । अर्को कुरा भक्तपुरको सम्पूर्ण सांस्कृतिक गतिविधिको मूल केन्द्र तलेजु मन्दिरमा बिस्केटको अवसरमा पर्व पूजा चलाउँदा मूल पुरोहित ब्राम्हण, जोशी, कर्माचार्य नाइकेहरूले संकल्प वाक्य लिंदा विश्व जात्रा महापावने भन्ने गर्छन् भनिएको छ । अभिलेखीय प्रमाणको रूपमा "विश्वयात्रा" को उल्लेख सर्वप्रथम यक्ष मल्लको ने.सं. ५६१ को टौमढी टोलको अभिलेखमा परेको छ । त्यस्तै ने.सं. ८०८ को जितामित्र मल्लको र ने.सं. ८१८ को भूपतीन्द्र मल्लको मालती चोकको अभिलेखमा बिस्क्यात शब्द उल्लेख भएको र पछिबाट अपभ्रंश भइ बिस्केट भएको हो भनिएको छ । बिस्केट नामकरणको पुष्टि केही अन्य शब्दबाट पनि हुन्छ भनिएको छ । जस्तो- वृषकेतु, विश्वकेतु, विषुवकेतु, विशक जात्रा आदि । विषुवकेतुको तात्पर्य सूर्यले मेष राशिमा योग गर्दा पृथ्वी विषुवत् रेखामाथि पुग्दछ । सोही विषुवत्बाट "विषुक केतु" भन्ने चलन विकास भइ बिस्केट भनेको वृषभ (वृष) को पताका हो भन्ने विचारलाई अगाडि सारेका छन् । तर कुनै पनि ऐतिहासिक प्रमाणहरूमा विषुव जात्रा भन्ने उल्लेख भएको पाइँदैन । त्यस्तै यस लेखमा लेखकले किम्बदन्तीहरूमा वर्णित नागनागिनीसँग सम्बन्धित र जनमानसमा प्रचलित विस्यातः शब्दबाट बिस्केट नामकरण भएको धारणा चाहिं असत्य र काल्पनिक भएको औंल्याएका छन्, जुन मह□वपूर्ण रहेको छ ।

**सत्यनारायण प्रजापति**, "बिस्केट जात्रा" *नेपाली संस्कृति,*वर्ष ५, अङ्क ३र वर्ष ६,अङ्क १, (वि.सं. २०४६)

श्री ५ को सरकार सांस्कृतिक संस्थान काठमाडौंबाट प्रकाशित नेपाली संस्कृति वर्ष ५, अंक ३ र वर्ष ६ अंक १ गरी दुई अंकमा सत्यनारायण प्रजापतिले बिस्केट जात्रा सम्बन्धी लेख प्रस्तुत गरेका छन् । ऋतु परिवर्तन हरेक चाडको एक विशेषता भएको र बिस्केट जात्रा

पनि ऋतु परिवर्तनसँगै (वसन्तका आखिरी र ग्रीष्मका आरम्भका दिनमा) मनाइने एक प्रमुख जात्रा हो भन्दै यसमा जात्राका समग्र पक्षलाई समेटेको नपाइएता पनि जात्राका प्रमुख देवीदेवता र विधिविधानबारे संक्षेपमा चर्चा गरिएको छ ।

यस जात्राको मह□वबारे चर्चा गर्दा जसले चैत्र महिनामा विश्वको पताका फर्फराउँछ र मेष संक्रान्तिका दिन सो उत्सव समाप्त गर्छ, त्यसको सबै दुःख नाश हुन्छ, शत्रुको क्षय हुन्छ भनिएको छ । यसरी अन्य जात्रा जस्तै यो जात्रा पनि जनमानसको धार्मिक भावनासँग सम्बन्धित छ भन्ने देखाउन खोजिएको छ ।

यस लेखमा उल्लेख भएअनुसार लिंगो ५५ हाते लामो सल्लाको रुखको हुन्छ । हरियो रुखका हाँगा बिँगा राखेर टाउको र हात बनाइन्छ । लिंगोको टाउको र हातमा आकाश भैरवको प्रतीक स्वरूप नीलो कपडाले बेरिन्छ र बायाँ कोखामा दुई ध्वजा गाँसिन्छ । यो ध्वजा नागनागिनीको प्रतीक हो भन्ने बलियो जनविश्वास भएपनि त्यसमा नागनागिनीको कुनै संकेत पाइँदैन बरु आकाश भैरवको चित्र अंकित छ ।यसैले यसलाई विश्वकेतु, विश्वध्वजा आदि भनिएको पाइन्छ । किनकि टौमढी टोलको भैरवलाई विश्वनाथ पनि भनिने भएकोले भगवान विश्वनाथको ध्वज भएकोले यसलाई विश्वध्वजा भनिएको हो ।

यसमा लिंगोवनबाट लिंगो ल्याउंदा गर्नुपर्ने विधि, लिंगो ल्याइसकेपछि लिंगोलाई भाले, पोथी वर्गीकरण गरी जीवन्यास दिने, तान्त्रिक जीवत्व प्राप्त गरेको लिंगोमा दांया बांया दुवैपट्टि चार–चारवटा डोरी राखी लिंगो उभ्याउने, लिंगो उभिएपछि नवदुर्गाका गठुहरू आई देवता फिर्ता लाने जस्ता रोचक कुराहरू उल्लेख गरिएका छन ।

काशीका विश्वनाथ भैरव कसरी भक्तपुरमा आइपुगे ? शरीर विनाको केवल शिर मात्रको भैरवनाथ भक्तपुरमा अनि शिर विनाको शरीर मात्रको विश्वनाथ काशीमा हुनु, त्यस्तै भक्तपुरका भैरवनाथका तीन रूप – महादेव, भैरवनाथ र नृत्यनाथबारे पनि यसमा उल्लेख छ । यस भन्दा पनि मह□वपूर्ण कुरा के हो भने बडादशैंको नवरात्रीको समयमा भैरवनाथलाई चक्रेश्वरीको रूपमा नवदुर्गा गण मध्ये एक गण मानी दशमीको दिनमा नवरथ गर्ने कुरा पनि यसमा उल्लेख छ ।

भैरवनाथपछि यस जात्राका दोस्रो प्रमुख देवता भनी वीर बेतालको चर्चा यसमा गरिएको छ । तर दोस्रो प्रमुख देवता भैरवकी शक्ति भद्रकाली हुनु पर्ने हो ।

जात्रा कसको पालादेखि भएको भन्ने सन्दर्भमा वंशावलीलाई आधार मान्दै जगज्योतिर्मल्ल (ने.सं. ७२६–७५३) को पालादेखि भएको साथै विश्वमल्ल (ने.सं. ६७०–७०५) को पालामा भएको पनि भनिएको छ । तर यक्षमल्लको ने.सं. ५६१ को विश्वयात्रा उल्लेख भएको शिलालेखलाई यहाँ नजरअन्दाज गरिएको छ ।

यसदेखि बाहेक प्रस्तुत लेखमा उल्लेख भएका धेरै तथ्यहरू हालका जात्राहरूमा देख्न पाइँदैन । जस्तो– जात्रा संचालनका लागि नभइ नहुने शाही तरवार सल्लाघारीबाट तलेजुभित्र लाँदा पाँचतल्ले मन्दिरको चार कुनामा रहेका जोर गणेशलाई परिक्रमा गरेर मात्र लाने परम्परा भएपनि त्यो अहिले हटिसकेको छ । त्यस्तै लिंगो ढालिसकेपछि भैरव भद्रकालीको रथ तानेर ल्याई गाःहिटीमा पुगेपछि रथ जुधाउने जात्रा सम्पन्न नगरेसम्म महाकाली–महालक्ष्मी, बटुकभैरव–जेठागणेशको जात्रा गर्न नमिल्ने परम्परा भएपनि त्यसको पालना हाल भइरहेको पाइँदैन । भैरव भद्रकालीको समागम नपर्खी आफू खुसी स्थानीय जात्राहरू गर्न थालिएको छ । जात्राको अन्तिम दिन द्यःथाहाँ बिज्याइगु कार्य सम्पन्न गर्न गाहिटीबाट भैरवको रथ तानेर ल्याई ऐंसामाढी सत्तल नाघिसकेपछि क्वने (तल्लो टोल) तिर तान्न पाइँदैन । देवतालाई रथबाट ओराल्दा रथको माझको ढोका र भैरवनाथ मन्दिरको उत्तरपट्टिको आँखीझ्याल सामुन्ने पारी ओराल्नु पर्दछ । तर सो विधान आज भोलि लागु भएको छैन । साथै लिंगो उभ्याइसकेपछि रथ तानेर श्री भैरवनाथ राज हुने भेलुखेल स्थित च्यासिंदेवलको सामुन्ने रथको माझको ढोका पारेर मात्र देवता तल ओराल्नु पर्दछ । कथंकदाचित राति मात्र लिंगो उठेमा कुनै उपायद्वारा देवता छोप्ने प्रबन्ध सरकारबाट हुँदै आएकोमा हाल त्यो पनि हटिसकेको छ ।

यस अतिरिक्त प्रस्तुत लेखमा जात्राको बेला थःने र क्वःने गरी समग्र भक्तपुर नगर क्षेत्रगत आधारमा दुई भागमा विभाजन हुने र जात्राको बेला थने (माथिल्लो टोल) मा भन्दा कोःने (तल्लो टोल) मा विशेष रौनकता हुन्छ भनिए पनि यस अध्ययनकर्ताको प्रत्यक्ष अवलोकनको आधारमा माथिल्लो टोलमा विशेष गरेर ब्रम्हायणी–महेश्वरी जात्रा वा महाकाली–महालक्ष्मी जात्राको बेला त्यतातिर पनि जात्राको रौनकता भव्य रूपमा देखिएकोले लेखकको भनाइ काल्पनिक जस्तो देखिन्छ ।

यसप्रकार प्रस्तुत लेखले वर्षेनी भक्तपुरमा हुने बिस्केट जात्राको समग्र पक्षलाई यथार्थ रूपले समेट्न सकेको देखिंदैन । तर पनि यस जात्राबारे सामान्य जानकारी लिन यस लेखले सहयोग गर्न सक्ने देखिन्छ ।

## १.५ शोधकार्यको औचित्य

बिस्केट जात्रा भक्तपुरको एउटा मह□वपूर्ण जात्रा हो । यो प्राचीनसमयदेखि यस समाजमा मनाइँदै आएको पाइन्छ । धार्मिक, सामाजिक, सांस्कृतिक विविध क्षेत्रमा मह□व राख्ने यस जात्रालाई एउटा परम्परागत आस्थाको रूपमा मात्र मनाइँदै आएको पाइन्छ । यसमा विभिन्न तन्त्रमन्त्र, विधिविधानको उपयोग गरिन्छ । सौर्य मासको प्रथम महिनाको पहिलो दिन नै मनाइने हुँदा प्राकृतिक रूपमा पनि यसको मह□व रहेको देखिन्छ । वैशाख १ गते मनाइने यस चाडको वास्तविक रहस्य खोजी गर्नु आवश्यक छ । यसमा अन्तरनिहित धार्मिक, सामाजिक, सांस्कृतिक, आर्थिक, पुरातात्विक, प्राकृतिक आदि अनेक पक्षको खोजी गर्दै यस जात्राको वास्तविक रहस्य उजागर गर्नु मह□वपूर्ण कार्य हो । यस कार्यले संस्कृति एवं धार्मिक क्षेत्रका अध्ययनकर्ता तथा शोधार्थीलाई मह□वपूर्ण सहयोग पुऱ्याउने छ । यसैले भक्तपुरमा मनाइने बिस्केट जात्रामा निहित विभिन्न पक्षलाई अनुसन्धान गर्दै यसको मह□वलाई उजागर गर्नु निश्चित् रूपमा औचित्यपूर्ण देखिन्छ ।

भक्तपुरका बहुसंख्यक बासिन्दा खेती किसानी गर्ने किसान (ज्यापू) हरू हुन् । नेवार समाजको सामाजिक मर्यादा क्रममा यी किसानहरू माथिल्लो स्थानमा नदेखिएता पनि समाजप्रति यिनीहरूको भूमिका, योगदान मह□वपूर्ण रहेको तथ्य भक्तपुरमा हुने प्रायः जसो चाडबाड, जात्रापर्वहरूमा यिनीहरूको सक्रिय सहभागिताबाट स्पष्ट हुन्छ अर्थात् कुनै पनि जात्रामा जात्राको वातावरण वा सांस्कृतिक माहौलको सृजना यिनीहरूबाटै भइरहेको हुन्छ । बिस्केट जात्रामा पनि खट बोक्ने, रथ तान्ने, लिंगो उभ्याउने, दाफा भजन गाउने, बाजा बजाउने, देवदेवीको आरती गर्ने जस्ता कार्यहरूमा यिनीहरू निक्कै उत्साह उमङ्गका साथ लागेका हुन्छन् । यसैकारण भक्तपुरका जात्रा अन्यत्रका जात्रा भन्दा बढ्ता सजीव र भव्य देखिन्छन् । भक्तपुरको संस्कृतिरूपी भवनको खम्बाको रूपमा रहेका यी किसानहरूकै मह□वपूर्ण भूमिकाका कारणले गर्दा परापूर्वकालमा जस्तो किसिमले जात्रा मनाइन्थ्यो, आज पनि त्यही रीतले मनाउँदैं आइरहेको पाइन्छ ।

यी माथि उल्लिखित तथ्यहरूका आधारमा भक्तपुरको बिस्केट जात्राको आफ्नै सांस्कृतिक परिवेश छ, आफ्नै मौलिक परम्परा र विविध विशेषताहरूले परिपूर्ण छ । जसले गर्दा यो जात्राको अस्तित्व आज पनि जीवन्त रहेको छ ।

यसप्रकार यो शोधकार्यको विषयवस्तु मह□वपूर्ण छ, रोचक छ । यसैले यो औचित्यपूर्ण पनि छ । किनकि यस शोध कार्यको अध्ययनबाट विश्व सम्पदा सूचीमा परेको भक्तपुरको कला, संस्कृति अन्तर्गतको एउटा प्रसिद्ध जात्रा बिस्केटलाई लोप हुनबाट जोगाइ यसको संरक्षण, सम्बर्द्धनमा मह□वपूर्ण योगदान पुग्नुका साथै यसबारे अध्ययन अनुसन्धान गर्न चाहने जो कोहीलाई पनि सघाउ पुग्नेछ भन्ने यस अध्ययनको मूल अभिप्राय हो ।

## १.६ शोध विधि

यस शोध कार्यलाई तथ्यमा आधारित र प्रामाणिक बनाउन निम्न लिखित सामग्री संकलन विधि र अध्ययन विधि प्रयोग गरिएको छ ।

### (१) सामग्री संकलन विधि

यसमा प्राथमिक र द्वितीयक (सहायक) गरेर दुई प्रकारका स्रोत सामग्रीहरू उपयोग गरिएको छ ।

### (क) प्राथमिक स्रोत

प्राथमिक स्रोत अन्तर्गत निम्न दुई समूहका स्रोतलाई समावेश गरिएको छ ।

अवलोकन विधि र अन्तर्वार्ता विधि

अप्रकाशित ग्रन्थहरूको अध्ययन

**अवलोकन**

जात्रा सम्पन्न हुँदा अपनाइएका विधिविधानदेखि लिएर सम्पूर्ण सांस्कृतिक गतिविधि अवलोकन प्रक्रियाबाट तयार गरिएको छ । शोधकार्यलाई बढी प्रामाणिक बनाउन यस सम्बन्धी सहायक सिद्ध हुने अवलोकनका तस्बिरहरू पनि प्रस्तुत गरिएका छन् ।

**अन्तर्वार्ता**

जात्रासम्बन्धी तथ्यपूर्ण सूचना प्राप्त गर्न सम्बन्धित क्षेत्रमा सम्पन्न हुने बिस्केट जात्रासँग सम्बन्धित गुठीका नाइकेहरू, पुजारीहरू, जात्रामा सहभागी हुने प्रमुख व्यक्ति,सम्बध्द निकायका प्रमुख तथा जात्रासम्बन्धी ज्ञान भएका विद्वानहरूएवम् स्थानीय संस्कृतिविद्हरूसित अन्तर्वार्ता लिइएको छ ।

**अप्रकाशित ग्रन्थहरूको अध्ययन**

(अ) हस्तलिखित ग्रन्थ : राष्ट्रिय अभिलेखालय, आशासफू कुथि लगायत अन्य क्षेत्रमा पाइएका हस्तलिखित ग्रन्थहरू जस्तो – विश्वयात्रा निमन्त्रण, विश्वयात्रा कुलुक्यात विधि, स्याकोत्याको पूजाविधि, कुलुक्यात मतः पूजाविधि, विश्वयात्राम् सदीप पूजाविधि, विश्वयात्रा मन्त्रम विधि, गोठासी होम विधि, दुमाजु विधि, विश्वयात्रा विधि, नेपाल वर्ष क्रिया संग्रहहरू, नेपाल महात्य आदि हस्तलिखित ग्रन्थहरूको अध्ययन गरिएको छ ।

(आ) थ्यासफू : बिस्केट जात्राबारे उल्लेख गरिएका थ्यासफूहरू जस्तो दुमाजु पूजाविधि, ऐतिहासिक घटनावली, भक्तपुरमा पाइएको बिस्केट जात्रा सम्बन्धी एउटा थ्यासफू आदि थ्यासफूहरूको अध्ययन गरिएको छ ।

### (ख) द्वितीयक स्रोत

यस जात्राको विविध पक्षबारे आवश्यक जानकारी प्राप्त गर्न विद्वानहरूद्वारा लेखिएका यस जात्रासित सम्बन्धित पुस्तक तथा शास्त्रीय ग्रन्थ लगायत चाडपर्वका पुस्तकहरू समेत अध्ययन गरिएको छ । साथै यस विषयमा लेखिएका विभिन्न पत्रपत्रिकाहरूमा प्रकाशित लेखहरू पनि अध्ययन गरिएको छ ।

### (२) अध्ययन विधि

यसरी विभिन्न क्षेत्रबाट संकलन गरिएका स्रोत सामग्रीहरूलाई अध्ययन गर्नका लागि विश्लेषणात्मक, वर्णनात्मक, ऐतिहासिक र तुलनात्मक विधिहरूलाई उपयोग गरिएको छ ।

यसप्रकार सामग्री संकलन र अध्ययन विधिद्वारा शोधकार्य पूरा गरिएको छ ।

## १.७ शोधकार्यको क्षेत्र र सीमा

प्रस्तुत अध्ययनको क्षेत्र प्राचीन नगर भक्तपुर रहेको छ । भक्तपुरलाई केन्द्रविन्दु बनाएर गरिएको यस अध्ययनमा खास गरेर बिस्केट जात्रा हुने मुख्य स्थान ल्योसींखेल (चुपींघाट) अनि भैरव भद्रकालीको रथ तान्ने जात्राको केन्द्रस्थल टौमढी चोक, गाःहिटी, लाकोलाछें त्यसपछि स्थानीय जात्राहरू संचालन हुने नगरका सम्बन्धित टोल इलाकाहरू रहेका छन् । यस अतिरिक्त भक्तपुर वरपरका थिमी, बोडे, नगदेश, काभ्रेको सांगा, खड्पु, धुलिखेल र काठमाडौँको टोखा क्षेत्रमा मनाइने बिस्केट जात्रालाई पनि तुलनात्मक रूपमा अध्ययन गरिएको छ । यी उल्लिखित क्षेत्रमा मनाइने बिस्केट जात्राको ऐतिहासिक, धार्मिक, सामाजिक, सांस्कृतिक अध्ययन नै यसको विषयगत सीमा हो ।

## १.८ शोध प्रबन्धको रूपरेखा

प्रस्तुत शोधप्रबन्धलाई विभिन्न शीर्षक उपशीर्षकमा विभाजन गरी निम्न लिखित दश अध्यायमा विभाजन गरिएको छ ।

**अध्याय एक** : शोध परिचय

**अध्याय दुई** : भक्तपुर शहरको समाज र संस्कृति

**अध्याय तीन** : चाडपर्वको सैद्धान्तिक र वैचारिक पक्ष

**अध्याय चार** : नेवार समाजमा प्रचलित चाडपर्व

**अध्याय पाँच** : बिस्केट जात्रा

**अध्याय छ** : जात्राका प्रमुख देवीदेवता र पूजाका विधिविधान

**अध्याय सात** : बिस्केट जात्राको सामाजिक पक्ष

**अध्याय आठ** : बिस्केट जात्राको सांस्कृतिक पक्ष

**अध्याय नौ** : बिस्केट जात्राको तुलनात्मक अध्ययन

**अध्याय दश** : उपसंहार

# अध्याय दुई

# भक्तपुर शहरको समाज र संस्कृति

## २.१ परिचय

यस अध्ययनको मूल क्षेत्र अथवा विश्वयात्राको उद्गम स्थल भक्तपुर भएकाले र भक्तपुरको संक्षिप्त जानकारी आवश्यक भएकोले प्रस्तुत अध्यायमा यसको स्थिति, नामकरण तथा यस क्षेत्रको नेवार समाज र संस्कृतिको संक्षिप्त जानकारी प्रस्तुत गरिएको छ।

ऐतिहासिक नगर भक्तपुरकै नामबाट जिल्लाको नाम रहेको छ । यो जिल्ला मध्यमाञ्चल विकास क्षेत्रमा बागमती अञ्चल अन्तर्गत पर्दछ । भौगोलिक क्षेत्रफलका आधारमा भक्तपुर नेपाल अधिराज्यकै सबभन्दा सानो जिल्ला हो ।[१] तर जनघनत्वका आधारमा यो काठमाडौँ पछिको नेपालकै दोस्रो ठूलो जिल्ला मानिन्छ ।[२] यस जिल्लामा मध्यपुर थिमी नगरपालिका र भक्तपुर नगरपालिका गरी दुई नगरपालिका अनि १६ वटा गाउँ विकास समितिहरू रहेका छन् । भक्तपुर र थिमी नेवारहरूको बाहुल्यता रहेका पुराना ऐतिहासिक नगरहरू हुन् भने शहरीकरणको विस्तार र प्रवर्द्धन सँगसँगै अरनिको राजमार्गको उत्तर र दक्षिणका धेरै बस्तीहरू नगर बन्ने क्रममा रहेका छन् । विशेष गरेर भ्mौखेल, कटुञ्जे, बालकोट, दुवाकोट, सिपाडोल जस्ता गाउँ विकास समितिहरू शहरीकरणतर्फ उन्मुख छन् ।[३] वास्तवमा भन्ने हो भने राष्ट्रिय राजमार्गहरू निर्माण हुनुभन्दा अघिसम्म पूर्वी नेपालका पहाडी जिल्लाहरूमा आवत जावत गर्ने मुख्य नाका भक्तपुर नै थियो ।

ऐतिहासिक नगर भक्तपुर जिल्लाको मध्यभागमा पर्दछ । यो उत्तरमा खासांगखुसुंग नदी र दक्षिणमा हनुमन्ते नदीको बीच उच्च भुभागमा बसेको छ । साथै पूर्व पश्चिम लामो आकारमा फैलिएर बीचमा खुम्चिएको छ । जिल्लाको अर्को ऐतिहासिक नगर थिमि भक्तपुर नगरबाट ४ कि.मि. पश्चिमतिर पर्दछ । यी दुवै प्राचीन नगरहरू उच्च भूभागमा अबस्थित भएकाले थुम्को जस्ता देखिन्छन ।

---

[१] यो जिल्ला नेपालको ज्यादै सानो जिल्ला हो, किनकि यसको क्षेत्रफल १३९ वर्ग कि.मी.मात्र रहेको छ । –"भक्तपुर जिल्लाको चिनारी", *खोपृङ्ग,* वर्ष १४, अंक १३, (वि.सं.२०६२), पृ. ४५ ।

[२] (क) यस जिल्लाको जनघनत्व प्रति वर्ग कि.मि.१८९५ रहेको छ ।– *ऐजन ।*
(ख) *राष्ट्रिय जनगणना २०६८ को प्रारम्भिक नतिजा,* काठमाडौँ : केन्द्रीय तथ्याङ्क विभाग, नेपाल सरकार, वि.सं. २०६८, पृ. १५ ।

[३] *आवधिक जिल्ला विकास योजना भक्तपुर ०५९/६०–०६३/०६४,* भक्तपुरः जिल्ला विकास समितिको कार्यालय, वि.सं.२०६४, पृ. १७९ ।

## २.२ भौगोलिक अवस्थिति

जिल्लाको मानचित्रअनुसार यस जिल्लाको पूर्वमा काभ्रेपलाञ्चोक, उत्तर र पश्चिमतिर काठमाडौं अनि दक्षिणमा ललितपुर जिल्ला पर्दछन् । भौगोलिक अवस्थिति अनुसार यो जिल्ला २७°३७' उत्तर अक्षांशदेखि २७°४४' उत्तर अक्षांशमा तथा ८५°२१' पूर्व देशान्तर देखि ८५°३२' पूर्व देशान्तरभित्र पर्दछ ।[४]

जिल्लाको भौगोलिक बनौट पूर्वबाट पश्चिमतिर भिरालो पर्दै गएको देखिन्छ । जिल्लाका मुख्य पर्वत श्रृंखलामा नगरकोट, सूर्यबिनायक, चाँगु, तेलकोट, सांगा र खावा भञ्ज्याङ्गहरू रहेका छन् । जिल्लाका मुख्य जंगल क्षेत्रहरूमा सूर्यबिनायक, नगरकोट, छालिङ्गको जंगल आदि प्रमुख हुन् । यस जिल्लाको आकार पश्चिमतर्फ लामो भई चुच्चो परेको छ । यसैकारण भक्तपुरलाई शंख आकारको पनि भन्ने गरिन्छ । पूर्व पश्चिम यसको लम्बाई करिब १६ कि.मी. छ भने उत्तर दक्षिण ११.२ कि.मी. रहेको छ ।[५] यस जिल्लामा ठूलठूला स्थायी नदीहरू छैनन् तापनि जिल्लाको बीचबाट बग्ने हनुमन्ते र काठमाडौं जिल्लालाई छुट्याउने मनोहरा नदी यस जिल्लाका मुख्य नदीहरू हुन् । यसबाहेक यिनै नदीहरूमा मिल्ने साना ठूला सहायक खोलाहरू यस जिल्लाभित्र यत्रतत्र छन् ।[६]

हनुमन्ते यस जिल्लाको मुख्य नदी हो, जुन भक्तपुर नगरको दक्षिणी छेउबाट बग्ने गर्दछ । यसैले हनुमन्ते नदी किनारका ठाउँ–ठाउँमा भक्तपुर नगरवासीहरूका मर्दापर्दा चाहिने थुप्रै ऐतिहासिक घाट र पवित्र तीर्थस्थलहरू अवस्थित रहेका छन ।[७] यी उल्लिखित नदी र खोलाहरू बाहेक यस जिल्लामा झरना र तालहरू छैनन् तर नगर वरिपरि अनेक ऐतिहासिक पोखरीहरू छन् । जसमध्ये सिद्धपोखरी विशेष मह□वको छ ।[८]

हावापानीका सम्बन्धमा यहाँ अधिकतम तापक्रम सरदर २३.६' सेन्टिग्रेड (७४.४' फरेन हाइट) र न्यूनतम तापक्रम सरदर ११° सेन्टिग्रेड (५१.८ फरेनहाइट) रहन्छ ।[९]

---

[४] *मेचीदेखि महाकाली, भाग २,* काठमाडौं : श्री ५ को सरकार, संचारमन्त्रालय सूचनाविभाग, वि.सं. २०३०, पृ. ६३८ ।

[५] *भक्तपुर जिल्ला: एक परिचय,* भक्तपुर : जिल्ला पंचायत, वि.सं.२०४५, पृ. क ।

[६] *मेचीदेखि महाकाली, भाग २,* पा.टि.नं. ४, पृ. ६४० ।

[७] जस्तैः ब्रम्हायणीघाट, महेश्वरीघाट, चुपींघाट, मङ्गलतीर्थ आदि भक्तपुरका प्रसिद्ध घाटहरू हुन् । अनि अष्टमातृका गण मध्येकी ब्रम्हायणी, महेश्वरी, कुमारी, भद्रकाली, वाराही पीठहरू यसै नदीको छेउछाउमा प्रतिस्थापित छन् । –प्रत्यक्ष अवलोकनवाट प्राप्त जानकारीको आधारमा ।

[८] दिपक अर्याल र अन्य (सं.) *नेपाल डिष्ट्रिक्ट प्रोफाइल,* काठमाडौं : नेशनल रिसर्च एशोसियसन, ई.सं. १९८२, पृ. २९३ ।

[९] *मेचीदेखि महाकाली, भाग २,* पा.टि.नं. ४, पृ. ६४२ ।

राष्ट्रिय जनगणना २०५८ अनुसार यस जिल्लाको कुल जनसंख्या २,२५,५६१ रहेको छ ।[१०] तर हाल यो संख्या वृध्दि भएर ३०३०२७ पुगेको छ, जसमध्ये पुरुष १५४००६ र महिला १४९०२१ जना रहेका छन् ।[११] यस जिल्लाको कुल जनसंख्या मध्ये अधिकांश हिस्सा अर्थात् ६२.८% नेवार जातिको रहेको छ । साथै अन्य जातजातिहरू यस जिल्लामा बसोबास गर्ने गरेकाले जातिगत र सांस्कृतिक विविधता रहेको देखिन्छ । राष्ट्रिय जनगणना २०४८ अनुसार यस जिल्लामा नेवारी भाषा बोल्नेको संख्या सबैभन्दा बढी ६०.८६% रहेको छ भने नेपाली भाषा बोल्नेको संख्या ३४.३३% रहेको छ । भक्तपुर नेवार संस्कार र संस्कृतिले सम्पन्न पुरानो शहर भएको कारण ठूलो नेवार समुदाय यस जिल्लामा रहेको हुँदा यहाँ नेवार भाषीहरूको बाहुल्यता रहेको छ ।[१२] धार्मिक दृष्टिकोणले पनि यस जिल्लामा विभिन्न धर्म मान्ने धर्मावलम्बीहरू बसोबास गर्दछन्, जसमध्ये हिन्दुधर्म मान्नेहरूको संख्या सबैभन्दा अधिक ९२.१% रहेको छ भने हिन्दु पछि बौद्ध धर्म मान्नेको संख्या ७.५% रहेको छ । अन्य धर्मावलम्बीहरूमा जैन, ईस्लाम, क्रिश्चियन रहेका छन् ।[१३]

युनेस्कोको विश्व सम्पदा सूचीमा नेपालका प्रमुख आठ वटा सम्पदाहरू पर्दछन् ।[१४] जस्तै – लुम्बिनी, स्वयम्भुनाथ, बौध्दनाथ, पशुपतिनाथ क्षेत्र, काठमाडौँ दरबार स्क्वायर, ललितपुर दरबार स्क्वायर, भक्तपुर दरबार स्क्वायर र चाँगु नारायण । यी मध्ये दुई वटा विश्वसम्पदास्थल भक्तपुरमा नै रहेका छन् । भक्तपुर दरबार स्क्वायर र  चाँगुनारायण उक्त सूचीमा समावेश भएका यस जिल्लाका ऐतिहासिक स्थलहरू हुन् ।[१५] यसर्थ ती स्थलहरूको पुरातात्विक र ऐतिहासिक मह□वलाई जिवितै राख्नको निम्ति पुरात□व विभाग, स्मारक संरक्षण, दरबार हेरचाह अड्डा, गुठी संस्थान लगायत स्थानीय निकायहरू र गैर सरकारी संघ, संस्थाहरू सक्रिय रूपमा लागिपरेका छन् ।

यस जिल्लामा रहेका प्रमुख पर्यटकीय तथा धार्मिक दर्शनीय स्थलहरू, जुन ऐतिहासिक तथा पुरातात्विक दृष्टिकोणले पनि मह□वपूर्ण छन्, ती निम्न अनुसार छन् ।

---

[१०] *स्ट्याटिस्टीकल इयर बुक अफ नेपाल –२००७,* काठमाडौँ : सेन्ट्रल ब्युरो अफ स्ट्याटिस्टीक्स, नेपाल गवर्मेन्ट, नेशनल प्लानिङ्ग सेक्रेटारियट, ई.सं. २००७, पृ. २१ ।

[११] *प्रेलिमिनरी रिजल्ट अफ नेशनल पपुलेशन सेन्सस २०११,* काठमाडौँ : सेन्टल व्युरो अफ स्टास्टिक्स, ई.सं. २०११ ।

[१२] आवधिक जिल्ला विकास योजना, पा.टि.न. ३, पृ. २१ ।

[१३] स्ट्याटिस्टीकल इयर बुक अफ नेपाल, पा.टि.नं. १०, पृ. २१ ।

[१४] www.explore himalaya.com/worldheritagesite; retrieved in 2011 Dec. 24.

[१५] *आवधिक जिल्ला विकास योजना,* पा.टि.न. ३, पृ. ९१ ।

**नगरकोट :** ऐतिहासिक सामग्रीहरूमा यो ठाउँ महामण्डप वा मण्डपगिरी नामले प्रसिद्ध छ । प्राचीन कालमा मंजुश्री बोधिसत्व स्वयम्भूज्योतिको दर्शन गर्न महाचीनबाट यहां आउँदा तीन रात यसै महामण्डपमा निवास गरेका थिए ।[१६] वंशावलीको चौसठी लिंग वर्णनमा यहाँको रत्नचुडेश्वर महादेव पोखरीको पनि नाम आउंछ ।[१७] हिमवत्खण्ड स्कन्दपुराणको १२३ औं अध्यायमा रत्नचुडेश्वर महात्म्यको वर्णन छ, जसअनुसार श्रावण शुक्लपूर्णिमाका दिन यहांको रत्नचुडेस्वर लिंगको दर्शन गरेर कुनै दूराचारी ब्राम्हण मुक्त भएका थिए ।[१८] यसैकारण आज पनि यहाँ त्यसदिन मेला लाग्ने गर्दछ । यसकासाथै प्राकृतिक सुन्दरता र मनमोहक हिमश्रृंखलाहरूको दृश्यावलोकनका लागि पनि यो स्थान निक्कै प्रख्यात छ । यो (नगरकोट) भक्तपुरबाट लगभग २० कि.मी. पूर्वमा पर्दछ ।

**चाँगुनारायण :** काठमाडौँ उपत्यकाका प्रसिद्ध चार नारायण मध्येको एक चाँगु नारायण मन्दिर धार्मिक दृष्टिकोणबाट मात्र नभएर ऐतिहासिक तथा पुरातात्विक दृष्टिकोणले पनि निकै मह□वपूर्ण रहेको छ । वंशावली अनुसार यो मन्दिरको निर्माण राजा हरिदत्त बर्माले ई.सं. ३२३ मा गरेका थिए ।[१९] यस भन्दा पनि मह□वपूर्ण कुरा के हो भने नेपालमा अहिलेसम्म पाइएका अभिलेखहरूमा सबैभन्दा प्राचीन मानिएको अभिलेख यसै मन्दिरमा रहेको राजा मानदेवको संवत् ३८६ (वि.सं. ५२१) को अभिलेख हो ।[२०]

यसरी यो मन्दिर र मन्दिर परिसरमा रहेका अभिलेखहरूले यसको ऐतिहासिक तथा पुरातात्विक पक्षलाई उजागर गरेको छ । यो भक्तपुरबाट ६ कि.मी. उत्तरमा रहेको दोलागिरी पर्वत (डाँडो)मा अवस्थित छ । संस्कृतिविद् लीलाभक्त मुनंकर्मीले चाँपारुखको फेदबाट उत्पति भएकाले क्रमशः चम्पकनारायण, चाँपानारायण हुँदै कालान्तरमा चाँगुनारायणको नामले प्रसिद्ध भए भन्नुभएको छ ।[२१] हरेक वर्ष कार्तिक शुक्ल नवमीदेखि पूर्णिमासम्म यहाँ

---

[१६] बालचन्द्र शर्मा, *नेपालको ऐतिहासिक रूपरेखा,* वाराणसी : कृष्णकुमारीदेवी, वि.सं. २०२२, पृ. ५५ ।

[१७] नयनाथ पौडेल (सं.), *भाषा वंशावली, भाग १,* काठमाडौँ : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२०, पृ. ७ ।

[१८] योगी नरहरीनाथ (सं), *हिमवत्खण्ड,* बनारस : गोरक्षटिल्ला, वि.सं. २०१३, पृ. २५३ ।

[१९] (क) धनवज्र वज्राचार्य र के.पी. मल्ल, *दि गोपालराज वंशावली,* काठमाडौँ : नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, पृ. २० क पत्र ।
(ख) नेपाल उपत्यकाका प्रसिद्ध चारनारायणको स्थापना राजा हरिदत्तले गरेका हुन् भनी गोपालराजवंशावलीमा लेखिएको पाइन्छ । लिच्छवीकालका अभिलेखहरू केलाएर हेर्दा सो कुरा सत्य हो भन्ने देखिएको छ ।– धनवज्र वज्राचार्य, *लिच्छवीकालका अभिलेख,* काठमाडौँ : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३०, पृ. ५५८ ।

[२०] *ऐजन,* (ख), पृ. १०–१३ ।

[२१] लीलाभक्त मुनंकर्मी, *नेपालको सांस्कृतिक तथा ऐतिहासिक दिग्दर्शन,* भक्तपुर : भवानी केशरी, वि.सं. २०४१, पृ. ३१५ ।

भव्य मेलालाग्ने गर्दछ ।[२२] यस अतिरिक्त वर्षको दुईपटक चाँगुनारायणलाई जात्रा गरेर हनुमानढोका दरबारमा लाने चलन छ ।[२३]

**सूर्यविनायक :** भक्तपुर नगरबाट दक्षिणतिर लगभग दुई कि.मी.को दूरीमा सूर्यविनायक गणेश मन्दिर रहेको छ, जुन धार्मिक तथा ऐतिहासिक दृष्टिकोणबाट अति मह□वपूर्ण रहेको छ । वंशावलीमा सूर्यविनायक गणेशको उत्पत्ति कसरी भयो भन्ने बारे उल्लेख भएको पाइन्छ ।[२४] यो मन्दिर शिखरशैलीमा बनेको छ, जुन सत्रौं शताब्दीमा बनेको बताइन्छ । मन्दिर परिसरमा आकर्षक पाटी, भजन स्थल, गणेशको बाहन मूसा, स्तम्भ, ढुंगेधारा लगायत अनेक देवदेवीका मूति प्रतिस्थापित छन् भने मन्दिर क्षेत्रमा ने.सं. ६०३, ९१३, ९९६, १०१०, १०१६ का शिलालेख प्राप्त छन् । गणेशजीको मन्दिरमा नित्य र पर्व पूजाका लागि एउटा गुठीको व्यवस्था गरिएको छ, जसमा राजथला, द्योपाला (द्योला) र मूल पुजारीका रूपमा कर्माचार्य रहने परम्परा छ ।[२५]

सूर्यविनायक गणेशको सेवाबाट भक्तको भाग्य निर्माण हुने र सद्बुद्धि पलाउने आमधारणा भएकोले यहाँ हरेक हप्ता मंगलबारको दिन बिहान सबेरैदेखि भक्तजनहरूको घुँइचो लाग्ने गर्दछ, त्यसमा पनि विशेष गरेर श्रावण र माघ महिनाका मंगलबार अनि मंगल चौथी पर्वहरूमा यहाँ दिनभरिजसो नै ठुलो घुँइचो लाग्ने गर्दछ । यसदिन जसले यी गणेशको दर्शन गर्ला उसलाई सर्वविघ्न हरण होला भन्ने वर्णन वंशावलीमा उल्लेख भएको पाइन्छ ।[२६] यस्तै गरेर बोली नफुटेका बालबालिकालाई मन्दिरमा ल्याएर पूजाआजा गरी गणेशको समीपमा छोडी बाबुआमा लुकी दिएमा बालकको रुवाइको चिच्याहटबाट बोली फुटेर बोल्न सक्ने शक्ति प्राप्त हुन्छ[२७] भन्ने विश्वासले गर्दा मानिसहरू समय पुगेर पनि बोल्न नजान्ने आफ्ना बच्चाहरू लिएर यहाँ आउने गर्दछन् ।

**भक्तपुर दरबारक्षेत्र :** भक्तपुर दरबार इलाका ऐतिहासिक दृष्टिकोणले मात्र होइन सांस्कृतिक तथा प्राचीन शिल्पकला एवं हस्तकलाको लागि समेत अनुपम रहेको छ ।

---

[२२] प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[२३] यो चलन प्राचीनकालदेखि हालसम्म पनि यथावत चल्दैआएको छ, जुन जात्रा श्रावण शुक्ल द्वादशी तथा पौष शुक्ल पुर्णिमाको दिन सम्पन्न गरिन्छ । -गौतमवज्र वज्राचार्य, *हनुमानढोका राजदरबार,* काठमाडौँ : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३३, पृ. १६७ ।

[२४] पौडेल, पा.टि.नं. १७, पृ. ११ ।

[२५] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[२६] पौडेल, पा.टि.नं. १७, पृ. ११ ।

[२७] लीलाभक्त मुनंकर्मी, "गणेश महिमा", *प्राचीन नेपाल,* संख्या १०९, (२०४५ पुष–माघ), पृ. २८ ।

इतिहासको कुनै कालखण्डमा मल्ल राजाहरू बसोबास गर्ने यो क्षेत्रमा ऐतिहासिक तथा पुरातात्विक दृष्टिकोणबाट अत्यन्त मह□वपूर्ण कलाकृतिहरूको विशाल एवं अनौठो भण्डार विद्यमान रहेको पाइन्छ । युनेस्कोको विश्व सम्पदा सूचीमा परेको भक्तपुर दरबार क्षेत्र वास्तवमा खुल्ला संग्रहालयको रूपमा रहेको छ ।

**मध्यपुर थिमी :** काठमाडौं र भक्तपुरको मध्य भागमा अवस्थित रहेको हुनाले यस ठाउँलाई मध्यपुर भनिएको हो । थिमी नामकरणका सम्बन्धमा भने दुई ऐतिहासिक नगर काठमाडौं र भक्तपुरको बीचमा सामरिक र व्यापारिक मह□व सहित एक अग्लो स्थानमा रहेको थिमी औंठीको पत्थर जस्तै बहुमूल्य भएको हुनाले यसको नाम थिमी रहन गएको देखिन्छ । किनकि औंठीमा जडिने बहुमूल्य पत्थरलाई नेवारी भाषामा “थि” भनिने र त्यसमा “मी” प्रत्यय लागेर थिमी बनेको हो ।[२८] थिमी पनि नेवार बाहुल्य क्षेत्र हो । यसको इतिहास पनि भक्तपुर जतिकै प्राचीन छ । इतिहासका विविध कालखण्डमा यहाँ अनेक मह□वपूर्ण घटनाहरू भए । वर्तमान मध्यपुर थिमी नगरपालिका अन्तर्गत थिमी, बोडे, नगदेश जस्ता ३ वटा ऐतिहासिक नगर उन्मुख बस्तीहरू समावेश छन् । यी बस्तीहरूको स्थापना भक्तपुरका राजा सुवर्ण मल्लले गरेका थिए, जसले थिमी, बोडे, नगदेशमा क्रमशः ७००, ५००, ५०० घरहरू बनाइ बस्ती बसालेका थिए ।[२९] यसरी हेर्दा थिमीको इतिहास पाँच, सात सय वर्ष मात्र पुरानो भएको देखिन्छ । तर वास्तवमा यसको इतिहास त्यसभन्दा पनि पुरानो रहेको देखिन्छ । गोपालराज वंशावलीका अनेक पत्रहरूमा “थ्यमी” को उल्लेख भएको पाइन्छ ।[३०] साथै थिमी भेकबाट लिच्छवीकालका दुईवटा अभिलेख प्राप्त भएकोले यहाँ लिच्छवीकालमा नै मानिसको बस्ती बसिसकेको थाहा हुन्छ ।[३१] हाल माटाका भाँडावर्तन र हरियो सागपातका लागि यो ठाउँ निक्कै प्रसिद्ध छ ।

## २.३ भक्तपुरको नामकरण

नेवारी भाषामा ख्वपः भनिने यस भक्तपुर नगरको नाम प्राचीन समयमा खोप्रिङग्राम थियो । यो शब्द संस्कृतेत्तर अर्थात् किराती भाषाबाट आएको हुनाले किरातकालीन समयमा

---

[२८] नेवारीमा कुनै पनि ठाउँका बासिन्दालाई सम्बोधन गर्दा “मी” प्रत्यय साथ गरिन्छ । यहाँ पनि बहूमूल्य पत्थर “थि” जस्तो ठाउंमा बस्ने निवासी भएकोले थिमि भएको हो ।

[२९] योगी नरहरी नाथ (सं.), *देवमाला वंशावली,* काठमाडौं : श्री पीरहन्त क्षिपानाथ योगीराज, वि.सं. २०१३, पृ. ८९ ।

[३०] वज्राचार्य र मल्ल, पा.टि. नं.१९ (क), पृ. ५२ (ख)२, ५५ (क) ३, ५७ (क) २, ५८ (ख) २ पत्रहरू ।

[३१] हरिराम जोशी (सं.), *नेपालको प्राचीन अभिलेख,* काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३०, पृ. ३५४ र ५४२ ।

नै यहाँ बस्ती बसिसकेको अनुमान गर्न सकिन्छ ।[३२] वास्तवमा नेपाल उपत्यका र उपत्यकावरिपरि जतिपनि प्राचीन बस्तीहरू छन्, ती सबै किरातकालीन समयमा नै स्थापना भइसकेको देखिन्छ । किनकि ती ठाउँका नाम किराती भाषाका शब्दबाट आएका छन् । जस्तै– खोपासीलाई बुझाउने शब्द कुर्पासी, सांगालाई शङ्गा, चाँगुलाई चङ्गु, टेकूलाई तेङ्खु, टिस्टुङलाई तेस्टुङ, भक्तपुरलाई खोप्रिङ आदि सबै किराती भाषाका शब्द हुन्,[३३] जुन शब्दहरू लिच्छवीकालका अभिलेखहरूमा उल्लेख भएको पाइन्छ । यसरी प्राचीन समयमा भक्तपुरको नाम खोपृङ रहेको र खोपृङकै अपभ्रंश भएर आएको हुनाले उपत्यकाका नेवारहरू अहिले पनि भक्तपुरलाई ख्वपः भन्ने गर्दछन् । यसबाट भक्तपुरको किरातकालीन नामले अहिलेसम्म निरन्तरता पाएको थाहा हुन्छ ।

खोपृङ शब्दको उल्लेख भएको पहिलो लिच्छवीकालीन अभिलेख मानदेव प्रथमको पालामा रत्नसंघद्वारा संवत् ३९९ (वि.सं. ५३४) मा स्थापित देवपाटनको शिवलिङ्गको अभिलेख हो, जसमा खोपृङग्राम प्रदेश भन्ने उल्लेख छ ।[३४] हुनतः यसभन्दाअघिको प्रसिद्ध लिच्छवीराजा मानदेव प्रथमको संवत् ३८६ (वि.सं. ५२१) को चाँगुनारायण अभिलेखमा पनि भक्तपुरको नाम उल्लेख नभएको चाहिं होइन, जुन अभिलेखमा भक्तपुरलाई खकम्प्रिङ्गग्राम भनेर उल्लेख गरिएको छ ।[३५] तर प्रष्ट रूपमा खोपृङको उल्लेख भएको पहिलो अभिलेख रत्नसंघको देवपाटनको अभिलेख नै हो । अनि यस्तै गरेर कसैले यसलाई खुपोक्रम, कसैले खृपम्वम पनि भन्ने गर्दछन् ।[३६]

शिवदेव र अंशुबर्माको वि.सं. ६५१ को भक्तपुर गोलमढी टोलको अभिलेखमा माखोपृङ[३७] र शिवदेव, अंशुवर्माकै क्रमशः भक्तपुर तालाको टोलको र तुलाछें टोलको अभिलेखहरूमा माखोदुलुं[३८] र खृपुङग्राम[३९] शब्दको प्रयोग भएको देखिन्छ । यसरी एउटै

---

[३२] *मेचीदेखि महाकाली भाग २,* पा.टि.नं. ४, पृ. ६३९ ।

[३३] धनवज्र वज्राचार्य, "लिच्छविकालको इतिहासमा किरातकालको प्रभाव", *पूर्णिमा,* पूर्णाङ्क १७, वर्ष ५, अंक १, पृ. ८ ।

[३४] धनवज्र वज्राचार्य (सं.) *इतिहास संशोधनको प्रमाण प्रमेय* (पहिलो भाग), ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०१९, पृ. २६४ ।

[३५] वज्राचार्य, पा.टि.नं. १९(ख), पृ. १३ ।

[३६] (क) लुसियानो पेटेक, *मिडियभल हिष्ट्री अफ नेपाल,* रोम : मेडियाइष्ट्रिमो ओरिन्टे, ई.सं. १९५८, पृ. ३९ ।
(ख) मोहन प्रसाद खनाल, *चाँगुनारायणका ऐतिहासिक सामग्री,* काठमाडौँ : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०४०, पृ. १५८ ।

[३७] वज्राचार्य, पा.टि.नं. १९(ख), पृ. २४९–५० ।

[३८] रामजी तिवारी र अन्य (सं), *अभिलेख संग्रह–पाँचौं भाग,* काठमाडौँ : संशोधन मण्डल, वि.सं. २०१९, पृ. ९ ।

[३९] वज्राचार्य, पा.टि.नं. १९(ख), पृ. २५३–५४ ।

समयको भक्तपुर भेकमा पाइएका विभिन्न अभिलेखहरूमा बेग्लाबेग्लै नामहरू उल्लेख भएबाट तात्कालीन भक्तपुरमा अर्थात् खोपृङग्राम प्रदेशमा खृपुङ, माखोदुलुं, माखोपृङ नामका भिन्नाभिन्नै बस्तीहरू आवाद रहेका थिए भन्ने बुझिन्छ । ती मध्ये माखोपृङ अन्य बस्तीको तुलनामा व्यापारिक, प्रशासनिक आदि हरेक दृष्टिले विकसित थियो भन्ने बुझिन्छ ।[४०] किनकि उक्त अभिलेखमा माखोपृङ पछाडि द्रङ शब्द पनि जोडिएर आएको र द्रङको अर्थ विकसित व्यापार केन्द्र भएकोले यो माखोपृङ बस्ती नगरको मध्यभागमा रहेको बुझिन्छ ।[४१] त्यस्तै भक्तपुर नगरभन्दा लगभग दुई कि.मी. जति दक्षिण पश्चिमतिर अवस्थित अनन्त लिङ्गेश्वरको मन्दिरमा प्रसिद्ध लिच्छवी राजा नरेन्द्रदेवले राख्न लगाएको संवत् ८० को एउटा अभिलेख छ । त्यस अभिलेखमा उक्त क्षेत्रलाई हंसगृहद्रङको रूपमा उल्लेख गरिएको छ । यसबाट उक्त क्षेत्रमा अहिले बस्ती नभएतापनि तात्कालीन समयमा त्यो क्षेत्र पनि विकसित बस्ती वा व्यापार केन्द्रको रूपमा रहेको थियो भन्ने बुझिन्छ ।[४२] जे होस् नेपाल उपत्यकाको एउटा प्राचीन किराती बस्ती भक्तपुर लिच्छवीकालको प्रारम्भिक समयमा ग्रामको रूपमा स्थापित भई क्रमशः उतरार्द्धतिर द्रङको रूपका विकसित हुँदै आएको तथ्य माथि उल्लिखित अभिलेखहरूबाट स्पष्ट हुन्छ र द्रङको रूपमा विकसित भएको यो भक्तपुर मध्यकालमा आउँदा देश (नगर) मा परिणत भयो ।

यसप्रकार किरातकालमा लोकप्रिय रहेको खोपृङ नाम लिच्छवीकाल हुँदै मध्यकालको एघारौं शताब्दीको मध्यतिर आइपुग्दा अपभ्रंश हुँदै ख्वपः शब्द चल्तीमा आएको देखिन्छ । किनकि ने.सं. १२५ (वि.सं. १०६१) को निर्भय देवको पालाको भक्तपुर भैरवस्थानमा रहेको अभिलेखमा ख्वपु शब्द उल्लेख भएको छ ।[४३] नेपालमा अहिलेसम्म पाइएका वंशावलीहरूमा प्रामाणिक वंशावलीका रूपमा गोपालराज वंशावलीलाई लिइन्छ । त्यस वंशावलीमा पनि यस नगरको नाम उल्लेख गर्ने सन्दर्भमा क्रमश ख्वप, ख्वव, ष्वप्व नामहरू लेखिएका पाइन्छन् । प्रसिद्ध मल्लराजा जयस्थिति मल्लको पालामा लेखिएको "प्रतिष्ठा सार संग्रह" नामक ग्रन्थमा

---

[४०] पुरुषोत्तमलोचन श्रेष्ठ, "भक्तपुर नगरको नामांकरण", *पासुका,* वर्ष १, अङ्क १०, (आषाढ २०५४), पृ. ४ ।

[४१] (क) ललितपुर र कान्तिपुरको तुलनामा भक्तपुरमा लिच्छवीकालका अभिलेखहरू निक्कै कम पाइएबाट लिच्छवीकालमा भक्तपुरमा बस्ती केही कम थियो कि भन्ने अनुमान हुन्छ । तर गोलमढी टोलको शिवदेव अंशुवर्माको अभिलेखमा तल सहित माखोपृङ द्रङको उल्लेख परेको हुनाले यो बस्ती पनि विकसित भइरहेको थियो भन्ने थाहा हुन्छ । –धनवज्र वज्राचार्य, "लिच्छवीकालीक बस्ती", *पूर्णिमा,* पूर्णाङ्क १८, वर्ष ५, अंक २, पृ. ८७–१०१ ।
(ख) त्यस बेलाको भौगोलिक विभाजन अनुसार स–सानो गाउँलाई ग्राम, दुई वा सो भन्दा बढी गाउँ मिलेर बनेको बस्तीलाई तल, अनि पूर्ण रूपमा विकसित बस्ती वा व्यापार केन्द्रलाई द्रङ भनिन्थ्यो ।

[४२] वज्राचार्य, पा.टि.नं. १९ (ख), पृ. ४८५–४८७ ।

[४३] रामजी तिवारी र अन्य (सं), *अभिलेख संग्रह–दोस्रो भाग,* काठमाडौं : संशोधन मण्डल, वि.सं. २०१८, पृ. ९ ।

पनि ख्वपः शब्द परेको छ । यसप्रकार मध्यकालदेखि वर्तमान समयसम्म नेवारहरूमा ख्वपः नाम कुनै खास अन्तर बिना नै प्रचलित रहँदै आएको छ ।[४४]

ख्वपःलाई भातगाउँ वा भादगाउँ पनि भन्ने गरिन्छ, जसको अर्थ हुन्छ – भात धेरै खान पाइने स्थान अर्थात् अन्नरूपी धनधान्यले भरिपूर्ण नगर भन्ने बुझाउँछ ।[४५] हुन पनि भक्तपुरमा तात्कालीन समयमा प्रशस्त मात्रामा खाद्यान्न वस्तुहरू उत्पादन हुने गर्थ्यो, जसको आधारमा शायद भादगाउँ भनियो होला ।[४६] शाहकालका अभिलेखहरूमा यस नगरलाई भादगाउँ नै भन्ने गरिएको पाइन्छ । जस्तै– भक्तपुर लायकु दरबारमा रहेको सुनढोकाको दायाँतिर भित्तामा टाँसिएको वि.सं. १८८३ को राजेन्द्र विक्रम शाहको नेपाली भाषामा लेखिएको ताम्रपत्रको अभिलेखमा "भादगाउँ" भनिएको छ ।[४७] त्यस्तै सोही स्थानको उत्तर पट्टिको भित्तामा टाँसिएको वि.सं. १९८९ को जुद्ध शम्शेरको नेपाली भाषामा लेखिएको ताम्रपत्रमा पनि "भादगाउँ" नै भनिएको छ ।[४८]

यसरी सरकारी स्तरबाट राखिएका अभिलेखहरूका आधारमा शाहकालमा यस शहरको नाम भादगाउँ रहेको थाहा हुन्छ । तर यो नाम परम्परादेखि विकास हुँदै आएको भने होइन । किनभने मध्यकालमा यसलाई भादगाउँ भनिएको पाइँदैन । भादगाउँ नामको चलन सबभन्दा पहिला गोर्खालीहरूले चलाएका हुन् । पृथ्वीनारायण शाहको एकीकरणको क्रममा लेखिएका चिठीपत्रहरूमा भक्तपुरलाई भादगाउँ भनी उल्लेख गरिएको छ ।[४९]

भादगाउँलाई आजभोलि भक्तपुर नामले सम्बोधन गरिन्छ । भादगाउँलाई कहिलेदेखि भक्तपुर भन्न थालियो ? यो चाहिं थाहा हुन सकेको छैन तर पनि स्थानीय बुढापाकाहरू राणाकालको अन्तिम समयतिर आएर यस ठाउँलाई भक्तपुर भन्न थालिएको हो भन्दछन् ।[५०] राणा प्रधानमन्त्री श्री ३ जुद्धशम्शेरको इस्तिहारबाट अदालती कामकाजमा भादगाउँको

---

[४४] श्रेष्ठ, पा.टि.नं. ४०, पृ. ४ ।

[४५] विनोदराज शर्मा, *इतिहास संस्कृति : केही पृष्ठहरू,* भक्तपुर : स्टुडेन्ट लाईब्रेरी, वि.सं. २०५७, पृ. १३ ।

[४६] उपत्यकाको तीन राज्यमध्ये काठमाडौं तथा पाटनका नामका साथमा गाउँ प्रयोग हुँदैन तर भादगाउँ मात्र लोक व्यवहारमा प्रायः गाउँ कहलाउँछ ।– सूर्यविक्रम ज्ञवाली, *नेपाल उपत्यकाको मध्यकालीन इतिहास,* काठमाडौं : रोयल नेपाल एकेडेमी, वि.सं. २०१९, पृ. ९४ ।

[४७] रामजी तिवारी र अन्य, *अभिलेख संग्रह-बाह्रौं भाग,* काठमाडौं : संशोधन मण्डल, वि.सं. २०२०, पृ. १७–१८ ।

[४८] रामजी तिवारी र अन्य, *अभिलेख संग्रह-आठौं भाग,* काठमाडौं : संशोधन मण्डल, वि.सं. २०१९, पृ. ७–८ ।

[४९] बाबुराम आचार्य, *श्री ५ बडामहाराजधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी, भाग ३,* काठमाडौं : श्री ५ महाराजधिराजको प्रेस सचिवालय, राजदरबार, वि.सं. २०२५, पृ. ४५३ र ५२८ ।

[५०] स्थानीय बुढापाकाहरूबाट प्राप्त जानकारीको आधारमा ।

सट्टामा भक्तपुर भनी लेख्नुपर्ने गराएका थिए ।[५१] यसैले त्यसैसमयदेखि भक्तपुर भन्ने चलन चलेको देखिन्छ । तर ऐतिहासिक प्रमाण खोतल्दा पूर्वमध्यकालतिरै यसलाई भक्तपुर भनेर सम्बोधन गरिएको पाइन्छ । इतिहासकार सूर्यविक्रम ज्ञवालीज्यूका अनुसार लिच्छवीकालीन अभिलेखहरूका आधारमा त्यसबेला संस्कृत भाषा निक्कै विकसित अवस्थामा थियो, तर लिच्छवीकालपश्चात् पूर्वमध्यकालमा आएर अशुद्ध संस्कृतको प्रयोग हुन थालेको तथ्य तात्कालीन शिलालेखहरूबाट जान्न सकिन्छ । जयस्थितिमल्लको पालामा आइपुग्दा यो स्थितिमा केही सुधार हुन लागेको तथा पुराना नामलाई संस्कृत रूप दिने चलन बढी चलेकोले खप्वः पनि भक्तपुर भएको अनुमान हुन्छ । किनकि उपत्यकाका दुई स्वतन्त्र शहर "यँः" तथा "यँला"ले संस्कृत रूप काष्ठमण्डप र ललितपुर धारण गरेको देख्दा उपत्यकाको तेस्रो शहर "खप्वः" ले पनि संस्कृत रूप लिन खोज्नु स्वाभाविक छ । यसैले खप्वः विस्तारै–विस्तारै भक्तपुर भयो ।[५२] यसैकारण गोपालराज वंशावलीको २५ र २८ पत्रहरूमा भक्तपुर र २७ पत्रमा भक्तग्राम शब्द उल्लेख छ । जयस्थितिमल्लको समयमा लेखिएको ने.सं. ५१२ को गुह्यसिद्धि शास्त्रमा भक्तग्राम, यक्ष मल्लको पालामा लेखिएको ने.सं. ५४९ को यजुर्वेद संहितामा भगतापुर नगर अनि जगत प्रकाश मल्लको समयमा लेखिएको "सप्तवारधारणी" ग्रन्थमा भक्तापुरी महानगर उल्लेख छ ।[५३] जगतप्रकाश मल्लकै संवत् ७८८ को तलेजु चोकको अभिलेखमा भक्तपुर[५४] अनि भक्तपुर राजदरबार नजिकै पूर्वपट्टि गहिरी धाराको ने.सं. ७९८ (वि.सं. ७३५) को जितामित्र मल्लको अभिलेखमा भक्तापुरी नगरा उल्लेख भएको छ ।[५५] उक्त सन्दर्भमा नगर एवं राजधानी नगरको रूपमा हरेक दृष्टिले केन्द्रीय स्तरमा विकसित हुँदै गएकोले एकातिर भक्तपुर नामको पछिल्तिर पुर, पतन, नगर, महानगर जस्ता विशेषणयुक्त संस्कृत शब्दहरू थपिदैं गए भने अर्कातिर परम्परादेखि प्रचलित रहँदै आएको ग्राम (गाउँ) शब्द पनि लोकप्रिय नै रहँदै आएको देखिन्छ ।[५६] विशेषतः भक्तपुरका राजाहरूले राजनैतिक विखण्डन पश्चात् पनि आफू र आफ्नो राज्यलाई सम्मानित स्थान दिलाउन भक्तापुरी महानगर, भक्तपट्टन राजधानी, भक्तपट्टने राजधान्याम आदिद्वारा सम्बोधन गर्न लगाउँथे भने अर्कातिर कान्तिपुरले भक्तपुरका राजालाई होच्याएर भक्तग्राम नरेश भनेर

---

[५१] *भक्तपुर जिल्लाको वस्तुगत विवरण वि.सं. २०५३,* भक्तपुर : जिल्ला विकास समिति, वि.सं. २०५३, पृ. ५३ ।

[५२] सूर्यविक्रम ज्ञवाली, "भादगाउँका केही नामहरू", *रोलम्बा,* अंक २, संख्या ३, जुलाई–सेप्टेम्बर १९८२, पृ. १३ ।

[५३] श्रेष्ठ, पा.टि.नं. ४०, पृ. ५ ।

[५४] रामजी तिवारी र अन्य (सं), *अभिलेख संग्रह– सातौं भाग,* काठमाडौं : संशोधन मण्डल, वि.सं. २०१९, पृ. २३–२४ ।

[५५] *ऐजन,* पृ. २५–२८ ।

[५६] श्रेष्ठ, पा.टि.नं.४०, पृ. ५ ।

सम्बोधन गरेको पनि पाइन्छ । भक्तपुर किन भनियो भन्ने सम्बन्धमा एकातिर भक्तको अर्थ धर्मपरायण, धार्मिक मूल्य मान्यतामा विश्वास गर्ने मानिसहरूको समूह र पुरको अर्थ बासस्थान, बस्ती आदि हो । यसरी धर्मभिरु मानिसहरूको बासस्थान भएकोले यसलाई भक्तपुर भनिएको देखिन्छ भने अर्कातिर "भक्त" नामको भात विशेषबाट भक्तपुर हुन गएको धारणा पनि पाइन्छ । किनभने श्री भावप्रकाश ग्रन्थमा भात ६ प्रकारको हुने र त्यसमध्ये एक प्रकारको भातलाई "भक्त" भनिने कुरा उल्लेख छ ।[५७] भक्तपुरमा धेरै धान उत्पादन हुने कुरा वंशावलीमा उल्लेख भएको छ ।[५८] अतः सो नामको भात प्रशस्त हुने भएकोले यो ठाउँको नाम भक्तपुर रहन गएको देखिन्छ ।

लिच्छवीकालका अभिलेखमा भक्तपुर भेकलाई सम्बोधन गरिएको खोपृङ शब्दको प्रिङ ग्रामलाई बुझाउने किराती भाषाको शब्द हो । जोलिप्रिङ, म्हसप्रिङ, याप्रिङ आदि प्रिङ शब्द जोडिएका ग्रामहरूको उल्लेख लिच्छवीकालका अभिलेखमा परेको पाइन्छ । "खो" शायद भातलाई भनिने शब्द थियो, जसकोआधारमा पछि संस्कृतमा रूपान्तर गरी "भक्तग्राम" भनिएको हो कि भन्ने अनुमान इतिहासकार धनवज्र वज्राचार्यज्यूले पनि गर्नुभएको छ ।[५९]

यसप्रकार प्राचीन समयमा खोपृङ ग्राम भनिने यस नगरलाई नेवारहरू ख्वपः र आम नेपाली तथा विदेशीहरू भक्तपुर भन्ने गर्दछन् । विभिन्न धार्मिक अनुष्ठान वा कर्मकाण्डहरूमा समेत गुरु पुरोहित, आचार्यहरूले पढ्ने संकल्प वाक्यहरूमा भक्तपुरे महानगरे भनेर उच्चारण गर्दै आएको पाइन्छ । अतः भक्तपुर नामकरण नै जगजाहेर वा विश्व प्रसिद्ध रहेको छ ।

## २.४ भक्तपुर शहरको नेवार समाज र संस्कृति

भक्तपुर शहरको नेवार समाज सांस्कृतिक इतिहास प्रधान समाज हो । नेपाल उपत्यकाका अन्य दुई शहर काठमाडौं र ललितपुर जस्तै भक्तपुर पनि नेवार बाहुल्य शहर हो । वर्तमान सन्दर्भमा उपत्यका आफ्नो मूल बासस्थान भएपनि आधा जसो नेवारहरू उपत्यका बाहिर छरिएर रहन पुगेका छन् । व्यापार व्यवसायका लागि कुशल मानिने यी

---

[५७] श्री लालचन्द्रजी वैद्य, *श्री भावप्रकाश,* (हिन्दी सर्वाङसुन्दरव्याख्यासहित), दिल्ली : मोतीलाल बनारसी दास, ई.सं. १९८६, पृ. २९३ ।

[५८] देवीप्रसाद लम्साल (सं.), *भाषा वंशावली– भाग २,* काठमाडौं : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ३६ ।

[५९] धनवज्र वज्राचार्य (सं), *पूर्वमध्यकालका अभिलेख,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०६८, पृ. ३० ।

नेवारहरू व्यापारकै सिलसिलामा अधिराज्यमा मात्र नभएर तिब्बत र भारतका कतिपय ठूला शहरहरूमा समेत बसोबास गर्न पुगेका छन् । तर  यसरी उपत्यका बाहिर गएर बिभिन्न जिल्ला सदरमुकाम तथा शहर बजारहरूमा बसोबास गरिरहेका नेवारहरू मध्ये धेरैको पुर्ख्यौली घर भक्तपुर भएको थाहा पाइएको छ ।[६०] अर्को कुरा जसरी उपत्यकाका नेवारहरू उपत्यका बाहिर गई बसोबास गर्न पुगे, त्यसैगरी बाहिरबाट पनि विविध जातजातिका मानिसहरू उपत्यकामा आएर स्थायी रूपमा बसोबास गर्ने क्रम बढ्दो छ । तर त्यस्तो प्रभाव काठमाडौँ र ललितपुरमा ज्यादा परेपनि भक्तपुर शहरमा भने कम मात्र छ ।

भक्तपुर शहरको समाज नेवार समाज हो । यसर्थ यहाँका नेवारहरू अन्य जाति समूह (नेवारेत्तर समूह) हरूबाट अलग भई आफ्नै सजातीय समूहसँग मात्र नजिक भई बसेका छन् ।[६१] सामान्यतः नेवार बस्तीमा ढुंगा छापेको बाटो, इँटा छापेको चोक, गल्ली, इँटाले बनेका दुई तीन तल्ला सम्मका अग्ला घरहरू, घरहरू पनि सँगै जोडेर बनाइएका, हरेक ५०, ६० कदमको दुरीमा खुल्ला चोक, डबली, ढुंगेधारा, सत्तल पाटी देवमन्दिर आदि रहेका हुन्छन् । यस्तो मौलिक नगरीय संरचनाको सुन्दर र भव्य नमूना भक्तपुर शहर रहेको तथ्य सर्वविदितै छ । हुन पनि यहाँको धार्मिक वास्तुकला, कलात्मक कृति, भव्य रूपको चाडपर्व, जात्रा, असंख्य हिन्दु मठ मन्दिरहरू, बौद्ध बिहारहरू, धार्मिक स्मारकहरू, पोखरीहरू, पृष्ठभूमि राखी कुँदिएका परिष्कृत मूर्तिकला, चित्रकला, काष्ठकलाले भव्यता दिइरहेका झ्याल, टुँडाल, खम्बा, पालिदार झिंगटी छाना आदि सबै नै यहाँको नेवार संस्कृतिको समुन्नतिका ज्वलन्त उदाहरण हुन् ।[६२]

कुनै बेला भक्तपुर ब्यापार व्यवसायकालागि प्रसिद्ध थियो तर हाल यो एउटा पुरानो बस्तीको रूपमा रहेको छ । यहाँका अधिकांश बासिन्दाको मुख्य पेशा खेती किसानी हो । खेती किसानी बाह्रै महिना नहुने हुँदा फुर्सदका बेला उनीहरू कला, शिल्प लगायत अन्य कामधन्दातिर पनि लाग्ने गर्छन् । यस अतिरिक्त यहाँ परम्परादेखि विभिन्न पेशा अँगाल्दै आएका अनेक व्यवसाय गर्ने नेवारहरू पनि रहेका छन् । पढेलेखेका शिक्षित नेवारहरू

---

[६०] सम्बन्धित स्थान विशेषका व्यक्तिहरूसँग भएको प्रत्यक्ष भलाकुसारीबाट प्राप्त जानकारीको आधारमा ।

[६१] एन्नी बरगती, *गड्स, मैन एण्ड टेरिटोरी,* न्यू दिल्ली : मनोहर पब्लिकेसन्स्, ई.सं. १९९५, पृ. ४ ।

[६२] भक्तपुर नगरमा ऐतिहासिक र पुरातात्विक दृष्टिकोणले मह□वपूर्ण रहेका ठूला साना गरी ३५ वटा पोखरीहरू, १९ वटा मठहरू, २५ वटा बौद्ध विहारहरूका साथै अनेकौं देवदेवीका मन्दिरहरू, राजा महाराजाका दरबारहरू, नाचगान गरिने डबलीहरू, आगन्तुकलाई स्वागत गर्ने द्वारहरू त्यस्तै गरेर खानेपानीको आपूर्तिका लागि असंख्य ढुंगेधाराहरू, इनारहरू अनि विश्रामका लागि टोलचोकहरूमा पाटी, सत्तलहरू रहेका छन् । -स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनका आधारमा प्राप्त जानकारीको आधारमा ।

सरकारी, अर्धसरकारी कार्यालय, शिक्षण संस्थाहरूमा लागेका छन् । समग्रमा भन्नुपर्दा भक्तपुरको नेवार समाजको प्रमुख आर्थिक आधार भनेको परम्परादेखि चल्दै आएको खेतीपाती अनि बाणिज्य व्यवसाय नै हो ।

### २.४.१ नेवार समाजको इतिहास

नेवारहरू नेपालका अन्य विविध जातजातिहरू जस्तै एउटा जाति विशेष नभएर विविध जात जातिहरूको एउटा समुदाय हो । यस समुदायभित्र नेपाल उपत्यकाभित्रका प्राचीन नाग जातिहरू, गोपाल, महिषपाल (आभीर), किरात, लिच्छवी, सेन, बर्मा, गुप्त, मल्ल, शाक्य, कोली, बृज्जि आदि विविध जातजातिहरूको समिश्रण रहेको पाइन्छ भन्ने इतिहासविद्हरूको मत छ ।[६३] विशेष गरेर आभीर र किरातीहरूको पारस्पारिक मेलमिलापकै कारणले गर्दा उपत्यकामा नेवार संस्कृतिको प्रारम्भ भएको अनुमान गरिन्छ ।[६४] यो नेवारी संस्कृतिको विकासक्रम ईशापूर्व छैठौं शताब्दीतिर भएको अनुमान गरिन्छ ।[६५] सिल्भाँ लेभीका अनुसार नेवारहरू हिमालयको उत्तरी खण्डबाट बसाई सरेका हुन् । तर अर्काथरी विद्वानहरूका अनुसार नेवारहरूको मूलथलो दक्षिण भारतको कन्नड प्रदेशको मालावार सामुद्रिक तट हो । त्यहाँका हिन्दु समुदायका नायरहरू नै नेवार हुन् । किनकि त्यहाँका नायरहरूको आनीबानी र जीउडाल केही हदसम्म यहाँका नेवारहरूको आनीबानी र जीउडालसँग मिल्दोजुल्दो भएकोले यो अनुमान गरिएको हो ।[६६] यस्तै त्यहाँ बनेका मठमन्दिरहरूको निर्माण शैली र यहाँको मठमन्दिरहरूको निर्माणशैली पनि झण्डै–झण्डै उस्तै रहेको भेटिन्छ । त्यहाँका नायरहरू ईशवीको एघारौं शताब्दीको अन्त्यतिर कर्णाटवंशी नान्यदेवका साथ नेपाल प्रवेश गरेका थिए[६७] भनिन्छ । तर वास्तवमा यो भनाइ गलत छ किनकि यसभन्दा शताब्दीयौं पहिले नै नेपालमा पेगोडा शैलीका मन्दिरहरूको निर्माण र नेवारी सभ्यताको विकासक्रम आरम्भ भइसकेको देखिन्छ । यसैले मालावारका नायरहरू नै नेवार हुन् भन्ने भनाइ तर्कसंगत देखिंदैन । डिल्लीरमण रेग्मीज्यूका अनुसार नेपाल उपत्यकाका सबभन्दा पुराना बासिन्दा भनेका भारतको दक्षिण विहार राज्यको छोटा

---

[६३] रामनिवास पाण्डे र दिनेशचन्द्र रेग्मी, *नेपालको पौराणिक इतिहास*, काठमाडौँ : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५४, पृ. ५ ।

[६४] गोपालसिंह नेपाली, *दि नेवार्स*, रिप्रिन्ट, बम्बई : युनाइटेड एशिया पब्लिकेशन्स, ई.सं. १९८८, पृ. १२ ।

[६५] डोरबहादुर विष्ट, *पिपुल अफ नेपाल*, पाँचौं संस्करण, काठमाडौँ : रत्न पुस्तक भण्डार, ई.सं. १९८७, पृ. १७ ।

[६६] नेपाली, पा.टि.नं. ६४, पृ. २८–२९ ।

[६७] शर्मा, पा.टि.नं. १६, पृ. ३८ ।

नागपुरका मुन्डा (Mundas), कोल (Cols), भील (Bhils) हरू थिए ।[६८] जसलाई उहाँ अष्ट्रो-एशियाटिक समूहका जाति मान्नुहुन्छ । हाल उपत्यकाको नेवार समाजमा खेती किसानी गर्ने जुन ज्यापू समुदाय छन्, तिनलाई नै उहाँ अष्ट्रो–एशियाटिक समूहका जाति मान्नु हुन्छ ।[६९] भक्तपुर शहरको अत्यधिक जनसंख्या पनि तिनै ज्यापूहरूको रहेको छ ।

यस आधारमा उपत्यकामा सर्वप्रथम नेवार सभ्यताको प्रारम्भ गर्ने पहिलो जातिका रूपमा अष्ट्रो–एशियाटिक समूहलाई लिन सकिन्छ । त्यसपछि दोस्रो समूहका आप्रवासीका रूपमा द्रविडियन जातिहरूले उपत्यकामा प्रवेश गरे । तर पछि गएर यी सुरुका दुवै जातिहरू दक्षिण पूर्वी भारतबाट आएका किरातीहरूको प्रभुत्वमा परे । त्यसपछि आर्यहरू अनि खसहरूले प्रभुत्व कायम गरे ।[७०] तर सबै नै नेवारी संस्कृतिमा आबद्ध हुँदै गए । वास्तवमा नेपालउपत्यका प्राचीन समयदेखि नै भौगोलिक दृष्टिकोणबाट एक सुरक्षित स्थल भएकोले उत्तर र दक्षिणतिर जब–जब प्राकृतिक प्रकोप, दैवीप्रकोप, बाह्यआक्रमण जस्ता घटना हुने गर्दथे, तब–तब त्यतातिरका मानिसहरू सुरक्षाका लागि नेपाल उपत्यकामा पस्ने गरे । ती बाहिरबाट आश्रयका लागि आएका विभिन्न जातिहरू पछि यहींका नेवार जातिमा मिसिएर गए । यसरी यहाँको नेवारसमाजको बनौट कुनै एउटा जातिका मानिसहरूबाट भएको नभइ विविध जातजातिहरूको समिश्रणबाट भएको देखिन्छ, जो इतिहासका विभिन्न कालखण्डमा आप्रवासीका रूपमा यहाँ पसेका थिए । यसैकारण नेवारहरूको मुखाकृति र शारीरिक बनौटमा विविधता देख्न सकिन्छ ।

### २.४.२ धर्म

धार्मिक दृष्टिकोणबाट हेर्दा भक्तपुरको नेवार समाजभित्र मूल रूपमा हिन्दु र बौद्ध गरी दुई सम्प्रदाय रहेको पाइन्छ । प्रारम्भमा नेवारहरूमा बौद्ध धर्म मान्नेहरूको संख्या अत्यधिक थियो ।[७१] तर कालान्तरमा आएर भारतबाट आप्रवासीका रूपमा नेपाल प्रवेश गरेका विभिन्न थरीका ब्राम्हणहरू जस्तो कान्यकुब्जी, पंचगौड, पंचद्रवीड, मैथिलहरू त्यस्तै राजपुत क्षेत्रीहरूले ल्याएको हिन्दुवादको प्रभाव तीव्र रूपमा प्रचार हुन थाल्यो । शंकराचार्यहरूको नेपाल भ्रमणबाट पनि यहाँ हिन्दु धर्मको प्रभुत्व विस्तार हुनुमा मद्दत पुऱ्यायो र पछि कर्णाटवंशी राजाहरूले पनि

[६८] डि.आर. रेग्मी, *एनसियन्ट नेपाल, भाग–१,* कलकत्ता : के.एल. मुखोपाध्याय, ई.सं. १९६५, पृ. १५–१६ ।

[६९] *ऐजन* ।

[७०] *ऐजन* ।

[७१] विष्ट, पा.टि.नं. ६५, पृ. १९ ।

हिन्दुधर्मलाई संरक्षण दिएपछि धेरै बौद्ध नेवारहरू पनि हिन्दु संस्कारभित्र समाहित हुँदै गए । यद्यपि बौद्ध र हिन्दु दुवै धर्म यहाँ भारतबाटै भित्रिएको हो । खुल्ला सीमानाको कारणले गर्दा प्राचीनकालदेखि यहाँको समाजमा भारतीय प्रभाव परेको पाइन्छ ।[७२]

भक्तपुर शहरको संरचना नै हिन्दुतन्त्रमा आधारित रहेको देखिन्छ । पूर्वमध्यकालका राजा आनन्ददेव (ई.सं.१२०४–१२२४) ले भक्तपुरलाई राजधानी शहरको रूपमा निर्माण गर्दा यस शहरलाई प्राकृतिक प्रकोप, दैवी विपत्ति, बाह्य आक्रमण जस्ता अनिष्ट र भयबाट मुक्त राख्न शहरको बाहिरी घेरामा अष्टकोण मण्डलाकार बनाई अष्टमातृका देवीहरूको शक्तिपीठ स्थापना गरी केन्द्रमा त्रिपुरासुन्दरी प्रतिस्थापित गरे ।[७३] यसैले नवदुर्गालाई नगर संरक्षिका देवीको रूपमा अद्यावधि पुजिँदै आएको पाइन्छ । शहरका ठाउँ–ठाउँमा विशिष्ट देवीदेवताका असंख्य मठमन्दिरहरू स्थापना गरिएको पाइएबाट वास्तवमै यो शहर एउटा सुक्ष्म रूपको धार्मिक संसार हो कि जस्तो लाग्दछ ।[७४]

यसरी भक्तपुर हिन्दुतन्त्रमा आधारित नेवार बाहुल्य शहर हो । तथ्याङ्कगत हिसाबले पनि भक्तपुरमा बसोबास गर्ने नेवारहरूमध्ये ९२% ले हिन्दु धर्म मान्दछन् ।[७५] यसैले होला यहाँ बौद्ध विहारहरू ललितपुर र काठमाडौंको तुलनामा अत्यन्त कम भेट्टिन्छन् ।[७६]

---

[७२] मेरी एम. एण्डरसन, *दि फेष्टिवल्स अफ नेपाल,* लण्डन : जर्ज एलेन एण्ड अनवीन लि., ई.सं. १९७१, पृ. २२ ।

[७३] (क) वज्राचार्य र मल्ल, पा.टि.नं. १९ (क), पृ. २५ (क) पत्र ।

(ख) पूर्वमध्यकालका राजा आनन्ददेव प्रथमले गाउँ नै गाउँले भरिएको भक्तपुरग्रामलाई विस्तार गरी बाह्र हजार घरधुरी भएको "भादगाउँ" शहर निर्माण गर्दा देशको सुरक्षालाई ध्यानमा राखी देशलाई भयरहित तुल्याउन भक्तपुर देशको मध्यभागमा त्रिपुरासुन्दरी देवीको प्रतिष्ठा गरी चारैतिर अष्टमातृका गणले परिवेष्ठित गरी देश निर्माण गराएका थिए । देशमा अष्टमातृका गणको स्थापना र पुजोपासना तथा जात्रा एवं नाचको प्रदर्शन गर्दा निम्न अनुसारका भयहरूबाट देश र जनता सुरक्षित रहने विश्वास गरिन्छ । १) राजभय २) चोरभय ३) पानीको भय ४) आगोको भय ५) हावा (वायु) को भय ६) शत्रुको भय ७) मल (चट्याङ) को भय ८) भुकम्प तथा दुर्भिक्षको भय । एवं रीतले दशमहाविद्या, पन्ध्र महाविद्या नामले मातृका गणको अर्थबोध हुँदै चौविस मातृका गणको पनि यहाँ तन्त्रसिद्धिद्वारा मह□वबोध गरी लोक जीवनमा मान्यता रहँदै आएका दृष्टान्त स्वरूप नेवार संस्कृतिमा प्रचलित सांस्कृतिक भोजलाई लिन सकिन्छ । नेवार सांस्कृतिक भोजमा प्रयोग हुने ठुलो लपेश (भ्वय–लप्टे) लाई धर्तीको सदृश मानी बीचमा राखिने चिउरालाई पृथ्वी तथा अन्य चौबिस प्रकारका खाद्य परिकारलाई चतुर्वीस मातृका गणका रूपमा लिने गरिन्छ – लीलाभक्त मुनंकर्मी, *संक्षिप्त मातृका वर्णन तथा देवी नाच,* काठमाडौं : कुमारी प्रकाशन, वि.सं. २०६४, पृ. ४६–४७ ।

[७४] हिरोशी इशी (अनु. भुवन लाल प्रधान), *नेपाली संस्कृति छ्पुलु,* येँ: च्वसापासा, ने.सं. ११०८, पृ. ८ ।

[७५] रवर्ट आइ. लेभी, *मेसोकज्म,* दिल्ली : मोतीलाल बनारसी दास पब्लिसर्स, ई.सं. १९९२, पृ. ५९, ७५ ।

[७६] (क) ऐतिहासिक प्रमाणअनुसार भक्तपुरमा बौद्ध विहारहरूको संख्या २५ वटा भएपनि हाल १६ वटा मात्र अस्तित्वमा रहेको देखिन्छ । यो संख्या ललितपुर र कान्तिपुरको भन्दा ज्यादै न्यून छ । यसो हुनुको प्रमुख कारणमा मध्यकालीन सशक्त शासक जयस्थिति मल्लले राजधानी भक्तपुरमा बसेर अवलम्बन गरेको हिन्दुकरणको नीति, बेलाबखत नेपाल आएका शंकराचार्यहरूद्वारा गरिएको हिन्दु धर्मको प्रचार अनि विभिन्न समयमा भएका भूकम्पीय प्रकोप जस्ता कारणहरूले भक्तपुरमा बौद्ध विहारहरूको संख्या सीमित हुन पुग्यो । भद्ररत्न वज्राचार्य (सं.), *ख्वपया बहा बही,* ख्वपः मैत्रेय युवा संघ, ने.सं. ११२४, पृ. ९–१० ।

(ख) यसैकारण लुसियानो पेटेकले मिडियभल हिष्ट्री अफ नेपाल भन्ने आफ्नो ग्रन्थमा जयस्थिति मल्लको शासन पश्चात् भक्तपुर हिन्दु राज्य, ललितपुर बौद्ध राज्य र कान्तिपुर हिन्दु र बौद्ध दुवैको प्रभाव मिसिएको राज्यको रूपमा विकास भयो भनेर उल्लेख गरेका छन् । – पेटेक, पा.टि.नं. ३६, पृ. १७२ ।

मल्लवंशलाई व्यवस्थित रूपमा स्थापित गर्ने संस्थापक शासक जयस्थिति मल्लले यहाँको नेवार समाजलाई हिन्दुतन्त्रका आधारमा सुव्यवस्थित गर्न ब्राम्हण, क्षेत्री, वैश्य, शुद्र गरी चार श्रेणीमा विभाजन गरेर सबैले आफ्नो जात अनुसारको कर्म गर्नुपर्ने व्यवस्था मिलाई दिए ।[७७] यसका लागि आवश्यक सहयोग र सल्लाह लिन भारतबाट समेत हिन्दु ब्राम्हण पण्डितहरूलाई बोलाइएको थियो । सोही समयदेखि यहाँको समाज हिन्दुतन्त्रका आधारमा चल्दै आएको देखिन्छ । यो हिन्दु समाजभित्र सबभन्दा माथिल्लो तहमा ब्राम्हण जाति पर्दछन् । ब्राम्हण जातिका नेवारहरूमा राजोपाध्याय भन्ने द्यःबजु, जसले वंशानुगत आधारमा नेवारहरूको पुरोहित काम गर्छ । त्यस्तै भट्ट ब्राम्हण, झा ब्राम्हणहरू विभिन्न मन्दिरका पुजारीका रूपमा रहेका छन् । क्षेत्री जाति भित्र प्रधान, प्रधानाङ्ग, मल्ल, जोशी, श्रेष्ठ आदि छ थरे नेवारहरू पर्दछन् । क्षेत्री शब्दकै अपभ्रंशबाट छ थरे भएको भनाइ समाजशास्त्री डोर बहादुर विष्टको रहेको छ ।[७८] वज्राचार्य भन्ने गुभाजुहरू, शाक्य भिक्षु भन्ने बाँडाहरू, अपवादका रूपमा केही श्रेष्ठहरू, तुलाधर, ताम्राकार, कंसाकार, राजकर्णिकार, धाख्वा जति सबै बौद्ध नेवारहरू हुन् ।[७९] वैश्य जातिका नेवारहरू विविध जात (थर) धारण गरेर आफ्नो जात अनुसारको पेशामा संलग्न हुँदै आएका छन् । त्यस्तै शुद्र जातिका नेवारहरूमा कुस्ले, खड्गी, कुलु, पोडे, च्यामे, च्यामखल आदि पर्दछन् ।

शुद्र जातलाई पनि पानी चल्ने र नचल्ने गरी विभेद गरिएको छ । यसैआधारमा यिनीहरूको बस्ती समेत अलग–अलग स्थानमा निर्धारण गरिएको छ । जस्तो – पोडे पानी नचल्ने शुद्र भएकोले ऊ नगरभन्दा बाहिर बस्दछ । जबकि कसाई पानीचल्ने शुद्र भएकोले नगरको सीमामा अनि कुस्लेहरू जसले सांस्कृतिक समारोहहरूमा बाजा बजाउने गर्दछ, तिनीहरू नगरभित्र अन्य जातिसँग मिसिएर रहेका देखिन्छन् ।[८०] वास्तवमा जातीय उच्चताको प्रभाव नगरीय संरचनामा पनि प्रष्ट रूपमा परेको पाइन्छ । जस्तो कि भक्तपुर राजदरबारको दक्षिणतिर राजपुरोहित ब्राम्हणहरू, दक्षिण पश्चिम, दक्षिण पूर्व, उत्तर पूर्व र पूर्वतिर राजपरिवारका नातेदारहरू, राजपरिवारसँग सम्बन्धित हाडा, मल्ल, प्रधानाङ्ग, जोशी, धौभडेल जस्ता छथरिया नेवारहरूको बसोबास अद्यावधि रहेको छ । त्यस्तै भक्तपुर शहरको केन्द्रविन्दुको रूपमा रहेको टौमढीटोलले पनि भक्तपुर शहरको सामाजिक वर्गीकरणलाई

[७७] चन्द्रविक्रम बुढाथोकी (सं), *जयस्थिति मल्लको सुधार,* काठमाडौं : साझा प्रकाशन, वि.सं. २०३९, पृ. ७-८ ।
[७८] विष्ट, पा.टि.नं. ६५, पृ. २० ।
[७९] डोरबहादुर विष्ट, *सबै जातको फूलबारी,* चौथो संस्करण, काठमाडौं : साझा प्रकाशन, वि.सं. २०३९, पृ. ९–१० ।
[८०] लेभी, पा.टि.नं. ७५, पृ. १६३–१६५ ।

प्रतिविम्वित गर्दछ । जस्तो पाँच तल्ले मन्दिरबाट गाःहिटी हुँदै तल झर्दा क्रमशः छथरिया नेवारहरूको बसोबास, त्यसपछि पाँचथरियाहरू, त्यसपछि ज्यापूहरू र आखिरमा खोलाको तीरैतीर पोडे बस्ती आउँछ ।[८१]

यसप्रकार प्रत्यक्षतः यहाँको समाज चार वर्णमा विभाजित रहेको देखिन्छ । तर त्यसोभएपनि यस समाजभित्र बीस भन्दा अधिक जातीय श्रेणीबद्धता वा मर्यादा विद्यमान रहेको थाहा हुन्छ । यसैकारण भक्तपुरलाई आजसम्म पनि अनेक नेवार जातजातिको बसोबास भएको शहर, विविध मूल्यमान्यता बोकेको शहर आदि पनि भन्ने गरिएको पाइन्छ । यहाँ बसोबास गर्ने धेरै नेवारहरूको विश्वासअनुसार यदि यो जातीय मर्यादा भएन भने समाजमा सदैव झैंझगडा र अव्यवस्था फैलिरहन्छ । अन्तरनिर्भरता भएन भने यहाँ कुनै समाज हुने छैन । यसैकारण यहाँ जातीय श्रेणीबद्धताको अन्तरनिर्भरतामा सामाजिक जीवन संभव भएको छ । यो जातीय अन्तरनिर्भरता नैतिकताको आधारभूत सिद्धान्त र परम्परागत हिन्दु सभ्यताको धरातलमा निर्माण भएको छ ।[८२]

यसरी भक्तपुर शहर हिन्दुशास्त्रीय परम्परामा आधारित नेवार बाहुल्य शहर भएर पनि त्यसभित्र अनेकानेक जातीय विविधता रहेको पाइन्छ । नेवार समाजको प्रत्येक तहका जातभित्र पनि सुक्ष्म रूपले अध्ययन गरेको खण्डमा विभिन्न तहका समूह वा कुल भेट्टिन्छन् । चाहे हिन्दु होस् वा बौद्ध, यहाँका सबै नेवारहरूको आ–आफ्नै गुठी हुन्छ । गुठी धेरै प्रकारको हुन्छ, जसमध्ये मह□वपूर्ण गुठी देवाली गुठी हो । एउटै पुर्खाका सन्तानले मान्ने गरेको पुर्ख्यौली देवता मान्ने सदस्य जहाँ बसे पनि देवाली गुठीको सदस्य हुन्छ । यसमा सबै जुठो लाग्ने दाजुभाइका सन्ततिले जम्मा हुनै पर्दछ । यस्तो जम्मा हुने काम वर्षको एकपटक हुन्छ । यसका सदस्यलाई फुकी भनिन्छ । फुकीका बीचमा ब्याहबारी चल्दैन । फुकीको मृत्युमा जुठो र आशोच बार्नु पर्दछ ।[८३] यो देवाली गुठी बाहेक लासलाई उठाएर घाटसम्म पुऱ्याउन व्यवस्था गर्ने "सना गुठी", लास जलाउन प्रबन्ध मिलाउने "सी गुठी" अनि धार्मिक सांस्कृतिक क्रियाकलापसँग सम्बन्धित गुठीहरूमा यहाँको नेवारसमाज आपसमा आबद्ध छन् । यसबाट उनीहरूमा आपसी एकता मात्र होइन, अनुशासनप्रियता पनि देखाउँदछ । गुठीमा सम्मिलित हुन पाउनु उनीहरूका निम्ति सम्मानजनक कुरा हुन्छ भने गुठीबाट बहिस्कृत हुनु

---

[८१] गुत्सो र कोल्वर, *भक्तपुर,* वेसवडेन : कमीशन्ज भर्लाज फ्रान्ज स्टेनर, ई.सं. १९७५, पृ. १० र ५६ ।

[८२] स्टेफेन एम पेरिस, *हाइरार्की एण्ड इट्स डिसकन्टेन्टस,* दिल्ली : अक्सफोर्ड युनिभरसिटी प्रेस, ई.सं. १९९३, पृ. ५ ।

[८३] जनकलाल शर्मा, *हाम्रो समाज,* काठमाडौं : साझा प्रकाशन, वि.सं. २०३९, पृ. ३३२ ।

लज्जाजनक मानिन्छ । साथै चाडपर्व जात्रा उत्सव, पूजा आदि सुव्यवस्थित रूपमा मनाउने अन्य गुठीहरूमा पनि उनीहरू संलग्न हुन्छन् ।[८४]

वास्तवमा नेवार समाजलाई जातीय आधारमा संगठित गर्ने मूल आधार भनेको गुठी नै हो । गुठीको एकता, सह–बन्धन अनि सदस्यहरूबीच सम्पर्कको ठोस माध्यम भोजद्वारा हुन्छ । हरेक गुठी समुहले आफ्ना सदस्यलाई सम्मिलित गरेर कमसेकम वर्षको एकपटक भोज खाने चलन छ ।[८५] यसरी गुठी व्यवस्था यहाँको नेवार समाजको मौलिक व्यवस्था हो ।

भक्तपुरमा बहुसंख्या हिन्दुको र अल्पसंख्या बौद्धको रहेपनि दुवै बीच धार्मिक सहिष्णुता, समन्वय र सहअस्तित्व रहेको पाइन्छ । पुरोहित्याइँ गर्ने ब्राम्हण र गुभाजुहरू प्रष्ट रूपमा हिन्दु र बौद्ध हुनु बाहेक अन्य नेवारहरू हिन्दु र बौद्धका बीच खासै कठोरतापूर्वक फरक रहेको मान्दैनन् । यसैले दुवै सम्प्रदायहरू हिन्दु र बौद्ध देवीदेवताप्रति समान आस्था र भक्ति राख्दछन् । बौद्धहरू गणेश, अजिमा, भैरव आदि शैव देवी देवतालाई तान्त्रिक देवताको रूपमा मान्ने गर्दछन् भने हिन्दुहरू पनि अवलोकितेश्वर, करुणामय मच्छेन्द्रनाथ आदिलाई मान्ने गर्दछन् ।[८६]

अल्पसंख्यामा रहेको भक्तपुरको बौद्ध समाजभित्र पनि जातीय विभेद पाइन्छ । जस्तो– सबभन्दा माथिल्लो तहमा गुभाजु (वज्राचार्य), जसले बौद्धमार्गी नेवारहरूको कर्मकाण्ड गर्दछन् । त्यसभन्दामुनि शाक्य (बाँडा) त्यसपछि उदास (व्यापारी) र त्यसभन्दा तल्लोजातिका मानिसहरूको हकमा जात अनुसारको धर्मको भेद छुट्याउन निक्कै मुस्कील पर्दछ । जस्तो– चित्रकार, मानन्धर, रंजितकार, नौ (नापित), कौ (नकर्मी), नाय (कसाई), पोडे, च्यामाखल आदि । यसमा कतिपय बौद्ध छन् भने कतिपय हिन्दु पनि छन् ।[८७]

---

[८४] *ऐजन*।

[८५] सम्भवतः परापूर्वकालमा गुठी भोजको संख्या बढी नै आयोजित हुन्थ्यो । यस्तो भोज आयोजना गर्ने जिम्मा गुठीका सदस्यहरूले पालै पालो गर्दछन् र यदि कुनै गुठी संख्याको हिसाबले ठूलो छ भने त यस्तो पालो कुनै सदस्यलाई ३०, ३५ वर्षपछि मात्र आउंछ । तर जसको टाउकोमा भोजको जिम्मेवारी पर्न आउँछ, त्यसलाई यस्तो भोज उतार्ने काम एउटा ठूलो आर्थिक बोझ हुन जान्छ । यद्यपि गुठीले पनि केही रकम व्यहोर्छ, तर त्यसरी व्यहोरेको रकम भन्दा वास्तविक खर्च धेरै हुने गर्दछ । – प्रयागराज शर्मा, *कुल भूमि र राज्यः नेपाल उपत्यकाको पूर्वमध्यकालिक सामाजिक अध्ययन,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५४, पृ. १५१ ।

[८६] बैष्णवहरू बुद्धलाई भगवान विष्णुको अवतारको रूपमा, शैवहरू मच्छेन्द्रनाथलाई शिवको अवतारको रूपमा, शाक्तहरू गुह्येश्वरीलाई देवी शक्तिको रूपमा पुज्ने गर्दछन् । त्यस्तै बौध्द नेवारहरू गुह्येश्वरीलाई आर्यताराको रूपमा मान्दछन् । यसैं गरेर हरेक वर्ष श्री पंचमीका दिन हिन्दुहरू स्वयम्भूलाई सरस्वती माताको रूपमा पुजा गर्दछन् । -टि.आर. वैद्य, त्रिरत्न मानन्धर र शंकरलाल जोशी, *सोसल हिस्ट्री अफ नेपाल,* न्यूदिल्ली : अनमोल पब्लिकेशन, ई.सं. १९९३, पृ. ३१ ।

[८७] प्रत्यक्ष अध्ययन, अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

माथि नै उल्लेख गरिसकिएको छ कि भक्तपुर नेवार बाहुल्य शहर भएर पनि त्यसभित्र परम्परागत शैलीको खेती किसानी पेशा अपनाउने किसान (ज्यापू) हरूको संख्या अत्यधिक रहेको पाइन्छ । यी किसानहरूको उपस्थिति शहरका सबै क्षेत्रमा बाक्लै रूपमा रहेको देखिन्छ । यी ज्यापूहरू सयौं थरीका छन् । जसलाई तीन श्रेणीमा विभाजन गरेर त्यसभित्र २३४ थर भएको कुरा अहिलेसम्मको अध्ययनबाट थाहा पाइएको छ ।[८८] यसरी यो शहर किसानबाहुल्य शहरको रूपमा पनि प्रसिद्ध रहेको छ । तर यसको मतलव यो होइन कि यहाँ अन्य वर्ग अथवा गैरकृषिपेशामा संलग्न मानिसहरू हुँदै नभएको चाहिं होइन । तिनीहरू पनि यहाँ छन् । जस्तो – पुजारी, ज्योतिष, वैद्य, हलुवाई, धातुका सामान बनाउने, माटोका भाँडावर्तन बनाउने, सूचिकार, कूचीकार, कसाई, हजाम, नकर्मी, छिपा, तेलपेल्ने साल्मी, चित्रकार, बाजा बजाउनेहरू, सिकर्मी, डकर्मी, लोहकर्मी जस्ता शिल्पीहरू, व्यवसायीहरू, फौबन्जार व्यापारीहरू, पसलेहरू अनि शिक्षक, सरकारी, गैरसरकारी कर्मचारीहरूको पनि ठूलो उपस्थिति छ । यी नेवारहरूका अतिरिक्त यस शहरमा ज्यादै न्यून संख्यामा केही गैर नेवारहरू पनि बसोबास गर्दछन् । जस्तो- चुरा पोते धागो जस्ता महिलाका श्रृंगार सम्बन्धी सामानको ब्यापार गर्ने मुसलमानहरू, सारंगी बजाएर जिविका गर्ने गाइनेहरू, जुत्ता सिउने सार्कीहरू, लुगा धुने धोबीहरू जस्ता गैरनेवारहरू पनि यहां छन् ।[८९] तर यी गैरनेवारहरूलाई यहाँको समाजले अछुत जात (पानी नचल्ने) भनेर व्यवहार गर्दछ ।

यसरी पूर्व पश्चिम एक माइल लम्बाइ र उत्तर दक्षिण आधा माइल चौडाइ रहेको एउटा सानो भौगोलिक घेराभित्रको यस सानो शहरमा अनेक प्रकारका परम्परागत पेशा अपनाउँदै आएका विविध जातजातिका नेवारहरू तहबद्ध रूपमा रहेका छन् ।

यहाँका बासिन्दाहरूमा जातपातका जति नै भेदहरू देखिएपनि उनीहरूमा धार्मिक, सांस्कृतिक एवम् भाषिक समन्वयको राम्रो परम्परा पाइन्छ । जुनसुकै जातका मानिसहरूले हरेक चाडपर्व, जात्राउत्सवका अवसरमा पूजाआजा लगायत राँगाका मासुका परिकार र मदिरापानद्वारा पर्व मनाउंछन् ।

### २.४.३ भाषा र साहित्य

भक्तपुर शहरमा स्थानीय बासिन्दाले बोल्ने मुख्य भाषा भनेको नेवारी (नेपाल भाषा) हो । यो भाषा मूल रूपमा तिब्बतो–बर्मन समूहको भाषा हो, तापनि यसमा धेरै हदसम्म

[८८] लेभी, पा.टि.नं. ७५, पृ. ८१–८२ ।

[८९] *ऐजन,* पृ. ८८ ।

इण्डो–आर्यन समूहको संस्कृत भाषाको प्रभाव परेको पाइन्छ ।[९०] अलि–अलि नेपाली भाषाबाट पनि प्रभावित रहेको देखिन्छ । नेवारी भाषामा रञ्जना लिपि, भुजिंमोल लिपि, प्रचलित नेपाल भाषा लिपि भएतापनि व्यावहारिक रूपले देवनागरी लिपिको बढी चलन छ । मध्यकालीन नेपाल उपत्यकाको इतिहास दर्शाउने विभिन्न हस्तलिखित ग्रन्थहरू, थ्यासफूहरू, शिलालेख, ताडपत्र, ताम्रपत्र, स्वर्णपत्रहरू प्रशस्त पाइएका छन् । यी ऐतिहासिक दस्तावेजहरू उल्लिखित लिपिहरूमा लेखिएका छन् । यसमा कतिपय मिश्रित नेवारीमा त कतिपय नेवारीमा लेखिएका छन् । यसबाट मल्लकालमा यहाँ यो भाषा राजकीय भाषाको रूपमा रहेको थाहा हुन्छ ।[९१] तर पछिल्लो मल्लकालमा आइपुग्दा यहाँ नेपालीभाषाले पनि जनभाषाकोरूपमा प्रवेश पाइसकेको कुरा मल्ल राजाहरूका धर्मकर्मविषयका अभिलेख अनि जग्गा दान गरिदिएका ताम्रपत्रबाट थाहा हुन्छ ।[९२] वर्तमान अवस्थामा नेपाली भाषा सरकारी कामकाजको भाषा भएको, बाहिरबाट आउने गैर नेवारहरूसँगको सम्पर्क भाषा अनि नेपाली भाषामा नै शिक्षा दिइने हुँदा नेवार केटाकेटीहरूलाई सानै उमेरदेखि नेपाली बोल्न सिकाउने प्रचलन सुरु भएको छ । तर अर्कातर्फ यहाँ नेपाली पटकै नजान्ने वृद्धवृद्धाहरू पनि छन् ।[९३]

साहित्यिक विकासका दृष्टिकोणले नेपालभाषा (नेवारी भाषा) निक्कै समृद्ध छ । यसमा मल्लकालीन समयदेखिका विविध साहित्यिक रचनाहरू भेटिन्छन् । मल्लकालमा रामायण, महाभारत, पुराण, तन्त्रविधान, आयुर्वेद आदि विविध विषयका ग्रन्थहरू यसै भाषामा लेखिएका थिए । मल्ल राजाहरू आफै नाटक रचना गर्थे । यस्ता नाटकहरू दरबारका नासल चोक, शहरका डबलीहरूमा मञ्चन गरिन्थ्यो । ती पनि नेवारी भाषामा नै थिए । असंख्य गीत, गजल, भजन, कविताहरू यस भाषामा लेखिएका छन् । वर्तमानमा भक्तपुर राजदरबारबाट पूर्व जाने साकोठा टोल जुन छ, त्यो मल्लवंशका अन्तिमराजा रणजीत मल्लको पुस्तकालय थियो भन्ने जनधारणा अद्यावधि छ । प्रचलित जनधारणाअनुसार सफूकोठा (पुस्तकालय) बाट नै यस टोलको नाम साकोठा रहन गएको हो । तात्कालीन रणजीत मल्लकालीन पुस्तकालय नै हालको राष्ट्रिय अभिलेखालय हो भन्ने भनाइ पनि देखिएको छ ।[९४] यद्यपि यसमा थप शोधखोज हुनु जरुरी छ ।

---

[९०] तुल्सीराम वैद्य र भद्ररत्न वज्राचार्य, *नेपाल–पिपुल एण्ड कल्चर,* न्यू दिल्ली : अनमोल पब्लिकेशन, ई.सं. १९९६, पृ. ६ ।

[९१] बलराम कायस्थ, "नेवार समुदायका विविध पक्ष", *भक्तपुर,* वर्ष २०, अंक ६, (२०५९ वैशाख), पृ. २० ।

[९२] वज्राचार्य, पा.टि.नं ३४, पृ. ८० ।

[९३] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[९४] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग,* अप्रकाशित विद्यावारिधि शोधग्रन्थ, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं.२०५०, पृ. ७८ ।

वास्तवमा मल्ल वंशको पतनसँगै यहाँको नेवारी समाज र संस्कृतिको संरक्षण र सम्वर्द्धनमा ह्रास आएजस्तै यहाँको भाषिक क्षेत्रको विकासक्रम पनि अवरुद्ध हुन पुग्यो । शाहकाल, राणाकाल, पंचायतकाल आदि सबैकाल परिस्थितिमा राज्यस्तरबाट यस भाषाको उन्नति प्रगतिमा कुनै चासो दिइएन । तर पनि जनस्तरबाट यस भाषाको संरक्षण र सम्बर्द्धनका निम्ति निक्कै प्रयासहरू हुँदै आए । व्यक्तिगत र संस्थागत रूपमा यस भाषाको विकासका लागि अनेक प्रयासहरू अहिले पनि भइरहेका छन ।

### २.४.४ संस्कृति (रीतिरिवाज)

अनादिकालदेखि प्रचलित सामाजिकपरम्परा एवं मान्यताको अर्को नाम संस्कृति हो । संस्कृतिले नै अनेक थरीका मानिसहरूलाई एकै सुत्रमा आबद्ध गर्ने काम गर्दछ । भक्तपुरको नेवारी संस्कृतिले पनि स्थानीय मानिसहरूको भावनालाई एउटै सूत्रमा उन्ने काम गर्दै आएको छ । यद्यपि उनीहरूका बीच सामाजिक, आर्थिक, धार्मिक आदि विभेद र विसंगतिहरू विद्यमान रहेका छन् । तर पनि परम्परागत रूपमा चलिआएको संस्कृति एवं रीतिरिवाजले समस्त भक्तपुरवासीलाई एउटै सूत्रमा बाँधेको पाइन्छ । यसको एउटा सानो उदाहरण यसरी प्रस्तुत गर्न सकिन्छ । जस्तै- आफ्ना धार्मिक रीतिस्थितिबाट अभिप्रेरित भएकाले यस समाजका प्रायःजसो मानिसहरूको दैनिकी नै बिहान उठ्ने बित्तिकै सर्वप्रथम आ–आफ्नो टोलमा रहेका देवी देवताका मन्दिरमा गएर दर्शन पूजन गर्ने, त्यसपछि आ–आफ्ना घरमा देवदेवीको पूजापाठपछिको प्रसाद ग्रहण गर्ने अनि बिहानको खाना खानुअघि परिवारको मुख्य व्यक्तिले खानाको थालीबाट थोरै खाना झिकी पितृतर्पण गर्ने र साँझमा पनि देवीदेवताको धुपबत्ती गरी आरती गर्ने आदि कार्य हरेकजसो व्यक्तिको दैनिकतालिका जस्तै छ ।[९५] यसबाट यहाँको समाज आजपनि धर्मप्रति आस्था र कर्मप्रति निष्ठा राख्तछ भन्ने थाहा हुन्छ ।

वास्तवमा यहाँको सम्पूर्ण समाज नै धार्मिक पृष्ठभूमिमा उभिएको समाज हो । जन्मेदेखि मृत्युपर्यन्तका संस्कारहरू, बिहानदेखि बेलुकासम्मका दैनिक क्रियाकलाप अनि वर्षैपिच्छे कुम्हालेको चक्र झैं घुमिरहने चाडपर्व, जात्राहरू सबै नै धर्मशास्त्रद्वारा निर्देशित परम्परागत रीतिरिवाजमा आधारित छन् । परिवारका सदस्यहरूको उमेरको बढोत्तरीसँगै गरिने विशेष कर्मविधिहरू जस्तै– न्वारन, पास्नी, ब्रतवन्ध (हिन्दु) बरेछुयेगु (बौद्ध), इही (बेलविवाह), बाह्ा तयेगु (गुफा राख्ने), विवाह, जङ्को (बुढोपास्नी), अन्त्येष्ठी क्रिया आदि ।

[९५] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

यस देखि बाहेक विभिन्न अवसरमा गरिने संस्कार कर्महरू जस्तो– नयाँ घर बनाउँदा गरिने संस्कार विधि, परदेश जाँदा वा परदेशबाट फर्कदा, कुनै नयाँ व्यवसाय थालनी गर्दा, त्यस्तै गरेर भूतप्रेत, पिशाच जस्ता दुष्ट आत्माहरूलाई पन्छाउन गरिने विधि, सुख सौभाग्य र पुण्य प्राप्तिका लागि गरिने सत्यनारायणको पूजा, परिवारको शुद्धिका लागि गरिने रुद्राभिषेक(रुद्री) जस्ता सबै नै धार्मिक तथा सामाजिक संस्कार, पारिवारिक कर्मकाण्ड वा रीतिरिवाजहरू प्राचीन हिन्दुधर्मशास्त्रमा आधारित छन् ।[९६] तर यस्ता सांस्कृतिक रीतिरिवाजको सारत□व बुझेका नेवारहरू त्यति छैनन् । प्रायःजसोको सरोकार त यस्ता रीतिरिवाजको दार्शनिक विचारसँग नभएर बाह्यस्वरूपसँग मात्र भएको देखिन्छ । यसैले धेरैजसोले यस्ता रीतिस्थितिलाई परम्परा थाम्ने क्रियाको रूपमा लिएको पाइन्छ ।

जेहोस् यस्ता सामाजिक रीतिस्थिति सम्पन्न गर्दा त्यस अवसरमा विभिन्न खाद्य परिकार सहितको भोज आयोजना गरिन्छ । त्यस्ता भोजमा आफन्त, नातागोता, साथीभाइ, टोल छिमेक आदिलाई बोलाउने गरिन्छ । यदि यस्ता संस्कार वा रीतिरिवाजहरूको परिपालनप्रति ध्यान दिइएन भने गुठीबाट बहिष्कृत हुने, समाजबाट तिरस्कृत हुने, दाजुभाइबाट अपहेलित हुने डर वा चिन्ता हरेकलाई हुन्छ । अतः लोकलाजको कारणले गर्दा सामाजिक रीतिथिति थाम्न आर्थिक भार व्यहोर्नु परेपनि यहाँका बासिन्दाहरू आफ्ना सामाजिक परम्पराका विरोधमा जान सक्दैनन् । उनीहरू आफ्ना सामाजिक रीतिथितिको पालनामा कटिबद्ध देखिन्छन् ।

## २.४.५ पारिवारिक जीवनचक्र

संस्कारबाट नै मानिस यथार्थमा मानिस बन्छ । संस्कारबिनाको मानिस पशुतुल्य हुन्छ । आदिमकालमा कुनै संस्कार गर्न नपर्ने भएकोले मानिस जंगलमा बसेर, जनावरका काँचो मासु खाएर, नाङ्गै हिंडेर जीवन बिताउने गर्दथे । कालान्तरमा आएर जान्ने बुझ्ने भएपछि समाजभित्र बसेर समाजका सबैसँग मिलजुल गरेर रहन थाले । मानिसलाई सामाजिक प्राणी बनाउनका लागि बाल्यकालदेखि नै विभिन्न संस्कार गर्ने प्रचलन सुरु भयो । अनि कस्तो संस्कारमा हुर्केको हो, त्यसैअनुसारको व्यवहार ऊबाट मिल्दछ ।[९७]

---

[९६] यद्यपि यहाँको परम्परागत रीतिस्थिति, मूल्यमान्यता, धार्मिकविश्वास हिन्दु जीवनदर्शन र हिन्दु सँस्कृतिबाट अत्यन्त प्रभावित छ, तरपनि यहाँको संस्कृतिलाई आफ्नै किसिमको मौलिक संस्कृति मान्न सकिन्छ ।–धुस्वाँ सायमी, *दि लोटस एण्ड दि फ्लेम,* काठमाडौँ : रत्न पुस्तक भण्डार, ई.सं. १९८०, पृ. ६७ ।

[९७] बलदेव जुजु, *नेवाः संस्कार व उकिया विधि,* येंः वैदिक प्रतिष्ठान, ने.सं. ১১১९, पृ. १ ।

भक्तपुरका नेवार बासिन्दामा जन्मेदेखि बुढ्यौलीसम्मका अनेक संस्कार र कर्मविधि गर्ने चलन पाइन्छ । यस्तो सामाजिक संस्कार गर्ने भन्ने सामाजिक बिधि बिद्यमान छ । यसैले कसैलाई उमेर पुगेर पनि त्यस उमेरअनुसारको गर्नुपर्ने संस्कार गरिदिएन भने समाजमा त्यसलाई उचित मानिन्न । यस्ता संस्कार कर्मलाई मह□व दिनुको अर्थ उमेरको बढोत्तरी सँगै मानव जीवनलाई संस्कारजन्य र सभ्य बनाउँदै लानु हो । यहाँको नेवार समाजका मुख्य–मुख्य संस्कारहरू निम्न छन् ।

**मचाबु ब्यङ्केगु (न्वारन) :** पहिलो बच्चा जन्मदा छ दिनमा र अन्य बच्चाहरूको पालामा चार दिनमा चोख्याउने जुन चलन वा संस्कार छ, त्यसलाई मचाबु ब्यङ्केगु भनिन्छ ।[९८] यो संस्कार परिवारको नव सदस्यको रूपमा भित्रिएको शिशुको नामकरणसँग सम्बन्धित छ ।[९९] यसैले बोलाउने नाम फुपूले र चिनाको नाम जोशीले राख्ने चलन छ ।[१००] त्यस दिन बच्चाको मामाघरबाट छोरो जन्मिएमा सिङ्गो राँगाको टाउको र छोरी जन्मिएमा आधा टाउको सहित अन्य चीजबीजहरू ल्याइन्छ । यस्ता चीजबीजहरू नवजात शिशु र आमाकालागि हुन्छन् । यसमा विशेष गरेर परालको सुकुलदेखि शिशुकालागि तोरीको सिरानी, ओढ्ने, ओछ्याउने अनि शिशुको आमा, बाबुका लागि एक एक जोर नयाँ ल्याइन्छ ।[१०१] यो नामकरण विधिको समाजमा ठूलो मह□व छ । यद्यपि न्वारानका दिन जुराएको नाम नै पछिसम्म व्यबहारमा चलिरहन्छ भन्ने छैन तरपनि एउटा व्यक्तिलाई समाजमा परिचित गराउन यस नामकरणविधिले ठूलो भूमिका खेल्दछ ।

**मचाजङ्को वा चिपं थिकेगु(पास्नी) :** छोरी भए ५ महिना, छोरा भए ६ महिना लाग्ने बित्तिकै यो संस्कार गरिन्छ ।[१०२] यो संस्कार नभएसम्म बच्चालाई आमाको दूध बाहेक अन्य ठोस बस्तु ख्वाउन हुन्न भन्ने चलन छ ।[१०३] यसमा पनि मामापट्टिबाट पूजासामान र नयाँ कपडाहरू दिइन्छ । पास्नीको दिन बच्चालाई तासको नयाँ लुगा लगाएर खीर ख्वाइन्छ र उपहारहरू दिइन्छ । देवी देवताको दर्शन गर्न लगिन्छ र अन्त्यमा सामुहिक भोज हुन्छ ।

---

[९८] कतिपयले यसलाई छैठी पनि भन्ने गर्छन । यो विशेष गरेर ६ दिनमा गर्ने संस्कारलाई भनिन्छ । –*ऐजन,* पृ. २ ।

[९९] नेवारहरूको आफ्नो जातअनुसार संस्कार गर्ने चलनमा विविधता पाइन्छ । यसैले कतिपयमा दशौं दिनमा चोख्याउने र बाह्रौं दिनमा नाम राख्ने चलन पनि छ । -*ऐजन*।

[१००] *मेचीदेखि महाकाली, भाग २,* पा.टि.नं. ४, पृ. ७६४ ।

[१०१] नेपाली, पा.टि.नं. ६४, पृ. ९२–९३ ।

[१०२] तर कसैकसैले छोराको भए ६ वा ८ र छोरीको भए ५ वा ७ महिनामा पास्नी गर्ने चलन छ भनेर भनेका छन् – *ऐजन,* पृ. ९९ ।

[१०३] जुजु, पा.टि.नं. ९७, पृ. ८ ।

**इही (बेल विवाह) :** यहाँको नेवार समाजमा प्रचलित यो अनौठो परम्पराले नेवार केटीहरूको जीवनमा एक बिशिष्ट र मह□वपूर्ण स्थान ओगटेको पाइन्छ । यस्तै चलन Mock Marriage भनेर दक्षिण भारतीय नायर ब्राम्हणहरूमा पनि प्रचलित रहेको देखिन्छ ।[१०४] तर नेवार समाजभित्र कै भएपनि द्योबजु (राजोपाध्याय), कसाईं, च्यामे, धोबी, डुँई जातिमा इहीको चलन छैन ।[१०५] यसदेखि बाहेक सम्पूर्ण नेवार केटीहरूमा रजस्वला हुनुभन्दा अघि सातदेखि नौ वर्षको उमेरमा स्वर्ण कुमार वा अमर पुरुषको प्रतीक बेलसँग बिहे गरिन्छ ।[१०६] नारायणलाई अमर दुलाहाको रूपमा पाइसकेपछि नेवार केटीको जीवनमा आउने अरु बिहेलाई धार्मिक बन्धनको रूपमा भन्दा सामाजिक र व्यावहारिक आवश्यकताको रूपमा बढ्ता मान्यता दिइन्छ । हिन्दु र बौद्ध दुवै नेवारमा पाइने यस चलनबाट नेवार महिला अन्य जातिका महिला भन्दा विशेष गरेर आर्य समूहका महिला भन्दा बढी स्वतन्त्र भएको थाहा हुन्छ ।[१०७] जेहोस, यो प्रथा मध्यकालीन विवाहका विविध प्रथाहरूमध्येको एक उन्नत र सभ्य प्रथाको रूपमा चलिआएको छ । खर्चको किफायतीलाई दृष्टिगत गरी हाल संयुक्त रूपमा इही गराउने चलन ज्यादा भेट्टिन्छ ।

**बारा तयेगु (गुफा राख्ने) :** प्रथम पटक रजस्वला हुने बित्तिकै वा हुनुभन्दा अघि कन्यालाई एघार दिनसम्म पुरुषको नजरबाट लुकाएर अँध्यारो कोठामा राख्ने र बाह्रौं दिनमा सूर्यको दर्शन एवं पूजा गरेर चोख्याउने चलनलाई बारा तयेगु भनिन्छ । यस संस्कार पश्चात् कन्या विवाहका लागि योग्य भएको मानिन्छ । यो चलन पनि नेवारबाहेक अन्य जातिमा पाइँदैन । बारा अवधिमा केही गरी गुफा बसेकी कन्याको मृत्यु भएमा महिलाहरूले नै त्यसको लास दलिनबाट प्वाल पारेर भुइँ तल्लामा झारी त्यहीं गाड्ने चलन छ ।[१०८]

नेवारहरूमा मात्रै प्रचलित रहेको इही र बारा तयेगु संस्कारको मह□वबारे ने.सं. ५०० को नारद स्मृति नामक हस्तलिखित ग्रन्थमा यस्तो श्लोक उल्लेख भएको पाइन्छ ।

व्यञ्जनैस्तु समुत्पन्नैः सोमो भुञ्जेत योषितः।
पयोधरैस्तु गन्धर्वो रजस्थग्निः प्रकीर्तितः॥
तस्माद व्यञ्जनोपेतामरजाम पयोधराम् ।
अमुक्त पूर्वा सोमाद्यैर्वद्याद् दुहितरं पिता ॥

---

[१०४] *ऐजन*, पृ. झ ।
[१०५] नेपाली, पा.टि.नं. ६४, पृ. १०६ ।
[१०६] विष्ट, पा.टि.नं. ६५, पृ. २३ ।
[१०७] बरगती, पा.टि.नं. ६१, पृ. ११ ।
[१०८] नेपाली, पा.टि.नं. ६४, पृ. ११७ ।

(आइमाईको आफ्नो योवन सुरु हुनेबित्तिकै उसको स्तनलाई गन्धर्वले भोग गर्छ, अग्नि उसको रजस्वलामा बस्छ। यसर्थ केटीको बाबुले यो हुनुभन्दा अघिबाटै अर्थात् छातीमा स्तन वृद्धि र रजस्वला हुनुभन्दा पहिले नै आफ्नी छोरीलाई विवाह गरेर पठाउनु पर्दछ।)

वास्तवमा काठमाडौँ उपत्यकाको नेवार समाजमा होस् वा दक्षिण भारतको नायर ब्राम्हण समाजमा इही गर्ने संस्कारको एउटा वैचारिक पक्ष के देखिन्छ भने आइमाइ वा केटीमान्छेको जीवनमा यौवनावस्था एउटा मह□वपूर्ण अवस्था हो । यसको निराकरणपूर्व कन्यादान गर्नु अर्थात् देवता सुवर्णकुमारको प्रतीक बेल वा भगवान विष्णुलाई छोरी सुम्पनु वा कन्यादान गर्नु नै इही संस्कार हो । त्यस्तै गरेर रजस्वला हुनुपूर्व वा प्रथम पटक रजस्वला हुनेबित्तिकै एघार दिनसम्म पुरुषबाट लुकाएर बाह्रौं दिन बिहान सूर्यनारायणलाई प्रतीकात्मक रूपमा चढाएर यो खतरा निवारण गर्ने संस्कार नै बारा तयेगु हो ।[१०९]

**रजस्वला :** रजस्वला हुँदा चार दिनसम्म बार्ने चलन हिन्दुमार्गी नेवार समाजमा भएपनि बौद्धमार्गी नेवारहरूमा पर सर्ने चलन प्रायः छैन । रजस्वला भएको अवधिमा पनि नुहाएर घरायसी काम गर्न उनीहरूलाई दिइन्छ । तर पूजाकोठामा पस्न वा धार्मिक कार्यमा भाग लिन भने मनाही गरेको पाइन्छ । यसबाट यहाँको समाज आज पनि प्राचीन वैदिक परम्पराबाट प्रभावित रहेको देख्न सकिन्छ ।

**छेवर तथा चूडाकर्म (ब्रतबन्ध) :** पहिले पहिले भए सबै नेवारहरूमा छेवर संस्कार गरेको ५, ६ वर्षपछि मात्र ब्रतबन्ध गर्ने चलन थियो तर आजभोलि भने सजिलोका लागि छेवर र ब्रतवन्ध दुवै एकैदिन गर्ने चलन आएको छ । छेवर भनेको बालकलाई समाजमा भित्र्याउन गर्नुपर्ने संस्कार हो भने ब्रतवन्ध भनेको पढीलेखी ज्ञानगुणका कुरा थाहा पाउन आफूलाई अनेक नियन्त्रणमा राखी उच्च शिक्षा प्राप्त गर्ने क्रममा अनुशासनको बाटो देखाउने संस्कार हो ।[११०] यस संस्कारमा अस्तुराको पूजा गर्ने अभिभारा फुपूको हुन्छ । सुरुमा त्यस अस्तुराले केटाको केश छुने काम मामाको हुन्छ, जुन केश भुईमा झर्न नपाओस् भनेर फुपूले थालमा थाप्ने कार्य गर्छिन् ।[१११] त्यसपछि नाउले केश खौरिदिन्छ । तागाधारी नेवारहरूमा जनै लाउने संस्कार यसै दिनबाट सुरु हुन्छ भने अन्य नेवारहरूमा लंगोटी लाउन दिने चलन छ । तर बौद्ध नेवारहरूमा ब्रतबन्ध (कयता पूजा) को सट्टा आ–आफ्ना

---

[१०९] जुजु, पा.टि.नं. ९७, पृ. झ–ञ ।

[११०] *ऐजन*, पृ. १६ ।

[१११] नेपाली, पा.टि.नं. ६४, पृ. १०४ ।

विहारमा चुडाकर्म (बरे छुइगु) गर्छन् । साथै हिन्दु नेवारमा केश खौरिंदा टुप्पी राख्ने चलन छ भने बौद्ध नेवारहरू टुप्पी राख्दैनन् । इतिहासमा भक्तपुरका राजा जितामित्र मल्लका पुत्र भूपतीन्द्र मल्लको ने.सं. ८०६ (वि.सं.१७४२)मा व्रतबन्ध भएको कुरा धरःपौमा टिपोट गरिएको छ ।[११२]

**भिं–इहिपा (शुभ–विवाह) :** यहाँका नेवारहरू जातिपातिमा ठूलो विश्वास गर्छन् । यसैले बिहेवारी गर्दा सगोत्रीमै गर्ने चलन छ । केही गरी बेजातमा बिहे गरेको खण्डमा गुठीगाना, भोजभत्तेरमा भाग लिन नपाउनु नै नेवारहरूकोलागि ठूलो सजायँ हो । बिहेको कुरा चलाउने व्यक्तिलाई “लमी” भनिन्छ । कुरा छिनेपछि स्वयम्बरको दिनमा मखमली थैली (लंपिचा) मा १० वटा सुपारी, सिन्दुरको बट्टा (सिन्हः मू) पूजा सामान र केटीलाई एक जोर नयाँ लुगा पठाइन्छ । यसलाई केटा तर्फबाट “ग्वें बियगु” भनिन्छ । केटीको घरमा यो सामान पुगेपछि थकाली नकींले दुलहीलाई सगुन लगाइदिएर  हातमा १० वटा सुपारी दिनुपर्छ । बिहे हुनुभन्दा अघि केटा पट्टिबाट “लाखामरी” पनि पठाउनु पर्छ । बिहेमा जन्तीसँग दुलाहा जान नपर्ने परम्परा एक रोचक विशेषता हो । जन्ती दुलही लिएर दुलाहाको घरमा पुगेपछि ढोकामा “लसकुस” पूजा गरिन्छ । दुलाहाको आमाले दुलहीलाई घरको साँचो दिएपछि दुलही भित्र्याइन्छ । त्यसपछि “होङ्केगु पूजा” हुन्छ ।[११३] यसमा दुलाहा दुलहीलाई एकसाथ बसाई संयुक्त रूपमा कुलदेवताको पूजा गराइन्छ । टीकाटालापछि परिवारका सदस्य, आफन्त, नातागोताहरूले दुलहीको हातबाट सुपारी लिने चलन छ, जसलाई “ग्वें सायकेगु” भनिन्छ ।[११४] अन्त्यमा दुलाहा दुलही दुवैलाई एउटै थालबाट चौरासीव्यन्जन खान लगाइन्छ ।[११५] यसलाई “थाय भू नके”(सहभोजन) भनिन्छ ।[११६] विवाहको चार दिनपछि साँझमा दुलहीपट्टिका लोग्नेमानिसहरू दुलहीको मुख हेर्न दुलहीको माइतीघरमा जम्मा भई भोज खान्छन् । त्यसपछि घरमा मुख हेर्न जान्छन् । यसलाई “ख्वः सो वनेगु“ भन्छन् । यो कार्य गर्दा हरेकले आफ्नो गच्छे अनुसार उपहार भेटी दिनु

---

[११२] चुन्दा वज्राचार्य, *जितामित्रकालीन धरःपौ,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र,त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५३, पृ. २७९ ।

[११३] दुलाहा र दुलही बीच मेल गराउने रीतिलाई “होङ्केगु” भनिन्छ । त्यस सम्बन्धी गरिने पूजा भएकोले यसलाई होङ्केगु पूजा भनिएको हो ।

[११४] (क) भक्तपुर निवासी ज्ञानकर वज्राचार्यको संग्रहमा रहेको “विवाहविधि” सम्बन्धी हस्तलिखित ग्रन्थ, पत्र संख्या १ ।
(ख) यसरी सुपारी नलिएसम्म दुलहीलाई परिवारको सदस्यको रूपमा लिइँदैन । यसअवस्थामा भोलिगएर त्यस दुलहीको बच्चा जन्मिदा दाजुभाइ, आफन्तहरूले सुतक बार्नु पर्दैन ।– जुजु, पा.टि.नं. ९७, पृ. ४६–४७ ।

[११५] *मेचीदेखि महाकाली, भाग २,* पा.टि.नं. ४, पृ. ७६६ ।

[११६] “स्त्री पुरुष नेम्हं फणिनिन चयके” –“दशकर्म पद्धति”, राष्ट्रिय अभिलेखालय, हस्तलिखितग्रन्थ माइक्रोफिल्म बी. ३६८/१९, पत्र ३० ।

पर्ने हुन्छ ।[११७] यथार्थतः विवाह संस्कार स्त्रीपुरुष बीचको शारीरिक मिलन मात्र नभएर धार्मिक, नैतिक र सामाजिक बन्धन पनि हो भन्ने कुरा यताबाट थाहा हुन्छ ।

**बुढा जङ्को (बुढा पास्नी) :** वृद्ध अवस्थामा प्रवेश वा बुढाबुढीको पास्नी भनिने यो प्रथा नेवार बाहेक अरु जातिमा पाइँदैन । यो प्रथा आर्थिक रूपले सम्पन्न र नातागोता थुप्रै भएकाले मात्र गर्ने गरेको पाइन्छ । यो बुढा जङ्को तीन पल्ट गरिन्छ – पहिलोपल्ट ७७ वर्ष ७ महिना ७ दिन ७ घडी ७ पला जाँदा यसलाई भीमरथारोहण भनिन्छ, दोस्रो पल्ट ८३ वर्ष ४ महिना ४ दिन ४ घडी ४ पला जाँदा यसलाई चन्द्ररथारोहण भनिन्छ र तेश्रोपल्ट ८८ वर्ष ८ महिना ८ दिन ८ घडी ८ पला जांदा यो बुढापास्नी गरिन्छ । यसलाई सूर्यरथारोहण भनिन्छ ।[११८] वृद्धव्यक्ति उमेरको त्यो हदमा पुगेपछि सर्वाधिक उमेरमाथि विजय प्राप्त गरेको अर्थमा यो संस्कार गरिन्छ । त्यस अवसरमा उष्णीय विजयानामक आयु देवताको पूजा गरी पगरी वा फेटा लगाउन दिई सिंगारेको रथमा राखी घुमाइन्छ । त्यसअवसरमा वरिपरिका सबैले "योमरी" को माला लगाइदिन्छन् । फूल, अबीर, अक्षताले तिनको पूजा गर्छन् र रथमा राखीसकेपछि टोल छिमेक, बजार घुमाइन्छ । यसरी रथमा राखेर घुमाउंदा पहिलोपल्ट भए डोरीले तानेर, दोश्रोपल्ट भए बोकेर, तेश्रोपल्ट भए झ्यालबाट माथि तानेर जात्रा गरिन्छ ।[११९] अन्त्यमा निम्तोमा आएका हरेकले सगुनको रूपमा दही, टोपी, कपडा आदि वस्तुहरू उपहार दिएर आशिष लिने चलन छ । यसपछि भोज खाने, खुवाउने कार्य हुन्छ ।[१२०] नेवार समुदायमा मात्र प्रचलित रहेको भएपनि यो परम्परा हाल आएर यहाँका प्रतिष्ठित नेवारहरूमा मात्र सीमित हुन पुगेको देखिन्छ । हुनपनि यो संस्कार जसका नाताकुटुम्ब धेरै छन्, जो आर्थिक रूपले सम्पन्न छ, उसैले गर्ने गरेको पाइन्छ । यस कर्म पश्चात् वृद्ध व्यक्ति देवतुल्य मानिन्छ । यसैले उसले झूठो बोल्न नहुने, सगोलमै बस्नु पर्ने जस्ता मान्यता रहेको पाइन्छ ।

### २.४.६ सामाजिक स्वभाव र व्यवहार

प्रत्येक मानिसको आनीबानी चालचलन आफ्नै किसिमको हुन्छ । एक ठाउँ र अर्को ठाउँमा मात्र नभएर एउटै घरका परिवारमा पनि प्रत्येकको स्वभाव र आनीबानी फरक

---

[११७] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[११८] नेपाली, पा.टि.नं.६४, पृ. १२०–१२१ ।

[११९] मानिसको घर पनि एक प्रकारले देव मन्दिर नै हो भन्ने यसको खास अभिप्राय हो ।-जुजु, पा.टि.नं. ९७, पृ. ५०-५१ ।

[१२०] प्रत्यक्ष अवलोकनवाट प्राप्त जानकारीको आधारमा ।

रहेको हुन्छ । कतिपयमा मिल्न पनि सक्छ । भक्तपुरका नेवारहरू आफ्नो धर्मसंस्कृतिप्रति समर्पित र सहृदयी देखिन्छन् । आफू भन्दा ठूलाबडा, बुढापाकाहरूको कदर गर्नु, पाहुनापासाको आदर गर्नु नेवारहरूको व्यवहारमा पाइने एउटा मह□वपूर्ण गुण हो ।

**जीउडाल :** डा.गोपालसिंह नेपालीज्यूले आफ्नो पुस्तक "दि नेवार्स" मा यस्तो भनाइ उल्लेख गरेका छन् – एकातिर पूरा मङ्गोल आकृति पनि देख्न पाइन्छ भने अर्कातिर पूर्ण आर्य आकृति पनि पाइन्छ । यसैले नेवार जातिको अध्ययन गर्दा नेवार–नेवारमा नै अनेक विभिन्नता पाइन्छ ।[१२१] नेवारहरूको शारीरिक कदका सम्बन्धमा जेसुइट पादरी डेसिडेरीले "नेवारहरू ठीक्कैको उचाइ कालो र हृष्टपुष्टका छन् । तिनीहरूमध्ये एकजनालाई एक हजार हिन्दुस्थानीहरूको बीचमा राखेपनि चिन्न सकिन्छ" भन्नु भएको छ ।

**खानपान :** यहाँको समाजमा खानपानमा दुई किसिमको परम्परा पाइन्छ – पहिलो सामान्य जीवनमा हुने नियमित भोजन र दोस्रो चाडपर्व, जात्रा उत्सव तथा संस्कारहरूमा हुने सांस्कृतिक भोजन । दैनिक जीवनमा यहाँका मानिसहरू बिहान र बेलुका भातसित गेडागुडीको दाल, तरकारी, अचार तथा दिउँसो चिउरा, रोटी, तरकारी राखेर भोजन गर्छन् । यो नियमित भोजन हो । यसमा सधैंजसो एकै प्रकारका परिकार हुन्छन् । तर सांस्कृतिक भोजन बेग्लै हुन्छ । चाडपर्व, जात्राउत्सव तथा संस्कार मनाउँदा भात खानु हुँदैन भन्ने मान्यता पाइन्छ । त्यस्तो बेला बिहान सम्हेय्बजी र बेलुका भोज खाने चलन पाइन्छ ।[१२२] भोजमा चोखोको निम्ति चिउराको प्रयोग गरिन्छ । चिउरालाई हाल "बजी" भनिएपनि प्राचीन समयमा "फलके" भनिन्थ्यो । गोपाल राजवंशावलीमा चिउराको निम्ति "फलके" शब्दको प्रयोग ठाउँ–ठाउँमा गरिएको छ ।[१२३] जयस्थिति मल्लको पालामा लेखिएको अभिलेखमा पनि "फलके" को उल्लेख परेको छ ।[१२४] अहिले यहाँको समाजमा प्रचलित भोजको परम्परा प्राचीनकालदेखि चल्दै आएको हो भन्ने तथ्य गोपालराजवंशावलीमा देवलदेवीले सम्हेय् भोज खुवाएको उल्लेख भएबाट पुष्टि हुन्छ ।[१२५] परम्परागत भोजमा साधारणतः चिउराको साथमा अनेक प्रकारका तरकारी, अचार, मासुका परिकार, मिठाई,

---

[१२१] नेपाली, पा.टि.नं. ६४, पृ. ३४ ।

[१२२] गोपालभक्त धौबन्जार, *मध्यकालीन नेपाल उपत्यकाको सामाजिक जीवन*, अप्रकाशित विद्यावारिधि शोधग्रन्थ, काठमाडौं : त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं. २०६२, पृ. २३७ ।

[१२३] वज्राचार्य र मल्ल, पा.टि.नं. १९ (क), पृ. ५८ (ख) पत्र ।

[१२४] डि.आर.रेग्मी, *मिडियभल नेपाल, भाग–२*, कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ४ ।

[१२५] वज्राचार्य र मल्ल, पा.टि.नं. १९(क), पृ. ५१ (क, ख) पत्र ।

दही तथा जाँड रक्सीको चलन पाइन्छ । भोजको किसिम हेरी खुताघासा (छ परिकार) वा च्याता घासा (८ परिकार) प्रमुख मानिन्छ ।[१२६] भोजका अवसरमा गरिने खानपानका आफ्नै नियम छ ।[१२७] जसअनुसार भ्वय सुकु र लपते (सालको पात) ठीक पारेर भोज खाने व्यक्तिहरू लहरै बसिसकेपछि सर्वप्रथम च्युरा, दुनामा अचार अनि रक्सीको निम्ति सलिचा (माटोको प्याला) राख्दै लगिन्छ । अनि पकाएको मासु आएपछि भोज सुरु हुन्छ । बीच–बीचमा अनेक परिकार आउँदै गर्छ, अन्त्यमा दही र सिसाफुसा (भिजाएको केराउ र फलफुल टुक्रा) राखेपछि भोज खाने कार्य सम्पन्न हुन्छ । तर बदलिंदो परिस्थितिले गर्दा यो परम्परागत भोज विस्थापित हुने क्रममा रहेको छ ।

**भेषभुषा :** प्रायः गरेर खेती किसानी नगर्ने श्रेष्ठ जातका नेवारहरूको मुख्य पेशा व्यापार वा सरकारी सेवा हुने भएकोले उनीहरूको पहिरन पनि त्यही अनुसार सुकिलो र सफा हुन्छ । यस पेशाका नेवारहरू पाको उमेरका भए दौरा, सुरुवाल, कोट, टोपी लाउँछन् । त्यस्तै युवाहरूले भने शर्ट पाइन्ट नै लाउन रुचाउँछन् । तर खेती किसानी गर्ने ज्यापूहरू सदैव शारीरिकश्रममा लाग्ने भएकाले उनीहरूको पहिरन कालो मैलो हुन्छ । तिनीहरूको पोशाक प्रायः घरबुनाको भोटो, सुरुवाल, कालो इष्टकोट र टोपी हुन्छ । आइमाईहरू घरबुनाको रातो किनारा भएको कालो “हाकुपटासी” सारी र घरबुनाकै चोलो लगाउँछन् । मल्लकालमा विवाहित महिलाले चोलो र सारी लगाउँदथे भने अविवाहित युवतीहरूले भोटो र जाँघवाल सुरुवाल लगाउँदथे ।[१२८]

यहाँको समाजमा भेषभुषालाई शरीरको कुन चाहिं भागमा लगाउने हो त्यस अनुसार नाम दिइएको पाइन्छ । जस्तो –कम्मरभन्दा माथि लगाउनेलाई “लँ” (भोटो) , “मिसा लँ” (बाहुला भएको चोलो), कम्मरभन्दा मुनि लगाउनेलाई “सुरुव” (सुरुवाल), पर्सी (फरिया, सारी) भन्ने गरिन्छ । कम्मरमा बाँध्ने पटुकालाई “जनी” भनिन्छ । त्यस्तै पुरुषले शिरमा टोपी र आइमाईले “गा” (खास्टो) ओढ्ने गर्छन् । विशेष गरेर ज्यापुनी महिलाहरूले चाडपर्व, जात्राउत्सवका बेला खास्टो ओढ्ने गर्छन् ।[१२९] अठारौं शताब्दीको प्रारम्भमा नेपाल उपत्यका आइपुगेका इसाई धर्म प्रचारकहरूले तात्कालीन उपत्यकावासीको भेषभुषाको वर्णन गरेका

---

[१२६] पर लडवीन, *फुड रिट्युयल एण्ड सोसाइटी एमङ्ग दि नेवार्स,* स्वीडन : अपसला रिसर्च रिपोर्ट इन कल्चरल एन्थ्रोपोलोजी, ई.सं. १९८५, पृ. २२ ।

[१२७] नेपाली, पा.टि.नं. ६४, पृ. ३८९ ।

[१२८] वैद्य, मानन्धर र जोशी, पा.टि.नं. ८६ , पृ. १८० ।

[१२९] नेपाली, पा. टि.नं. ६४, पृ. ३८९ ।

छन् । जस्तै–फादर जिसेपेले यहाँका बासिन्दाले डेनमार्कका बासिन्दाले जस्तै लुगा लगाउँदा रहेछन् भनेर वर्णन गरेका छन् । त्यस्तै फादर डेसिडेरीले यहाँका बासिन्दाले ऊन र सुती मिसिएको घुँडासम्म आउने जाकेट र कुर्कुच्चासम्म पुग्ने सुरुवाल साथै शिरमा रातो टोपी र खुट्टामा चप्पल लगाउँदथे, तर वर्षादको बेला स्त्री पुरुष दुवै नाङ्गै खुट्टा हिड्ने गर्दथे भनेर वर्णन गरेका छन् ।[130] त्यस्तै पहिले–पहिले हुने खानेले खुट्टामा "नालु लकाँ" भनेर सनपातको जुत्ता र नहुनेले परालको जुत्ता लगाउने गर्दथे ।[131] यसमा विशेष गरेर पराल र सनपातको जुत्ता ज्यापूवर्गले, छालाका जुत्ता शासक वर्गले लगाउँदथे ।[132] उनीहरूका जुत्ता राजस्थानी शैलीका हुन्थे, तर सबै वर्गले समान रूपले जुत्ता लगाउन पाउँदैनथे । पोडे जातिलाई जुत्ता लगाउन बन्देज थियो ।[133] तर समयको परिवर्तनसँगै लगाउने कुरामा पनि व्यापक परिवर्तन आउन थालेको छ । वास्तवमा मानिसको आयवृद्धि र सामाजिक खुल्लापनले गर्दा जसलाई जस्तो मन पर्छ त्यस्तो लगाउन सबै स्वतन्त्र भएका छन् ।

**गरगहना :** यहाँका बासिन्दाहरू गरगहना लगाउन सौखिन छन् । संसारका अन्य समाजमा जस्तै यहाँको समाजमा पनि गहनाको चलन पुरुषमा भन्दा महिलामा ज्यादा भेट्टिन्छ । महिलाले शरीरको कुन अंगमा गहना लगाउने हो, त्यसअनुसार गहनाको नाम दिएको हुन्छ । जस्तो– निधारमा लाउने आभुषणलाई शिरबन्दी भनिन्छ, जुन धेरै वजनको र महङ्गो हुने भएकोले यो गहना विशेष पर्व उत्सवहरूमा मात्र लगाइन्छ । विगतमा शिरमा "लुंस्वां" (सुनकोफूल) लगाइन्थ्यो ।[134] त्यस्तै कानमा लगाउने गहनामा विर्वली, ठेटी र टुकी थिए । तर हाल सुनको मुन्द्री, ढुंग्री, यार्लिङ, टप, कानपासा, रिङ्ग आदि लगाइन्छ । गलामा पहिले न्यापुसिख्ख, चन्द्रहार, तिख्ख लगाइन्थ्यो ।[135] तर हाल पोते, तिलहरी, सिक्री, तायो, हार आदि लगाउने गरिन्छ ।[136]

अविवाहित नेवार कन्याकेटीहरूले पनि पोते, तिलहरी लाउँछन् । जबकि नेवारेत्तर जातिमा यो गहना विवाहित महिलाहरूले मात्र लगाउन पाउँछन् ।[137] हातमा लगाउनेलाई

---

[130] वैद्य, मानन्धर र जोशी, पा.टि.नं. ८६, पृ. १७८ ।

[131] इन्द्र मजपुरिया, *नेपलीज ओमन,* काठमाडौं : रोयल नेपाल एकेडेमी, ई.सं. १९८२, पृ. १५० ।

[132] वैद्य, मानन्धर र जोशी, पा.टि.नं. ८६, पृ.१८० ।

[133] डेनियल राइट, *हिस्ट्री अफ नेपाल,* न्यू दिल्ली : कस्मो पब्लिकेसन्स, ई.सं. १९८३, पृ. १२४ ।

[134] रेग्मी, पा.टि.नं. १२४, पृ. ७८३ र ७८४ ।

[135] वैद्य, मानन्धर र जोशी, पा.टि.नं. ८६, पृ. १८१ ।

[136] बलराम कायस्थ, "नेवार समाजमा परम्परागत गहनाको महत्त्वः एक दृष्टि", *सिलिचुङ स्मारिका,* वर्ष ९, अंक -७, (वि.सं. २०५९), पृ. ४४–४५ ।

[137] कृष्णबहादुर थापा, *मैन अस्पेक्ट अफ सोसल, इकोनोमिक एण्ड एडमिनिस्ट्रेटिभ हिस्ट्री अफ मोडर्न नेपाल,* काठमाडौं : अम्बिका थापा, ई.सं. १९८८, पृ. १०० ।

चुरा भनिन्छ । अघिपछि काँचका रंगीन चुराहरू लगाइन्छ भने भोजभत्तेर चाडपर्वका बेला सुनका चुरा लगाइन्छ । साथै औंलामा औंठीहरू पनि लगाउने गर्छन् । औंठी सुन र चाँदीका हुन्छन् । पहिले पहिले “प्याखंअंगु”को निक्कै चलन थियो । यो औंठी महिलाले मात्र, त्यो पनि विवाह अवसरमा मात्र लगाइन्थ्यो ।[१३८]

यी उल्लिखित गहनाहरूमध्ये गह्रुङ्गो र महङ्गो गहनाहरू विशेष अवसरहरूमा र हल्का फुल्का गहनाहरू अघिपछि पनि लगाउने गरिन्छ । तर पहिले–पहिले सबै जातिका नेवारहरूले सबै किसिमका गहना लगाउन पाउँदैनथे । खास गरेर तल्लो जातिका नेवारहरूले सुनका गहना लगाउन पाउँदैनथे । जयस्थिति मल्लले पोडे जातिलाई सुनका गहना लगाउन बन्देज लगाएका थिए ।[१३९] त्यस्तै पाऊमा लगाउने गहना “कल्ली” (पाउबन्दी) पहिले नेवार शासक वर्गमा मात्र सीमित थियो । पछि आएर सर्वसाधारणमा पनि यो चलन आयो । हाल खुट्टामा पाउजु लगाउने चलन बढ्दो छ । खुट्टामा लगाउने आभूषण विशेष गरेर चाँदीको हुन्छ । तर नेवार महिलाहरूमा नाक छेड्ने र नाकमा फूली लाउने चलन भने पाइँदैन ।[१४०]

**अन्धविश्वास :** यहाँको नेवारी समाज स्वभावैले रुढिग्रस्त भएकाले यसमा अन्धविश्वास व्याप्त पाइन्छ, जुन अन्धविश्वास जीवनको प्रत्येक क्रियाकलाप, धर्म, कर्म आदिमा प्रशस्त भेट्टिन्छ । यस्ता अन्धविश्वासलाई मूलतः दुई भागमा छुट्याउन सकिन्छ – धर्मसँग सम्बन्धित अन्धविश्वास र समाजसित सम्बन्धित अन्धविश्वास ।[१४१] समाजमा गरेका अनेकौं अनैतिक कार्यको प्रायश्चित मन्दिरमा गएर केही चढाउँदैमा हुँदैन । तर यहाँको समाजमा यस्तो अन्धविश्वास पाइन्छ । यहाँका हरेक बासिन्दा आफ्ना प्रत्येक क्रियाकलाप, सामाजिक संस्कार, चाडपर्व आदिमा देवीदेवताको पूजा आराधना गर्ने गर्दछन् । अर्कोथरीको अन्धविश्वास भूतप्रेत, पिशाच, वीर, वायु आदि हुन् । त्यस्तै तन्त्रमन्त्र, बोक्सी, झाँक्रीमा पनि यहाँका मानिस विश्वास गर्छन् । त्यस्तै जीवनमा कुनै दुःखकष्ट आइपऱ्यो भने त्यसलाई पूर्वजन्मको पाप सम्झन्छन् । कतै जाँदा बिरालोले बाटो काट्नु, रित्तो गाग्री भेट्टिनु आदिलाई

---

[१३८] वैद्य, मानन्धर र जोशी, पा.टि.नं. ८६, पृ. १८१ ।

[१३९] राईट, पा.टि.नं. १३३, पृ. १२४ ।

[१४०] सुशीला मानन्धर, “नेवार जातिको परम्परागत गहना र श्रृङ्गार एक मानवशास्त्रीय एवं ऐतिहासिक दृष्टिकोण”, *पासुका*, वर्ष ३, अंक ७, (चैत्र २०५५), पृ. ७।

[१४१] थापा, पा.टि.नं. १३७, पृ. ८१ ।

अपसकुन मानिन्छ । वास्तवमा अन्धविश्वास जुनै समाजमा पनि पाइन्छ । फरक के हो भने अगाडि बढेको समाजमा कम र पछाडि परेको समाजमा ज्यादा भेट्टिन्छ ।

**आमोदप्रमोद :** यहाँका बासिन्दाका आमोद–प्रमोदका साधन भन्नाले विशेष गरेर चाडपर्व, जात्रा र विविध देवदेवीका नाच अनि गीत संगीत आदि भन्ने बुझिन्छ । मनोरन्जनका यी परम्परागत साधनहरू यहाँका नेवारहरू आफैले सृजना गरेका हुन् । संगीत र नृत्यका सौखिन नेवारहरू महादेवलाई नासःद्यः (नृत्य देवता) को रूपमा मान्ने गर्दछन् । तन्त्रवादीहरू 'षोडस लास्य' नामक नाचगानको देवताहरूको पनि पूजा गर्दछन् । यहाँको परम्परागत रागरागिनीहरूमा ब्याँचुली, बसन्त, घाटु, पुवज्या, सिनाज्या, सिलु, मालश्री आदि हुन् । गीत गाउन र बाजा बजाउनमा कतिपय परम्परागत नियमहरू पनि छन् । जस्तो जेठमा पर्ने सिठी नखः देखि श्रावणमा पर्ने गथामुगःचह्रेसम्मको अवधिमा खीङ (ढोलक) देव खीं, धीमे आदि बजाउनु हुन्न भन्ने छ । किनभने यो दुई महिनामा यहाँका नेवारहरू खेती किसानीमा व्यस्त हुनुपर्ने भएकाले गीत संगीत, नाचगान आदिमा लागेर काम धन्दा तिर ध्यान नदेलान भनी नेवारहरूका पुर्खाले यस्तो नियम बनाएको हुनुपर्छ । यसैकारण निर्धारित समयावधि सम्मको लागि वादवादनका सबै सामग्रीहरू "नासः द्यः"(नाचगान सम्बन्धी देवता)कहाँ लगेर थन्क्याउने गरिन्छ ।[१४२] गीत, संगीत, नाचगान, भजन, कीर्तन आदिलाई प्रोत्साहन दिन विभिन्न परम्परागत गुठीहरू जस्तो– नासःगुठी, दाफा भजन गुठी, धल्चा गुठी आदिको व्यवस्था गरिएको छ ।

यसदेखिबाहेक वर्षैपिच्छे आइरहने चाडपर्व, जात्रा उत्सवहरू मनाएर पनि यहाँका बासिन्दाहरूले मनोरन्जन प्राप्त गर्ने गर्छन् । उनीहरू वर्षभरि असंख्य चाडपर्व मान्ने र भोज भत्तेर आयोजना गरेर रमाइलो गर्छन् । यस्ता कार्यमा प्रशस्त पैसा खर्च गर्छन् ।[१४३]

## निष्कर्ष

यसप्रकार भक्तपुरको नेवार समाज आफ्नो परम्परागत मान्यता, रीतिरिवाज र मौलिक संस्कृतिमा सम्पन्न छ । यहाँका चाडपर्व, जात्रा, देवदेवीका परम्परागत नाच जस्ता सांस्कृतिक गतिविधिहरू सारा संसारकै लागि विशिष्ट प्रकारको रहेको देखिन्छ । नेपाल भ्रमणमा आउने कुनै पनि पर्यटक भक्तपुर घुम्न जान पाएन भने तिनले आफ्नो भ्रमण अधुरो

[१४२] साय्मी, पा.टि.नं. ९६, पृ . ६४ ।

[१४३] विष्ट, पा.टि.नं. ६५, पृ. २७ ।

भएको ठान्ने गर्छन् । भक्तपुर दरबार क्षेत्रमा रहेको एउटा गोल्डेन गेट (स्वर्णद्वार) मात्र देख्न पाउँदा पनि उनीहरू आधी संसार घुमे जतिको अनुभूति गर्छन् ।[१४४] वास्तवमा इतिहासको कुनै कालखण्डमा लगभग साँढे तीन सय वर्षसम्म यस शहरले समग्र नेपाल मण्डलकै राजधानी हुने सौभाग्य पाएको थियो । अतः नगरको संरचनागत वास्तुकला, तान्त्रिक पद्धति, धार्मिक परम्परा, सुरक्षा र सामरिक पक्ष, कला साहित्य, सांस्कृतिक गतिविधि, रहन–सहन आदि हरेक पक्षमा समुचित दृष्टि दिई सुव्यवस्था कायम राख्दै आएको शहर नै भक्तपुर शहर हो ।

[१४४] प्रा. तुल्सीराम वैद्यज्यूसँग २०६४ मार्ग ७ गते लिइएको अन्तर्वार्ताको आधारमा ।

# अध्याय तीन

# चाडपर्वको सैद्धान्तिक र वैचारिक पक्ष

## ३.१ परिचय

नेपालमा प्रचलित विविध सांस्कृतिक क्रियाकलापहरूमा नेपाल उपत्यकाको नेवार समुदायमा प्रचलित चाडपर्व, जात्रा उत्सवहरू पनि नेपाली संस्कृतिको एउटा अभिन्न अङ्ग हो । यहाँका चाडपर्वलाई संसारकै एउटा अत्यन्त उत्कृष्ट किसिमको सामाजिक, सांस्कृतिक पर्व मान्न सकिन्छ । किनकि यसको आफ्नै मौलिक परम्परा र सांस्कृतिक परिवेश रहेको छ । वास्तवमा यहाँका बासिन्दाको सम्पूर्ण जीवनपद्धति चाडपर्वको जालोमा बेरिएका छन् ।[१] सांस्कृतिक सहअस्तित्व र एकताबाट नै राष्ट्रिय एकतालाई अक्षुण्ण राख्न सकिन्छ । ठूलालाई आदर र सानालाई माया गर्नुपर्ने एवं सबैले खुसीयालीपूर्वक उन्मुक्त वातावरणमा मनाउने यी पर्वहरूको विशेषता भन्नु नै घरपरिवारमा मेलमिलाप, समाजमा सामाजिक सद्भाव, राज्यमा अमनचैन र विश्वमा शान्तिको कामना गर्नु हो ।[२] अनि यी अधिकांश चाडपर्वका पछाडि मुख्य अभिप्राय मानिस र वातावरणीय पर्यावरण अर्थात् जीव र जगत्बीचको सम्बन्ध सदा सन्तुलित बनिरहोस भन्ने कामनार्थ देवतालाई रिझाउनु रहेको देखिन्छ । वास्तवमा सृष्टिको प्रारम्भदेखि नै यस चराचर जगतलाई व्यवस्थित ढंगले चलाउँदै आएको एउटा अदृश्य शक्ति, जो सर्वशक्तिमान छ, जसलाई मानिसहरू ईश्वरको रूपमा कल्पना गर्ने गर्छन्, तिनलाई पुज्ने हेतुले यस्ता चाडपर्वहरू प्रचलनमा आएका देखिन्छन् । समयमा पानी परोस, कृषिबाली सप्रियोस्, सबैतिर सुख, शान्ति र समृद्धि फैलियोस्, प्राकृतिक प्रकोप, दैवी विपत्तिका घटनाहरू नहुन् भन्ने उद्देश्यले नै चाडपर्वहरू उत्पति भएका देखिन्छन् ।

## ३.२ चाडपर्वको सैद्धान्तिक अवधारणा

कुनै पनि समाजमा परम्परादेखि चल्दैआएका चाडपर्वहरू समाजको यथार्थ स्वरूपलाई चित्रण गर्ने एउटा सशक्त सांस्कृतिक प्रक्रिया हो । संस्कृतिभित्र मानिसका आस्था, विश्वास, कला, नैतिक आदर्श, मूल्यमान्यता, रीतिरिवाज, चालचलन तथा मानिसले

---

[१] टि.सी. मजपुरिया र एस. पी. गुप्ता, *नेपाल: दि ल्याण्ड अफ फेष्टिवल्स,* नयाँ दिल्ली : एस. चन्द्र एण्ड कम्पनी, ई.सं. १९८१, पृ. ३ ।

[२] शिवप्रसाद भट्टराई, "वर्तमान परिवेशमा बडा दशै", *गोरखापत्र दैनिक,* (२०६६/६/३ गते), पृ. ५ ।

आजसम्म हासिल गरेका शीप, ज्ञान, योग्यता आदि समाहित रहेका हुन्छन् ।[३] चाडपर्वले संस्कृतिका यी सबै पक्षको प्रतिनिधित्व गर्दछ । यसैले चाडपर्व संस्कृतिको अभिन्न अङ्गको रूपमा रहेको पाइन्छ ।

चाडपर्वसम्बन्धमा धेरै विद्वानहरूले अध्ययन, अन्वेषण गरे पनि यस विषयमा विभिन्न मतमतान्तर विद्यमान रहेका देखिन्छन् । मानिसले चाडपर्व किन मनाउँछन् ? चाडपर्वले समाजको संरचनामा के प्रकाश पार्छ ? सांस्कृतिक सर्वव्यापकताको क्षेत्रमा चाडपर्वले कसरी सैद्धान्तिक सामान्यीकरण गर्न सक्छ ? आदि बारे अधिकांश नेपाली पूर्व अध्ययनकर्ताहरू मौन रहेका छन् । जस्तो कि पुण्यरत्न बज्राचार्य,[४] लीलाभक्त मुनकर्मी,[५] सत्यमोहन जोशी,[६] रवि चालिसे[७] आदिले नेपालका चाडपर्वबारे अध्ययन अनुसन्धान त गरे, यस क्षेत्रमा ठूलो योगदान पनि पुऱ्याए, तर कसैले पनि चाडपर्वका सैद्धान्तिक अवधारणा, दृष्टिकोण, मान्यता, आधारभूत विशेषता आदि बारे ध्यान दिएको पाइँदैन ।[८] वर्णनात्मक शैलीमा प्रस्तुत गरिएका यी अध्ययनहरू केवल ऐतिहासिक घटना, कथा, किम्बदन्ती र विधिविधानमा नै केन्द्रित रहेका पाइन्छन् ।

तर हालका दिनमा आएर केही स्वदेशी तथा विदेशी विद्वानहरू विशेष गरेर समाजशास्त्रीहरू जस्तो– Kiyotomo Mikame, Sherry B. Ortner, Alexender W. Mackdonald, Dor Bahadur Bista आदिले नेपालका अनेक समुदायका चाडपर्वबारे मात्र लेखेनन, बरु यसकासाथै चाडपर्वसम्बन्धी धारणा र दृष्टिकोणलाई पनि प्रस्तुत गरेका छन् । Kiyotomo Mikame ले चितवनका थारु समुदायको चाडपर्वबारे अध्ययन गर्दा "Visible facts are clues with which to elicit the invisibile beliefs, values, attitudes, traditions and social structures (देखिने तथ्यले नदेखिने विश्वास, मूल्य, मान्यता, धारणा, परम्परा, सामाजिक संरचनाबारे पत्ता लगाउन सकिन्छ) ।"[९] भन्ने जस्तो निष्कर्षपूर्ण टिप्पणी गरेका छन् । त्यस्तै डोरबहादुर विष्टका अनुसार नेपालका अधिकांश चाडपर्वका साधारणतया दुईवटा रूप

---

[३] एडवर्ड बर्नेट टेलर, "प्रिमिटिभ कल्चर", *हाई प्वाइन्टस इन एन्थ्रोपोलोजी,* पाउल बोन्नान र मार्क ग्लेजर (सं), न्यूयोर्क : अल्फ्रेड ए नोंफ, ई.सं. १९७५, पृ. ६३ ।

[४] पुण्यरत्न बज्राचार्य, *हाम्रो चाडपर्व,* पाँचौं संस्करण, काठमाडौँ : रत्न पुस्तक भण्डार, वि.सं. २०३३, पृ. १०४ ।

[५] लीलाभक्त मुनकर्मी, *हाम्रा सांस्कृतिक पर्व र जात्राहरू,* काठमाडौँ : दयारत्न शाक्य, वि.सं. २०४३, पृ. १५८ ।

[६] सत्यमोहन जोशी, *नेपाली चाडपर्व,* काठमाडौँ : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३९, पृ. १३८ ।

[७] रवि चालिसे, *हाम्रा चाडपर्व,* काठमाडौँ : सूचना विभाग, श्री ५ को सरकार, वि.सं. २०३९ ।

[८] रमेशराज कुँवर, "होरी फेष्टिबल अफ राना थारुज अफ नेपाल", *भ्वाइस अफ हिस्ट्री,* भोलुम १२, संख्या १, (जुलाई १९९७), पृ. ९४ ।

[९] कियोतोमो मेकामे, "ए नोट अन द फगुवा फेष्टिबल अफ चितवन थारू", *कैलाश,* अंक ७, नं. ३-४, पृ. २४५ ।

हुन्छन्- (१) देवीदेवताको पूजापाठ (२) खाने पिउने, नाच्ने गाउने आदिद्वारा रमाइलो गर्ने ।[10] Ortner ले सोलुका शेर्पा समुदायका चाडलाई प्रतीक र धार्मिक क्रियाकलापको माध्यमबाट विश्लेषणात्मक रूपमा अध्ययन गरे ।

भारतमा पनि असंख्य विद्वानहरूले चाडपर्वकासम्बन्धमा अध्ययन गरेका छन् । तर थोरैले मात्र यस सम्बन्धी सैद्धान्तिक धारणाको विकास गर्न सकेको पाइयो । असीम मैत्रले भारतीय समाजशास्त्रीहरूले गरेका कार्यको अध्ययन गरेपछि चाडपर्वको व्याख्या गर्ने क्रममा केही Theoretical Model को विकास गरे । उनले चाडपर्वसम्बन्धी विश्लेषण गर्दा "Sub heading of definition (परिभाषालाई उपशीर्षक दिएर) Category of Classification (वर्गीकृत श्रेणी) Purpose or theme (विषय वा उद्देश्य) Feature (लक्षण) Characteristics (विशेषता) Utility (उपयोगिता) को आधारमा गर्नुपर्ने कुरा" सुझाएका छन् । साथै यसमा भौगोलिक अवस्था, वातावरण, पर्यावरण, लिङ्गको भिन्नता, परिवर्तित वा अपरिवर्तित आर्थिक अवस्था, नकारात्मक क्रियाकलापको विकास, यसले समाज र राज्यमा पर्ने प्रभाव पनि गाँस्न सकिन्छ भनेका छन् । K Gnanambal भन्ने विद्वानले "सङ्गठित रूपमा गरिने धार्मिक उत्सव" भनेर चाडपर्वको परिभाषा गरेका छन् । हिन्दु चाडपर्वहरू धार्मिक विषयवस्तुमा सामाजिक र मनोवैज्ञानिक लक्ष्य प्राप्त गरिने माध्यम पनि हो भन्ने विचारलाई उनले अघि सारेका छन् । साथै उनले धार्मिक क्रियाकलाप जस्तो पूजापाठ जपतप आदिलाई एउटा हिन्दु चाडका आधारभूत विशेषता मानेका छन् । Emile Durkheim का अनुसार "चाडपर्व समाजको अस्तित्वलाई जीवित राख्ने वा अङ्गिकार गर्ने संयन्त्र हो । यसले समाज वा समुदायका भावना र मनोविज्ञानलाई सङ्गठित गरेर सामाजिक सन्तुलन र सामुहिक एकतालाई कायम राख्न सहयोग गर्दछ ।" चाडपर्वका धार्मिक क्रियाकलापहरू ज्योतिषीय पद्धतिअनुसार बनाइएको पञ्चाङ्ग मुताविकको निश्चित् दिन र समय (साइत) मा सम्पन्न हुने र तत्पश्चात् स्थानीय बासिन्दाले मीठो खानेकुरा खाई आनन्दले रमाइलो गरी खुसीयाली मनाउने गर्छन ।[11]

कुनै पनि समाजले चाडपर्व मनाउनुका पछाडि केही निश्चित् उद्देश्यहरू हुन्छन् । जस्तो- देवीदेवता वा पूर्वजका आत्मालाई सन्तुष्ट तुल्याएर जीवनमा सफल बन्ने, महामारीलाई रोकथाम गर्ने, प्राकृतिक प्रकोप जस्ता विपत्तिहरू नहोस् घर परिवार, गाउँ,

---

[10] डोरबहादुर विष्ट, *पिपुल अफ नेपाल,* काठमाडौँ : रत्न पुस्तक भण्डार, ई.सं. १९७२, पृ. १६७ ।

[11] असिम मैत्र, *रिलिजिअस लाइफ अफ द ब्राह्मण,* न्यू दिल्ली : इन्टर इन्डिया पब्लिकेशन, ई.सं. १९८६, पृ. १२६ ।

समाजका सदस्यहरू लगायत खेतीपाती, पशुप्राणी आदि सबैको कल्याणको शुभेच्छाको कामना गर्दै चाड मनाइन्छ ।

चाड आर्थिक रूपमा बोझिलो बन्दै गए तापनि कुनै पनि मूल्यमा यो मनाउनै पर्ने हुन्छ । किनकि यसमा सामाजिक प्रतिष्ठाको सवाल गाँसिएको हुन्छ । यसैले कमजोर आर्थिक हैसियत भएकाले पनि साहुसँग ऋण काढेर भए पनि चाड मनाउने गर्छन । चाड सुरु हुनुभन्दा पहिलेबाट नै चाडका बेला खाने सामानहरूको जोरजाम, नयाँ लुगा किन्ने आदि बन्दोबस्त गर्न थालिन्छ ।

चाडपर्व सभ्यताको प्रतीकको रूपमा प्रतिबिम्बित भएको हुन्छ । मानिस जहाँ बसोबास गर्दछ, त्यहाँको वातावरण, पर्यावरणसँगको सांस्कृतिक समन्वयको काम पनि यसले गर्दछ । यसबाट मानिसको प्रकृतिसँग कहिलेकाहीँ देवता वा आत्मासँगको सम्बन्ध र मेलमिलापको सङ्केत दिन्छ ।

चाडपर्वहरू सदैव धार्मिक स्वरूपका हुँदैनन् । जादु, टुनासम्बन्धी चाडपर्व चाडपर्वको प्राचीन रूप हो । अझै पनि विश्वका कतिपय अशिक्षित समुदायहरू भूतप्रेत, बोक्सी, दुष्ट आत्माहरूको डर, त्रास, भय जस्ता अन्धविश्वासबाट मुक्त हुन सकेका छैनन् । विश्वका कतिपय भू-भागमा मौसम परिवर्तनलाई पनि चाडकै रूपमा लिएको पाइन्छ । किनकि यसले खानेकुरा आपूर्तिमा असर पारेको हुन्छ । जस्तो कि प्राचीन इजिप्सियनहरूले मौसमी चाड मनाउँदथे  किनकि नील नदी सिंचाईको मुख्य स्रोत भएको र यसले बालीनालीको विकासमा सहयोग पुऱ्याउँथ्यो । शीतकालीन चिनियाँ नववर्षलाई चिनियाँहरूले आफ्नो सबैभन्दा ठूलो चाडको रूपमा मान्छन् । यो चाड चान्द्रमानअनुसार निर्धारण गरिएको हुन्छ । आल्पस् पर्वतमा शरद् ऋतुका बेला गाईबस्तुहरू पहाडी चरणबाट फर्केर उपत्यकामा आएको अवसरलाई पनि चाडकै रूपमा मनाइन्छ । तर मौसमी चाडपर्व Solar र Lunar Calender अनि ऋतुचक्रअनुसार निर्धारण गरिएको हुन्छ ।[१२] वर्तमानमा आएर अन्य थुप्रै उत्सवहरूलाई पनि चाडकै रूपमा व्याख्या गर्न थालिएको छ । जस्तो-फिल्म फेष्टिबल्स, फुड फेष्टिबल्स, आर्ट फेष्टिबल्स, स्पोर्ट फेष्टिबल्स, युथ फेष्टिबल्स आदि । यी सबै आधुनिक चाड वा महोत्सव शहरी प्रकृतिका छन्, जुन परम्परागत सांस्कृतिक चाडपर्वभन्दा सर्वथा भिन्न छन् ।

[१२] www.google.com, http://en.wikipedia.opg/wiki/festival; retrieved in 2010 Dec. 10.

तर परम्परागत चाडपर्वका आफ्नै मह□व हुन्छन्, जसले समाजको यथार्थ स्वरूपलाई दर्शाइरहेको हुन्छ ।[१३]

हरेकले चाडपर्व र त्यसका सकारात्मक पक्षलाई मात्र हेर्ने गर्छन् । चाडपर्वका बेला देखिने विकृति, विसङ्गतिबारे कसैले पनि गम्भीर भएर सोचेको पाइँदैन । यस्ता विकृति, विसङ्गतिको बढ्दो विकासले सांस्कृतिक सर्वनाश निम्त्याउँदछ । विशेष गरेर युवा वर्गले चाडपर्व, जात्राका बेला बाहिरबाट यस्ता विकृतिहरू भित्र्याउने गर्दछन् । मादक पदार्थ सेवन गर्ने तथा अमर्यादित क्रियाकलाप गर्ने आदि घटना समेत हुने गरेको पाइन्छ ।

चाडपर्व संस्कृतिको एक हिस्सा हो । तर वर्तमानमा आएर यसमा विकृतिहरू भित्रिएका छन् । विशेष गरेर दक्षिण एशियाली समाजमा यो देख्न पाइन्छ । यस्ता नकारात्मक प्रवृत्तितर्फ नवयुवाहरू चाँडै आकर्षित हुन्छन् । युवाहरूमा पाइने यस्ता प्रवृत्ति विशेष गरेर शहरी क्षेत्रका चाडपर्वमा देख्न सकिन्छ । यसैकारण चाडपर्वमा सहभागीहरूको भूमिका समान रूपले हुनु आवश्यक छ ।[१४] चाडपर्व जात्रा उत्सव मनाउनुमा कुन चाहिँ उमेर समूह बढ्ता सहभागी हुन्छन्, यसैमा त्यो विकृति भर पर्दछ ।

भौगोलिक बनोट, वातावरण, पर्यावरण, हावापानी, प्रकृतिकै आधारमा कुनै पनि स्थानमा स्थानीय नाचगान, रहनसहन, परम्पराहरूको विकास भएका हुन्छन् । जस्तो- उदाहरणको रूपमा सोलुखुम्बुका शेर्पाहरूले चाड मनाउँदा बाक्लो लुगा लगाएर घरभित्र नाचगान प्रस्तुत गर्दछन् । यसको मुख्य कारण एकातिर समथर र फराकिलो ठाउँको अभाव र अर्कोतिर ज्यादै चिसो हावापानी हुनु हो । उच्च भू-स्थलका कारणले गर्दा गीत गाउँदा पनि ठूलो आवाजले गाउन सक्दैनन् । साँघुरो ठाउँको कारणले गर्दा एउटै लहरमा उभिएर नाच्नुपर्ने बाध्यता रहेको छ । जबकि नेपालको दक्षिण तराईका थारुहरूको चाडपर्वमा न्यानो हावापानी र समथर भौगोलिक बनोटको सुविधाले गर्दा उनीहरू हल्का लुगा लगाएर ठूलो घेरामा नाच प्रस्तुत गर्न सक्षम छन् । गीत गाउँदा पनि चर्को आवाज निकालेर गाउन सक्छन् ।[१५] यी उदाहरणबाट चाडपर्वका विविधतापूर्ण क्रियाकलाप भौगोलिक बनोट, वातावरण, पर्यावरण, हावापानी, प्रकृति आदिका कारणले कसरी एक अर्कोबाट पृथक र फरक रहेको छ भन्ने थाहा हुन्छ ।

---

[१३] हरिराम जोशी, *नेपालका चाडपर्व*, ललितपुर : जोशी रिसर्च सेन्टर, वि.सं. २०६०, पृ. ग ।

[१४] कुँवर, पा.टि.नं. ८, पृ. ९६-९७ ।

[१५] *ऐजन* ।

अतः चाडपर्वसम्बन्धी माथि उल्लेख गरिएका परिभाषा, धारणा, विशेषताहरूका आधारमा के भन्न सकिन्छ भने चाडपर्व, जात्रा उत्सवहरू धार्मिक भावनाको अतिरिक्त परम्परागत स्थितिको झलक, ऋतुपरिवर्तनको सङ्केत, राष्ट्रिय मह□वका पुरुषहरूको परिचय एवं प्राचीन संस्कृति र सम्पदाहरूको गरिमामय जानकारी, भूतप्रेत, पिचाश, डंकिनी, बोक्सी, राक्षस आदि दुष्ट आत्मा र रोगब्याधि हटाउने, कृषि फसल सपार्ने, सामाजिक स्थिरता कायम राख्ने आदिका लागि चाडपर्व मनाउने गरिन्छ । यसका अतिरिक्त चाडपर्वको विकास ऋतुकाल, समय, परिस्थिति, देशको भौगोलिक बनोट, वातावरण, पर्यावरण, मौसम आदिको आधारमा हुने गर्दछ ।

## ३.३ नेवार चाडपर्वको पृष्ठभूमि

काठमाडौँ उपत्यका चाडपर्वका दृष्टिले सम्पन्न मानिन्छ । यहाँका नेवारहरू परम्परादेखि चलिआएका चाडपर्व मान्न सौखिन छन् । चाडपर्व मान्न उनीहरू आफ्ना दैनिक कामधन्दाबाट समेत विश्राम लिन्छन् । यसवेला उनीहरू सम्बन्धित देवीदेवताकहाँ गएर दर्शनपूजन गर्ने, घरमा मीठा–मीठा परिकार बनाएर खाने, रमाइलो गर्ने आदि गर्छन ।

यी चाडपर्वको पृष्ठभूमिलाई निम्न उपशीर्षकका आधारमा विश्लेषण गर्न सकिन्छ ।

### ३.३.१ धर्मदर्शन

नेपाली संस्कृतिको प्रमुख आधार भनेको हिन्दु धर्म र दर्शन हो । हिन्दु धर्म संसारकै एक प्रमुख र प्राचीन धर्म हो । यसै धर्मको आधारमा नेपाली संस्कृति विकसित हुँदै आएकोले यहाँको नेपाली संस्कृतिलाई प्राचीन संस्कृति मान्न सकिन्छ । हिन्दु धर्ममा विश्वास गर्ने नेपाली समाज आफ्नो उन्नति वा अवनतिलाई पूर्वजन्मको फल ठान्दछ । धर्मले सत्मार्गमा हिँड्न अभिप्रेरित गर्ने भएकाले सदा ईश्वरभक्तिमा समर्पित भइरहन पाए मृत्युपछि स्वर्गलोक प्राप्त हुने यहाँको जनधारणा छ ।[१६] वास्तवमा संसारको जुनै धर्मले पनि मानिसलाई सत्मार्गमा हिँड्न अभिप्रेरित गर्दछ । हिन्दु धर्मग्रन्थहरूमा पनि दुर्भाग्य र अनिष्टबाट बच्न, सुख, शान्ति प्राप्त गर्न र अर्को जुनीमा दुःख नपाओस् भन्नाका लागि भगवान्को भक्ति, पाठपूजा, जपतप गर्नुपर्ने कुरा उल्लेख गरिएको छ ।[१७] अतः प्राचीनकालदेखि आजसम्म पनि समाजका हरेक वर्ग धार्मिक कार्य गर्न तत्पर देखिन्छन् । यस पृष्ठभूमिमा प्रत्येक घरपरिवार,

---

[१६] मेरि एम्. एण्डरसन, *दि फेष्टिवल्स अफ नेपाल,* लण्डन : जर्ज एलेन एण्ड वीन, ई.सं. १९७१, पृ. २६ ।

[१७] *ऐजन,* पृ. २३ ।

टोल, समाज र राज्यभित्र देवदेवीका मूर्ति स्थापना गर्ने, मन्दिर बनाउने, नियमित रूपमा पूजापाठ गर्ने, वार्षिक रूपमा जात्रा गरी चाड मनाउने जस्ता अनेक धार्मिक कार्यहरू सञ्चालन हुँदै आएका छन् । यहाँ वर्षेनी मनाइने जात्राहरू कुनै न कुनै मठमन्दिर वा देवदेवीसँग सम्बन्धित छन् ।[१८] त्यसैले यस्ता जात्रालाई पवित्र र धार्मिक समारोहको रूपमा लिन सकिन्छ ।

वास्तवमा जात्रा उत्सव सञ्चालन गर्नाले समाजलाई अनेक उपलब्धिहरू प्राप्त हुने कुरा धर्मशास्त्रले सङ्केत गर्दछ । यसैको फलस्वरूप जात्राहरू सञ्चालन गर्ने परम्परा विकास हुँदै आएको छ । हिन्दु समाजमा वैदिक कालदेखि जात्राउत्सव मनाउने परम्परा रहेको तथ्य हाम्रा धर्मग्रन्थ र पुराणहरूले पुष्टि गर्दछ । त्यतिबेला जात्रालाई 'जता' र उत्सवलाई 'मह' भन्ने गरिन्थ्यो । त्यतिबेलाका प्रसिद्ध जात्राहरूमा गिरीमह, इन्द्रमह, स्कन्दमह, रुद्रजता, शिवजता, नागजता आदि थिए भन्ने कुरा हरिवंश पुराण, जैनधर्म ग्रन्थ आदि ग्रन्थहरूको आधारमा थाहा हुन्छ ।[१९] त्यस्तै त्यतिबेला प्रतापी राजाहरूले चक्रवर्ती महाराजाधिराज बन्ने आफ्नो ईच्छालाई सफलीभूत पार्न घोडाबलि दिएर गरिने उत्सव "अश्वमेध यज्ञ" पनि आयोजना गर्दथे । त्यस अवसरमा भव्य भोज आयोजना हुनुका साथै ब्राह्मणहरूलाई बहुमूल्य बस्तुहरू दान दिइन्थ्यो ।[२०]

चाडपर्व, जात्राउत्सव मनाउने परम्परा नेपालमा मात्र नभएर संसारका अरु मुलुकहरूमा पनि रहेको पाइन्छ । अनि ती मुलुकका चाडपर्व पनि कुनै देवीदेवतासँग, कुनै आफ्ना पितृसँग, कुनै खेतीपाती वा मौसम परिवर्तनसँग सम्बन्धित भएर आएका देखिन्छन् । तर जुनै चाडपर्वमा पनि सर्वप्रथम जपतप, व्रत, पाठपूजा जस्ता पवित्र कार्यहरू हुन्छन् । त्यसपछि मात्र त्यस खुसीयालीमा आफन्त, इष्टमित्र, साथीभाइलाई जम्मा गरेर मीठा–मीठा परिकार बनाएर खाने, ख्वाउने आदि गरी रमाइलो गर्ने गर्छन् । यसरी संसारका जुनै देशमा पनि परम्परागत चाडपर्वहरू प्रत्यक्ष वा परोक्ष रूपमा धर्मकर्मसँग सम्बन्धित रहेका हुन्छन् । जस्तो-छिमेकी मुलुक चीनमा चिनियाँ पात्रोअनुसारको नववर्षलाई भव्य चाडको रूपमा धुमधामसँग मनाइन्छ । त्यस्तै तिब्बतमा ल्होसारपर्व, पाकिस्तान, बंगलादेशहरूमा इद,

---

[१८] एन्नी बरगती, *गड्स, मैन एण्ड टेरीटोरी,* न्यु दिल्ली : मनोहर पब्लिसर्स, ई.सं. १९९५, पृ. ७ ।

[१९] वासुदेव शरण अग्रवाल, *प्राचीन भारतीय लोक धर्म,* अहमदावाद : ज्ञानोदय ट्रष्ट, ई.सं. १९६४, पृ. ४-५ ।

[२०] बसन्त ऋतुमा आयोजना गरिने यस समारोहमा चक्रवर्ती हुन चाहने राजाले एउटा घोडालाई विधिपूर्वक सिङ्गारेर खुल्ला छाडिन्छ । एउटा निश्चित् समयसीमा पूरा गरी बिना व्यवधान त्यो घोडा फर्केर आएमा त्यस अवसरमा अन्य पशुहरूसहित त्यस घोडालाई बलि दिएर यो उत्सव मनाइन्थ्यो । - मजपुरिया र गुप्ता, पा.टि.नं. १, पृ. २ ।

बकरिद, रमजान आदिलाई महान् पर्वको रूपमा लिने गरिन्छ । अनि श्रीलङ्का, थाइलैण्ड, बर्मा आदि मुलुकहरूमा बुद्धजयन्ती, भारतको बिहार राज्यमा छठपर्व, महाराष्ट्रमा गणपति उत्सव, गुजरातमा जगन्नाथ यात्रा आदिलाई भव्य पर्व वा उत्सवको रूपमा मनाउने गरिन्छ ।

नेपाल उपत्यका चाडपर्वका लागि उर्वरभूमि मानिन्छ । यहाँ अनेकौं चाडपर्व मनाइन्छ । पश्चिमेली विद्वानहरूले समेत यहाँको समाजमा वर्षदिनभरिका दिनहरूभन्दा चाडपर्वका दिनहरू बढी छन् भनी स्वीकारेका छन् ।[२१] यी चाडपर्वहरूको एउटा खास विशेषता के हो भने चाडपर्वका अवसरमा गरिने देवीदेवताका जति पनि तान्त्रिक विधिविधान वा पूजापाठहरू छन्, त्यसको चरमविन्दु भनेको पशुबलि नै हो ।[२२] यसरी सम्बन्धित देवतालाई पशुबलि चढाएपछि चाडपर्वको मुख्य कार्य सम्पन्न भएको मानिन्छ । त्यसपछि खानपान, आमोदप्रमोद, आदि गर्ने कार्य प्रारम्भ हुन्छ । नेवारका अतिरिक्त क्षेत्री, बाहुनहरूमा पनि चाडपर्वको बेला सर्वप्रथम देवीदेवताको पूजा आराधना गर्ने प्रचलन रहेको पाइन्छ । जस्तो कि दशैंका बेला दुर्गाभवानीको पूजापाठ गर्ने, मान्यजनका हातबाट टीका थाप्ने जस्ता कार्यहरू हुन्छन् ।[२३] यसदेखि बाहेक पूर्वका किराती र हिमाली भेगका शेर्पा समुदायमा पनि चाडपर्वका बेला आफूले मान्ने गरेका देवीदेवताको सम्मानमा पूजापाठ गर्ने चलन रही आएको पाइन्छ ।[२४] यसरी चाडपर्वका अवसरमा गरिने देवदेवीका पूजापाठ, भक्तिभाव आदिबाट यहाँको संस्कृति प्राचीनकालदेखि धार्मिक र आध्यात्मिक भावनाबाट प्रेरित छ भन्ने कुरा थाहा हुन्छ ।

यहाँनेर विचारणीय कुरा के देखिन आउँछ भने लिच्छवीकालमा शुद्ध वैदिक धर्म, दर्शन, साहित्यको प्रधानता थियो । यसैले त्यसबेलाका चाड वा जात्रा उत्सवहरू पनि वैदिक देवताका नाममा मनाइने गरिन्थ्यो । जस्तो- द्वारोद्घाटनयात्रा, कैलाशयात्रा, वराहयात्रा आदि त्यसबेलाका प्रसिद्ध जात्रा थिए ।[२५] तर पूर्वमध्यकालतिर आइपुग्दा तन्त्रमन्त्र प्रधान विचारधारा प्रादुर्भाव हुन पुग्यो । त्यसबेला निर्मित अनेक तान्त्रिक साहित्य र त्यसैबाट उद्भव भएका अनेक स्वरूपका देवदेवीका मूर्तिहरू, चाडपर्वहरू, पूजाविधानहरू प्रचलनमा आए ।[२६] त्यसबेला तन्त्रको लोकप्रियता जनस्तरमा मात्र नभएर राजकीय स्तरमा नै थियो भन्ने कुरा

---

[२१] टिवर सल्केज, *विण्डो अन नेपाल,* लण्डन : रवर्ट हेल लिमिटेड, ई.सं. १९५९, पृ. १३७ ।

[२२] बरगति, पा.टि.नं १८, पृ. १५ ।

[२३] विष्ट, पा.टि.नं १०, पृ. १२ ।

[२४] *ऐजन,* पृ. ४२-४३ र १७४ ।

[२५] धनवज्र वज्राचार्य, *लिच्छवीकालका अभिलेख,* काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३०, पृ. २७४ र ४८६ ।

[२६] मनवज्र वज्राचार्य, *हाम्रा चाडपर्वहरूको विवेचना,* काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०२५, पृ. २ ।

मल्ल शासकहरूका राजप्रशस्तिमा उल्लेखित मानेश्वरी, तलेजु, स्वेष्ट देवता, इष्ट देवता आदिबाट थाहा हुन्छ ।

यसरी यहाँ तन्त्रमन्त्रको विकास हुनुका पछाडि मुसलमानी आक्रमणबाट उत्पीडित भारतीय हिन्दु विद्वानहरूको नेपाल प्रवेश र दक्षिणको तिरहुत वा डोय राज्यसितको निकट सम्बन्ध नै हो भन्ने देखिन्छ ।[२७] विशेष गरेर शैव, बौद्ध, वैष्णव, शाक्त मतका तान्त्रिक देवीदेवतालाई देश रक्षा, जनहीत, राष्ट्रिय समृद्धि, सुस्वास्थ्यको कामना तथा कृषिको उन्नतिका लागि मान्दै आएको पाइन्छ । पूर्वमध्यकालका राजा आनन्ददेवले राजधानी र राजदरबारको प्रतिष्ठा गर्दा तान्त्रिक रूपबाट पनि देश, जनता र राजाको सुरक्षा समृद्धि होस् भन्नाका लागि नगरका प्रमुख स्थानहरूमा अष्टमातृका, नवदुर्गा, दशमहाविद्या, भैरव आदि शीर्ष रूपका देवमूर्ति, मन्दिर, पीठहरू स्थापना गर्न लगाए ।[२८] यसप्रकार मल्लकालमा आएर यहाँको जनजीवनमा तान्त्रिक प्रवाहको लोकप्रियता निक्कै बढ्न गएको परिप्रेक्षमा यहाँका चाडपर्व, जात्रा उत्सवहरू पनि तिनै तान्त्रिक देवीदेवताको नाममा सञ्चालन हुदै आएको तथ्य ती जात्राका विधिविधानसम्बन्धी हस्तलिखित ग्रन्थहरूको अध्ययनको आधारमा स्पष्ट हुन्छ ।[२९]

### ३.३.२ मनोरञ्जन

यस धर्तीमा मानिसको विकाससँगै संस्कृतिको पनि विकास हुन थालेको देखिन्छ अर्थात् सृष्टिको प्रारम्भदेखि नै मानिसका लवाइखवाइ, हिँड्डुल, उठबस जस्ता यावत क्रियाकलापबाट नै संस्कृतिको विकास हुन थालेको हो र मानिस जति विकसित र सभ्य हुँदै गयो, त्यति उसको संस्कृति पनि परिष्कृत हुँदै गएको ऐतिहासिक तथ्यले देखाउँदछ । चाडपर्व पनि त्यसैको परिणति हो । वास्तवमा मानिस एक चेतनशील प्राणी भएकाले प्राग ऐतिहासिककालदेखि नै उसले आफ्नो मानसिक र शारीरिक थकान मेट्नका लागि बेलाबखत रमाइलो गर्नु पर्ने आवश्यकता देख्यो र आफ्नो स्थितिअनुरूप रमाइलो पनि गर्दै आयो । मानवजीवनलाई खान, पिउन र लाउन पाएर मात्र हुँदैन । मनमस्तिष्कलाई सदा सन्तुलित र स्वच्छ बनाइराख्न पनि जरुरी हुन्छ । सन्तुलित मनमस्तिष्कले मात्र आवश्यकताअनुरूप उचित निर्णय लिई सफलतापूर्वक कार्यसम्पन्न गर्न सक्दछ । मनुष्यको मनमस्तिष्कलाई

---

[२७] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग* (अप्रकाशित विद्यावारिधि शोध प्रबन्ध), कीर्तिपुर : त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५०, पृ. ७८ र ८१ ।

[२८] *ऐजन,* पृ. ७९ ।

[२९] राष्ट्रिय अभिलेखालयमा संग्रहित हस्तलिखित ग्रन्थहरू - विश्वयात्रा विधि २/७७२, दुईमाजु पूजाविधि २/२७७ स्मशान भैरव पूजा पद्धति २/९२४, नेपाल वर्षक्रिया ५/७३७५ ।

सन्तुलित बनाइ राख्नको निमित्त आमोदप्रमोदको ज्यादै ठूलो भूमिका रहन्छ । यसैकारण आमोदप्रमोद वा मनोरञ्जन प्रदान गर्ने प्रयोजनार्थ नै चाडपर्व, जात्राउत्सवको परम्परा प्रचलनमा आएको हो भन्ने थाहा हुन्छ । अर्को कुरा, अहिले जस्तै प्राचीन कालमा आमोदप्रमोदका विविध साधनहरू थिएनन् । रमाइलो गर्ने मुख्य माध्यम भनेको यिनै चाडपर्वहरू थिए ।

यसरी आफ्ना समस्त दुःख, पीडा, वेदना भुलेर एकदिन वा एकक्षण भए पनि सबैसँग मिलेर रमाइलो गर्ने मुख्य माध्यमको रूपमा चाडपर्व मनाउन थालिएको हो । अनि चाडपर्वमा उत्साहपन र जनसहभागिता जुटाउन यसलाई धर्मकर्म, देवीदेवता र परलोकसँग जोडेर हेर्ने प्रचलन संसारव्यापी हुन आयो । चाडपर्वका अवसरमा गरिने खटयात्रा, रथयात्रा, ऋतुअनुसारका गाना, विभिन्न प्रकारका बाजाहरू, अनेकतरहका नृत्यहरूबाट उपरोक्त तथ्यको पुष्टि हुन्छ । उदाहरणका लागि गाईजात्रा, इन्द्रजात्राको अवसरमा आठ–आठ दिनसम्म नाचगान, प्रहसन, यात्रा आदि कार्य गरिने, फागुको बखत आठ दिनसम्म अबिर खेली गाना गाएर दिन बिताउने, त्यस्तै दशैं अनि तिहारका मुख्य दिनहरूमा गरिने विविध सांस्कृतिक क्रियाकलापहरूका आधारमा यहाँका चाडपर्वहरूको उत्पति धार्मिक भावना, आध्यात्मिक चिन्तन अनि मनोरञ्जन प्राप्त गर्ने उद्देश्यले भइआएको हो भन्ने देखिन्छ । वास्तवमा चाडपर्वले कुनै पनि स्थानका मानिसहरूको धार्मिक विश्वास, सामाजिक परम्परा, रीतिरिवाज, आर्थिक स्थितिको परिचय मात्र दिइरहेको हुदैन, मनोरञ्जनको झलक पनि प्रस्तुत भइरहेको हुन्छ ।[३०]

### ३.३.३ आर्थिक स्थिति

वर्तमान समयमा नेपाल उपत्यकामा प्रचलित रहेका अधिकांश चाडपर्वहरू विभिन्न कालखण्डमा विभिन्न उद्देश्य र कारणबाट अभिप्रेरित भई उत्पन्न भएका हुन् । आर्थिक समुन्नतिको पृष्ठभूमिमा धर्म, पुण्य, लोककल्याण, सामाजिक, सद्भाव, पारस्परिक मेलमिलाप, मनोरञ्जन आदि प्राप्त गर्ने उद्देश्यले विभिन्न देवीदेवता, पितृ (पूर्वज), ऐतिहासिक घटना जस्ता कुराहरूको सम्झनामा यहाँ चाडपर्व मनाउने परम्परा थालनी भएको मान्न सकिन्छ ।

[३०] मजपुरिया र गुप्ता, पा.टि.नं १, पृ. १ ।

नेपाल उपत्यका प्राचीनकालदेखि नै आर्थिक रूपमा सम्पन्न र समृद्ध थियो । एकातिर कृषियोग्य जमिन, जहाँबाट प्रशस्त अन्नबाली लगायत् सागसब्जी, नगदेबालीहरू उत्पादन हुन्थ्यो भने अर्कोतिर उद्योग व्यापारको विकासले गर्दा दैनिक उपभोग्य बस्तुको सहज आपूर्तिका साथै उत्पादित बस्तुहरू बिक्रीका लागि बाह्य बजारमा समेत लगिने गर्थे । यसैकारण यहाँका बासिन्दाले कहिले पनि के खाउँ के लाउँको समस्या बेहोर्नु परेन । यसरी त्यसबेला नेपाल कृषिप्रधान हुनुका अतिरिक्त उद्योग एवं व्यापारका क्षेत्रमा ज्यादै विकसित थियो भन्ने तथ्य चिनियाँ तथा भारतीय स्रोतहरूको अध्ययनबाट समेत थाहा लाग्दछ । वैशालीबाट नेपाल प्रवेश गरेका सूर्यवंशी लिच्छवीहरू सभ्य, सुसंस्कृत र बुद्धिमान थिए । राज्यसत्ता आफ्नो हातमा आएपछि लिच्छवी शासकहरूले कृषि, उद्योग धन्दा एवं व्यापारको उन्नति गरी देशलाई आर्थिक दृष्टिले समृद्धशाली तुल्याउने कार्यमा दत्तचित्त भइ लागेका थिए । उत्तर प्राचीनकालीन टिस्टुङका अभिलेखहरूको अध्ययनबाट त्यसवेला नेपालको बाह्य व्यापार उक्त मार्ग भई हुने कुराको निश्चित् जानकारी मिल्छ ।[३१] अर्को, आचार्य जिनमित्र लिखित "मूल सर्वास्तिवाद विनय" मा वर्णित वर्णनअनुसार नेपालको वाह्य व्यापार प्राचीन समयमा भारतसम्म फैलिएको थियो ।[३२] कौटिल्यको अर्थशास्त्रमा नेपालमा बनेका ऊनीका सामानको मगधको राजधानी पाटलीपुत्रमा निक्कै ठूलो माग रहेको तथ्य उल्लेख पाइन्छ ।[३३] चिनियाँ ऐतिहासिक स्रोतअनुसार प्राचीन कालमा कृषि हेरी उद्योगधन्दा एवं व्यापारको क्षेत्रमा नेपालले अत्यधिक मात्रामा उन्नति गरेको थियो ।[३४] यी तथ्यहरूको आधारमा उत्तर प्राचीन कालमा नेपालको आर्थिक उन्नति प्रचुर मात्रामा भएको अनुमान गर्न सकिन्छ ।

यस किसिमको आर्थिक समुन्नतिको पृष्ठभूमिमा यहाँका बासिन्दाले अनेक किसिमका चाडपर्व, जात्रा उत्सव, नाचगान, खानपान, सामाजिक संस्कार, भेषभूषा, आभूषण, कलात्मक घर, दरबार, मठ, मन्दिर, पाटीपौवा, ढुङ्गेधारा, पोखरीहरू निर्माण गर्न सके । अनेक सांस्कृतिक गतिविधि संचालन गरेर धर्म, पुण्य, लोककल्याण र मनोरञ्जन लिन सके । फेरि अर्को कुरा, त्यतिखेरको समाजमा आजको जस्तो मनोरञ्जनका आधुनिक साधनहरूको

---

[३१] वज्राचार्य, पा.टि.नं २५, पृ. ३०९-३१० ।

[३२] हरिराम जोशी, *पेजेज अफ दि फरगटेन पास्ट,* ललितपुर : सुशीलराम जोशी, ई.सं. १९९८, पृ. १४० ।

[३३] "पिच्छिल मार्द्रमिव च सूक्ष्म मृदु च श्रेष्ठम् ॥ अष्टाप्लौटिसंघात्या कृष्णा भिङ्गिसी वर्णवारणमपसारक इति नेपालकम ।" –उदयवीर शास्त्री (अनु.), *कौटलीय अर्थशास्त्र,* लाहोर : मेहरचन्द्र लक्ष्मणदास, ई.सं १९२५, पृ. ८० ।

[३४] चिनियाँ ताङ्ग वृतान्तमा तिब्बतपट्टिको बाटो खुल्दा र व्यापार चल्दा नेपालमा खेतीवालहरूको सङ्ख्या भन्दा व्यापारीहरूको सङ्ख्या ज्यादा हुन गएको थियो भनी लेखिएको पाइन्छ । -सिल्भाँ लेभी, *ले नेपाल, दोश्रो भाग,* पेरिस : अनेष्ट लेरोक्स, ई.सं १९०६, पृ. १८५ ।

कल्पनासम्म पनि गर्न सकिंदैनथ्यो । त्यसैले चाडपर्व, जात्रा उत्सव जस्ता सांस्कृतिक गतिविधिहरू नै यस्ता माध्यम थिए, जसबाट सबैले रमाइलो गरेर भरपूर आनन्द लिन सक्थे । साथै तात्कालीन समयका अधिकांश शासकहरू पनि धर्म, साहित्य, कला, सङ्गीत आदिका क्षेत्रमा अत्यधिक अनुराग राख्ने स्वभावका थिए । त्यसैले अत्यधिक मात्रामा चाडपर्वहरू विकसित हुन पुगे । अहिले नेपाल उपत्यकाका नेवार समुदायले मनाउने चाडपर्वहरू पनि त्यसैको निरन्तरता हो ।

### ३.३.४ खानपिन

यहाँनेर एउटा कुरा के बिर्सन हुँदैन भने नेपाल उपत्यकाका चाडपर्वहरूले माथि उल्लेख गरेअनुसार केवल धार्मिक, आध्यात्मिक, आर्थिक र मनोरञ्जनको उत्थानसित मात्र सम्बन्ध राख्दैन बरु खानपिनसँग पनि विशेष सम्बन्ध राखेको देखिन्छ । प्रत्येक जसो चाडपर्वमा एउटा फरक ढङ्गको खाद्यबस्तुलाई प्रमुखताका साथ ग्रहण गरिने परम्पराले यस तथ्यलाई पुष्टि गर्दछ अर्थात् प्रत्येक चाडपर्व, जात्रा उत्सवहरूमा विशेष प्रकारका खानाहरू तयार पारी भोज खाने गरिन्छ र त्यस भोजमा मौसमअनुसार उत्पादन हुने कृषिजन्य खाद्यवस्तुलाई प्राथमिकता दिइने गरिन्छ, जुन खाद्यबस्तु स्वास्थ्यका लागि पनि निकै लाभप्रद मानिन्छ अर्थात् ती खाद्यबस्तुलाई केबल खाद्यबस्तुका रूपमा मात्र नलिएर औषधिमुलोको रूपमा पनि लिने गरिन्छ । जस्तै : माघे संक्रान्ति पर्वका अवसरमा घ्यू, चाकु, तीलका लड्डु, तरुल आदि खाद्यवस्तु ग्रहण गर्ने गरिन्छ । यसबाट शिशिर ऋतुको सर्दी हटेर शरीरमा गर्मीको मात्रा बढाइ तागत दिने गर्दछ । त्यस्तै श्रावण, भाद्रतिर मनाइने गाईजात्रा, जनैपूर्णिमा चाडका अवसरमा अनेक थरीका गरम मसला मिलाएर नौथरीको भिजाएका गेडागुडीलाई पकाएर त्यसको रसलाई क्वाथको रूपमा क्वाँती बनाई पिउने गरिन्छ । त्यसबाट अपच, ग्यास्टिक, आउँ जस्ता पेटसम्बन्धी रोग नाश हुन्छ भन्ने मान्यता छ । यस प्रकार चाडपर्वहरू मौसमानुसार उत्पादन हुने कृषिजन्य खाद्यवस्तुहरूसँग पनि सम्बन्धित रही आएका छन् ।

यद्यपि प्राचीन कालको अन्त्यतिर र मध्यकालको सुरुतिरको नेपाली इतिहास त्यति स्पष्ट छैन तथापि प्राचीन कालको नेपाली समाजभन्दा मध्यकालको नेपाली समाजको स्वरूप परिष्कृत हुँदै गएको कुरा निश्चित् हो । पूर्वमध्यकालका सुधारवादी शासक जयस्थितिमल्लको सुधार कार्यले निकै नै अस्तव्यस्त रहेको यहाँको समाजलाई हिन्दुवर्ण व्यवस्था अनुरूप एउटा संगठित स्वरूप प्रदान गरेपछि स्वाभाविक रूपमा सामाजिक,

सांस्कृतिक गतिविधिहरू बृद्धि हुँदै जान थाल्यो । यस्ता सबैजसो गतिविधिहरू देवीदेवता र धर्मकर्मसँग सम्बन्धित रहेका देखिन्छन् । वस्तुतः मध्यकालमा संस्कृतिलाई देवीदेवता र परलोकसँग जोड्ने चलन संसारव्यापी नै थियो । ती कुरा नजोडिए संस्कृति निस्तो र खल्लो हुने वा त्यो संस्कृति नै हुँदैन भन्ने जनधारणा व्यापक थियो ।[३५] जयस्थिति मल्लकै पालामा लेखिएको गोपालराज वंशावलीका आधारमा पनि त्यतिबेला यहाँ अनेक चाडपर्व, जात्राहरू प्रचलित थिए भन्ने कुरा थाहा पाइन्छ ।[३६]

### ३.३.५ सामाजिक स्थिति

प्रचलित चाडपर्वले अप्रत्यक्ष रूपमा यहाँको समाजलाई एउटा संगठित स्वरूप प्रदान गर्दै आएको छ । चाडपर्वका अवसरमा गरिने विविध देवीदेवताका पूजापाठ, यात्रा, नाचगान, भजनकीर्तनहरूमा समाजमा रहने प्रत्येक जाति वा वर्गका मानिसलाई आफ्नो जातीय पेशाअनुरूपको एउटा–एउटा कामको दायित्व सुम्पिएको हुन्छ, यसबाट जात्राका विधिविधानहरू सफलतापूर्वक सम्पन्न गर्न कुनै मुस्किल पर्दैन । यस्तो दायित्व समाजको उच्चवर्गदेखि तल्लो वर्गका रूपमा रहेको शुद्र जातिले समेत निर्वाह गर्नुपर्दछ । जस्तैः देवस्थलको सरसफाइ पोडेले, बाजा बजाउने कार्य कुस्लेले, फूलपाती वनमालीले, मासुको प्रबन्ध कसाईले, खट बोक्ने, रथ तान्ने, भजन गाउने जस्ता अधिकांश कार्य ज्यापू समुदायले गर्छन् । त्यस्तै खट वा रथ बनाउने कार्य सिकर्मीले, रंगरोगनको काम चित्रकारले, डोरी बाट्ने कार्य मानन्धर जातिले, देवताको मूर्ति सिँगार्ने कार्य धौबडेल जातिले, पूजा पाठसम्बन्धी सम्पूर्ण कार्य ब्राह्मण, जोशी, कर्माचार्य जातिले गर्दै आइरहेका छन् ।[३७] यसरी आफुलाई सुम्पिएको यो परम्परागत दायित्व बहन गर्नु आवश्यक र अनिवार्य मानिन्छ । यदि यो दायित्व पुरा नगरेमा सम्बन्धित देवीदेवता रुष्ट हुने, त्यसको प्रकोपले आफू र आफ्नो परिवारमा अनिष्ट हुने भय अनि मृत्युपश्चात् पनि नरक बास हुने डरका कारणले गर्दा आफूलाई सुम्पिएको दायित्व पूरा गर्न यहाँका बासिन्दा अग्रसर देखिन्छन् । यसरी प्रचलित चाडपर्वले यहाँको समाजलाई एउटा संगठित स्वरूप प्रदान गर्दै विविध जातजाति र वर्गबीच आपसी एकता, समन्वय र सद्भावना फैलाउन मद्दत पुऱ्याइ आएको छ अर्थात् समाजमा

---

[३५] मोदनाथ प्रश्रित, "अखण्ड राष्ट्रिय एकता निम्ति शुभकामना", *अन्नपूर्ण पोष्ट दैनिक,* २०६६ असोज १०, पृ. ७ ।

[३६] धनवज्र वज्राचार्य र कमल प्रकाश मल्ल(सं), *गोपालराजबंशावली,* काठमाडौँ : नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, ६३ ख पत्र *सापारु (गाईजात्रा),* ६१ ख पत्र, *सल्लपोयात (घोडेजात्रा), ६१ क पत्र गण्ठकर्ण्ण (घण्टाकर्ण),* ५६ क पत्र महनी (दशै), ४९ ख पत्र बुंगद्यो (मच्छेद्रनाथ जात्रा) ।

[३७] देवीप्रसाद लम्साल (सं.), *भाषा वंशावली, भाग २,* काठमाडौँ : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ४१ ।

बसोबास गर्ने विविध जातजातिका बासिन्दाहरूबीच आपसी सहयोग, पारस्परिक मेलमिलाप, सामाजिक एकता र सहबन्धनलाई बलियो र मजबुत पार्ने उद्देश्यले पनि यी चाडपर्वहरू प्रचलनमा आएका हुन भन्ने बुझिन्छ ।

यसरी धर्म, कर्मबाट अभिप्रेरित र लोकजीवनमा आधारित यहाँका चाडपर्व, जात्रा उत्सवहरू कुनै खेतीपातीसँग, कुनै मौसम परिवर्तनसँग, कुनै मृत आत्मासँग, कुनै ऐतिहासिक व्यक्तित्व वा घटनासँग, कुनै भूतप्रेत, पिशाच जस्ता दुष्ट आत्मालाई पन्छाउन, कुनै रोगब्याधिले छुन नपाओस् भन्ने जस्ता अभिप्रायसँग सम्बन्धित रहेका पाइन्छन् ।[३८] चाडपर्वका बेला हुने जात्रा वा नाचगानका लागि नगरका प्रमुख चोकहरूमा डबली (मण्डप) बनाइएको हुन्थ्यो ।[३९] सबै मल्ल दरबारमा नासल चोक थिए, जहाँ नाटक, प्रहसन, नाचगान आयोजना गरिन्थ्यो ।[४०] नाचगानका देवता (नासःद्यः) उपत्यकाभरि यत्रतत्र स्थापना गरिएका थिए । त्यसबेला मनोरञ्जनका भौतिक साधनहरू थिएनन् । मानिसको मुख्य पेशा कृषि थियो । कृषिको कामबाट क्षणिक फुर्सद लिएका जनतालाई मनोरञ्जन पुऱ्याई आनन्दित बनाउन चाडपर्वले मह□वपूर्ण योगदान पुऱ्याएको देखिन्छ ।

आफ्नो मनको ईच्छा र चाहना आध्यात्मिक ढङ्गबाट प्राप्त गर्ने, लामो समयसम्म कृषि तथा अन्य व्यवसायमा व्यस्त जनजीवनलाई आनन्दित बनाई मनोरञ्जन प्रदान गर्ने तथा परिवार र समाजमा आपसी एकता र सद्भाव कायम राख्ने - यी तीन उद्देश्यगत आधारमा नै यहाँको समाजमा चाडपर्व, जात्राहरू प्रचलित हुँदै आएका देखिन्छन् । अनि चाडपर्व, जात्राहरूले राजनैतिक, सामाजिक, आर्थिक, सांस्कृतिक आदि पक्षहरूको पनि प्रतिनिधित्व गरिराखेको हुन्छ । साथै परम्परागत शिक्षा वा उद्देश्यहरूको पनि संचार गरिरहेको हुन्छ ।[४१] यसदेखिबाहेक सम्बन्धित राज्यका शासकहरू पनि परम्परादेखि चल्दै आएका चाडपर्व जात्राहरूको संरक्षण, सम्वर्द्धनका लागि दत्तचित्त भएर लाग्ने गर्थे । साथै विद्वान ज्योतिषी, राजगुरुहरूको सल्लाहबाट समाजमा नयाँ नयाँ परम्परा पनि बसाल्दै लगे । यसका निम्ति आर्थिक भारवहन गर्ने गुठीको पनि व्यवस्था गरे ।

---

[३८] एण्डरसन, पा.टि.नं १६, पृ. २७ ।

[३९] तुल्सीराम वैद्य, त्रिरत्न मानन्धर र शंकरलाल जोशी, *सोसल हिस्ट्री अफ नेपाल,* न्यू दिल्ली : अनमोल पब्लिकेसन्स प्रा.लि., ई.सं. १९९३, पृ.२१० ।

[४०] यस्ता आयोजनाहरूमा अन्य राज्यका शासकहरूलाई पनि आमन्त्रित गरिएको हुन्थ्यो। जस्तै– भक्तपुरका राजकुमार उग्रमल्लको विवाहमा पाटनका राजा श्रीनिवास मल्ल ५ दिन भक्तपुर बसेका थिए । त्यसअवसरमा नाच प्रस्तुत गर्ने कलाकारहरूलाई १० मोहर दाम दिएर पुरस्कृत गरिएको थियो ।– *ऐजन,* पृ. २०८–२०९ ।

[४१] मजपुरिया र गुप्ता, पा.टि.नं. १, पृ. १ ।

### ३.३.६ राजनैतिक स्थिति

मध्यकाल चाडपर्व, जात्रा–उत्सवका दृष्टिले निकै उल्लेखनीय छ । तात्कालीन शासकहरू धार्मिक, सांस्कृतिक तथा कलाको क्षेत्रमा विकास गर्न सौखिन थिए । यक्ष मल्लको राज्यकालसम्म बलियो र संगठित रहेको नेपालमण्डल (उपत्यका राज्य)[४२] उनको मृत्युपश्चात् उनका छोराहरूको कलहपूर्ण नीतिले गर्दा कान्तिपुर, भक्तपुर, ललितपुर गरी तीन स्वतन्त्र राज्यहरूमा विभाजित हुनपुग्यो । यसरी एउटा बलियो र शक्तिशाली उपत्यका राज्य विखण्डित भई कमजोर बन्न पुग्यो । तीनवटै राज्यहरूमा यक्ष मल्लकै सन्तानहरू राजा भए, तर तिनीहरूबीच अपनत्वको भावना थिएन, जे कुरामा पनि तँ भन्दा म के कम भन्ने प्रतिस्पर्धाको भावना थियो । यसले हरेक क्षेत्रमा वैरभाव उत्पन्न गरायो । तर तीनवटै राज्य बीचको यस प्रतिस्पर्धापूर्ण सम्बन्धका कारणले गर्दा समग्र उपत्यकाको कलासंस्कृतिले भने समृद्धि र विकसित हुने अवसर प्राप्त गऱ्यो । एउटा राज्य अर्को राज्यभन्दा आफ्नो राज्यलाई बढ्ता सुन्दर र कलात्मक बनाउन चाहन्थे । यही प्रतिस्पर्धापूर्ण नीतिले गर्दा तीनवटै शहरहरूमा आश्चर्यलाग्दा सांस्कृतिक सम्पदाहरू निर्माण हुन पुगे । यो प्रतिस्पर्धा सांस्कृतिक जात्रा उत्सवहरूमा पनि विद्यमान थियो । फलस्वरूप अनेक नाच, जात्रा–उत्सव देखा पर्न थाले । जस्तो कि पाटनको कार्तिक नाच, भक्तपुरको नवदुर्गा नाच, कान्तिपुरको कुमारी रथ यात्रा यसका उदाहरण हुन् । यसरी मल्ल राजाहरूबीचको सांस्कृतिक क्षेत्रमा भएको प्रतिस्पर्धापूर्ण राजनीतिले गर्दा पनि यहाँको समाजमा धेरै रथयात्रा र अन्य जात्राहरूको विकास हुन गएको देखिन्छ अर्थात् पछिल्लो मल्लकालको विखण्डित राजनैतिक परिस्थिति र मल्ल शासकहरू बीचको आपसी इर्ष्या, द्वेष, शत्रुताले गर्दा पनि चाडपर्व, जात्राको उत्थानमा अप्रत्यक्ष रूपमा सहयोग पुऱ्याएको देखिन्छ ।

## ३.४ नेवार चाडपर्व र तिनको वैचारिक विश्लेषण

नेपाल उपत्यकाका नेवार समुदायमा प्रचलित अनेक किसिमका चाडपर्वहरूको उत्पति कसरी हुन आयो ? तिनको मह□व के हो ? वर्तमान सन्दर्भमा तिनको उपयोगिता के छ ? भन्ने सम्बन्धमा विभिन्न तथ्यहरू प्रस्तुत गर्न सकिन्छ । धार्मिक र आध्यात्मिक पक्ष चाडपर्व उत्पतिका प्रमुख कारण रहे पनि, त्यसको उपयोगिता वा मह□व पनि वरत्रभन्दा परत्र सुधार्नका लागि अथवा मृत्युपश्चात् मोक्ष प्राप्तिका लागि भएको जस्तो देखिए पनि

[४२] त्यसवेला नेपाल मण्डल केन्द्रीय राज्य थियो । राजधानी भक्तपुर थियो । मल्ल राजाहरू भक्तपुरमा बसेर शासन गर्दथे । नेपाल मण्डल अन्तर्गत प्रत्यक्षतः अहिलेका १२ जिल्लाका भूभागहरू जस्तो - काठमाडौं, भक्तपुर, ललितपुर, नुवाकोट, धादिङ, रसुवा, काभ्रे, सिन्धुपाल्चोक, मकवानपुर, दोलखा, सिन्धुली, रामेछाप पर्दथे ।–त्रिरत्न मानन्धर, “काठमाडौंमा नेवार”, *नागरिक दैनिक*, (२०६६ भाद्र १३ गते), पृ. ५ ।

वास्तवमा यहाँ मनाइने असङ्ख्य चाडपर्वले एकातिर समाजलाई अनेक किसिमका व्यावहारिक, नैतिक, कुटनैतिक, सामाजिक आदि शिक्षा दिइरहेको हुन्छ भने अर्कोतिर यसले मुलुकको संस्कृतिको सम्बर्द्धन, पर्यटनको विकास, मनोरञ्जनको स्तर, आर्थिक स्थिति जस्ता विविध पक्षहरूको परिचय पनि प्रस्तुत गरिरहेको हुन्छ । वस्तुतः परापूर्वकालदेखि प्रचलित हुँदै आएका चाडपर्वहरू केवल रुढि थाम्ने परम्परा मात्र होइनन् । यस पछाडि अनेक रहस्यले भरिएका दर्शन र अभिप्रायहरू पनि लुकेर रहेका छन् । ती दर्शन र अभिप्रायलाई गहन रूपले बुझ्न नसकेसम्म आफ्नो संस्कृति के हो भन्ने थाहा नहुन सक्दछ । आफ्नो संस्कृति नै थाहा नभएपछि व्यक्तिले आफैलाई चिन्न सक्दैन । यसैले यससम्बन्धी चिन्तन, मनन् हुनु आवश्यक छ ।

माथि नै उल्लेख गरिसकिएको छ कि यहाँको धर्म संस्कृति एवं समाज संगठनमा वैदिक धर्म, संस्कृतिको प्राचीन कालदेखि नै ज्यादै ठूलो प्रभाव रहेको पाइन्छ । प्रचलित चाडपर्व पनि त्यसैबाट अनुप्राणित छ । त्यसैले चाडपर्वलाई संस्कृतिको अमूल्य निधि र समाजको यथार्थ स्वरूपलाई अवलोकन गर्ने दर्पण मानिन्छ । जुन देशमा जति धेरै चाडपर्व मनाइन्छ, त्यो देश त्यति नै सभ्यता र संस्कृतिले सम्पन्न मानिन्छ । यसैकारण संस्कृतिलाई पंचम वेद पनि भन्ने गरिन्छ ।[४३] यथार्थमा संस्कृति कुनै पनि राष्ट्रको ढुकढुकी हुन्छ । यो बिना राष्ट्र निर्जीव र निस्तेज हुन जान्छ ।

संस्कृतिविद हरिराम जोशीज्यूका अनुसार मानिसले यस धर्तीमा जन्म लिएपछि सदाका लागि मोक्ष प्राप्ति गर्नका लागि अर्थात् मृत्युपश्चात् फेरिफेरि यस संसारमा जन्मिनु नपरोस् भन्नाका लागि विविध ऋणहरूबाट मुक्त हुनु आवश्यक र अनिवार्य मानिन्छ । त्यस्ता ऋणहरूमा पितृऋण, ऋषिऋण, देवऋण, अतिथिऋण, आत्मऋण, भृत्यऋण आदि मुख्य छन् । यी ऋणहरूबाट मुक्त भई मोक्ष प्राप्तिको आकांक्षाबाट प्रेरित भएर नै यहाँ विभिन्न चाडपर्व मनाउने परम्पराको विकास भएको हो ।[४४] प्रत्येक चाडपर्वको बेला एउटा न एउटा पवित्र दह, कुण्ड, नदीमा स्नान गरी सम्बन्धित देवदेवीहरूको दर्शन, पुजन गरी दीनदुःखी, गरिब, माग्नेहरूलाई दानदक्षिणा दिने जस्ता परम्परा धर्म तथा मोक्ष प्राप्तिकै

---

[४३] रामदयाल राकेश, *"संस्कृतिसम्बन्धी राष्ट्रिय नीति"* (२०६७ वैशाख ५ र ६ गते पाटन संग्रहालयमा सम्पन्न संस्कृतिसम्बन्धी दुई दिने गोष्ठी बारेको टिप्पणी), *अन्नपूर्णपोष्ट दैनिक,* (२०६७ वैशाख ८ गते), पृ. ७ ।

[४४] जोशी, पा.टि.नं १३, पृ. १ ।

लागि हो भन्ने देखिन्छ ।[४५] अनि यी पर्वका अवसरमा गरिने धार्मिक क्रियाकलापले मानिसमा धार्मिक भावना जगाइदिएर काम, क्रोध, लोभ, मोह जस्ता कुभावना र दुर्विचारबाट टाढा रहने प्रेरणा दिने गर्छ ।

माथि उल्लिखित तथ्यहरूको आधारमा नेवार समुदायमा प्रचलित चाडपर्वहरूलाई निम्नअनुसार विश्लेषण गर्नु उपयुक्त र सान्दर्भिक हुने देखिन्छ । जस्तै : यस संसारमा मानिसलाई प्राणीको रूपमा सर्वप्रथम पदार्पण गराउने हुँदा आफ्ना बाबुआमा सबैका लागि पूजनीय र बन्दनीय रही आएका छन् । साँचो अर्थमा तिनीहरू मनुष्यको रूपमा देवता नै रहेका छन् । यसैकारण प्रत्येक वर्ष मातातीर्थ औंसी र कुशे औंशी जस्ता निश्चित् तिथिलाई यहाँको समाजले पवित्र र मह□वपूर्ण दिनको रूपमा लिएर ठूलो श्रद्धा र भक्तिभावपूर्ण ढङ्गले मातृदिवस र पितृदिवस मान्दै आइरहेको पाइन्छ । साथै पितृ श्राद्ध कर्महरूलाई पितृ ऋणबाट मुक्त हुने मह□वका चाडपर्वको रूपमा लिइन्छ । मातातीर्थ औंशी र कुशे औंशीमा पनि सम्बन्धित तीर्थ स्थलहरूमा गएर आफ्ना दिवंगत बुबाआमाको सम्झनामा मानिसहरूले चोखो नितो भई सीदा, पिण्डदान दिएर श्राद्ध कर्महरू गर्छन् ।[४६] तर जसका आमाबाबु जीवित छन्, तिनलाई इच्छित खानेकुरा खुवाएर आशिर्वाद लिने गरिन्छ । यसैले यसदिनलाई मातृ औंशी र पितृऔंशीका अतिरिक्त आमादिवस र बाबुदिवस भनेर मनाउने चलन पनि ब्यापक रूपमा देखिन थालेको छ ।

हिन्दु सभ्यता र संस्कृतिका अग्रज ऋषिमुनिहरू सत्मार्गका प्रणेता हुन्, जसले मानिसहरूलाई यस धर्तीमा सभ्यता र संस्कृतिको पहिलो पाठ पढाएका थिए । त्यसैले तिनलाई पनि मानव सभ्यताका पहिलो आचार्य भनी गुरुको रूपमा लिएर मातापिता अनुरूप तिनीहरू पनि देवता नै मानिएका छन् । मानिसले अध्ययन अध्यापनद्वारा आफ्नो सांस्कृतिक गरिमालाई उत्तरोत्तर प्रगति गर्दै लानुको साथै गुरुको सम्मुख नतमस्तक भएमा मात्रै मनुष्य ऋषि ऋणबाट मुक्त हुने हुनाले हरेक वर्ष गुरु पुर्णिमाका दिन मानिसहरू आफूलाई शिक्षा दीक्षा दिने गुरु कहाँ गई आदर सत्कार अभिव्यक्त गर्छन् । वास्तवमा गुरुलाई शिष्यका

[४५] बलराम कायस्थ, *भक्तपुर शहरमा मनाइने केही ऐतिहासिक चाडपर्वहरू,* (अप्रकाशित स्नातकोत्तर तहको शोध प्रबन्ध), इतिहास केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं. २०५०, पृ. १५४ ।

[४६] एण्डरसन, पा.टि.नं १६, पृ. ५० र ११४ ।

आध्यात्मिक माताको रूपमा लिइने परम्परा हिन्दु समाजमा वैदिक कालदेखि नै रहेको तथ्य अथर्व वेदको निम्न श्लोकबाट पनि थाहा हुन्छ ।[४७]

"आचार्य उपनयमानो ब्रम्हंचारिणं कृणुते गर्भम् अन्तः ।

तं रात्रीस् तिस्र उदरे विभर्ति तं जातं द्रष्टुम् अभि सयन्ति देवाः ॥"

अर्थात् आफूसंग आएको ब्रम्हचारी (शिष्य)लाई ३ दिनसम्म आचार्य गुरुले पेटमा धारण गर्दछ र त्यसबाट जन्मिए पछि त्यसलाई हेर्न देवताहरू पनि आउँछन् ।– अथर्व वेद ११.५.३ ।

उल्लिखित पितृऋण, ऋषिऋण जस्तै देवऋणबाट मुक्त हुनु पनि मानिसका लागि अनिवार्य मानिन्छ । यसैले ती महान् आत्माहरू, जसलाई देवदेवीका रूपमा पुजिन्छ, तिनीहरूप्रति श्रद्धा राखी भक्तिभाव प्रदर्शित गरेर देवऋणबाट मुक्त हुन सकिन्छ । यसैकारण यहाँको समाजमा वर्षैपिच्छे देवीदेवताको सम्मानमा अनेकन् जात्रा, पर्वहरू मनाइन्छ । जस्तोः बुद्धजयन्ती, कृष्णाष्टमी, रामनवमी, विवाहपंचमी, शिवरात्रि, कुमारषष्ठी आदिलाई चाडपर्वको रूपमा लिइने गरिन्छ ।[४८] यसरी यी ऐतिहासिक व्यक्तित्वहरूको जन्म, विवाह आदिको सम्झनालाई सदा ताजा राखेर तिनका उच्चतम नैतिक आदर्शलाई अंगीकार गर्नु नै उत्सव, पर्वहरू मनाइनाको खास अभिप्राय भएको बुझिन्छ ।

"अतिथि देवो भवः" भन्ने श्लोकबाट नै यहाँको समाजमा अतिथिको मह□वपूर्ण स्थान रहेको थाहा पाइन्छ । घरमा आएका पाहुनालाई देवता तुल्य सम्झेर आदरसम्मान गर्ने परम्परा वैदिककालदेखि नै रहेको तथ्य श्रीकृष्ण र सुदामाको उदाहरणबाट जान्न सकिन्छ ।[४९] पाहुनाको स्वागत सत्कार नगरी स्वयं आफूले भोजन गर्न नहुने परम्पराले गर्दा पितृ, ऋषि, देवतासरह अतिथि पनि महान् आत्मा हो, तिनको पूजा गरेमा मात्र अतिथि ऋणबाट मुक्त हुन सकिन्छ । यसै तथ्यको सन्दर्भमा पाहाँ चऱ्हे (पिशाच चतुर्दशी) चाडलाई लिन सकिन्छ । उक्त दिन साँझपख भगवान् शिवले दुनियाँका आँगनमा लिङ्ग स्वरूप प्रकट भएको हुँदा मानिसले तिनलाई साँझको बेला घर आएको पाहुना सम्झेर यद्यपि तिनी पिशाच नै किन नहोउन्, आफूले तयार गरेको खानेकुरा चढाएर तिनको अतिथि सत्कार

---

[४७] ए.सी. बोस, *दि कल अफ वेदस,* बम्बई : भारतीय विद्याभवन, ई.सं. १९६०, पृ. ११४-११५ ।

[४८] जोशी, पा.टि.नं. १३, पृ. २ ।

[४९] रामप्रसाद जोशी(अनु.), *श्री मद्भागवत,* काठमाडौं : नानीमैंया जोशी, वि.सं. २०४६, पृ. ८९२–८९४ ।

गरेका थिए, जुन परम्परा आज पनि पाइन्छ । यस चाडका अवसरमा उपत्यकामा हिन्दु नेवारहरूले मात्र नभएर कट्टर बौद्धमार्गी नेवारहरूले पनि पिशाचरूपी महादेवको पूजा आराधना गर्दछन् ।[५०] अतिथि सत्कारबाट मनुष्यको सदैव अहित चिताउने पिशाच जस्तो दुरात्मालाई पनि आफ्नो बनाउन सकिन्छ भन्ने सन्देश यस चाडबाट मिल्दछ ।

यी उल्लिखित ऋणहरूबाहेक अर्को ऋण आफ्ना स्वजनहरूको कल्याण कामनाका साथ तिनीहरूलाई बेला–बेलामा आवश्यक सहयोग गर्नुको साथै दान दातव्य गर्ने जस्ता कर्तव्यलाई भृत्य ऋणको संज्ञा दिइएको छ । जस्तो : शिवरात्रिको बेला सम्हेय्बजी, सकिमना पुन्हिको राति छुस्यामुस्या (हलिबलि), अक्षय तृतीयाका दिन सख्खर पानी, यःमरी पुन्हिका दिन यःमरी अरुलाई बाँडेर मात्र खाने गरिन्छ ।[५१]

मानिसले आत्म ऋण जन्मेदेखि नै बोकेर आएको हुन्छ । पठन, श्रवण, मनन्, आदि कार्य गर्नुको साथै पशुपन्छी आदि जीवहरूको रक्षा गर्ने कार्यलाई प्राथमिकता दिनु जरुरी छ । यसैले यहाँका धेरै चाडपर्वहरू पशुपन्छीहरूसँग सम्बन्धित भइरहेका पाइन्छन् । गाई, गोरु, कुकुर, काग, सर्प, भ्यागुता आदि पशुप्राणीहरूको पूजा गर्ने चलन भएबाट यसकुराको पुष्टि हुन्छ । साथै यी पशुपन्छीलाई हाम्रो संस्कृतिमा विभिन्न देवीदेवताका बाहन भनेर पुज्ने गरिन्छ । जस्तो-मुसोलाई गणेशको बाहन, कुकुरलाई भैरबको, हाँसलाई सरस्वतीको बाहन, गाईलाई लक्ष्मीको प्रतीकको रूपमा मान्ने गरिन्छ ।

यसप्रकार उल्लिखित तथ्यहरूका आधारमा हामी कहाँ परापूर्वकालदेखि प्रचलित रहँदै आएका चाडपर्वहरू, मानिसले जन्मेदेखि नै बोकेर आएका जुन विभिन्न ऋणहरू छन, तिनीहरूसित खास तवरले सम्बद्ध छन् भन्न कर लाग्दछ ।

नेपालमा असङ्ख्य चाडपर्व मनाउने गरिन्छ जसमध्ये दशैं सबैभन्दा मह□वपूर्ण चाड हो । दानवी प्रवृत्तिमाथि मानवी या दैवी शक्तिको विजय अर्थात् अन्धकार माथि प्रकाशको प्रभुत्व स्थापित भएको, असत्यमाथि सत्यको विजय भएको खुसीयाली स्वरूप यो चाड मनाउने गरिएको हो, जसलाई नेपाली जनजिब्रोमा दशैं भनिन्छ । वैदिककालदेखि नै सत्य र असत्य, सुर र असुर अथवा मानव र दानवबीच यो विश्वमा आ-आफ्नो प्रभुत्व कायम गर्ने उद्देश्यले संघर्ष हुँदै आएको र जहिले पनि सत्यकै जीत हुने कुरा पौराणिक

[५०] धुस्वाँ सायमी, *दि लोटस एण्ड दि फ्लेम,* काठमाडौं : रत्न पुस्तक भण्डार, ई.सं. १९८०, पृ. ३५ ।
[५१] जोशी, पा.टि.नं. १३, पृ. ३ ।

साहित्यहरूबाट थाहा हुन्छ । श्री मद्देवीभागवत पुराणअनुसार विष्णुद्धारा मधुकैटभ, भगवती चण्डिकाद्वारा महिषासुर, इन्द्रद्वारा वृत्रासुर तथा श्रीरामद्वारा रावण बध गरिएका थिए ।[५२] चार दानवहरूको बध चार विभिन्न ऋतुमा गरिएको हुँदा ती चार घटना घटित भएको समयमा चार दशैं मान्ने परम्परा प्राचीन कालमा चलेको तथ्य उपर्युक्त पुराणले इङ्गित गर्दछ । यसै तथ्यको सङ्केत स्वरूप दोलखामा आश्विन महिनाको दशैंको नवमीको दिन भीमदवुलीमा चारओटा राँगा बलि दिने परम्परा अद्यावधि कायमै छ ।[५३] चार राँगाहरू चार दानवको प्रतीक अथवा चार अलग–अलग दशैंको सम्झनामा बध गरिएको हो भन्ने जनविश्वास रहेको छ । तर हिजोआज दशैं वर्षमा दुईपटक मात्र मान्ने गरिन्छ । त्यसमा पनि आश्विनको दशैं भव्य रूपमा र चैते दशैं सामान्य रूपमा मात्र मनाउने गरिन्छ ।

उल्लिखित तथ्यका आधारमा दशैं चाड धार्मिक र आध्यात्मिक कारणले उत्पत्ति भएको जस्तो देखिए पनि वास्तवमा गहिरिएर विचार गरेको खण्डमा धार्मिक, आध्यात्मिक कारणका अतिरिक्त अन्य कारणहरूले गर्दा पनि उत्पन्न भएको हो भन्ने देखिन्छ किनकि दशैंको बेला आफ्ना मान्यजनको हातबाट टीका ग्रहण गरेर आशिष लिनु, आफूभन्दा सानालाई टीका लगाईदिएर आशिष दिनु, आफ्ना घरमा टीकाटालो सकेपछि वरपरका आफन्त, नाता कुटुम्बहरू कहाँ गएर टीका थाप्न जाने आदि परम्पराले घर परिवार, नाता कुटुम्बहरूबीच सुमधुरसम्बन्ध स्थापित हुनुका साथै अघिपछि रीस, राग, द्वेष, ईर्ष्याको भाव लिएर बसेका आफन्तजनहरूमा पनि दशैंले गर्दा मित्रभाव उत्पन्न हुन जान्छ । अर्को कुरा कामधन्दाको सिलसिलामा घरदेखि टाढा गइराखेका वा बाह्रै महिना घरबाहिर रहनेहरू पनि यस चाडको बेला घर सम्झेर सबैसँग मिलेर चाड मान्न आफ्नो घर फर्किने गर्छन् । यसरी यस चाडको माध्यमबाट आफन्तजनहरूबीच पारिवारिक सम्बन्ध मजबुत हुन गई यसले समाज र राष्ट्रमा सामाजिक सद्भावको सन्देश दिने गर्छ । यसका साथै अघिपछि आफ्नो घरलाई सुंगुरको खोरजस्तै फोहर र दुर्गन्धित पारी राख्नेहरूले पनि यस चाडको बेला लिपपोत, सफासुग्घर गरी आआफ्ना घर सजाउने काम गर्छन् । अरुबेला जेजस्तो खानु परे पनि, झुत्रो, टालो लाउनु परे पनि यसबेला जस्तै गरीबले पनि मीठो खाने र राम्रो लाउने गर्छन् । यसरी दशैं चाडले धार्मिक र आध्यात्मिकका साथै अनेक व्यावहारिक शिक्षा दिइरहेको छ ।

---

[५२] हनुमानप्रसाद पोद्दार र अन्य(सं), *संक्षिप्त श्री मद्देवीभागवत,* गोरखपुर : गीताप्रेस,वि.सं. २०५२, पृ.३५, २७१, ३३० र २७१ ।
[५३] जोशी, पा.टि.नं १३, पृ. ५ ।

हाम्रो धर्मशास्त्रमा तिहारको पाँच दिनलाई यमपंचकको संज्ञा दिइएको छ । मृत्युका देवता यमराज यस पाँच दिनमा आफ्नी बहिनी यमुना कहाँ गएर बसेकोले यसलाई यमपंचक भनिएको हो । तर यम शब्दले संयमलाई पनि बुझाउँछ । संयम मोक्ष प्राप्तिका लागि अत्यावश्यक तीन अमृत पद मध्ये एक भएको कुरा "त्रिनि अमृत पदानि इअ सु अन दितानि नेयति स्वगं दम चाग अप्रमाद" पङ्तिबाट स्पष्ट रूपले जानिन्छ ।[५४] संयमताले खराव–पनालाई हटाइ मानिसलाई असल कुरोमा डोऱ्याउने हुँदा त्यसलाई शीलको संज्ञा दिइएको देखिन्छ । यसरी यम शब्दले शीलतिर इङ्गित गरेको हुँदा तिहारको पाँच दिनलाई सामुहिक रूपले यमपंचक भनिएको पाइन्छ ।

यमपंचकको पहिलो दिन यमको सन्देशवाहकको रूपमा कागको पूजा गरिन्छ । यसरी कागको पूजा गर्नुको पछाडि धार्मिक पक्ष जेजस्तो भएपनि दार्शनिक र बौद्धिक पक्ष के रहेको छ भने मानिसले सफल र सुखद् जीवन बिताउने हो भने सर्वप्रथम दुष्टजन अथवा आफूलाई द्वेष गर्ने व्यक्तिलाई अभिवादन गर्नु जरुरी हुन्छ । दुष्टलाई देख्नासाथ टाढैबाट अभिवादन गर्नाले ऊबाट खास हानी हुने संभावना रहँदैन । वास्तवमा दुष्ट भनौं वा विरोधीहरू तिनीहरू साँच्चै भन्ने हो भने मनुष्यका सबैभन्दा ठूला शिक्षक अर्थात पथ प्रदर्शक हुन् । साँचो अर्थमा मानिसहरू तिनीहरूकै कारण पनि सदाचारको मार्गमा अत्यधिक मात्रामा लम्किने हुन्छन् । यसैकारण राज्य शासनमा विरोधीदलको आवश्यकतालाई आज विश्वले पनि स्वीकारी सकेको छ । फेरि दुष्ट भन्नासाथ तिनीहरूमा गुण भन्ने कुरो हुँदैहुँदैन भन्ने पनि होइन । दुष्टको प्रतीक रूपमा रहेको कागमा पनि कतिपय यस्ता गुणहरू छन्, जसलाई हामीले अङ्गीकृत गर्नु जरुरी छ । कागमा निहित गुणहरू यी हुन्- कसैले नदेख्ने गरी आफ्नी स्त्रीसँग सम्भोग गर्नु, बेलाबखत चारा सङ्ग्रह गर्ने, प्रमादी नहुने, धूर्त हुने अनि सारा आफन्तहरूसँग एकगठ भएर रहने[५५] जस्ता पाँच कुराको ज्ञान मानिसले कागबाट सिक्नुपर्दछ ।

यमपंचकको दोस्रो दिन कुकुरपूजा गरिन्छ । यमराजको दूतको रूपमा वा यमलोकको पालेको रूपमा लिइने कुकुरबाट अनेक किसिमका गुण अनुकरण गरेर मानव जीवनलाई सुखी र सफल तुल्याउन सकिन्छ । कुकुर पशुमध्येमा सबैभन्दा गुणी र विश्वासिलो हुन्छ । भएमा धेरै खाने, नभएका बेला थोरै खाएर सन्तोष गर्ने, तुरुन्तै सुत्ने, तुरुन्तै ब्युँझने, स्वामी

[५४] श्रीराम गोयल, *प्राचीन भारतीय अभिलेख संग्रह, खण्ड १*, राजस्थान : हिन्दी ग्रन्थ एकेडेमी जयपुर, ई.सं. १९८२, पृ. १५६ ।

[५५] "गूढमैथुन धृष्टत्वं काले चारथ संग्रहः ॥
अप्रमादीपु धुर्त्कञ्ज पंच शिष्येच्च वायसात् ॥१२६॥" - प्रेमबहादुर कसाः (सं.), *चाणक्य सार संग्रह*, काठमाडौं : च्वसापासा, ने.सं., १०९१, पृ. ५४ ।

भक्त हुने, सुरो हुने[५६] जस्ता गुण कुकुरमा पाइन्छ । तर अरुबेला मिलेर रहे पनि खानेबेला सधैँ झगडा गर्नु कुकुरमा पाइने ठूलो दुर्गुण हो ।

यमपंचकको तेस्रो दिन अर्थात् लक्ष्मीपूजाको दिन दीपावली पर्व धुमधामले मनाइन्छ । यो स्वाति नक्षत्र परेको औँशीको दिन भएकोले नेवारहरू यस दिनलाई स्वन्ति भन्दछन् । वातावरणमा व्याप्त अन्धकारलाई विनष्ट गर्नुका साथै जीवनमा व्याप्त निरासा, दुःख, अज्ञान तथा अकल्याण रूपी अन्धकारलाई दूर गर्ने मंगलप्रद ज्योतिको कामना यस पर्वमा विशेष रूपले गरिन्छ । ब्रम्हको प्रतीक रूपमा रहेको ज्योति अर्थात् दीप अन्धकारलाई नाश गर्ने हुँदा त्यस कुरालाई सरलतम आख्यानको रूपमा दर्साउने हाम्रा प्राचीनतम मनीषिहरूको अभिष्ट थियो । अर्को कुरा व्यक्ति र समाजको उन्नतिका लागि धनको अपरिहार्यता रहेको हुन्छ । यस यथार्थतालाई हाम्रा प्राचीन मनीषिहरूले पनि अङ्गीकृत गरी चतु पुरुषार्थको अत्यावश्यकतामाथि जोड दिएका थिए । ती चार पुरुषार्थहरू हुन्-धर्म, अर्थ, काम, मोक्ष ।[५७] पुरुषार्थ चतुष्ट्यमा अन्तको मोक्षलाई साध्य मानिएर बाँकी तीनलाई साधनको रूपमा लिइने परम्परा पहिलेदेखि नै चल्दै आइरहेको छ । यी आधारबाट धनको मह□वलाई पहिलेदेखि नै यस संसारका मानिसहरूले बुझेर धनकी देवी लक्ष्मी तथा कुवेर देवताको पूजा गर्दै आएको पाइन्छ । यसै परिप्रेक्ष्यमा यमपंचकको तेस्रो दिन धनकी देवी लक्ष्मीको पूजा गर्ने चलन छ । यद्यपि धनको प्राप्ति स्वजनहरूलाई मारेर वा छलकपट गरेर नै प्राप्त हुन्छ । कुवेरको नरवाहन यस यथार्थताको सूचन स्वरूप छ । फेरि, लक्ष्मीको लाटोकोसेरो बाहन हुनुले ठूलो राशिको धन मानिसले दिनको उज्यालोमा होइन, अँध्यारो रातमा मात्र आर्जन गर्ने हुन्छन् । भन्नुको तात्पर्य दुई नम्बरी धन्दाले मात्र मानिसले धन कमाउन सक्दछ भन्ने यथार्थतालाई दर्शाएको हो ।

वैदिक कालमा देवराज इन्द्रको मह□वपूर्ण स्थान थियो । मानिसहरू अन्न उत्पादनद्वारा सुखद् जीवन यापनका लागि देवराज इन्द्रको पूजाउपासना गरी तिनलाई सन्तुष्ट पार्ने प्रयासमा रहन्थे । नेपालमा प्राचीन कालदेखि नै इन्द्रको पूजा आराधना गर्ने परम्परा कायम रहेको तथ्य अद्यावधि हरेक वर्ष भाद्र महिनामा इन्द्रध्वजको स्थापनाका साथै इन्द्रजात्रा गर्ने परम्परा चल्दै आइरहेको पाइएबाट स्पष्ट हुन्छ । तर समाजमा आफ्नो पूर्ण

---

[५६] "वहवाशी चाल्प संतुष्टः सुनिद्रा शीघ्रचेतनः ॥
स्वामिभक्तश्व शूरश्च षडेते खानतो गुणाः ॥१२५॥" - *ऐजन* ।

[५७] हरिराम जोशी, *अभिनव संस्कृति कोष*, ललितपुर : सुशीलराम र नवीन्द्रराज जोशी, वि.सं. २०५८, पृ. ९३ ।

आधिपत्य कायम भइरहेकोले देवराज इन्द्रमा एक किसिमको दम्भ थियो । त्यस दम्भलाई चकनाचुर पार्न भगवान् श्रीकृष्णले मानिसलाई अरु कसैको भरमा परेर होइन, न कुनै बाह्य देवताहरूकै पूजा आराधना गरेर बरु स्वयं आफ्नै मनभित्रको देवतालाई सम्झेर मानिसले यदि आफ्नै पौरुषलाई प्रदर्शित गर्न सकेमा तिनको सफलता अवश्यमेव हुनेछ भनी जागृत गरे । फलस्वरूप देवराजको पराभव भई मानवको विजय भएको थियो ।[५८] इन्द्रजात्राको अवसरमा नेपालमा देवराज इन्द्रलाई चोरको आरोपमा समातेर चौबाटोमा बाँधिराख्ने जुन परम्परा छ, त्यसले पनि उपर्युक्त तथ्यको पुष्टि गरेको छ । अनि मानिसको बन्धनमा जकडिएर रहेका आफ्ना पुत्र इन्द्र (पुरन्दर) लाई फुत्काएर पुनः स्वर्ग लैजान पृथ्वी तलमा आएकी डाकिनीको रूपमा इन्द्रकी आमा तथा ऐरावत हाती, जसलाई इन्द्रको बाहन पुलुकिसि भन्ने गरिएको छ, पनि इन्द्रजात्राको अवसरमा देख्न सकिन्छ । यसरी वैदिक इन्द्रका आधिपत्यलाई देवकी पुत्र श्रीकृष्णको नेतृत्वमा यस भूतलमा मनुष्यले अस्वीकार गरेको कुरा गोवर्द्धन पूजाको परम्पराले स्पष्ट गर्दछ ।[५९]

गोवर्द्धन पूजाका दिन नेपालका नेवारहरू "म्हः पूजा" गर्दछन् । बाह्य देवताको भर नपरी आफ्नै हृदयपटलस्थित परमात्मा सम्झने शिक्षा अनुरूप तिनीहरूले म्हःपूजालाई अङ्गीकृत गरेको देखिन्छ । म्हःपूजालाई आत्मपूजाको रूपमा पनि लिइन्छ । जसले ब्रम्हपूजातिर स्पष्ट रूपले इंगित गर्दछ । किनभने वैदिक साहित्यमा आत्मा र ब्रम्ह एउटै भएको कुरा दर्साइएको छ, "अयं आत्मा ब्रम्ह"-यो वैदिक उपनिषदको महावाक्य हो । यसरी म्हःपूजाको प्रचलनले नेपालमा वैदिक परम्परा प्रवाहित भएको कुरा थाहा लाग्दछ । यसै यथार्थतालाई अङ्गीकृत गरी अष्टादश पुराण मध्येको भविष्य पुराणले सोही दिन आत्मपूजा गर्नुपर्ने अनिवार्यतालाई जोड दिन्छ ।[६०] यसैले नेवारहरू उक्त दिन गोवर्द्धन पूजा नगरेर म्हःपूजा गर्दछन् ।

यमपंचकको अन्तिम दिन दाजुभाइ दिदीबहिनीहरूबीच आपसी मेललाई सुदुढ गराइ राख्ने पावन उद्देश्यले भाइपूजा गरिन्छ । प्राचीन कालमा वर्षको चारपटक श्रावण, भाद्र,

---

[५८] उपर्युक्त संघर्ष अन्ततोगत्वा देवराजको पराजय र जनशक्तिको विजयमा समाप्त भएको थियो । इन्द्रले जनआक्रोशको दमन गर्न आकाशबाट असङ्ख्य मात्रामा असिना, पानी, वरफ वर्साएका थिए । भाद्र महिनामा आकाशबाट आषाढ-श्रावणमा जस्तो पानी नपरी असिना वर्षा हुनुका साथै मेघ गर्जन हुनेलाई उक्त तथ्यकै पुष्टि स्वरूप लिन सकिन्छ । -हरिराम जोशी, *ग्लिम्सेज अफ एनसिएन्ट पोलिसी,* ललितपुर : जोशी रिसर्च इन्ष्टिच्यूट, ई.सं. २००८, पृ. १०० ।

[५९] *श्रीमद भागवत महापुराण, दशम स्कन्ध, अध्याय २४-२७, श्रीमदभागवतमहापुराण, द्वितीय खण्ड,* गोरखपुर : गीताप्रेस, ई.सं. १९९७, पृ. ३३८-३५१ ।

[६०] डि.आर. रेग्मी, *मिडियभल नेपाल, दोस्रो भाग,* कलकत्ता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ६८० ।

असोज र कार्तिक शुक्ल द्वितीयाका दिनहरूमा क्रमशः मामाकी छोरी, काकाकी छोरी, फुपूकी छोरी र आफ्नै दिदीबहिनीले भातृपूजा गर्ने चलन थियो ।[६१] तर पछि गएर कार्तिक शुक्ल द्वितीयाका दिन गरिने भातृपूजाबाहेक सबै भातृपूजा विलुप्त हुन गए ।

यसप्रकार उल्लिखित तथ्यहरूका आधारमा नेपालमा प्रचलित रहेका चाडपर्वहरूमध्ये कुनैमा देवीको पूजा, कुनैमा काग र कुकुरको पूजा, कुनैमा मानिसको आफ्नै पूजा जस्ता परम्परा रहेको पाइन्छ । त्यस्तै गरेर यहाँको चाडपर्वमा गाई, भ्यागुता, सानासाना नानीहरूको पनि पूजा गर्ने गरिन्छ । यहाँसम्म कि विष ओकल्ने अथवा आफूलाई टोक्न आउने सर्पलाई समेत देवता मानेर पूजा गर्ने परम्परा हाम्रा चाडपर्वहरूमा पाइन्छन् । यसरी यस संसारमा वनस्पति, वातावरण, पशुपन्छी, किटपतङ्ग, मानिस आदि सबैको मह□व उत्तिकै रहेको सन्देश अप्रत्यक्ष रूपमा यहाँ मनाइने चाडपर्वले दिइरहेको पाइन्छ ।

हरेक वर्ष श्रावण शुक्ल प्रतिपदाका दिन मनाइने गाईजात्रा एकप्रकारले मृतक संस्कारसित सम्बन्धित देखिन्छ । यो दिन धर्मशास्त्रमा वर्णित विधानबमोजिम गाईजात्राको ठीक–ठीक परिचालन गरिएमा मृतक व्यक्ति गाईको पुच्छर समाती वैतरणी नदीलाई पार गरी मोक्ष प्राप्त हुने हुन्छ । रगत, हाड, छाला, गुमुत्र आदिले बग्ने वैतरणी नदीको कल्पना यहाँ मात्र नभई युनानी अनुश्रुतिहरूमा पनि पाइन्छन् । तर गहिरिएर अध्ययन गरेको खण्डमा यस जात्राले मनुष्यजीवनको सफलता आफ्नो इन्द्रिय संयम गर्न सकेमा मात्र सम्भव हुने कुरातिर इङ्गित गरेको थाहा हुन्छ । 'गो' को एक अर्थ इन्द्रिय पनि हो । गोको पुच्छरलाई समाती यात्रा गर्नु भनेको इन्द्रियलाई बडो यत्नसाथ संयम गर्न सकेमा मनुष्यले कुनै प्रकारको पापकर्म गर्ने नभई ऊ मोक्ष प्राप्तिको हकदार हुने हुन्छ । वास्तवमा सम्पूर्ण दुःखको स्रोत नै इन्द्रिय असंयम हुनु हो र त्यसको संयममै वास्तविक आनन्द हुने भइ मोक्षको मार्ग प्रशस्त हुने हुन्छ ।

मृत्यु संस्कारसितै सम्बन्धित अर्को पर्व मार्ग कृष्ण चतुर्दशी अर्थात् बालाचतुर्दशीका दिनमा पशुपति श्लेष्मान्तक वनमा वर्षभरि दिवंगत भएका माता वा पिता वा स्वजनको नाममा काजकिरिया गर्ने पुत्र वा पुत्रीले सतवीज (सातप्रकारका अन्न) छर्दै परिक्रमा गर्ने पर्व पनि एक हो । यस कर्मबाट मृतक मातापिताले जीवित अवस्थामा गरेका पापकर्महरू सबै नाश भइ वैष्णव भए वैकुण्ठबास, शिवमार्गी भए कैलाशबास गर्न पाउँछन् भन्ने धार्मिक

---

[६१] *श्री ब्रतराज,* बम्बई : खेमराज श्री कृष्णदास, ई.सं. १९९९, पृ. १०१-१०२ ।

विश्वास यहाँका जनसमुदायमा पाइन्छ ।[६२] वास्तवमा पितृ ऋणबाट मुक्त हुने उद्देश्यले प्रचलित रहेका विभिन्न चाडपर्वहरूमध्ये यो पनि एक भएको देखिन्छ ।

श्रावण शुक्ल पूर्णिमाका दिन नेपालमा एक विशेष प्राणीको पनि पूजा गरिन्छ- त्यो हो भ्यागुताको । भ्यागुताको पूजा चल्नुको पछाडि मुख्य दुई कारण छन् । पहिलो-प्रकृतिमा भ्यागुतोले ट्वार ट्वार कराउने जुन तौरतरिका छ, त्यसले वैदिक ऋषिमुनिहरूलाई शिक्षण तौरतरिकाको ज्ञान प्रदान गरेको थियो । जसको कारण ऋग्वेदमा भ्यागुतोकै बारेमा एक प्रख्यात श्लोक रचिएको थियो, जुन मण्डूक ऋचाको नामले विख्यात छ ।[६३] अर्को, भ्यागुतोले खेतीपातीलाई बिगार्ने, माटोमा लाग्ने कीराहरूलाई खाई भूमिको उर्वरा शक्तिलाई बढाउँदछ । वास्तवमा भ्यागुतो वर्षाकालिन जलचर प्राणी हो । पृथ्वीमा वर्षासंगसंगै आगमन हुने प्राणी भएकोले यसलाई पृथ्वीमा वर्षा ल्याउने प्राणीको रूपमा लिइन्छ । यसैले यहाँको किसान समाज यो प्राणीको पूजाआजामा लागिपर्नु स्वाभाविकै लाग्दछ ।[६४]

वैदिक कालमा यसैदिन सर्पको पनि पूजा गरिन्थ्यो तर पछि गएर नागपूजा विशेष गरेर श्रावण शुक्ल पंचमीका दिन गर्न थालियो । यसरी दूध दिने गाई वा वर्षाको शुभ सूचक भ्यागुतोको पूजा गर्ने परम्परा स्वाभाविक लागे पनि विष ओकल्ने सर्पको समेत पूजा गर्ने परम्परा चाहिं विष्मयकारी लाग्दछ । तर पनि नाग पंचमीका दिन गरिने नागपूजाबाट केही मौलिक शिक्षा प्राप्त हुन्छ । जस्तो-भागवत्गीताअनुसार कुनै पनि योनिमा उत्पन्न प्रतापी जीव विभूतिवानको रूपमा लिइन्छ । यसैले विभूति पूजाको अभिप्राय त्यस शरीरको पूजा नभएर त्यस शरीरद्वारा परमात्माको अंश जति विकास भएको छ, त्यसको पूजा हो । यही सिद्धान्त वासुकी आदि द्वादश नागहरूका पूजामा लागु हुन्छ । नाग पंचमीको पूजाको चरित्र नायक विभूतिवान् सर्प थियो । यसर्थ नागपूजा अन्धपरम्परा नभई विभूतिपूजा भएको चाल पाइन्छ ।[६५] फेरि हाम्रो सांस्कृतिक जीवनमा नागको महिमा अत्यधिक पाइन्छ । नागलाई देवताकै रूपमा पुजिन्छ । यसैले मठमन्दिरको तोरणद्वारहरूमा नागकै प्रतिरूप कुँदिएको हुन्छ । नयाँ घर निर्माण गर्ने क्रममा जग खन्दा सर्व प्रथम नागको दोष पन्छाउन वास्तुशास्त्र मुताविक नागको पूजा गरिन्छ । किनकि यहाँको भूगर्भभित्र पानी रहेको र पानी नागहरूको

[६२] लीलाभक्त मुनंकर्मीसँग २०६४।८।१४ गते भएको कुराकानीबाट प्राप्त जानकारीका आधारमा ।

[६३] *ऋग्वेद,* नयाँ दिल्ली : सर्वादेशीय आर्य प्रतिनिधि सभा, वि.सं. २०३९, पृ. १४९-१५४ ।

[६४] जोशी, पा.टि.नं १३, पृ. ७८ ।

[६५] हरिराम जोशी, *हाम्रो संस्कृति,* काठमाडौं : सूचना विभाग, वि.सं. २०३७, पृ. ६६-६७ ।

बासस्थान रहेकोले यो पूजा आवश्यक हुन्छ ।[६६] वास्तवमा मनुष्यले जन्मेदेखि बोकेर आएका ऋणमध्येको आत्मऋणबाट मुक्त हुने पर्वको रूपमा यसलाई लिन सकिन्छ ।

यहाँका चाडपर्वहरू धार्मिक भावनाले मात्र युक्त नभई अन्य विभिन्न उद्देश्यले पनि प्रेरित छन् भन्ने तथ्य निम्न उदाहरणहरूबाट अझ स्पष्ट पार्न सकिन्छ । जस्तैः विश्व प्रेमदिवस हरेक वर्ष फेब्रुअरी १४ का दिन युवायुवती, प्रेमीप्रेमिका एकै थलोमा बसेर रमाइलो गर्छन्, हाँसखेल गर्छन् । तर यस्तै प्रेमदिवसका रूपमा हाम्रा साँस्कृतिक पर्व फागु उत्सवलाई पनि लिन सकिन्छ ।[६७] सानो-ठूलो, नारी-पुरुष, छुत-अछुतको कुनै भेदभाव नराखी एक आपसमा प्रेमभावले खेलिने यो सामुहिक पर्व हो ।[६८] यसैले यसलाई स्वतन्त्रता र समानताको प्रतीक वा प्रजातन्त्रको चाड पनि भन्ने गरिन्छ । यद्यपि यो पर्व भगवान श्रीकृष्णको जीवनगाथासँग गाँसिएको देखिन्छ, तैपनि यहाँ हिन्दुनेवारले मात्र नभएर बौद्धनेवारहरूले समेत यो पर्व हर्षोल्लासपूर्वक मनाउने गर्छन् ।[६९] यसलाई साच्चै भन्ने हो भने नेपालमा पहिलेदेखि चल्दै आएको प्रेम दिवस वा 'भ्यालेन्टाइन डे' को रूपमा लिन सकिन्छ ।[७०] त्यस्तै मध्यकालमा यहाँ स्थायी सेनाको अत्यधिकता नभएकाले सङ्कट कालमा युवकहरूले देशको रक्षाका लागि तयार रहनु आवश्यक पर्ने हुँदा युवायुवती सबैले हातहतियारसहितको सैन्य तालिम लिई राखेका हुन्छन् । अनि वर्षको एकपटक कुमार षष्ठीका दिन कान्तिपुरमा तल्लो टोलका र माथिल्लो टोलका युवकयुवतीहरूबीच विष्णुमती कंकेश्वरी र इन्द्रायणीको बीचमा मिथ्या लडाई हुन्थ्यो । यसप्रकारको युद्ध गर्ने चलन धेरै पछिसम्म चलेको थियो ।[७१] यसप्रकारको मिथ्या युद्ध गर्ने पररम्परा काभ्रेपलाञ्चोक जिल्लास्थित बनेपामा पनि प्रचलित थियो ।[७२] अनि यक्ष मल्लको वि.सं. १५१० को भक्तपुर राजदरबारको बाहिरीभित्तामा रहेको अभिलेखले सो नगरको सरसफाई र किल्लाको मर्मत संभार सबै देशवासीले मिलेर गर्नुपर्ने र यो कार्य सिठी नखः (कुमारषष्ठी) को दिन सक्नुपर्ने

---

[६६] वज्राचार्य, पा.टि.नं. २६, पृ. ७ ।

[६७] जोशी, पा.टि.नं. १३, पृ. ६ ।

[६८] मजपुरिया र अन्य, पा.टि.नं. १, पृ. ४२ ।

[६९] सायमी, पा.टि.नं. ५०, पृ. ३३–३४ ।

[७०] जोशी, पा.टि.नं. १३, पृ. ७ ।

[७१] भैरवबहादुर प्रधान, *मध्यकालीन नेपाल,* काठमाडौं : कृष्णबहादुर प्रधान, वि.सं. २०१०, पृ. ६६ ।

[७२] आशाकाजी सेवक, *बनेपाका चाडपर्वहरू,* नाला : अनामणि प्रकाशन, वि.सं. २०५५, पृ. १९ ।

कुरा उल्लेख छ ।[७३] यी यथार्थताहरूको प्राप्तिबाट कुमारषष्ठी चाडको सामाजिक मात्र नभएर सामरिक मह□व पनि अत्यधिक मात्रामा रहेको कुरा थाहा हुन आउँछ ।

कतिपय चाडपर्वहरू नयाँ वर्षको स्वागत अभिवादन गर्ने उत्सवको रूपमा पनि रहेका छन् । नयाँ वर्षलाई एक प्रकारले पराधीनताबाट उन्मुक्त भई स्वतन्त्रताको आस्वाद लिने दिवसको रूपमा मान्ने यहाँको सांस्कृतिक परम्परा रहेको कुरा इतिहासको अध्ययनबाट थाहा पाइन्छ । जस्तो विदेशी शासकद्वारा आक्रान्त हुँदा तिनीहरूसित युद्ध गरी देशको स्वाधीनतालाई रक्षा गरेर मालवहरूले जुन मालव संवत्को प्रवर्तन गरे, त्यसैलाई पछि आएर विक्रम संवत्को संज्ञा दिइएको थियो । त्यस्तै नवौं शताव्दी ई. को उत्तरार्द्धतिर शंखधर सख्वा नामका वैश्यले विश्व इतिहासमै सर्वप्रथम नेपालमा दासहरूको सम्पूर्ण ऋणलाई तिरेर नयाँ संवत् प्रवर्तन गर्नुका साथै सोही उपलक्ष्यमा म्हःपूजा गर्ने सांस्कृतिक परम्परालाई बसालेका थिए ।[७४] त्यस्तै नेपालको दक्षिण तराई भेगका थारूहरूले माघे संक्रान्तिलाई र उत्तरी हिमाली भेगका शेर्पा, गुरुङ्ग, तामाङ्गहरूले ल्होसार पर्वलाई नयाँ वर्षको रूपमा मनाउने गर्छन् । नयाँ वर्षको आगमनलाई खुसीयालीका साथ स्वागत अभिवादन गर्नु नै यी पर्वको विशेष मह□व मानिन्छ ।

चाडपर्वका माथि उल्लिखित विविध वैचारिक विश्लेषणहरूका अतिरिक्त यहाँ हरेक वर्ष मनाइने अन्य कतिपय चाडपर्वहरूले यहाँको समाजमा प्राचीन कालमा धार्मिक संघर्षहरू, जनआन्दोलन आदिका बारे पनि केही तथ्य उद्घाटित गरेका छन् । घण्टाकर्णको चाड र बालाचतुर्दशीको पर्व यसका उदाहरण हुन् । यी दुवै चाडपर्वका नायक क्रमशः घण्टाकर्ण र बालासुर रहेका छन् । घण्टाकर्ण भगवान् शिवपुत्र कुमार कार्तिकेय रहेका छन् भने बालासुर शैवमतका एक अघोरपन्थी थिए । तर ती दुबैलाई विधर्मीहरूले असुरको रूपमा लिएर असुरकै रूपमा उक्त चाडपर्व मनाउँदै आइरहेका छन् । यसरी यहाँ प्रचलित कतिपय चाडपर्वले यहाँको समाजमा धार्मिक विद्वेष विद्यमान रहेको स्पष्ट्याएको छ । यसैसन्दर्भमा यहाँको नेवार समाजमा प्रचलित चङ्गा जुधाउने परम्परालाई पनि मनुष्य र देवगणबीचको सङ्घर्षको रूपमा लिनु प्रासङ्गिक देखिन्छ । विशेषतः भाद्र महिनादेखि कार्तिक महिनासम्म लाग्ने स्वांति चाडसम्म आकाशमा चङ्गा उडाई जुधाउने जुन परम्परा

---

[७३] हरिराम जोशी, "मध्यकालीन अभिलेख," *प्राचीन नेपाल,* सङ्ख्या-५८, (असार-साउन २०३७), पुरात□व विभाग, अभिलेख सङ्ख्या नं. ८५, पृ. १६-१७ ।

[७४] जोशी, पा.टि.नं. १३, पृ. १० ।

प्रचलित छ, त्यसलाई स्वर्गका देवता इन्द्रका समर्थक र विरोधीहरूबीच घटित सङघर्षको प्रतीकका रूपमा लिने गरिन्छ ।[७५]

त्यस्तै अन्याय र अत्याचारको विरोधमा उठेको जनआक्रोश वा जनआन्दोलनसित सम्बद्ध जात्रा, पर्वहरू पनि यहाँ पाइन्छन् । जस्तो : प्रत्येक वर्ष आषाढ कृष्णअष्टमीको दिन देवपाटनमा सम्पन्न हुने त्रिशुल जात्रालाई यसको उदाहरणका रूपमा लिन सकिन्छ । यस जात्रामा स्थानीयवासीले काठमाडौँवासीलाई अश्लील शब्दहरूको प्रयोग साथ गालिगलौज गर्ने परम्पराले उपयुक्त यथार्थलाई प्रष्ट्याएको छ ।[७६]

चाडपर्वका बेला पुजिने देवताहरू सबै सच्चरित्रका मात्र हुन्छन् भन्ने छैन । खराब आचरणका देवता पनि हुन्छन् र तिनको पनि पूजा गरी चाड मनाउने परम्परा यहाँको समाजमा विद्यमान छ । चोर नै भए पनि यदि त्यसको अभावमा सबैको अकल्याण हुन्छ भने तिनको पूजा गर्नु उचित नै मानिन्छ ।[७७] भाद्र शुक्ल चतुर्थी भनौ गणेशचतुर्थीको दिन चन्द्रदर्शन गर्न नहुने हुँदाहुँदै पनि चन्द्रमाकै पूजा गर्नुपर्ने अनिवार्यताले उक्त कुराको पुष्टि हुन्छ ।

कतिपय चाडपर्व आफ्नो स्वास्थ्यलाई दह्रो र स्वस्थ राख्न पनि मनाउने गरिन्छ । जस्तो -माघे संक्रान्ति चाड जसलाई नेवारीमा  घ्योचाकु सँल्हु भनिन्छ । यो चाड वकुलिं, च्वकुलिं व वाकुलिं भनेर तीन दिन मनाउने गरे पनि अहिले च्वकुलिं अर्थात् संक्रान्तिको दिनमात्र मनाइन्छ । यसदिन घिउ, चाकु, तिलको लड्डु, तरुल, खिचडी खाने गरिन्छ । परिवारका सबै सदस्यहरू घाममा बसी तेल घस्ने, कानमा तेल हाल्ने गरिन्छ ।[७८]

**निष्कर्ष**

यसप्रकार चाडपर्वसम्बन्धी माथि उल्लेख गरिएका जतिपनि परिभाषा, विशेषता, विश्लेषण, उद्देश्य र अभिप्रायहरू छन्, तिनका आधारमा निचोडमा भन्नुपर्दा चाडपर्व, जात्रा उत्सवले धार्मिक भावनाको अतिरिक्त परम्परागतस्थितिको झलक, ऋतु परिवर्तनको सङ्केत, राष्ट्रिय मह□वका पुरुषको परिचय, महान् आत्माको स्मरण एवं प्राचीन संस्कृति र सम्पदाको गरिमाको अवगत, युगपुरुषहरूको संघर्ष, बलिदान र उनीहरूका विचार तथा चिन्तनको बोध गराउने कार्य गर्दछ । यसका अतिरिक्त भूतप्रेत, पिशाच, डंकिनी, बोक्सी,

---

[७५] जोशी, पा.टि.नं. ५८, पृ. १०० ।

[७६] जोशी, पा.टि.नं. १३, पृ. १० ।

[७७] ध्रुवकृष्ण दीप, *दि नेपाल फेस्टिबल्स,* काठमाडौँ : रत्न पुस्तक भण्डार, ई.सं. १९९९, पृ. ८६ ।

[७८] सुमनराज ताम्राकार, *पनौतीका चाडपर्व र मकर मेला,* पनौती : लेखक स्वयं, वि.सं. २०६६, पृ. ६० ।

राक्षस आदि दुष्ट आत्मा र रोगब्याधि हटाउने, कृषि फसल सफल पार्ने उद्देश्यहरू पुरा गर्न पनि चाडपर्व मनाइन्छ । यसका साथै चाडपर्वमा देवीदेवताको मात्र पूजा हुन्छ भन्ने यथार्थतालाई पनि यसले नकार्दछ अर्थात् यस संसारमा रहने हरेक जीवको मह□व आआफ्नो स्थानमा छ भन्ने तथ्यलाई पनि चाडपर्वले स्वीकार्दछ । यसैकारण चाडपर्वमा मानिसले देवीदेवताको मात्र पूजा नगरेर आत्मपूजा, मातापिताको पूजा, दिवंगत पूर्वजको स्मरणमा पूजा, दाजुभाइ, दिदीबहिनीको पूजा, बालबालिकाको पूजा, शिक्षा दिने गुरुको पूजा, यस्तै पशुपन्छी, कीटपतङ्ग आदि जीवको मह□वको कदर गर्दै पूजा गर्ने परम्परा पनि यहाँका चाडपर्वहरूमा पाइन्छ । सबैभन्दा मह□वपूर्ण कुरा के हो भने चाडपर्वले घरपरिवार, टोल, समाजमा बसोबास गर्ने अनेक थरीका बासिन्दालाई एउटै सम्पर्क सूत्रमा ल्याउन सहयोग गर्दछ साथै यसले सामाजिक सद्भाव, परस्परमा मेलमिलाप र सहयोगको भावना जगाउँदछ ।[७९]

चाडपर्वलाई गहन रूपले अध्ययन गरेको खण्डमा त्यसभित्र अनेक किसिमका गुढ रहस्यले भरिएका नैतिक, आदर्श, सदाचार, सच्चरित्रताका उपदेश, शिक्षा वा गुणहरू पनि विद्यमान रहेको पाइन्छ, जसलाई अनुसरण गर्दै अघि बढ्ने हो भने संघर्षमय जीवनमा आफ्नो लक्ष्य प्राप्त गर्न सजिलो हुन जाने छ ।

मनोवैज्ञानिक दृष्टिकोणबाट हेर्दा मानिसले आफ्नो मनको भाव व्यक्त गर्ने प्रयोजनार्थ वा अवसरको रूपमा पनि चाडपर्वको विकास गरेको हो भन्ने लाग्दछ किनभने प्राचीन कालको बन्द समाजभित्र र नियन्त्रित राज्यव्यवस्था अन्तर्गत बसोबास गर्ने स्थानीय सर्वसाधारण बासिन्दाले आफ्नो मनका बह, पीडा, दुःख, कष्ट, गुनासाहरू आजको परिवेशमा

---

[७९] चाडपर्वका बेला दिइने टीका, सगुन वा सिकाबु मर्यादाक्रमअनुसार जेठोदेखि दिइन्छ । यदि यसमा तलमाथि पऱ्यो भने त्यस समाज वा परिवारभित्र किचलो उत्पन्न भई दाजुभाइबीच झगडासमेत पर्न सक्छ । अतः यसबाट पनि समाजभित्र अनुशासन र मर्यादा कायम गराई राख्नमा मद्दत पुऱ्याउँदछ । केही गरी दाजुभाइ आफन्तहरूबीच झैझगडा परी बोलचाल बन्द भएमा पनि त्यो वैमनस्यता सधैँका लागि नभएर केवल क्षणिक हुन्छ । किनभने साइकलको पाङ्ग्रा जस्तै वर्षभरि घुमिरहने चाडपर्व गुठीले त्यस्ता वैमनष्यता हटाई दिन्छ । जस्तो उदाहरणका लागि कुनै फुकी खलः का सदस्य वा परिवार परिवारबीच झगडा भएर बोलचाल बन्द भइरहेको भए देवाली, दशैं आदि जस्ता पर्वहरूमा वाध्य भएर बोल्नुपर्ने हुन्छ । किनकि कुनै पनि चाडवाडहरूमा आफ्ना कुलदेवता, आगमदेवता, पिठदेवताहरूमा अनिवार्य रूपले कुखुरा, हाँस, बोका जस्ता पशुहरूको बलि चढाउनु पर्दछ । त्यसरी चढाएको पशुबलिको मुख्य अङ्गको 'सिकाबु' गर्ने नेवार समुदायमा परम्परागत चलन छ । यसरी सिकावु गर्दा कम उमेरका (क्वकाली) ले जेठो (थकाली) लाई आफ्नो सामाजिक मर्यादाक्रम अनुसारको 'सिउ' दिएर परम्पराअनुसार अनिवार्य रूपले ढोगदिनुस् ("भागियाये ति") भनेर मान गर्नुपर्ने हुन्छ । यदि त्यस्तो चाडपर्वको बेला कुनै सदस्यले आफूभन्दा जेठोलाई त्यसरी मान नगरेको खण्डमा त्यस समुदायका सबै सदस्य मिलेर त्यस व्यक्तिलाई समाजबाट बाहिर अर्थात् बहिष्कार गरिन्छ । त्यसरी चाडपर्वका माध्यमबाट पनि यहाँको समाजमा सामाजिकसम्बन्ध सुमधुर भइ पारिवारिक एकता कायम भइरहेको हुन्छ । -कायस्थ पा.टि.नं ४५, पृ. १५५-१५६ । अर्को कुरा विविध चाडपर्वका बेला हुने खटजात्रा, रथजात्राहरू संचालन गर्न जात्रा संचालक गुठीले स्थानीय समाजमा रहेका विविध जातजातिलाई आआफ्नो कामको जिम्मेवारी सुम्पेर परम्परागत पेशाका आधारमा जातिय मर्यादा र सामाजिक एकताको भावना कायम राख्दै पनि आएको छ ।

जस्तो जुनबेला पायो त्यहीबेला व्यक्त गर्न सक्तैनथे । त्यसको निमित्त एउटा बेग्लै अवसर हुन्थ्यो, त्यो अवसर भनेको चाडपर्व नै थियो । अर्कोतिर राज्यले पनि आफ्ना जनताका भावना, शासन व्यवस्थाप्रति तिनीहरूको धारणा, तिनीहरूको अवस्था आदिबारे अप्रत्यक्ष रूपमा जान्ने एउटा सशक्त मौकाको रूपमा यस्ता चाडपर्वलाई लिइने गरिन्थ्यो, जसबाट शासक वर्गलाई आफ्ना कमजोरीलाई सुधारेर अघि बढ्न सजिलो हुन्थ्यो । यसरी सर्वसाधारण जनताले चाडपर्वका अवसरमा आफूलाई लागेका, आफूले देखेका, भोगेका पीडा, वेदना, दुःखकष्टहरू धक खोलेर विभिन्न प्रतीकका माध्यमबाट सार्वजनिक रूपमा अभिव्यक्त गर्न सक्दछन् । यस्ता चाडपर्वहरूमा गठेमंगल पर्व, गाईजात्रा आदिलाई प्रमुख चाडका रूपमा लिन सकिन्छ । आफ्ना मनभित्रका उकुसमुकुसपूर्ण भावनालाई यस्ता जात्राको बेला अनेक हावभावपूर्ण नाच, व्यङ्ग्य प्रदर्शनी, प्रहसन आदिका माध्यमबाट अभिव्यक्त गर्ने गरिन्छ । अनि यी जात्राहरू प्राचीनकालदेखि नै काठमाडौँ उपत्यका र त्यसवरपरका नेवार बस्तीहरूमा प्रचलित थियो भन्ने तथ्य गोपालराज वंशावलीमा “गण्ठकर्ण चवदश”र “सायात” भन्ने उल्लेख भएबाट स्पष्ट हुन आउँछ ।[८०] अतः गठेमंगल पर्व मूल रूपमा घण्टाकर्ण राक्षससँग र गाईजात्रा मृतक व्यक्तिको स्मरणार्थ मनाइने जात्रा भएपनि मनोबैज्ञानिक दृष्टिकोणबाट हेर्दा स्थानीय बासिन्दाको मनका भावहरू अभिव्यक्त गर्ने प्रमुख चाडका रूपमा लिन सकिन्छ ।

कुटनैतिक दृष्टिकोणको आधारमा हेर्दा पनि यहाँका चाडपर्वहरूको आफ्नै मह□व रहेको पाइन्छ । किनकि यहाँ मनाइने मुख्य चाड वा स्थानीय जात्राका बेला विवाह गरेर दिइसकेका छोरी, चेली, ज्वाइँ, भान्जाभान्जी, नाति, नातिनालाई ‘नखःत्या’ भोज आयोजना गरेर आमन्त्रण गरिन्छ । त्यस्तो नखःत्या भोजको निमन्त्रणालाई स्वीकार गरेर नखःत्या मान्न जानु सबै चेली, ज्वाइँ, भान्जाभान्जीको कर्तव्य हुन्छ । कोही आफन्त वा १३ दिने दाजुभाइको मृत्युको कारणले जुठो परेको वा आशोच बारेको अवस्थामा बाहेक अरुबेला त्यसरी नखःत्या भोजमा बोलाउँदा जानु परम्परागत सामाजिक चलन मानिन्छ । यदि नगएको खण्डमा त्यसलाई नराम्रो अर्थमा लिइन्छ ।

यसरी चाडपर्वको बेला नखःत्या भोजमा आफन्तजन, नातेदार, इष्टमित्रहरूलाई बोलाउने, एकै ठाउँमा जम्मा हुने, एकआपसमा खुसी साटासाट गर्ने, सामुहिक रूपमा भोज खाने, रमाइलो गर्ने जस्ता कार्यले पनि अप्रत्यक्ष रूपमा पारिवारिक तथा सामाजिक सम्बन्ध

---

[८०] वज्राचार्य र मल्ल, पा.टि.नं. ३६, पृ. ६१ क ५ र ६३ ख १ ।

सुमधुर हुन जाने हुन्छ । आफ्नो घरपरिवार, नातासम्बन्धी र आफन्तजनसँग मैत्रीपूर्णसम्बन्ध विकास र विस्तार गर्न यस्ता चाडपर्वहरूको निक्कै ठूलो कुटनैतिक भूमिका रहेको पाइन्छ ।

प्रागऐतिहासिक कालदेखि नै यहाँका चाडपर्वहरू प्रत्यक्ष वा परोक्ष रूपमा खेतीपातीसँग वा अन्न उत्पादनसित सम्बन्धित भइ आएको पाइन्छ । समयमा पानी परोस्, बालीनाली सप्रियोस्, अनिकाल नपरोस्, खोलाबाढी वा खडेरी नलागोस्, वर्षाको बेला चट्याङ्ग नपरोस्, भूकम्प नआओस् भनेर यस संसारको नियमित विधि संचालन गर्ने एउटा अदृश्य शक्तिको कल्पना गरेर सोही शक्तिको मह□वलाई शिरोधार्य गरेर त्यसको स्तुति स्वरूप चाडपर्व मनाउन थालिएको हो । पछिबाट मानिसमा धार्मिक,आध्यात्मिक भावनाको विकास हुन थालेपछि उनीहरूले सोही अदृश्य शक्तिलाई ईश्वर वा देवताको रूपमा मान्न थाले । तिनै देवताको सम्भ्कनामा यहाँ वर्षेनी चाड मनाउन थालियो । अनि पछिल्लो कालमा आएर देवता पनि अनेक स्वरूपमा देखा परे । प्रारम्भमा केही सीमित देवताहरू जस्तो - ब्रह्मा, विष्णु, महेश मात्र रहेकोमा पूर्व मध्यकालमा वा प्राचीन मल्लकालमा आइपुग्दा अनेक स्वरूपका तान्त्रिक देवीदेवताहरू देखिए ।

तान्त्रिक देवीदेवता पनि शैव, वैष्णव, बौद्धतन्त्रसँग सम्बन्धित थिए । लिच्छवीकालमा पुरुष देवताको साथमा शक्तिको उल्लेख ज्यादै कम पाइन्छ । तर मध्यकालमा मिश्रित तान्त्रिक धर्म लोकप्रिय हुदै गएकोले शैव, वैष्णव, बौद्ध मतहरूमा यो मिश्रित रूप लोकप्रिय हुँदै गयो । शक्तिसहितका देवताहरू विशेष रूपमा लोकप्रिय हुन गएको तथ्यलाई ‘यामल’ ग्रन्थहरूबाट पनि पुष्टि गर्न सकिन्छ । तान्त्रिक परम्परामा यामलको अर्थ मेल वा देवदेवीको समागम भन्ने बुझिन्छ ।[८१] यामलग्रन्थहरूमा संयुक्त रूपका देवताहरू जस्तै ब्रह्मा र सरस्वती, विष्णु र लक्ष्मी, शिव र पार्वती आदि समावेश गरी सम्बद्ध देवताले प्रश्न सोध्ने र शक्ति देवताले उत्तर दिने रूपमा रहेका छन् । पछिल्लो मल्लकालमा यसले सर्वाधिक लोकप्रियता पायो । यसैले शासकहरूका राजप्रशस्तिमा समेत मानेश्वरी, तलेजु आदि तान्त्रिक स्वरूपका देवीहरूलाई स्वेष्टदेवता, इष्ट देवताहरूको रूपमा मान्दै, पुज्दै आएको पाइन्छ । शक्ति देवताको लोकप्रियता राजकीय रूपमा नै बढ्न थालेपछि अनेक तान्त्रिक पूजा विधानहरू, जात्रापर्वहरू, तान्त्रिक स्वरूपका मूर्तिहरू पनि देखा पर्दै गए ।

---

[८१] हरप्रसाद शास्त्री, *ए क्याटलग अफ पाम लिफ एण्ड सेलेक्टड पेपर म्यानुस्क्रिप्टस, भोलुम 1* -कलकत्ता : दि वाप्टिस्ट मिसन प्रेस, ई.सं. १९०५, पृ. xxii ।

विशेष गरिकन शाक्त तान्त्रिक देवीदेवतालाई देशरक्षा, जनहित, राष्ट्रियसमृद्धि, सुस्वास्थ्यको कामनाका साथै खेतीपाती र कृषिको उन्नतिका लागि मान्दै आएको पाइन्छ । अद्यावधि पनि नवदुर्गाले जहाँ पाइला टेक्छ, त्यहाँको उब्जनी दोब्बर बढ्छ भन्ने धारणा रहेको जान्न सकिन्छ ।[८२] त्यस्तै विश्वनाथ भैरवलाई सहकालका देवता मान्ने परम्परा छ ।

काठमाडौँ उपत्यकाका तीनवटा शहरहरूमा तीनवटा जात्राहरू क्रमशः भक्तपुरमा बिस्केट जात्रा, पाटनको मच्छेन्द्रनाथको जात्रा र काठमाडौँको इन्द्रजात्रा निक्कै प्रसिद्ध छन् । तीनवटै जात्राहरू आ–आफ्नो क्षेत्रमा धेरै दिनसम्म मनाइने गरिन्छ । जसमध्ये बिस्केट जात्रा शैव धर्म सम्प्रदायसँग, मच्छेन्द्रनाथ नाथसम्प्रदायसँग र इन्द्रजात्रा वैदिक आर्य वा वैष्णव सम्प्रदायसँग सम्बन्धित रहेका छन् । त्यस्तै जात्रा मनाउने तौरतरिका वा विधिविधान अनि समय परिस्थिति पनि भिन्न रहेको पाइन्छ । जस्तै : बिस्केट जात्रा र मच्छेन्द्रनाथको जात्रा हरेकवर्ष वर्षारम्भ हुनुभन्दा अघि मनाइन्छ भने इन्द्रजात्रा वर्षान्तितिर मनाइन्छ । तर अनौठो संयोगको कुरा के छ भने तीनवटै जात्राको मूल उद्देश्यमा भने समानता पाइन्छ अर्थात् समयमा पानी परोस्, कृषिवाली सप्रियोस्, अनिकाल नपरोस्, सर्वत्र सुख, शान्ति र समृद्धि छाइरहोस् भन्ने नै हो ।

यसप्रकार यहाँ प्रचलित चाडपर्वहरूको गहन रूपले अध्ययन गर्दा के कुरा थाहा पाइन्छ भने प्राग ऐतिहासिककालदेखि नै अर्थात् मानिसमा धार्मिक भावनाको विकास हुनुभन्दा पहिलेदेखि नै प्रकृतिपूजाकोरूपमा चाडपर्व मान्ने गरिन्थ्यो । घाम, पानी, बादल, वर्षा, वृष्टि, पर्यावरण जस्ता प्रकृतिजन्य कुराहरू असन्तुलित नहोस् भन्ने कामनार्थ चाडपर्व मनाइने गरिन्थ्यो ।

वैज्ञानिक दृष्टिकोणले हेर्दा पनि यहाँका चाडपर्वहरू बेकारका छैनन् । यसपछाडि अनेक दर्शन र अभिप्राय लुकेर रहेका छन्, जुन दर्शन बहुजन हिताय र बहुजन सुखायको उद्देश्यले प्रेरित देखिन्छन् । आजको परिवर्तितसन्दर्भमा पनि यी चाडपर्वहरूको मह□व र उपयोगिता पहिले जत्तिकै रहेको हुनाले चाडपर्वका प्रवर्तक प्राचीन पुर्खाहरू आजका आधुनिक भनाउँदा भौतिकवादी विद्वानहरू भन्दा कम छैनन् भन्ने थाहा हुन्छ । किनभने यहाँ मनाइने प्रत्येक चाडपर्व, जात्राउत्सवहरूका पछाडि एउटा न एउटा उद्देश्य वा मह□व अन्तर्निहित रहेको थाहा हुन्छ ।

यहाँका प्राचीन विद्वानहरूले सबै जीव, वनस्पति, पर्यावरणको कल्याण अनि मानवमात्रको सुख, शान्ति र समृद्धिका लागि विभिन्न उपाय खोजेर ती उपायहरू

---

[८२] श्रेष्ठ, पा.टि.नं. २७, पृ. ८१ ।

व्यावहारिक रूपमा कार्यान्वित गराउन त्यसवेलाको देश, काल, परिस्थिति र मानिसहरूको विचारधारासँग अनुकूल हुने गरेर पूर्ण रूपमा तथ्य उद्घाटित नगरेर भावनात्मक कुरालाई ठोस कुरामा परिणत गरी चाडपर्वको सृजना गरेका थिए भन्ने देखिन आउँछ । यहाँको मौलिक संस्कृतिको संरक्षण गर्दै समाजलाई अनेक प्रकारका जीवनोपयोगी शिक्षादीक्षा प्रदान गर्नुका अतिरिक्त संघर्षमय जीवनमा कदम कदममा आइपर्ने अनेक समस्या, कठिनाइ, मुस्किलहरूको सामना गरेर सफल बन्ने प्रेरणा अप्रत्यक्ष रूपमा यी चाडपर्वहरूले जगाएको हुन्छ । अतः यी चाडपर्वहरू बेकारका छैनन् । यसपछाडि अनेक वैज्ञानिक र तथ्यपरक कारणहरू रहेका छन् भन्ने थाहा हुन्छ ।

अर्को कुरा, आर्थिक सम्पन्नता र वैभवताको पृष्ठभूमिमा यहाँ अनेक चाडपर्व, जात्राउत्सवहरू प्रचलनमा आएका हुन् । आश्चर्यजनक कला, संस्कृति, धर्म, परम्परा, रीतिरिवाजले युक्त यहाँका चाडपर्वले सारा संसारकै ध्यान आकर्षित गरिरहेकोछ । उत्साहपूर्ण धार्मिक एवं आध्यात्मिक भावनाले सृजित यहाँको संस्कृतिलाई एशियाकै उच्चकोटीको संस्कृति मानिन्छ ।[८३] यसरी यहाँको विशिष्ट प्रकारको अचम्म लाग्दो कला, संस्कृति, सम्पदाहरूले गर्दा नै वर्षेनी लाखौं विदेशी पर्यटकहरू नेपाल भ्रमणमा आइरहेका छन् । आज पर्यटन उद्योग नेपालको विदेशी मुद्रा आर्जन गर्ने सबभन्दा ठूलो उद्योग भएको छ । यसले राष्ट्रिय अर्थतन्त्रमा ठूलो टेवा दिइरहेको छ । यसरी आर्थिक दृष्टिकोणबाट पनि यहाँका चाडपर्व, जात्राउत्सवको निक्कै ठूलो मह□व रहेको देखिन्छ ।

उल्लिखित तथ्यहरू चाडपर्वका सकारात्मक पक्ष भए । तर यसका नकारात्मक पक्ष पनि छन् । जस्तै–चाडपर्व मनाउने आर्थिक पक्षतिर ध्यान दिंदा अहिले यो बढी जटिल र बोझिलो बन्दै गएको पाइन्छ । यहाँको समाजभित्र वर्षभरिका दिनहरू भन्दा चाडपर्वका दिनहरू ज्यादा छन् ।[८४] प्रत्येक चाडपर्वमा भोज खाने खुवाउने परम्पराले गर्दा नेवारहरूको जनजीवनमा प्रत्यक्ष असर पारेको देखिन्छ । यसैले समाजशास्त्री गोपालसिंह नेपालीले "...., नेवार बिग्र्यो भोजले" भनेका छन् ।[८५]

मल्लकालीन समयमा चाडपर्वको अवसरमा गरिने विभिन्न जात्राहरू खटजात्रा, रथजात्राहरू परम्परागत नाचहरू, भजनकीर्तन, पूजापाठजस्ता सांस्कृतिक गतिविधि

---

[८३] एण्डरसन, पा.टि.नं. १६, पृ. ३५ ।

[८४] सल्केज, पा.टि.नं. २१, पृ. १३७ ।

[८५] गोपालसिंह नेपाली, *दि नेवार्स*, रिप्रिन्ट, बम्बई : युनाइटेड एशिया पब्लिकेशन, ई.सं. १९८८, पृ. ३४३ ।

संचालनमा कुनै किसिमको आर्थिक व्यवधानहरू नआओस् भनेर देवीदेवताको नाममा गुठीको रूपमा प्रशस्त जग्गाजमिन राखेर जाने परम्परा प्रचलित थियो । त्यसबेला गुठीका सदस्य कम हुन्थे । जग्गाको आम्दानी प्रशस्त हुन्थ्यो, आजको जस्तो महंगी पनि थिएन । यसैले चाडपर्वका बेला गरिने विविध देवीदेवताका जात्राहरू, नाचहरू आदि सबै विशेष सजधज र भव्यताका साथ सहज किसिमले समयमा नै सम्पन्न हुन्थ्यो । त्यसमा कुनै किसिमको कमी र व्यवधान आउँदैनथ्यो । स्थानीय जनतामा पनि देवीदेवताप्रतिको धार्मिक आस्था, विश्वास ओतप्रोत हुने भएकोले उनीहरू तन, मन, धन आदि सबै लगाएर जात्रा सम्पन्न गर्नमा तल्लीन हुन्थे । तर आज स्थिति अर्कै भइसकेको देखिन्छ । मन्दिरको पूजापाठ र त्यससम्बन्धी जात्रा उत्सवको संचालनार्थ नयाँ गुठी राख्नु त परै जावस्, भएका गुठी जग्गाहरू समेत मासिने गतिविधि बढेको बढ्यै छ । यसमा राज्यको नीति पनि धेरै हदसम्म जिम्मेवार रहेको पाइन्छ । वि.सं. २०२१ मा लागु भएको भूमिसुधार कार्यक्रमले गर्दा यहाँका परम्परागत जात्रा उत्सवहरूमा आर्थिक समस्या उत्पन्न भई शिथिलता आउन थालेको हो ।

यसरी व्यक्तिगत स्वार्थ र व्यक्तिवादी धारणाले प्रश्रय पाएको आजको यसस्थितिमा देवीदेवताको नाममा रहेका कैयन् गुठीहरू मासिइसके भने कतिपय मासिने क्रममा छन् । एकातिर यस्तो अवस्था छ भने अर्कोतिर गुठी संस्थानले उपलब्ध गराउने खर्च पनि नाम मात्रको छ । यसैले आफ्नो क्षेत्रका परम्परागत जात्रा वा सांस्कृतिक नृत्यहरू संचालन गर्ने गुठीका सदस्यहरूमा निरासाको आभाष स्पष्ट देखिन्छ ।

यी उल्लिखित आर्थिक व्यवधानका अतिरिक्त विद्युतीय संचार माध्यमसम्बन्धी प्रविधिको विकास, केबुल लाइनको प्रसारण, विदेशीसंस्कृतिको अतिक्रमण, नयाँ पुस्ता दिनपरदिन विलासी र नास्तिक बन्दै जानु जस्ता कारणहरूले चाडपर्व, जात्रा उत्सवहरूमा प्रत्यक्ष असर पारिरहेको छ ।

अर्को कुरा चाडपर्वका बेला स्थानीय युवाहरूमा अनेक प्रकारका विकृति र उच्छृङ्खलताहरू देखापर्न थालेका छन् । जस्तो : फागु पर्वमा पहिले भए अबीर मात्र दलेर, गीत गाएर सामुहिक रूपमा सबै मिलेर मनोरञ्जन गर्ने गरेकोमा विगत केही दशकदेखि यो पर्व मनाउने क्रममा लोलाले हान्ने, प्लाष्टिकका झोलामा पानी भरेर छ्याप्ने, हिलोले छ्याप्ने, जवर्जस्ती रङ्ग दल्ने कार्य बढ्दै गएको छ । त्यस्तै नेवारी संस्कृतिभित्र नपर्ने कुरा भएपनि तिहारको बेला देउसी, भैलो खेल्न आउने युवाहरूको अनेक समूह, जो रक्सी, बियरले मातिएका पनि हुन्छन्, तिनले भनेजति पैसा माग्ने, नदिए मुख छाड्ने, वितण्डा

मच्चाउँने गर्दछन् । यसैले समयको प्रभावले गर्दा चाडपर्व, जात्राउत्सवहरूमा मिसिन आएका यस्ता विकृति, विसङगति, उच्छृङ्खलतालाई हटाउनु आवश्यक हुन्छ । वास्तविक तथ्य कुरा पत्ता नलगाई अर्थात् चाडपर्वसम्बन्धी ज्ञान प्राप्त नगरी अरुले घोडा चढेको देखी आफूले धुरी चढ्न खोज्ने प्रवृत्तिका मानिसहरूले झै चाडलाई भाँड भनी छोड्नु आफू चढिरहेको रुखको फेद आफैँले काट्नु सरह हुनेछ ।

अन्तमा प्रचलित चाडपर्व, जात्राउत्सवहरू समग्र रूपमा यस मुलुककै सांस्कृतिक गरिमा र धरोहर भएकाले यसको संरक्षण, सम्बर्द्धन गर्दै लानुमा नै सबै नेपालीको कल्याण हुनेछ ।

# अध्याय चार

# नेवार समाजमा प्रचलित चाडपर्व

## ४.१ परिचय

उपत्यकाको नेवार समाजमा परम्परागत चाडपर्वहरू अत्यधिक रूपमा प्रचलित छन् । प्राय:जसो महिना वा पक्षमा एउटा न एउटा ठूलो वा सानो चाडपर्व आइरहेका हुन्छन् । चाडपर्व मनाउने कुरामा स्थानीय बासिन्दाहरू पछि पर्दैनन् । अपवादका रूपमा केहीलाई छोडेर बाँकी सबै चाडपर्वहरू पंचाङ्गद्वारा निर्धारण गरिएको चान्द्रमान तिथि अनुसार सम्पन्न हुने गर्छन् । यहाँ मनाइने असंख्य चाडपर्व,जात्राहरू देखेर विदेशी पर्यटकहरू समेत दङ्ग पर्दछन् ।

नेवारहरू चाडपर्वलाई नखःचखः भन्ने गर्छन् । शाब्दिक अर्थमा नखः भन्नाले चाड र चखः भन्नाले पर्व भन्ने बुझिन्छ ।[१] चाडपर्व वा जात्राहरू भव्य रूपले मान्ने भयो भने "चाड" तथा सामान्य किसिमले मात्र मान्ने भयो भने त्यसलाई "पर्व" भन्ने गरिन्छ ।[२] तर यहाँनेर विचारणीय कुरा के देखिन आउंछ भने प्रचलित चाडपर्वहरू सबै समान रूपले चाड नै भनेर वा पर्व नै भनेर छुट्याउन मुस्किल पर्दछ । किनकि एउटै चाडलाई पनि कतिपयले चाडकै रूपमा मान्ने गर्छन भने कतिपयले त्यही चाडलाई चाडका रूपमा नलिएर केवल पर्वका रूपमा मात्र लिने गर्छन् । यसमा स्थान, परिवेश, जात, कुल, परम्परा, सम्प्रदाय अनुसार चाडपर्व मनाउने तौरतरिकामा तात्विक भिन्नता रहेको पाइन्छ । जस्तैः उदाहरणार्थ "मेष संक्रान्ति"एउटा पर्वको दिन हो । यसलाई "खाइसल्हुँ" पर्व पनि भनिन्छ । यसदिन भक्तपुरमा प्रसिद्ध बिस्केटजात्रा हुने गर्छ । यस अवसरमा त्यहाँ भव्य चाड मनाइन्छ । तर काठमाडौँ, पाटन आदि स्थानहरूमा त्यसदिनलाई एउटा सामान्य पर्वको रूपमा मात्र लिने गरेको पाइन्छ । यसप्रकार नेवार समाजमा चाडपर्व मान्ने चलन समान छैन ।

यसैगरेर चाडपर्व र जात्राबीचको सम्बन्धबारे अध्ययन गर्दा यसमा शाब्दिक भिन्नता देखिएपनि उपत्यकाको नेवार समाजको सन्दर्भमा हरेक जात्राले चाडको माहौल श्रृजना गरिरहेका हुन्छन् । जस्तै : जात्राको दिन बिहानै जात्रा गर्ने देवताको मन्दिरमा होम गरी बलि दिइ पूजा गरिन्छ । दिउँसोपख झ्याँइ झ्याँइ बाजा बजाएर, उत्सव गरेर देवतालाई मन्दिर

---

[१] रेवती रमणानन्द श्रेष्ठ, *नेवाः*, यलः साहित्यया मूलुखाः, ने.सं. ११२१, पृ. ९५ ।

[२] चुन्दा वज्राचार्य, *नेवाः तजिलजिइ नखःचखः*, येंः नेपाल भाषा एकेडेमी, ने.सं. ११२०, पृ. २ ।

बाहिर ल्याई सजाइएको खटमा राखी विधिपूर्वक पूजा गरेपछि सम्बन्धित गुठीयारले खट बोकेर अघि बढाइन्छ । त्यस अघिल्तिर बाजागाजा, भजनकिर्तनसहितको लावालश्कर हुन्छ । जात्रामार्गमा पनि स्थानीय बासिन्दाले पशुबलि, सम्हेय्बजी आदि चढाएर पूजा गर्छन् । देवताको प्रसादको रूपमा त्यसदिन घर–घरमा सम्हेय्बजी खाने, भोज खाने आदिद्वारा चाड मनाइन्छ ।[३] यसरी जात्राले चाडको रूप लिइरहेको हुन्छ । यसबाट यहाँका जात्रा वा चाडपर्वहरू कुनै न कुनै देवदेवी वा मठमन्दिरसंग सम्बन्धित भइरहेका हुन्छन् भन्ने देखिन्छ ।[४] अतः जात्रा, स्थानीय परिवेश र मठमन्दिरबीचको त्रिपक्षीय सम्बन्धले स्पष्ट रूपमा के देखाउँदछ भने चाडपर्व एउटा निश्चित् देवीदेवताको सम्मानमा आयोजना हुने समारोह भन्ने जनाउँदछ ।[५] अपवादका रूपमा केहीलाई छोडेर यहाँका प्रायःजसो चाडपर्वहरू देवीदेवताकै नाममा मनाइँदै आइरहेको पाइन्छ । यसो हुनुको मुख्य कारण प्रारम्भदेखि नै यहाँको समाज धर्ममा आधारित समाज भएको हुनाले हो ।

## ४.२ भक्तपुरको सांस्कृतिक परिवेश

भक्तपुर नगरको समाज हिन्दुतन्त्रमा आधारित एक विशुद्ध नेवारी समाज हो । हिन्दु समाज वर्णव्यवस्था अनुरूप चलेको हुन्छ ।[६] यसैले हिन्दुहरूको शास्त्रीय परम्परा अनुरूप चार वर्ण छत्तीस जात भन्ने अवधारणा यहाँको नेवारी समाजमा पनि प्रचलित रहेको पाइन्छ ।[७] यो सामाजिक संरचनाभित्र ब्राम्हण जातिका नेवारहरूमा राजोपाध्याय भन्ने द्यःबजु,[८] जसले वंशानुगत आधारमा नेवारहरूको पुरोहित काम गर्दछन् र भट्ट ब्राम्हण, झा ब्राम्हणहरू विभिन्न मन्दिरका पुजारीका रूपमा रहेका छन् । त्यस्तै गरेर क्षेत्री जातिका नेवारहरूमा प्रधान, प्रधानाङ्ग, मल्ल, जोशी, श्रेष्ठ[९] आदि छ थरेहरू पर्दछन् ।[१०] वज्राचार्य भन्ने गुभाजुहरू, शाक्य भिक्षु भन्ने बाँडाहरू, अपवादका रूपमा केही श्रेष्ठहरू, तुलाधर, ताम्राकार, कंसाकार,

---

[३] बलदेव जुजु र सुरेन्द्रमान श्रेष्ठ, *नेपाःया तान्त्रिक द्यः व तान्त्रिक पुजाविधि,* येंः लेखकद्वय, ने.सं. ११०५, पृ. ३१ ।

[४] एन्नी बरगती, *गड्स, मैन एण्ड टेरिटोरी,* न्यू दिल्ली : मनोहर पब्लिसर्स, ई.सं. १९९५, पृ. ७ ।

[५] *ऐजन,* पृ. १५ ।

[६] प्राचीन हिन्दु समाज ब्राम्हण, क्षत्री, वैश्य, शुद्र गरी चार वर्णमा विभाजित थियो । प्रत्येक वर्णको आफ्नो अलग अलग कर्म निर्धारित गरिएको हुन्थ्यो ।– राधाकुमुद मुखर्जी, (अनु.वाशुदेवशरण अग्रवाल), *हिन्दु सभ्यता,* नयां दिल्ली : राजकमल प्रकाशन प्रा.लि., ई.सं. १९९०, पृ. १४१–१४२ ।

[७] जगदीशचन्द्र रेग्मी, *नेवारी संस्कृतिको रूपरेखा,* काठमाडौं : अफिस अफ नेपाल एन्टिक्वेरी, वि.सं. २०३५, पृ. ५ ।

[८] राजोपाध्याय संस्कृत शब्द हो तर स्थानीय जनजिब्रोमा भने यिनलाई द्यःबजु भन्ने गरिन्छ । द्यःबजु वा देउभाजुको अर्थ दैवीय व्यक्ति भन्ने हुन्छ ।– तुल्सीराम वैद्य, त्रिरत्न मानन्धर र शंकरराज जोशी, *सोसल हिस्ट्री अफ नेपाल,* न्यू दिल्ली : अनमोल पब्लिकेसन्स प्रा.लि, ई.सं. १९९३, पृ. ३७ ।

[९] काठमाडौं उपत्यकाका श्रेष्ठ नेवारहरू पनि तागाधारी र मतवाली गरेर दुई समूहमा रहेका छन् ।–*ऐजन* ।

[१०] डोरबहादुर विष्ट, *सबै जातको फूलबारी,* चौंथो संस्करण, काठमाडौं : साझा प्रकाशन, वि.सं. २०३९, पृ. ९–१० ।

राजकर्णिकार, धाख्वा बौद्ध नेवारहरू हुन् ।[११] त्यस्तै वैश्य जातिका नेवारहरू विविध जात (थर) धारण गरेर आफ्नो जात अनुसारको पेशामा संलग्न हुँदै आएका छन् । आजपनि यस समाजमा ब्राम्हण देखि शुद्रसम्मका मानिसहरूले आफ्नो जात अनुसारको कर्म गर्दै आएको पाइन्छ ।

नेवार समाज भित्रकै एउटा बृहत समुदाय, जो खेती किसानी गर्ने गर्दछन्, तिनलाई प्रचलित भाषामा ज्यापू भन्ने गरिन्छ, त्यस वर्गलाई जगदीशचन्द्र रेग्मीज्यूले पानी चल्ने अछुत जात (शत् शुद्र) को कोटीमा राख्नु भएको छ ।[१२] जयस्थिति मल्लले बनाएको सामाजिक स्थिति अनुसार ज्यापू समुदायभित्र मात्र ३२ जात रहेको पाइन्छ । शुद्र जातिका नेवारहरूमा कुस्ले, खड्गी, कुलु, पोडे, च्यामे, च्यामाखल आदि पर्दछन् । माथि उल्लेख गरिएका बाहुनहरू प्रष्ट रूपमा हिन्दु अनि वज्राचार्य र शाक्य भिक्षुहरू प्रष्ट रूपमा बौद्ध हुनु बाहेक अरु नेवारहरू धेरै जसो हिन्दु र बौद्ध धर्मको बीचमा त्यति फरक देखाउने वा मान्ने गर्दैनन् ।[१३] यसैले होला हिन्दु नेवारहरू स्वयम्भूनाथ र बौद्ध नेवारहरू पशुपतिनाथमा पूजा आराधना गर्दछन् । पशुपतिनाथको लिंगमा वर्षेनी बुद्धको मुकुट लगाएर छाँया दर्शन गर्ने गराउने चलन छ ।[१४] यसबाट पनि उनीहरू शिव र बुद्धमा कुनै भेद देख्दैनन् भन्ने बुझिन्छ ।

यद्यपि यहाँको नेवार समाज प्रत्यक्षतः चार वर्णमा विभाजित भएको देखिन्छ । तर त्यसोभए पनि वास्तवमा यिनीहरू आफै भित्र बीस भन्दा अधिक जातीय श्रेणीबद्धतामा विभाजित रहेको पाइन्छ । यसैले भक्तपुर नगरलाई आजसम्म पनि अनेक नेवार जात जातिको बसोबास भएको जातीय शहर भन्ने गरिएको पाइन्छ । यहाँ बसोबास गर्ने धेरै हिन्दु नेवारहरू के विश्वास गर्छन् भने यदि जातीय संरचना (Hierarchy order) भएन भने समाजमा अव्यवस्था फैलिन्छ । यसैकारण यिनीहरूका लागि जातीय श्रेणीबद्धताको अन्तरनिर्भरताले सामाजिक जीवन सम्भव भएको छ । यो जातीय अन्तरनिर्भरता नैतिकताको आधारभूत सिद्धान्त र परम्परागत हिन्दु सभ्यताको धरातलमा निर्माण भएको छ ।[१५]

भक्तपुरका परम्परागत चाडपर्वहरूको कुरा गर्दा यसको संरचनागत स्वरूप आफ्नै प्रकारको रहेको देखिन्छ । नेवार चाडपर्वहरू सबैतिर एउटै उद्देश्यले चलेको भएपनि त्यसलाई मनाउने तरिका र संरचनागत स्वरूप भने फरक–फरक पाइन्छ । गथामुगः

---

[११] *ऐजन* ।

[१२] रेग्मी, पा.टि.नं. ७, पृ. ९ ।

[१३] विष्ट, पा.टि.नं. १०, पृ. १० ।

[१४] जगदीशचन्द्र रेग्मी, *नेपालको धार्मिक इतिहास,* काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३०, पृ. २१० ।

[१५] स्टेभेन एम. पेरिश, *हाइरार्की एण्ड इट्स डिसकन्टेन्टस,* दिल्ली : अक्सफोर्ड युनिभरसिटी प्रेस, ई.सं. १९९३, पृ. ५ ।

(घण्टाकर्ण), गाईजात्रा, इन्द्रजात्रा आदिका उदाहरणबाट यस कुराको पुष्टि हुन्छ । जस्तो कि काठमाडौँमा घण्टाकर्ण चतुर्दशीका दिन साँझपख गथामुगः (घण्टाकर्ण) राक्षसलाई घिसारेर लगेर खोलामा विसर्जन गराउने चलन छ । तर भक्तपुरमा बाजागाजा सहित सिंगारेको भीमकाय घण्टाकर्णलाई बोकेर स्थानीय युवा केटाकेटीहरूले हात–हातमा बलेको छ्वाली लिएर अश्लील शब्दको नारा लगाउँदै जलाउन लाने गरिन्छ । यस्तै भिन्नता गाईजात्रा, इन्द्रजात्राहरूमा पनि देख्न सकिन्छ । यसबाट के कुरा स्पष्ट हुन्छ भने विभिन्न स्थान वा क्षेत्रका मानिसहरूको धर्म तथा भाषा एउटै भएपनि सांस्कृतिक परिवेश चाहिं अलग रहेको देखिन्छ, जसले सो स्थान वा जातिको विशेषता औंल्याइरहेको हुन्छ । धर्मशास्त्र निर्देशित हाम्रा चाडपर्वहरूले पनि यही विशेषतालाई झल्काउँछन्, जसलाई मनाउने तरिका, तिनमा जुटाइने मनोरञ्जनका साधनहरू, खानपानका कुराहरू आफ्नै पाराका हुन्छन् । यसले गर्दा एउटै उद्देश्यले चलेका चाडपर्व, जात्राहरू पनि काठमाडौं, पाटन र भक्तपुरमा बेग्ला–बेग्लै प्रकारले मनाइएको पाइन्छ । जबकि यी तीनवटै शहरहरू भाषागत, जातिगत र ऐतिहासिकताले परस्परमा आबद्ध छन् । वास्तवमा नेपाल उपत्यकाका यी तीनवटै शहरहरू एउटै भाषा, जाति र संस्कृतिमा आबद्ध छन् तापनि भक्तपुरको आफ्नै मौलिक परम्परा र सांस्कृतिक परिवेश रहेको छ । जस्तो कि पाटनमा शाक्य, वज्राचार्यहरूको संख्या बहुमतमा छ भने काठमाडौँमा श्रेष्ठहरू बढी छन्, त्यसै गरी भक्तपुरमा चाहिं ज्यापूहरूको संख्या अत्यधिक छ ।[१६] अर्को शब्दमा भन्ने हो भने पाटन शहर बौद्ध धर्मको केन्द्र हो भने काठमाडौँ हिन्दु र बौद्ध दुवै धर्मको मिश्रित प्रभाव भएको शहर हो । तर उपयुक्त दुवै नगरको अनुपातमा भक्तपुरमा हिन्दु धर्मको अत्यधिक प्रभाव प्राचीनकालदेखि नै रहेको छ ।[१७] यसैले अमेरिकी विद्वान रवर्ट आई. लेभीले यसलाई विशुद्ध हिन्दुतन्त्रमा आधारित शहर भनेका छन्, जहाँका ९२% बासिन्दाहरू हिन्दु धर्म मान्दछन् ।[१८] यसैकारण भक्तपुरमा काठमाडौं र पाटनको तुलनामा हिन्दु मठहरू अधिक र बौद्ध बिहारहरू कम रहेका छन् ।[१९]

---

[१६] (क) मानव शास्त्रीय दृष्टिकोणका आधारमा नेपाल उपत्यकामा सर्वप्रथम बस्ती आवाद गर्ने पहिलो मानवजाति अष्ट्रो–एशियाटिक समूहका भएको र तिनीहरू यिनै ज्यापूहरू भएकोले पनि यिनीहरू उपत्यकाको सबैभन्दा प्राचीन जाति भएको अनुमान गर्न सकिन्छ ।– डी.आर. रेग्मी, *एनसिएन्ट नेपाल,* कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६५, पृ.१५ ।
(ख) यस ज्यापू जातिभित्र प्राचीन कालका शासकवर्ग जस्तो गोपाल, महिषपाल (आभीर) हरू समेत समाहित भएको हुनुपर्छ भन्ने अनुमान गरिएको छ । – रेग्मी, पा.टि.नं. ७, पृ.९ ।

[१७] हरिराम जोशी, "मठ", *खोपृङ,* वर्ष–५, अंक ५ (वि.सं. २०५३), पृ. ११ ।

[१८] रबर्ट आइ. लेभी, *मेसोकज्म,* दिल्ली : मोतीलाल बनारसी दास, ई.सं. १९९२, पृ. ५९ र ७५ ।

[१९] बिहारहरू बौद्ध शिक्षाको थलो मानिन्छन् भने मठहरू हिन्दु धर्म दर्शनको पठनपाठन गरिने थलोको रूपमा लिइन्छ र मठका मठाधीशलाई महन्त भनिन्छ । मध्यकालीन नेपालका लगभग ३५ वटा मठ घरहरू पाइएका छन्, जसमध्ये अधिकांश भक्तपुरमा रहेका छन् । –जोशी, पा.टि.नं. १७, पृ. ११ ।

यसप्रकार हिन्दुतान्त्रिक व्यवस्थामा आधारित उपत्यकाको एउटा पुरानो शहर भक्तपुरमा अधिकांश बासिन्दा खेती किसानी गर्ने ज्यापूहरू रहेका छन् ।[२०] नेवार समाजको सामाजिक मर्यादा क्रममा माथिल्लो स्थानमा नदेखिएता पनि समाजप्रति यिनीहरूको योगदान मह□वपूर्ण छ र कुनै पनि चाडपर्वमा मनाइने जात्रामा जात्राको वातावरण नै यिनीहरूबाट सृजना भइरहेको हुन्छ । जात्राको बेला देवदेवीका खट बोक्ने, दाफा भजन गाउने, बाजा बजाउने, चिराग बत्ती बाल्ने, बिस्केटको रथ तान्ने, लिंगो उभ्याउने, गथामुगः चऱ्हेमा घण्टाकर्ण राक्षसलाई अश्लील शब्दले गाली गर्दै दाहसंस्कार गर्न लाने, गाईजात्रामा नर्तक नर्तकी भएर नाच्ने, बाजा बजाउने, ताहासाँ बोक्ने, इन्द्रजात्रामा पुलुकिसी बन्ने, मुपात्र जात्रा आदिमा यिनीहरूको सहभागिताले यस कुराको पुष्टि हुन्छ ।[२१] भक्तपुरको जात्रा पर्वमा ज्यापू समुदायको सहभागिता उपल्लो दर्जाको रहेको छ । अतः यिनीहरूको सहभागिता बिना कुनै पनि जात्रा पर्व सम्पन्न हुनु संभव देखिंदैन ।

मल्लकालीन प्रसिद्ध राजा जयस्थिति मल्लले बनाएको सामाजिक स्थिति अनुसार ज्यापू समुदायभित्र ३२ जात रहेको उल्लेख पाइन्छ ।[२२] तर पनि भक्तपुर नगरभित्र हेर्ने हो भने यिनीहरूका सयौं प्रकारका थरहरू अद्यावधि प्रचलित रहेको देखिन्छ । रवर्ट आई.लेभीले भक्तपुरका ज्यापूहरूलाई तीन श्रेणीमा विभाजन गरेर त्यसभित्र २३४ थर भएको कुरा औंल्याएका छन् ।[२३]

परिणामतः भक्तपुर शहरको एक सानो स्थानमा पनि अनेकाअनेक थरका मानिसहरूको बसोबास पाइन्छ । जस्तै : भक्तपुर नगरपालिकाको वार्ड नं. ४ मा गरिएको एक अनुसन्धानमा १३९ प्रकारका थरका मानिसहरूले बसोबास गरेको पुष्टि भएको छ ।[२४] तर भक्तपुरमा डंगोल र महर्जन थरका ज्यापूहरूको भने उपस्थिति रहेको पाइँदैन ।[२५] भक्तपुरका ज्यापूहरूमा अनौठो प्रकारका थरहरू प्रचलनमा रहेको छ । अर्को रोचक पक्ष के

---

[२०] ज्यापू दुईवटा शब्द मिलेर बनेको छ – ज्या र पू ।  ज्या= काम र पू वा फू= गर्न सक्ने अर्थात् ज्या याय फू वा सफलतापूर्वक काम गर्न सक्ने समर्थवान व्यक्ति नै ज्यापू हो । तर कोही ज्या को अर्थ काम र फू को अर्थ एक किसिमको तौली धान मान्ने गर्छन् । किनभने कुनै बेला उपत्यकामा तौली धानको उत्पादन खुबै हुने गर्थ्यो । ज्यापू भन्नाले उपत्यकाको कृषि पेशामा लाग्ने नेवार समाजको एउटा प्रमुख समुदाय भन्ने बुझिन्छ । – गोपालसिंह नेपाली, *दि नेवार्स*, रिप्रिन्ट, बम्बई : युनाइटेड एशिया पब्लिकेसन्स्, ई.सं. १९८८, पृ. १६६–१६७ ।

[२१] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[२२] देवीप्रसाद लम्साल (सं), *भाषा वंशावली, भाग २*, काठमाडौं : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं.२०२३, पृ. ३८ ।

[२३] लेभी, पा.टि.नं. १८, पृ. ८१–८२ ।

[२४] बिगोल, "भक्तपुर नगरः ४ नं. वडा परिचय", *भक्तपुर*, वर्ष २०, अंक ६, (२०५९ भाद्र), पृ. ६ ।

[२५] स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।

छ भने भक्तपुरका ज्यापूहरू आफ्नो कर्मकाण्ड, सामाजिक संस्कार आदि शैव ब्राम्हण, राजोपाध्याय (द्यः बजु) बाट सम्पन्न गराउँछन् । तर यसको विपरीत काठमाडौँ र पाटनका ज्यापूहरूले वज्राचार्य (गुभाजु) लाई आफ्नो पुरोहित मानेका छन् ।[२६] यस उदाहरणबाट भक्तपुरका ज्यापूहरू हिन्दुतन्त्रमा बिश्वास गर्ने र काठमाडौँ र पाटनका ज्यापूहरू बौद्ध धर्ममा आस्था राख्ने देखिन्छ । वास्तवमा यो कुरा थप अनुसन्धानको विषय हो । काठमाडौँ र पाटन पहिलेदेखि नै बौद्ध धर्मको केन्द्र भएकोले त्यसको प्रभाव त्यहाँका विभिन्न जाति र वर्गमा पर्नु स्वाभाविक देखिन्छ । परिणामतः त्यस क्षेत्रका ज्यापूहरूमा बौद्ध परम्पराको प्रभाव पर्न गएको हो । अर्कोतिर भक्तपुर नगरको स्थापना नै हिन्दुतन्त्रमा आधारित भएको र यहाँ हिन्दु धर्मावलम्वीहरूको बाहुल्यता भएकोले यो धर्म नै प्रभावकारी रूपमा रह्यो । त्यसको प्रभाव स्थानीय ज्यापूहरूमा पर्नु कुनै अनौठो देखिदैन । जे होस् यिनको धर्ममा कुनै विवाद छैन । वस्तुतः नेवार समाज धार्मिक उदारता बोकेको समाज हो ।[२७] यसैकारण धार्मिक कट्टरता यहाँ कहिले पनि रहेन । सहिष्णु र समन्वयको भावना आज पनि देख्न सकिन्छ ।

आर्थिक दृष्टिकोणबाट हेर्दा यिनीहरूको मुख्य पेशा खेती किसानी हो । मल्लकाल, शाहकाल र राणाकालमा यिनीहरू माथिल्लो वर्गका दासका रूपमा थिए । दास यस अर्थमा थिए कि खेती किसानीका अलावा यिनीहरूले मालिकको घर घरायसी र अन्य भैपरी आउने सबै काम गर्नु पर्दथ्यो । यसले गर्दा यिनीहरूको अवस्था दयनीय थियो । जसले वर्षदिनभरि काम गरेर पनि एक पेट राम्रोसँग खान पाउँदैनथ्यो । तर वि.सं. २०२१ सालमा नेपालमा भूमिसुधार योजना लागु भएपछि यिनीहरूको आर्थिक अवस्थामा क्रमिक रूपमा सुधार हुँदै आयो ।[२८] यहाँको समाज धार्मिक र भक्तिमार्गबाट प्रभावित  समाज भएपनि यो धार्मिक प्रवृत्ति परम्परा थाम्ने रुढि जस्तो पनि देखिन्छ । हाल आएर परम्परागत समाज भएतापनि यसले उद्यमशीलतालाई अँगालेको पाइन्छ ।[२९]

भक्तपुर नगर परापूर्वकालमा उद्योग र व्यापारका दृष्टिले प्रख्यात रहेको भएपनि हाल एउटा पुरानो बस्तीको रूपमा रहेको छ । राजधानीको छिमेकमै रहेको भएर पनि यो नगर

---

[२६] बासुपासा, *भादगाउँ*, काठमाडौँ : पासा प्रकाशन, वि.सं. २०५१, पृ. ४८ ।

[२७] तथापि भक्तपुरका ज्यापूहरूको अन्यत्रका ज्यापूहरूसँग सामाजिक विभेद भने कायम देखिन्छ । विशेष गरेर सँगै खान र वैवाहिक सम्बन्ध जोड्न प्रतिवन्धित छ । यसको मुख्य कारण अन्यत्रका ज्यापूहरू डोली बोक्ने बाँडाले पकाएको खाने भएकोले यो विभेद आवश्यक छ भन्ने तिनीहरूको मान्यता छ । वास्तवमा ज्यापू जातिलाई पनि सत् शुद्र र असत् शुद्र भनेर वर्गीकरण गरिएको पाइन्छ । सत् शुद्र भनेका भक्तपुरका हिन्दु ज्यापू र असत् शुद्र भनेका बौद्ध ज्यापूहरू हुन् । – नेपाली, पा.टि.नं. २०, पृ.१६७ ।

[२८] बलराम कायस्थ, “नेवार समुदायका विविध पक्ष”, *भक्तपुर,* वर्ष २० ,अंक ६, (२०५९ वैशाख), पृ.२० ।

[२९] रेग्मी, पा.टि.नं. ७, पृ.१४ ।

आधुनिक विकास र आर्थिक उन्नतिका क्षेत्रमा निकै पछाडि परेको छ, यसको बावजूद कला, संस्कृति, सामाजिक रीतिरिवाज, परम्परा, जात्रा, चाडपर्व आदिका दृष्टिले यो नगर अन्य नगरको तुलनामा समृद्ध रहेको देखिन्छ ।[३०] यसैकारण पश्चिमेली विद्वान टिवर सल्केजले भनेका छन् –"वर्ष दिनभरिका दिनहरू भन्दा यहाँ मनाइने ठूलो वा सानो सबै किसिमका चाडपर्व, उत्सव र जात्राका दिनहरू बढी छन् ।"[३१] काठमाडौँ र पाटनमा बाह्य जगतको प्रभाव तीब्र रूपमा पर्नु, त्यहाँ स्थानीय नेवारहरू भन्दा बाहिरबाट आएर बसेका गैर नेवारहरूको बाहुल्यता बढ्दै जानु, अनि व्यस्त जीवनको बेफुर्सदी समय जस्ता कारणहरूले गर्दा त्यहाँका चाडपर्व जात्राहरूमा पाइने मौलिकता खिइँदै गएको परिप्रेक्ष्यमा भक्तपुरका चाडपर्व जात्राहरूमा आफ्नै मौलिकपन र जीवन्तता रहेको पाइन्छ । माथि उल्लेख गरि सकिएको छ कि भक्तपुर किसान बाहुल्य नगर हो । किसानहरू नगरभित्र बस्दछन् नगर वरिपरि यिनीहरूका खेत छन् । दिनमा यिनीहरू आफ्ना खेतमा गएर काम गर्छन् । वर्षको ३, ४ महिनामात्र खेतको काम हुन्छ अर्थात् यिनीहरूका अधिकांश समय फुर्सदमै बितेको हुन्छ । यस परिस्थितिमा धर्म, पुण्य, लोककल्याणका साथै मनोरञ्जन पनि प्राप्त हुने हुनाले यी परम्परावादी किसानहरू हरेक तिथि, सप्ताह, पक्ष, महिनामा हुने भोज भत्तेर, गुठी गाना, जात्रा पर्वहरूमा सहभागी हुन्छन् । यसप्रकार नेवार संस्कृतिरूपी भवनको आधारस्तम्भको रूपमा रहेका यी किसानहरूकै कारणले गर्दा भक्तपुरका चाडपर्व जात्राहरूका आफ्नै सांस्कृतिक परिवेश र आफ्नै मौलिक विशेषता रहेको पाइन्छ ।

## ४.३ भक्तपुरमा मनाइने चाडपर्वहरूको संरचना

चाडपर्वका लागि उर्वर भूमि मानिने भक्तपुरमा हरेक वर्ष अनगिन्ति चाडपर्व, जात्रा, उत्सव लगायतका सांस्कृतिक गतिविधिहरू अद्यावधि प्रचलित रहँदै आएका छन् । चाहे सानो होस् वा ठूलो, यहाँ हरेक दिन एउटा न एउटा पर्व परिरहेकै हुन्छ । ३६५ दिनको वर्षमा ३६६ वटा पर्व आउँछन् भन्ने लोकोक्ति यहाँ प्रचलित रहेबाट नै यस कुराको पुष्टि हुन्छ । यसरी वर्षैपिच्छे चक्र झैं घुमेर आउने यस्ता पर्वहरूलाई निष्ठाका साथ ग्रहण गरेर मनाउने परम्परा यहाँका बासिन्दाहरूमा परापूर्वकालदेखि रहँदै आएको पाइन्छ । यस्ता चाडपर्व लगायतका सांस्कृतिक गतिविधिहरू मनाउने परम्पराको विकास किन र कसरी

[३०] बलराम कायस्थ, *भक्तपुर शहरमा मनाइने केही ऐतिहासिक चाडपर्वहरू,* (अप्रकाशित स्नात्तकोत्तर तहको शोध प्रबन्ध), इतिहास केन्द्रीय विभाग, त्रि.वि. कीर्तिपुर, वि.सं. २०५०, पृ. ४ ।

[३१] टिबर सल्केज, *वीन्डो अन नेपाल,* लण्डन : रवर्ट हेल लिमिटेड, ई.सं. १९५९, पृ. १३७ ।

भयो भन्दा यसको सजिलो जवाफ यस्तो आउँछ – आर्थिक सम्पन्नता, धर्मकर्मप्रतिको विश्वास अनि मनोरञ्जन ।

प्राचीन समयमा यो ठाउँ आर्थिक रूपमा सम्पन्न थियो । यहाँको उर्वर भूमिका कारणले गर्दा कृषि उत्पादन प्रशस्त हुन्थ्यो । वर्षको ३, ४ महिनामात्र काम गरेपनि वर्ष दिनभरि खान पुग्ने अन्न उत्पादन हुने हुनाले बाँकी फुर्सदको समयमा स्थानीयवासीले विभिन्न किसिमका नाचगान, भोजभत्तेर, जात्रा, पर्व मनाउने परम्पराको थालनी गरे । वास्तवमा चाडपर्व मनाउनाले धर्मको सँगसँगै मनोरञ्जन पनि प्राप्त हुने अनि समाजमा सामाजिक सद्भाव पनि बढ्ने भएकोले यसलाई जो कोहीले पनि सामाजिक प्रतिष्ठाको रूपमा लिने गरेको देखिन्छ । जनविश्वास के पाइन्छ भने स्थानीय संरक्षक देवीदेवताको वर्षको एकपटक जन्मोत्सवको रूपमा निश्चित् दिनमा “बुसादँया जात्रा” गर्ने प्रचलन भक्तपुर लगायत अन्य नेवार बस्तीहरूमा रहेको देखिन्छ ।[३२] भक्तपुरमा भैरवनाथ, बनेपामा चण्डेश्वरी, पाटनमा मच्छिन्द्रनाथ, काठमाडौँमा कुमारीलाई वर्षको एकपटक निश्चित् तिथि र साइतमा मूल देवगृहबाट बाहिर ल्याई खटमा राखेर जात्रा गर्ने परम्पराले यस कुराको पुष्टि हुन्छ ।

यद्यपि आधुनिक विद्वानहरू चाडपर्वले मानिसको समय, स्रोत र पैसाको मात्रै नाश गर्छ भन्ने सोचाइ राख्छन् ।[३३] तर गहिरिएर अध्ययन गरेको खण्डमा चाडपर्व समाज र संस्कृतिको स्तर मापन गर्ने प्रमुख आधार रहेको देखिन्छ । जुन समाजमा जति बढी यस्ता चाडपर्वहरू प्रचलित हुन्छन्, त्यो समाज त्यति नै संस्कृतिले सम्पन्न मानिन्छ ।

भक्तपुरका चाडपर्वको उत्पति सम्बन्धमा ध्यान दिंदा विशेष गरेर धर्म, मनोरञ्जन र सामाजिक सद्भाव यी तीन उद्देश्यगत आधारमा नै यहाँका चाडपर्वहरूको संरचना भएको देखिन्छ । उपत्यकामा प्रचलित समग्र चाडपर्वहरूको पृष्ठभूमितर्फ ध्यान दियो भने यी तथ्यहरू वास्तविकताको नजिक रहेको थाहा हुन्छ । वास्तवमा धर्मसँगै मनोरञ्जन पनि हुने र त्यसबाट सामाजिक एकता पनि प्रदर्शित हुने भएकोले नै यहाँका चाडपर्वहरू संरचित हुन आएको बुझिन्छ ।[३४] यस अतिरिक्त आर्थिक समुन्नति र राजनैतिक स्थिरता जस्ता कारणले

---

[३२] जुजु र श्रेष्ठ, पा.टि.नं.३, पृ. ३२ ।

[३३] रमेशराज कुँवर, “होरी फेष्टिबल अफ राना थारुज अफ नेपाल”, *भ्वाइस अफ हिष्ट्री,* अंक १२, संख्या १, (जुलाई १९९७), पृ. ९५ ।

[३४] यहाँका चाडपर्वहर धर्मप्रतिको आस्था, परिवारजनप्रतिको आत्मीयता र साथीभाइसंग गरिने रमाइलोका रूपमा रहेका छन् । यी चाडपर्वहरू विविध साँस्कृतिक क्रियाकलापले सम्पन्न छन्, जसमा धर्मको केन्द्रीय भूमिका रहने गर्छ । – ध्रुवकृष्ण दीप, *दि नेपाल फेष्टिबल्स,* काठमाडौँ : रत्न पुस्तक भण्डार, ई.सं. १९९९, पृ. IX ।

पनि यहाँको सांस्कृतिक पर्वहरूको संरचनामा मह□वपूर्ण भूमिका खेलेको पाइन्छ । वास्तवमा समुन्नत आर्थिक अवस्थाको पृष्ठभूमिमा नै कुनै पनि सभ्यता र संस्कृतिले मौलाउने अवसर पाउँछ । एकातिर प्रशस्त उत्पादन हुने यहाँको कृषियोग्य जमीन, अर्कोतिर तिब्बत र भारतसँगको बाह्य व्यापार, घरेलु उद्योगको विकास आदि कारणले यहाँको राज्य र जनता दुवैको आर्थिक स्थिति दरिलो थियो । यस किसिमको सम्पन्न आर्थिक परिवेश अनि धर्मकर्म प्रतिको अगाध आस्था र विश्वासले गर्दा यहाँका बासिन्दाले विभिन्न किसिमका नाचगान भोजभत्तेर, चाडपर्व, जात्रा, उत्सव मनाएर रमाइलो गर्ने परम्परा कायम हुन गयो । यस्ता सांस्कृतिक पर्वहरूको संरक्षण, सम्बर्द्धनको लागि श्रद्धा भएका शासक वर्ग र प्रजाजनले आ–आफ्ना खेत जग्गा गुठी राखी दिए, जसको आयस्ताबाट आजसम्म पनि यी पर्वहरू संचालन हुँदै आएका छन् । अर्को कुरा यहाँको स्थिर र शान्त राजनीतिक स्थितिले पनि सांस्कृतिक पर्वहरूको विकासमा टेवा पुऱ्याएको देखिन्छ । यसभन्दा पनि मह□वपूर्ण कुरा यहाँका शासकहरूमा रहेको धर्मकर्म प्रतिको आस्था, कलासंस्कृतिप्रतिको प्रेम, उदारवादी चरित्र आदि हो । यसैकारण भक्तपुर समग्र नेपाल मण्डलको राजधानी छँदा र त्यसपछि बिखण्डित भक्तपुर राज्यको राजधानीमात्र रहँदा पनि मल्ल शासकहरूले सदैव चाडपर्व, जात्रा लगायतका अवसरमा आयोजना गरिने सांस्कृतिक गतिविधिलाई प्रोत्साहित गर्न प्राथमिकता दिने गरेको पाइन्छ ।[३५] यहाँका मल्ल राजाहरू आफैं विभिन्न जात्रा, नाचगानहरूमा सहभागी भएका उदाहरणबाट पनि यस कुराको पुष्टि हुन्छ ।[३६] तात्कालीन सामाजिक परिवेशमा मनोरञ्जनको एउटा प्रमुख माध्यम चाडपर्व पनि रहेको पाइन्छ । प्राचीन किरात काल र त्यसभन्दा पूर्व मनोरञ्जन (आमोदप्रमोद) को के कस्तो स्थिति थियो भन्ने कुरा प्रमाणको अभावमा बताउन सकिन्न । तर पनि यहाँको भौगोलिक अवस्था, अविकसित समाज, पछौटेपन जस्ता कारणले गर्दा शिकार खेल्नु, धनुर्वाण चलाउनु, चित्र कोर्नु, मूर्ति बनाउनु, आदि क्रियाकलाप गरेर त्यसबेलाको समाजले मनोरञ्जन लिने गर्दथ्यो भन्ने अनुमान गर्न सकिन्छ ।[३७] तर लिच्छवीकालसम्म आइपुग्दा यहाँको समाज व्यवस्थित र

[३५] प्रत्येक चाडपर्व, जात्राउत्सवमा नाचगानको आयोजना गरिन्थ्यो । शहर बस्तीका मुख्य–मुख्य केन्द्रहरूमा डबली निर्माण गरिएका हुन्थे । राजदरबारभित्र नाचगानकालागि एउटा छुट्टै चोकको निर्माण गरिएको हुन्थ्यो । जुन चोकलाई नासलचोक भनिन्थ्यो । उपत्यकाका तीनवटै मल्लदरबारमा यस्ता चोक थिए । यी नाचगानहरू कुनै–कुनै महिनौदिनसम्म प्रदर्शित गरिन्थे । मल्लशासकहरू स्वयम् कलाका उपासक भएकाले आफै नाटक, गीत आदि लेख्ने लेखाउने, खेल्ने खेलाउने परम्परा विद्यमान रहेको थियो । – वैद्य, मानन्धर र जोशी, पा.टि.नं. ८, पृ. २०७ ।

[३६] आजपनि बिस्केटको बेला भैरवनाथको रथयात्रा गर्दा मल्लराजाको प्रतीक स्वरूप शाही तरवार राजकीय ठाँटले हाजिलँ र गुजिलँ(मुजामुजा परेको जामा, सुरुवाल, भोटो र पगरी) लगाएका गुरु पुरोहितका साथ सिंगारिएको रथमा सवार गराएपछि मात्र औपचारिक जात्रा शुभारम्भ हुने परम्पराबाट के कुरा पुष्टि हुन्छ भने मल्लकालमा यस्ता जात्रा नाचगानहरू भव्यताका साथ सम्पन्न गर्न राजाहरू आफै त्यसमा सहभागी हुने गर्दथे भन्ने थाहा हुन्छ ।

[३७] बलराम कायस्थ, “प्राचीन नेपाली समाजमा मनोरञ्जनका विविध पक्ष”, *भक्तपुर*, वर्ष १९, अंक १२, (२०५८ असोज) पृ. ७ ।

क्रमिक रूपमा विकसित हुँदै गएकाले र लिच्छवीशासकहरूकासाथै यहाँका बासिन्दाहरूको धर्मभीरु स्वभावको कारणको फलस्वरूप धर्म, पुण्य, लोककल्याण, सामाजिक स्थिरता तथा मनोरञ्जन आदि अभिप्रायले विभिन्न प्रकारका धार्मिक पर्व, जात्रा[३८], नाचगान[३९], भोज जस्ता विविध सांस्कृतिक गतिविधिहरू सहितको चाडपर्वहरूको व्यवस्था हुन आएको तथ्य लिच्छवीकालीन अभिलेखहरूको अध्ययनको आधारमा थाहा हुन्छ । वास्तवमा धार्मिक कर्ममा अगाध आस्था भएको यहाँको समाजमा विविध किसिमका चाडपर्वहरूको उत्पति हुँदै आएको बुझिन्छ ।[४०] यद्यपि लिच्छवीकालमा प्रचलित कतिपय चाडपर्वहरू वर्तमान समयसम्म आइपुग्दा लोप भइसकेका छन् । तर केही जात्राहरू भने हाल सम्म पनि प्रचलित रहेको बुझिन्छ । संवत् ५२६ (वि.सं. ६६१) को शिवदेव अंशुवर्माको लेले अभिलेखमा अनेकौं प्रकारका गोष्ठी (गुठी) का साथै ध्वजगोष्ठीको पनि उल्लेख हुन आएको र ध्वजाको बन्दोवस्तका लागि ध्वज गोष्ठी बनेको आधारमा लिंगोमा ध्वजा फहराई जात्रा गर्ने चलन त्यसबखत लोकप्रिय थियो[४१] भन्ने कुरा यसबाट पनि थाहा पाइने हुनाले वर्तमानमा प्रसिद्ध रहेको यहाँको प्रमुख जात्रा विश्वजात्रा  सातौं शताब्दीमै लोकप्रिय रहेको थियो भन्ने अनुमान हुन्छ । अनि नरेन्द्रदेवको संवत् ८० को अनन्तलिङ्गेश्वर अभिलेखमा वराह यात्राको उल्लेख भएको र जगदीशचन्द्र रेग्मीद्वारा यो जात्रा भक्तपुर भेकतिरै हुन्थ्यो[४२] भनिएको आधारमा अहिले भक्तपुरमा हरेक वर्ष हुने वाराही जात्रा यही वराह यात्राको विकसित रूप हो भन्ने अनुमान गर्न सकिन्छ ।[४३] वास्तवमा अनन्तलिङ्गेश्वर र वाराही पीठ त्यति दूरीमा पनि छैन । यी तथ्यका आधारमा वर्तमान भक्तपुरको नेवार समाजमा प्रचलित चाडपर्व मध्ये केहीको प्रचलन लिच्छवीकाल देखि नै भएको हो भन्ने बुझिन्छ । यसदेखि बाहेक भक्तपुरमा प्रचलित

[३८] ऐतिहासिक प्रमाणका आधारमा त्यसबेला अनेक जात्राहरू प्रचलित थिए भन्ने कुरा कैलाश यात्रा, द्वारोद्घाटन यात्रा, वराह यात्रा, लोकपाल स्वामीको यात्रा, पशुपतिनाथमा छाता चढाउने यात्रा, मण्डपी यात्रा आदिका उदाहरणबाट पुष्टि हुन्छ । – धनवज्र वज्राचार्य, *लिच्छवीकालका अभिलेख,* काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३०, पृ. २७४, ४८६, ५३१ र ५६५ ।

[३९] (क) चिनियाँ ताङ्ग वृत्तान्तमा नेपालीहरू सनाई र ढोल बजाएर नाचगान गर्न खुसी मान्छन् भनी उल्लेख भएको पाइन्छ ।- नयराज पन्त (सं.), *लिच्छवी संवत्को निर्णय,* काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०४३, पृ. ५१२ ।
(ख) शिवदेव प्रथमको लेले अभिलेख र नरेन्द्रदेवको अनन्त लिंगेश्वर अभिलेखहरूले नाचगान सम्बन्धी व्यवस्था बारे उल्लेख गरेको छ । पहिलो अभिलेखमा मन्दिरहरूमा बाजा बजाउने व्यवस्थाका लागि वादित्र गोष्ठी र दोस्रो अभिलेखमा दश देवदास र वीस देवदासी नाचहरूको उल्लेख भएको छ । यी देवदास देवदासीहरूको मुख्य काम विविध भावभङ्गिमा गानद्वारा सम्बन्धित देवताहरूलाई खुसी पार्नु रहेको हुनुपर्छ । - हित नारायण झा, *दि लिच्छवीज,* वाराणसी : चोकम्बा संस्कृत सिरिज अफिस, ई.सं. १९७०, पृ. १९१ ।

[४०] जुजु र श्रेष्ठ, पा.टि.नं. ३, पृ. ३० ।

[४१] वज्राचार्य, पा.टि.नं. ३८, पृ. २८३ ।

[४२] जगदीशचन्द्र रेग्मी, *लिच्छवी संस्कृति,* काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०२६, पृ. २५३ ।

[४३] अनि लिच्छवीकालमा प्रचलित पुरुष देवता मल्लकालमा आउँदा स्त्रीलिङ्गी देवता भएको उदाहरण मानेश्वरको मानेश्वरी र कुमारको कुमारी पनि हो ।– गौतमवज्र वज्राचार्य, *हनुमानढोका राजदरबार* , काठमाडौं: नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३३,  पृ.१६२ ।

अधिकांश चाडपर्व, जात्राहरू पूर्वमध्यकालतिर प्रारम्भ भएको कुरा गोपालराजवंशावलीका[४४] अतिरिक्त पशुपतिको ताम्रपत्र, टौमढी टोलको अभिलेख[४५] आदि ऐतिहासिक प्रमाणहरूका आधारमा जान्न सकिन्छ । यी चाडपर्व जात्रालाई मल्लकालको अन्ततिर आएर विभिन्न शासकहरूले अझ भव्य र सजधजका साथ मनाउनु पर्ने प्रचलन सुरु गरिदिए । त्यसैको निरन्तरता आज भक्तपुरमा वर्षेनी मनाइने चाडपर्व र जात्राहरू हुन् ।

नेपालको सामाजिक इतिहासमा नेवार एउटा जात्रा प्रधान जातिको रूपमा रहँदै आएको छ । हुन पनि यहाँका नेवारहरूले धेरै प्रकारका चाडपर्व जात्राहरू मनाउँछन् । यसैले विद्वानहरू भन्दछन् कि"नेवार बिग्र्यो भोजले, अरु बिग्र्यो मोजले" ।[४६] यसपछाडि उनीहरूको धार्मिकता मात्रै होइन सामाजिकपक्ष पनि प्रबल कारण रहेको देखिन्छ । चाड, पर्व, जात्रा लगायत अन्य उत्सवहरूमा परिवार र समाजका बीच परस्पर तालमेल, सहयोग र राम्रो समन्वय रहेको पाइन्छ । जात्रामा सहभागी हुने भ्वोछीं (पुरै परिवार), फुकी (तेन्ह दिने दाजुभाइ), विविध गुठी, टोल, इलाका वा स्थानीय बासिन्दा नै जात्राको आधारभूत इकाई  हो ।[४७] जात्राको अवसरमा सार्वजनिक स्थल, मठमन्दिर, तीर्थ, जलाशय वा घाटमा लाग्ने मानिसहरूको घुइँचो व्यक्ति वा परिवारकै समष्टिगत रूप हो । वर्षकृत्य भनिने यस्ता चाडवाड (नखःचखः) लाई वर्षैपिच्छे निश्चित् तिथिमा पुनः सम्पन्न गरिन्छ । यसको तिथि पञ्चाङ्गमा निर्धारण गरिएको हुन्छ ।[४८]

यसप्रकार चाडपर्व वा जात्राको संरचना निर्माणको मूलउद्देश्य सामाजिक सुस्थितिको शाश्वत अवधारणालाई ध्यान दिएर परिवारदेखि छरछिमेक, टोल बस्ती मात्र नभएर राज्य स्तरमा स्थिरता कायम राख्नु हो । किनकि सार्वजनिक जात्रामा व्यक्ति वा परिवारका

---

[४४] धनवज्र वज्राचार्य र कमल प्रकाश मल्ल, *दि गोपाल राजवंशावली,* काठमाडौँ : नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, गण्ठकर्ण चवदश (घण्टाकर्ण चतुर्दशी) (पत्र ६१ क), सांयात कोन्हु (गाईजात्रा) पत्र ६१ ख, ऐन्द्रेयात (ईन्द्रजात्रा) पत्र २९ क, महनी (दशैंको टीका) पत्र ५६ क र "पौस्य पूर्णिमा होली कृतं" (पत्र २१ क) यस वाक्यांशले होलीलाई संकेत गर्दछ । तर हिजो आज होली त फाल्गुण पूर्णिमाका दिन सम्पन्न गरिन्छ । के त्यसबेला होली पौष पूर्णिमामा गरिन्थ्यो ?

[४५] ने.सं. ५६१ को पशुपति ताम्रपत्र र टौमढी टोलको शिलालेखहरूमा महाष्टमी, महानवमी र महाष्टमी देखि तीन दिन भनेर स्पष्ट रूपमा दशैंलाई उद्धृत गरेको बुझिन्छ । अनि सुखरात्री भनेर म्हःपूजाको रातलाई पौष पूर्णिमा पछि आउने दिक्षय संक्रान्तिको उल्लेख निश्चय पनि माघे संक्रान्तिलाई भनिएको हुनुपर्छ । पिशाच चतुर्दशी वर्तमान पाँहाचरे जात्रालाई भनेको हुनुपर्छ । सिठीकोन्हु हिजोआजको सिठी चाड अनि पशुपति ताम्रपत्रमा उल्लेखित विश्व संक्रान्ति र टौमढीको शिलालेखमा उल्लेखित "विश्वयात्रा दुई दिन" निश्चय पनि भक्तपुरको वर्तमान बिस्केट जात्रा बाहेक अरु केही हुन सक्तैन भन्ने कुरा स्पष्ट छ । –डि.आर. रेग्मी, *मिडियभल नेपाल, तेस्रोभाग,* कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ५९–६० र ६४–६६ ।

[४६] नेपाली, पा.टि.नं. २०, पृ. ३४३ ।

[४७] प्रयागराज शर्मा, *कुल, भूमी र राज्यः नेपाल उपत्यकाको पूर्वमध्यकालिक सामाजिक अध्ययन,* काठमाडौँ : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५४, पृ. १४७ ।

[४८] आशाकाजी वज्राचार्य (संकलक),*नेपाल वर्ष क्रिया नखः चखः पुस्तकम्,* यलः आशाकाजी वज्राचार्य, वि.सं. २०४४, पृ. १४७ ।

सदस्यहरूले एउटा निश्चित् भूमिका खेलेर त्यसलाई पूर्णता दिएको हुन्छ । जस्तो उदाहरणको रूपमा सापारु वा गाईजात्रालाई लिन सकिन्छ, यसमा देखिने सार्वजनिक चहलपहल जनसहभागिताको समष्टिगत रूप हो ।[४९] अनि त्यसैगरेर कुनै टोल, इलाका वा स्थान विशेषको देवदेवीको जात्रा "बुसादँया जात्रा" हो, जुन जात्रा परम्परादेखि नै वर्षैपिच्छे निश्चित् तिथिमा सम्पन्न हुने गर्दछ ।[५०] यस्ता जात्रा किन गरिन्छ त भन्दा स्थानीय समाजले आफूले मान्ने गरेको देवी देवताको संरक्षण आफूलाई सदा प्राप्त भइरहोस् भन्नाका लागि हो ।[५१] भक्तपुरको सन्दर्भमा नवदुर्गा गण, विश्वनाथ भैरवलाई स्थानीय बासिन्दाले संरक्षक देवीदेवताको रूपमा लिई अगाध श्रद्धा र विश्वासका साथ पुज्ने गर्छन् । यी जात्राहरू पनि यसैको परिणाम स्वरूप सृजना गरिएका अभिन्न वार्षिक क्रियाहरू हुन्, जसलाई निश्चित् दिनमा सम्पन्न गरिन्छ । यसका अलावा वार्षिक जात्राहरू सफलतापूर्वक सम्पन्न गर्ने एउटा मह□वपूर्ण संगठन निर्माण गरिएका हुन्छन्, जसलाई जात्रासंचालकगुठी भनिन्छ ।[५२] जात्राको बेला सामुहिक जिम्मेदारीको बाँडफाँड र सहभागिता जुटाउने काम यही जात्रा गुठीको माध्यमबाट सम्पन्न हुन्छ । यसैको फलस्वरूप कुनै पनि खटजात्रा वा रथयात्राको प्रचलन एउटा सामान्य क्रिया हुन जान्छ । विभिन्न बाजा गुठी, नासः गुठी, खट बोक्ने, रथ बनाउने, पूजापाठ गर्ने पुजारी जस्ता विभिन्न समूहलाई कामको जिम्मेदारी यही जात्रा गुठीको तर्फबाट अलग–अलग बाँडिएको हुन्छ । यस अवसरमा प्रत्येक घरले जात्राको मुख्य देवी वा देवताको सम्मानमा पूजाभाग पठाउने, घरमा "नखःत्या" (भोज) को आयोजना गर्ने आदि कार्य चाडको एउटा आवश्यकीय अंग बनेको हुन्छ ।[५३]

यसप्रकार व्यक्तिदेखि समूहसम्म र घर चोकदेखि टोल बस्ती नगरसम्मका सम्पूर्ण बासिन्दालाई एकैसूत्रमा आबद्ध गर्नमा यी देवदेवीको संजाल (Network) जात्राका माध्यमबाट कार्यरत रहेको देख्न सकिन्छ । यो संलग्नताको क्रम घरको पूजा कोठा देखि सुरु हुन्छ ।[५४]

---

[४९] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[५०] जुजु र श्रेष्ठ, पा.टि.नं. ३, पृ. ३२ ।

[५१] मेरी एम. एण्डरसन, *दि फेष्टिबल्स अफ नेपाल,* लण्डन : जर्ज एलेन एण्डवीन, ई.सं. १९७१, पृ. १९४ ।

[५२] संस्कृत शब्दको गोष्ठीबाट गुठी बनेको देखिन्छ, जसको अर्थ हुन्छ – कुनै पनि काम आपसमा मिलेर गर्ने भावनाको विकास गर्नु । लिच्छवीकालमा यस्ता थुप्रै गोष्ठीहरू प्रचलित थिए, जसले विविध सुविधाहरू उपलब्ध गराउँदथे । तर अहिले यस्ता लौकिक जीवनसँग सम्बन्धित गुठीहरू समाजबाट लोप भइसकेका छन् । तर विभिन्न देवीदेवता र तिनका जात्रासँग सम्बन्धित गुठीहरू भने अद्यावधि देख्न सकिन्छ । यस्ता गुठीहरू संचालन गर्न श्रद्धालु राजा तथा प्रजाले आफ्ना चलअचल सम्पति दान गर्दथे । त्यसको आयस्ताबाट वार्षिक जात्राहरू सम्पन्न हुने गर्छन् । – वज्राचार्य, पा.टि.नं. ३८, पृ. २८४–२८५ ।

[५३] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[५४] शर्मा, पा.टि.नं. ४७, पृ. १४९ ।

जहाँ आफ्ना ईष्टदेव, कुलदेव, आगमदेव जस्ता सधैं धूपबत्ती गर्नुपर्ने देवीदेवता राखिएका हुन्छन् । अनि घरको चोक वा रछ्यानको एक कुनामा लुकुमाद्यः को बासस्थान हुन्छ । आफ्ना चोक वा आसपासमा तीन आँखी प्वालले झ्याल जस्तो बनेका नासःद्यः को एउटा खुल्ला भित्ते देगः हुन्छ । घरदेखि बाहिरको पहिलो दोबाटोलाई छ्वासः भनिन्छ र छ्वासः अजिमाको बासस्थान मानिन्छ । टोलको एउटा मोडमा ट्वा गणेशको खोपा वा सानो देवल हुन्छ । टोलको खुल्ला र मध्य भागमा प्रायः एउटा मन्दिर बनेको हुन्छ । अलि पर दुरीमा अझ व्यापक मान्यता पाएका झन ठूला धार्मिक देवस्थल बसेको पाइन्छ ।[५५] यी विभिन्न तहका देवीदेवतासँग प्रत्येक परिवारले दैनिक, वार्षिक, नैमित्तिक वा चाड विशेषमा एउटा अविच्छिन्न सम्बन्ध स्थापित गरिराखेको हुन्छ । यस परम्पराले स्थानीय बासिन्दालाई एउटै भावनात्मक सम्बन्धमा आबद्ध गर्न मद्दत पुऱ्याएको देखिन्छ । यहाँ कुनै पनि जात्रा सम्पन्न गर्दा विभिन्न जाति वा पेशागत वर्गबाट विविध सेवा प्राप्त गर्नु आवश्यक र अनिवार्य मानिन्छ । जसको शैली जजमानी सेवासँग तुलनीय छ । पुजारी कार्यका लागि वज्राचार्य वा कर्माचार्य, पुरोहित्याइँ र याज्ञिक कार्यका लागि राजोपाध्याय वा अन्य ब्राम्हण, विभिन्न नृत्य खलः, बाद्य खलः, भजन खलः, खट बोक्ने आदि कार्यका लागि अधिकांश ज्यापू समुह, पशुबध र मासु काट्ने कार्यका लागि कसाई, मन्दिरको सरसफाइ वा बाद्यवादनको निमित्त कुस्ले, रथ निर्माण र रथको रंगरोगनका लागि सिकर्मी, चित्रकार, भोजस्थलको सरसफाइ कार्यको निम्ति पोडे आदिको व्यवस्था परम्परागत ढंगबाट हुँदै आएकोले कुनै बेला यस मर्यादा वा व्यवस्थालाई राज्यस्तरीय अनुमोदन र समर्थन समेत प्राप्त थियो भन्ने बुझिन्छ ।[५६]

पूजाका प्रचलित विधि वैदिक र तान्त्रिक गरी दुई प्रकारका भएपनि यहाँका चाडपर्व जात्राका अधिकांश पूजापद्धति तान्त्रिक विधिमा ढलेको कुरा थाहा हुन्छ । भक्तपुरका नेवारहरूका पूजामा मद्य र पशुबलिको प्रयोग आम रूपमा देख्न सकिन्छ । हुन पनि यहाँ मद्यपान बिना कुनै पनि पूजा सम्पन्न हुन सक्तैन । स्याबजी (चिउरा) कालो भटमास, अदुवा, छ्वेयला (पोलेको मासु साँधेको) रक्सी सहितको सम्हेय्बजी नैबेद्यको रूपमा देवतालाई चढाउने र पछि त्यसलाई प्रसादको रूपमा त्यहीं बसेर खाने आम प्रचलन पाइन्छ । सम्हेय्बजी भनेको एउटा चढाउने खाद्य बस्तु मात्र नभएर तान्त्रिक अर्थमा पंचत□वको

---

[५५] *ऐजन,* पृ. १५० ।

[५६] संस्कृतिविद् लीलाभक्त मुनंकर्मीबाट प्राप्त जानकारीको आधारमा ।

प्रतीकका साथै जीवबलिको प्रतीक पनि हो । जीवलाई बलि दिएर गर्नुपर्ने पूजामा जीवको सट्टामा "सम्हेय्बजी"चढाएर देवतालाई सन्तुष्ट गर्न सकिने यहाँको आफ्नै प्रकारको तान्त्रिक पद्धति रहेको पाइन्छ ।[५७]

यी तथ्यहरूको आधारमा भक्तपुरको नेवार समाजमा प्रचलित चाडपर्वहरूको संरचना मुख्य रूपले धर्म, मनोरञ्जन र सामाजिक एकता यी तीन उद्देश्यगत आधारमा संगठित भएको मान्न सकिन्छ । जस्तो कि जात्राकोबेला गरिने पूजा अर्चनाको मूल उद्देश्य सम्बन्धित देवतालाई सन्तुष्ट गरेर त्यसबाट आफू र आफ्नो परिवार तथा समग्र समुदायको निम्ति कल्याणको चाहना र मनोकांक्षा पुरा गर्नु हो ।[५८] त्यस्तै गरेर मनोरञ्जनका विविध साधनहरू उपलब्ध नभएको अवस्थामा चाडपर्व, जात्रा नै मनोरञ्जनका प्रमुख साधनका रूपमा देखा परे, जसमा सबैले रमाइलो गर्न पाउँथे । मानिसलाई शारीरिक विश्रामका अतिरिक्त बेला मौकामा मानसिक विश्रामको पनि आवश्यकता पर्दछ । मानसिक विश्राम भनेको आमोद प्रमोद, रहर बहल, दिल्लगी, खुसीयाली आदि हुन् ।[५९] अतः यस कारणले पनि चाडपर्वको संरचना हुन गएको हो । यसकासाथै विभिन्न गुठीका माध्यमबाट यहाँको नेवार समाजलाई एक बनाएको पाइन्छ । त्यस्ता गुठीहरूमा जात्रासँग सम्बन्धित गुठी पनि एक हो, जसले जात्राको बेला समाजमा बस्ने विभिन्न पेशा र वर्गका मानिसहरूलाई आ–आफ्नो कार्यको जिम्मेवारी सुम्पेर जात्रा सफलतापूर्वक सम्पन्न गर्न प्रमुख भूमिका खेल्दछ । यसरी चाडपर्व,जात्राले सामाजिक एकता प्रदर्शित गराउँदछ । साथै चाडपर्वको बेला बोलाइने नखःत्या भोजले परिवार कुल, आफन्त र नातेदारहरू बीचको आपसी सम्बन्धलाई नियमित बनाउन मद्दत पुऱ्याउँदछ । हिन्दु चाडपर्वको संरचना निम्न आधारमा भएको हुन्छ । जस्तै : धार्मिक संस्कारको प्रदर्शन, सामाजिक क्रियाकलाप, पुराणबाट प्रभावित नृत्य र सांगीतिक प्रस्तुति, सबै मिलेर रमाइलो गर्नु, उत्सव मनाउनु, भोज खानु अनि अतिथि र आतिथ्य तथा प्रस्तुतकर्ता र दर्शकबीच सम्बन्धको विकास गर्नु, पूजा, अर्चना, प्रार्थना, बलि, उपहार र शुभकामनाको आदानप्रदान, घर, चोक, गल्लीको सरसफाइ आदि । एउटा चाडको प्रमुख विशेषता यिनै हुन् भनेर विद्वानहरूले औंल्याएको पाइन्छ ।[६०] वास्तवमा चाड मनाउनाले समाजमा सामाजिक प्रतिष्ठा कायम हुने हुँदा गरीबहरू पनि चाडको बेला राम्रो लाउने,

---

[५७] जुजु र श्रेष्ठ, पा.टि.नं. ३, पृ. १३ ।

[५८] शर्मा, पा.टि.नं. ४७, पृ. १५२ ।

[५९] पुण्यरत्न वज्राचार्य, *हाम्रो चाडपर्व*, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०४३, पृ. च–छ ।

[६०] कुँवर, पा.टि.नं. ३३, पृ. ९६ ।

मीठो खाने र रमाइलो गर्ने गर्दछन् । साथै चाडपर्वले विगत, वर्तमान र भविष्यका मानिसहरूबीच Safety valve mechanism को रूपमा काम गरिरहेको हुन्छ । किनकि यसले एकातिर मानिसलाई आउँदो वर्षमा अघि बढ्नका लागि प्रेरित वा प्रोत्साहित गर्दछ भने अर्कोतिर विगत वर्षमा भएका सम्पूर्ण नराम्रा घटनालाई बिर्साउने काम पनि गर्दछ ।[६१] तर चाडपर्वको बेला हुने झैं–झगडा यसको एउटा खराब पक्ष हो । भक्तपुरको बिस्केट जात्राको परिप्रेक्ष्यमा हेर्दा यसमा अनेकौं प्रकारका परिवर्तन समाहित भएको छ । परिणामतः विगत केही वर्ष देखि यस जात्राका गतिविधि कसैको नियन्त्रणमा नरहेको देखिन्छ । यो जात्रा हिंस्रक बन्दै गएको पाइएको छ । पुर्खाको आस्था र मनोरञ्जनको मूर्त रूप यस्ता परम्परागत जात्रा संस्कृतिमा आधुनिक समाजका कतिपय विकृतिले प्रवेश पाएका छन् । यस्तो स्थितिका कारण ती जात्रा पर्वको प्राचीन संरचनामा समेत उल्लेख्य परिवर्तन आएको छ ।

## ४.४ चाडपर्वहरूको वर्गीकरण

जसरी नेवार जाति एउटा जात्राप्रधानजातिको रूपमा ऐतिहासिक सामग्रीहरूमा वर्णित छ[६२], त्यसैगरेर भक्तपुरको समाज पनि परापूर्वकालदेखि नै विविध धार्मिक पर्वहरूद्वारा सु–सम्पन्न रहेको तथ्य सर्वविदितै छ । यो नगर ऐतिहासिक चाडपर्व, जात्रा लगायतका सांस्कृतिक गतिविधिहरूका लागि उर्वर भूमि मानिन्छ । भक्तपुरको नेवार समाजमा वर्षेनी अनगिन्ति पर्वहरू मनाइन्छ । ती पर्वहरू शैव, वैष्णव, शाक्त, बौद्ध आदि धार्मिक सम्प्रदायसँग सम्बन्धित छन् । एक वर्षमा भक्तपुरमा साना ठूला गरी करिव ७९ वटा पर्व मनाइन्छ । यस्ता पर्व कुनै–कुनै दिनमा त एक भन्दा बढी पनि पर्छन् भने कुनै–कुनै पर्व दुई दिनसम्म पनि मनाइन्छ ।[६३]

भक्तपुरका समग्र चाडपर्वलाई समाज शास्त्रीय दृष्टिकोणका आधारमा प्रमुख र स्थानीय गरी दुई भागमा विभाजन गर्न सकिन्छ । प्रमुख चाडपर्वहरू भक्तपुर नगरका अतिरिक्त त्यस वरपरका नेवार बस्ती लगायत काठमाडौं पाटनमा समेत मनाउने गरिएको छ । तर स्थानीय चाडपर्व भने भक्तपुर नगरकै कुनै एउटा निश्चित् इलाकामा मात्र आयोजना हुने स्थानीय देवीदेवताका जात्रासँग सम्बन्धित रहेका छन् ।

---

[६१] *ऐजन* ।

[६२] शर्मा, पा.टि.नं. ४७, पृ. १४७ ।

[६३] लेभी, पा.टि.नं. १८, पृ. ५७७–५७८ ।

भक्तपुरका प्रमुख चाडपर्वहरूमा बिस्केट जात्राका अतिरिक्त विशेष गरेर गथामुगः (घण्टाकर्ण चतुर्दशी), गुंपुन्ही र सापारु (जनै पूर्णिमा र गाईजात्रा), चथाः (गणेश चौथी), योमरी पुन्हीं (धान्य पूर्णिमा), घ्यो चाकु सल्हुँ (मकर संक्रान्ति), श्री पंचमी, होली पुन्ही (फागु महोत्सव), सिठी नखः (कुमार षष्ठी) का साथै आमाको मुख हेर्ने (मातातीर्थ औंसी), बाबुको मुख हेर्ने (गोकर्ण औंसी), पंचदान र सम्यकदान (बौद्ध नेवारहरूको पर्व) आदि छन् । हुनतः संस्कृतिविद्हरू चाडपर्वको परिभाषा गर्दा भोज खाएर मनाउनेलाई चाड र भोज नखाएर मनाउनेलाई पर्व भनी व्याख्या गर्छन् । उदाहरणको रूपमा दशैं, तिहार, बिस्केट, सिठी नखः आदिमा भोज खाइने भएकोले यसलाई चाडको रूपमा लिइन्छ भने गणेश चौंथी, बाला चतुर्दशी, बाबुको मुख हेर्ने, घण्टाकर्ण चतुर्दशी, माघे संक्रान्ति आदिलाई पर्वको रूपमा मात्र लिइन्छ ।[६४] यसैकारण माथि उल्लिखित प्रमुख चाडपर्वहरू सबैमा भोज खाइन्छ नै भन्ने छैन । तर पनि उल्लिखित विभिन्न चाडपर्वका बेला विभिन्न विशेष प्रकारका खानेकुराहरू ऋतु, काल र समयसँग मिल्ने गरी खाइन्छ । जस्तै : कुनै चाडमा कन्दमूललाई मह□व दिएर खाइन्छ भने कुनैमा रोटीलाई, यसैगरेर कुनैमा मासु त कुनैमा गेडागुडीको झोल अनि कुनैमा भुटेको अन्न र गेडागुडी खाइन्छ । चाडपर्वका बेला खाइने यी वस्तुहरूको आ–आफ्नै प्राकृतिक मह□व रहेका छन् । यसबाट यहाँका चाडपर्वहरूको कृषि कार्यसँग अटुट सम्बन्ध रहेको कुरा थाहा पाइन्छ । वास्तवमा नेवारहरूका पुर्खाले प्रकृतिलाई नै आफ्नो मूलदेवता ठानेर सूर्य र चन्द्रमाको गति अनुरूप आफ्नो दिनचर्या सुरु गरे झैं चाडपर्वहरू पनि देशकाल परिस्थिति अनुसार प्राकृतिक उत्पादनसँग समन्वय गरी मनाउँदै आएको देखिन्छ ।[६५]

भक्तपुरको कुनै एउटा निश्चित् स्थान विशेषमा आयोजना हुने धार्मिक देवी देवताका जात्राका क्रममा स्थानीय बासिन्दाले त्यसलाई आफ्नो स्थानीय चाडको रूपमा मानेका हुन्छन् । त्यस अवसरमा घर लिपपोत, सफा सुग्घर गरी अनेक प्रकारका मासु सहितको भोजका परिकारहरू पकाइन्छ । अनि आफन्त, नाताकुटुम्बलाई नखःत्या (भोज) बोलाइन्छ र बेलुका भोज खाएर चाड मान्ने गरेको पाइन्छ । भक्तपुरको टोल–टोलमा हुने यस्ता स्थानीय जात्राहरू धेरै छन्, जसमध्ये बिस्केटको क्रममा यस्ता खाले जात्राहरू अनेकानेक देख्न सकिन्छ । चैत्र मसान्तको साँझ भैरवको लिंगो उत्थान गरिसकेपछि त्यस खुसीयालीमा राती नै टोल टोलमा रहेका गणेशलाई जात्रा गरेर मूलदेवगृहबाट बाहिर ल्याइन्छ । यसका साथै

---

[६४] श्रेष्ठ, पा.टि.नं. १, पृ. ९५ ।

[६५] वज्राचार्य, पा.टि.नं. २, पृ. ५ ।

इन्द्रायणीको त्वारेवाः जात्रा, वाराहीको तिंप्वा जात्रा पनि यसै क्रममा मूल देवगृहबाट पीठमा ल्याउने कार्य हुन्छ । भोलिपल्ट (मेष संक्रान्तिका दिन) दिउँसो भक्तपुर दरबार परिसरमा दुमाजु (देवी) को खटजात्रा गरिन्छ । लिंगोजात्रा विसर्जन गरिसकेपछि नगर भित्रका टोल टोलमा हुने विभिन्न देवदेवीका खटजात्राहरूका अतिरिक्त नगर बाहिर कटुञ्जेमा सुशील भैरवको जात्रा, ठिमीमा बालकुमारी जात्रा, बोडेमा जिब्रो छेड्ने जात्रा, नगदेशमा सिद्धिगणेशको जात्रा सम्पन्न हुने गर्दछ । नगरभित्र तालाक्व टोलमा जेठा गणेश र बुलुचा भैरवको खटजात्रा, भोलाछें टोलमा महाकाली र महालक्ष्मीको खटजात्रा, थःने (माथिल्लो टोल) मा ब्रम्हायणी र महेश्वरीको खटजात्रा, तँ कोने तेखार्रेमा चोंगा गणेश जात्रा, चोछेंमा छुमा गणेशको जात्रा आदि जात्राहरू बिस्केटको दौरान सम्पन्न हुने गर्दछन् ।[६६] यसका अतिरिक्त अघिपछि पनि विभिन्न पर्वका दिनहरूमा यस्ता स्थानीय जात्राहरू हुने गर्छन् । जस्तो वैशाख पूर्णिमाका दिन चासुखेल, टिबुक्छें, सुकुलढोका, गोलमढी आदि टोलहरूमा हुने चण्डेश्वरी जात्रा[६७] कौलागा बाला चतुर्दशीमा थःने दतात्रय चोकमा हुने दतात्रय भीमसेन (देवता)को सुकुभिसिन्द्यः जात्रा[६८], सिपुन्ही (स्वस्थानी व्रत समापन) को दिन हनुमानघाटबाट गाःहिटी हुँदै माथिल्लो टोल इलाकामा लगेर पुनः हनुमानघाट पुऱ्याएर सम्पन्न गरिने माःद्यः जात्रा,[६९] येंया पुन्हीको अघिल्लो दिन राती इन्द्रायणीलाई देवगृहबाट खटमा राखी जात्रा गरी सिद्धपोखरी छेउमा लगेर राख्ने इन्द्रायणी जात्रा,[७०] त्यस्तै गुंपुन्हीको चारौं दिनमा वाराहीलाई खटमा राखेर नगर परिक्रमा गर्ने वाराही जात्रा, क्वाछेंको भगवती जात्रा, सूर्यविनायक गणेश जात्रा आदि जात्राहरू भक्तपुरमा परम्परादेखि चल्दै आएका स्थानीय जात्राहरू हुन् ।

तर यसका अतिरिक्त यहाँ प्रचलित चाडपर्वहरूको स्वरूप र विशेषताका आधारमा त्यसको परिचयलाई निम्न प्रकारले पनि प्रस्तुत गर्न सकिन्छ । जस्तै :–

– आफ्ना ईष्टदेव (दिगु द्यः), पितृ, त्वाः गणेश, नासःद्यः, नाग, भूतप्रेत, छ्वासः जस्ता परिवार स्तरमा पुजिने र तीसँग सम्बन्धित चाड (कुल, फुकी स्तरमा सम्पन्न गरिने पूजा पर्व) ।

---

[६६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[६७] सत्यनारायण प्रजापति "भक्तपुरको चण्डेश्वरी जात्रा," *रोलम्बा* , वर्ष १०, अंक २, ई.सं. १९९०, पृ. ६ ।

[६८] लेभी, पा.टि.नं. १८, पृ. ४२१ ।

[६९] *ऐजन,* पृ. ४२७ ।

[७०] बलराम कायस्थ, "भक्तपुरको इन्द्रायणी जात्रा र सिद्धपोखरी मेला," *जमरा स्मारिका* १२, (कार्तिक २०६४), पृ. ९१–९३ ।

- हिन्दु र बौद्ध धर्म अन्तर्गत व्यापक मान्यता पाएका देवताको नाममा गरिने सप्तमी व्रत, अष्टमी व्रत, एकादशी व्रत, कृष्णाष्टमी, नागपंचमी, बुद्ध पूर्णिमा, शिवरात्री जस्ता व्रत तथा पूजा ।
- स्नान वा तीर्थसँग सम्बन्धित जात्रा, जस्तै माघे संक्रान्ति मेला, गुँला जात्रा ।
- भैरव, भद्रकाली, दुमाजुदेवी, वाराही, इन्द्रायणी, महाकाली, महालक्ष्मी, ब्रम्हायणी, महेश्वरी लगायत विविध गणेश देवताहरूको रथ र खटजात्राहरू ।
- गाईजात्रा, उपाको वनेगु, मतया, सतबीज छर्ने जस्तो देश वा भूमि परिक्रमा गर्ने जात्रा ।
- यलसिं वा ध्वज गाड्ने जात्रा बिस्केट, इन्द्रजात्रा ।
- मन्दिर विशेषसँग जोडिएर वा नजोडिएर बनेको नृत्य खलः सम्बन्धी जात्रा । जस्तै जरं प्याखँ, नवदुर्गा प्याखँ, देवी प्याखँ, लाखे प्याखँ आदि ।
- भूत, प्रेत, बोक्सी, राक्षस जस्ता अनिष्ट समन गर्ने नानाथरि विश्वाससँग जोडिएका गथामुगः, लाखे, ब्यांजा पुन्ही जस्ता जात्रा ।
- संक्रान्ति पर्व जस्तै माघे संक्रान्ति ।
- ऋतु–ऋतुका खाद्य विशेषसँग जोडिएका जात्रा, जस्तै क्वाटी पुन्ही, चथाः (गणेश चौथी), सकीमना पुन्ही, योमरी पुन्ही, घ्यो चाकु संक्रान्ति ।
- पंचदान, सम्यकदान जस्तै दानसम्बन्धी चाड ।
- मातातीर्थ औंसी, गोकर्ण औंसी, उपाको वनेगु वा सापारु जस्ता पितृ र दिवंगत परिवारका सदस्यका सम्झनामा सम्पन्न गरिने जात्रा ।
- मोहनी, स्वन्ति (दशैं तथा लक्ष्मीपूजा, म्हःपूजा र किजा पूजा) जस्ता पारिवारिक स्तरमा सम्पन्न गरिने व्यापक मान्यताका सामाजिक, धार्मिक चाडहरू ।[७१]

चाडपर्वका यी उल्लिखित दुवै प्रकारका विश्लेषणका अतिरिक्त समाजशास्त्री गोपाल सिंह नेपाली र अमेरिकी विद्वान रवर्ट आइ.लेभीले यहाँका चाडपर्वहरूलाई आफ्नै किसिमले विश्लेषण गरेको पाइन्छ । विशेष गरेर गोपालसिंह नेपालीले यहाँका समग्र चाडपर्वलाई

[७१] शर्मा, पा.टि.नं. ४७, पृ. १४७–१४८ ।

सामुदायिक चाडपर्व र पारिवारिक चाडपर्व गरी दुई वर्गमा छुट्याएका छन् । सामुदायिक चाडपर्व नेवार समाजका समस्त जाति, उपजातिहरूले कुनै भेद बिना सामुहिक रूपमा सहभागी भई मनाउने गर्छन् भने पारिवारिक चाडपर्व एउटै परिवारका सदस्यहरू, नाता कुटुम्ब, आफन्त, देवालीगुठीका सदस्यहरू, फुकीहरू सहभागी भएर मनाउने गर्छन् । उनका अनुसार उपत्यकाका सम्पूर्ण हिन्दु चाडपर्वहरू दोस्रो वर्गमा पर्न आउँछ । पहिलो वर्गको चाडपर्वहरू विभिन्न जात्राहरूसँग सम्बन्धित छन् । तिनमा प्रमुख रूपले भैरव, भैरवी जात्रा, घण्टाकर्ण, गाईजात्रा, इन्द्रजात्रा आदि पर्दछन् । र दोस्रो वर्गको चाडपर्वहरूमा म्हःपूजा, किजा पूजा, सकिमना पुन्ही, योमरी पुन्ही, घ्यो चाकु सल्हूँ, श्रीपंचमी, सिलाचऱ्हे, पाँहा चऱ्हे, दिगु पूजा, सिठी नखः, गुंपुन्ही, मोहनी आदि पर्छन् ।[७२]

रवर्ट आई.लेभीले भक्तपुरका चाडपर्वलाई खगोल शास्त्रीय पंचाङ्ग (पात्रो) अनुसार तीन वर्गमा विभाजन गरेर विश्लेषण गरेका छन्, जस्तै–चान्द्रमान अनुसारका चाडपर्व, सौर्यमान अनुसारका चाडपर्व र देवीचक्र अनुसारको चाडपर्व । चान्द्रमान चाडपर्व तिथि अनुसार मनाइन्छ, जुन गथामुगः चह्रेबाट प्रारम्भ भई सिठी नखः मा गएर वर्षदिनभरिको चाडपर्व समाप्त हुन्छ । तर उनले यी पर्वहरूको क्रम स्वन्ति नखः बाट प्रारम्भ गरी इन्द्रजात्रासम्म पुऱ्याएर वर्णन समाप्त गरेका छन् । त्यस्तै सौर्यमानका चाडपर्व दिन गणना अनुसार हुने गर्छ । घ्यो चाकु सल्हूँ र बिस्केट जात्रा सौर्यमान चाडपर्व हुन् । अनि अर्को, देवी चक्र पात्रोअनुसारका पर्वहरू हरेक वर्ष नवदुर्गाको जन्मसँगै प्रारम्भ भई नवदुर्गाको अवसान सँगै समापन हुने गर्छन् । यसरी उनले यहाँका समग्र चाडपर्वलाई तीन वर्गमा विभाजन गरेको देखिन्छ ।[७३] यसका साथै यी चाडपर्वको उपयोगिता र मह□वलाई आधार मानेर फेरि त्यसलाई मुख्य मह□वपूर्ण, मध्यम मह□वको र सामान्य मह□वको गरी तीन श्रेणीमा विभाजन गरी विश्लेषण गरेका छन् । यसमा २५ वटा चाडपर्व मुख्य अथवा उच्च मह□वपूर्ण रहेका र त्यसदेखि बाहेक २८ वटा मध्यम मह□वका र २६ वटा सामान्य मह□वका भएको कुरा औंल्याएका छन् ।[७४] तर वास्तवमा कुनै पनि चाडपर्वहरू सानो वा ठूलो अथवा अधिक मह□व र कम मह□वको हुँदैन । सबै चाडपर्वहरू समान मह□वका हुन्छन् । यिनीहरूमा मनाउने तरिका, हेर्ने दृष्टिकोण, प्रक्रियागत कुराहरूमा मात्र भिन्नता

---

[७२] नेपाली, पा.टि.नं. २०, पृ. ३४३–४४ र ३८१–३९७ ।

[७३] लेभी, पा.टि.नं. १८, पृ. ४११–१२, ४६३–६४ र ५०१ ।

[७४] *ऐजन,* पृ. ५७७–५७८ ।

हुन सक्छन् । यसर्थ चाडपर्वलाई समाजको यथार्थ स्वरूपलाई अवलोकन गर्ने दर्पण, संस्कृतिको निधि आदि भन्ने गरिन्छ । तर त्यसो भएपनि मोहनी (दशैं) एउटालाई चाहिं सबैले नै महान् चाडको रूपमा मान्ने गरेको र यसदेखि बाहेक अन्य चाडहरूलाई कसैले चाडकै रूपमा मान्ने गरेका छन् भने कसैले पर्वका रूपमा मात्रै लिने गरेको देखिन्छ । यहाँ यो भनाइ उपयुक्त देखिन्छ –"सुयां नखः सा सुयां चखः, सुयां चखः सा सुयां अखः" अर्थात् कसैको लागि चाड हो भने कसैको पर्व मात्र अनि कसैको लागि पीडा मात्रै ।[७५]

**निष्कर्ष**

भक्तपुरको चाडपर्व यहाँको जनजीवनसित सम्बन्धित रहेको र जनजीवन चाहिं प्रत्यक्ष वा परोक्ष रूपमा खेतीपातीमा आधारित भएको हुनाले कृषि कार्यबाट चाडपर्वहरू प्रभावित भएको देख्न सकिन्छ । जस्तो रोपाईको अवसर पर्ने हुनाले सिठी नखः (कुमार षष्ठी) देखि गथामुगः चऱ्हे (घण्टाकर्ण चतुर्दशी) सम्म यहाँका बासिन्दाले कुनै प्रकारको चाड मान्ने गर्दैनन् । चाडपर्वको वार्षिक चक्रमा पनि यस अवधिमा कुनै चाड पर्दैनन् । गथामुगः चऱ्हेदेखि मात्र यहाँ वार्षिक चाडपर्व प्रारम्भ हुने गर्दछ । चाडपर्वका अवसरमा आयोजना गरिने परम्परागत भोजमा समावेश गरिने अधिकांश परिकारहरू पनि स्थानीय कृषि उपजमा नै आधारित हुने गर्दछ ।

भक्तपुरको नेवार समाजमा हरेक वर्ष ऋतुकाल जस्तै आउने हरेक चाडको आफ्नै मह□व रहेको पाइन्छ । चाडको प्रकृतिका आधारमा विशेष प्रकारको खाद्यवस्तु खानु ती चाडको खास विशेषता पनि हो ।

किसानहरू साधारणतया पर्वमा मुख्य हर्ताकर्ता रहेकाले तिनीहरू चाडपर्वका निम्ति महिनौं दिन अघिदेखि रक्सी पार्ने, जाँड बनाउने, चिउरा कुट्ने, मासुको जोहो गर्ने, लताकपडा किन्ने जस्ता पूर्वतयारीमा लागेका हुन्छन् । अनि चाडपर्वका बेला हुने जात्रामा खट बोक्ने, रथ तान्ने, बाजा बजाउने, नाच प्रस्तुत गर्ने, भजन गाउने जस्ता कार्यहरू पनि यिनीहरूले नै गर्दछन् । यसैकारण भक्तपुरका चाडपर्वहरू यहाँको सामाजिक जीवनको एउटा अभिन्न अंग बनेको छ ।

[७५] वज्राचार्य, पा.टि.नं. २, पृ. ५ ।

# अध्याय पाँच

# बिस्केट जात्रा

## ५.१ परिचय

नेपाली संस्कृति प्राचीन हिन्दु धर्ममा आधारित संस्कृति भएको हुनाले यसका आफ्नै विशेषता, परम्परा, मौलिक संस्कार, मूल्य मान्यताहरू रहेका छन् । नेपाली समाजमा परापूर्वकालदेखि प्रचलित हुँदै आएका चाडपर्व, जात्रा, उत्सवहरू नेपाली संस्कृतिको एउटा अभिन्न अंग हो । चाडपर्व, जात्राका लागि काठमाडौं उपत्यका उर्वरभूमि मानिन्छ, जहाँ अनेक किसिमका चाडपर्व, जात्रासम्बन्धी सांस्कृतिक गतिविधिहरू अद्यावधि प्रचलित छन् । यी जात्राहरूका आ–आफ्नै किसिमका इतिहास, परिवेश, परिविधान, उद्देश्यहरू रहेका छन् । जस्तै– कुनै जात्रा धर्मकर्मसित सम्बन्धित हुने गर्छन् भने कुनै विशुद्ध मनोरञ्जनका लागि अनि त्यस्तै कुनै मृतआत्माको शान्तिको लागि । तर प्रत्यक्ष अप्रत्यक्षतः अधिकांश जात्राहरू विभिन्न देवदेवीसँग सम्बन्धित रहेका हुन्छन् । यसरी यी विविध उद्देश्यले चलिआएका जात्रा उत्सवहरूले गर्दा नै आज नेपाली संस्कृति विश्व सामु एक विशिष्ट पहिचान बोकेको संस्कृतिको रूपमा प्रस्तुत हुन सकेको छ ।

बिस्केट जात्रा पनि नेपाली समाजमा परापूर्वकालदेखि प्रचलित हुँदै आएका जात्राहरू मध्येको एउटा प्रमुख जात्रा हो । यद्यपि यो जात्रा मूल रूपमा भक्तपुरमा हुने गर्दछ,[१] तर त्यसो भएपनि यसको चाड चाहिं नेपाल अधिराज्यभर फैलिएर रहेका नेवारहरू विशेषतः भक्तपुर र त्यस वरपरबाट बसाई सरेर गएकाहरूले मनाउने गर्दछन् । पश्चिममा चितवन, पोखरा[२], बागलुङ, बुटवल, भैरहवा, पाल्पा आदि अनि पूर्वमा बनेपा[३], धुलिखेल, सिन्धुली,

---

[१] बिस्केट जात्राको उद्‌गम स्थल भक्तपुर हो । वरपरका अन्य स्थानहरूमा यो जात्रा प्रचलित रहे पनि ती सबै जात्रा भक्तपुरकै बिस्केट जात्राका प्रतिरूप हुन् ।

[२] (क) पोखराका नेवार समुदायमा पनि बिस्केट जात्रा एउटा मह□वपूर्ण जात्राको रूपमा रहेको छ । किनकि पोखरा उपत्यकामा हाल बसोबास गरिरहेका नेवारहरू मध्ये करिव ७५% नेवारहरू भक्तपुरबाट आएका पाइन्छन् ।– विष्णु देवी भान्साकार्य, *पोखराका नेवारहरूको चाडपर्व* (अप्रकाशित स्नातकोत्तर शोधप्रबन्ध), इतिहास केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०४१, पृ. ८९ ।
(ख) बिस्केट जात्रा भक्तपुरको अति लोकप्रिय जात्रा भएकोले पोखरा उपत्यकामा पनि बिस्केट जात्रा विशेष लोकप्रिय हुन पुगेको हो । हाल नेपालमा व्यापक प्रचलनमा रहेको विक्रम संवत्‌को नयाँवर्षको आरम्भको अवसरमा सम्पन्न गरिने भएकोले यस जात्राको विशेष मह□व रहेको छ । – महेश कुमार आचार्य, *पोखराका नेवार समुदायमा प्रचलित प्रमुख चाडहरू* : एक विश्लेषणात्मक अध्ययन, (विश्वविद्यालय अनुदान आयोगमा प्रस्तुत लघु अनुसन्धान परियोजना), वि.सं. २०५८, पृ. २९ ।

[३] बनेपामा पनि दछुटोलका बासिन्दालाई भक्तपुरबाट आएर बसेका भनी मानिन्छ । र बिस्केटलाई यसै टोलका बासिन्दाले मान्ने गरेबाट सो कुरा पुष्टि हुन्छ, तर बिस्केटको बेला त्यहाँ कुनै जात्राको चलन भने पाइँदैन । - स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।

ओखलढुंगा, भोजपुर, तेह्रथुम, धरान, धनकुटा लगायतका स्थानहरूमा बसोबास गरिरहेका नेवारहरूले समेत यसलाई एउटा प्रमुख चाडको रूपमा मान्ने गरेको पाइन्छ ।[४]

बिस्केट पर्व मूल रूपले वैशाख १ गते पर्ने भएकोले र उक्त दिन हाम्रो राष्ट्रिय संवत् (विक्रम संवत्)अनुसार नववर्षको पहिलो दिन[५] पनि पर्ने भएकोले त्यस अवसरमा भक्तपुरबाट बसाई सरेर आएका साथीभाइ, आफन्तहरू एकै ठाउँमा जम्मा भएर शुभकामना आदानप्रदान गर्ने, खुसी साटासाट गर्ने, मीठा–मीठा परिकारहरू बनाएर खाने, खुवाउने आदि गरेर रमाइलो गर्छन् । यसरी उक्त दिन विविध दुःख कष्ट भुलेर, सुखशान्ति र समृद्धिको कामना गरेर बिस्केट पर्व मनाइन्छ ।

बिस्केट जात्रा हुने मूलस्थान भक्तपुर हो, जुन ऐतिहासिक र सांस्कृतिक नगरीको रूपमा युनेस्कोको विश्वसम्पदा सूचीमा समेत सूचीकृत छ ।[६] यहाँ यो चाड हिन्दुहरूको दशैं तिहार जतिकै भव्यता र धुमधामका साथ मनाइन्छ । यद्यपि भक्तपुर र बिस्केट जात्रा दुवै हिन्दुतन्त्रमा आधारित छ । यहाँ यो जात्रा नौ दिनसम्म मनाइन्छ । काठमाडौंको इन्द्रजात्रा र पाटनको रातो मच्छेन्द्रनाथको रथजात्रा जतिकै यो जात्रा यहाँको प्रख्यात जात्रा हो । यस जात्रामा लिंगो उभ्याउने जात्रा प्राचीन र मूलजात्रा भए तापनि कालान्तरमा विशेष गरेर मल्लकालमा आएर यसमा अनेक उपजात्राहरू थपिए । यस्ता जात्राहरूमा भैरव र भद्रकालीको रथयात्रा निक्कै प्रसिद्ध रहेको छ । जुन जात्रा मूलजात्राको चार दिन अघिबाट प्रारम्भ भई मूलजात्रा सकिएको चार दिन पछि सम्म चल्ने गर्दछ । साथै जात्राको बेला यहाँ अष्टमातृका लगायत अन्य देवदेवीहरूका स्थानीय स्तरका अनेक जात्राहरू पनि हुने गर्दछन् ।[७]

---

[४] उपत्यका बाहिर पनि विभिन्न जिल्लाहरूमा नेवारहरू बसोबास गरिरहेका छन् । तीमध्ये धेरैजसोको पुर्ख्यौली घर भक्तपुर रहेको कुरा थाहा हुन आएको छ । –स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।

[५] काठमाडौँ उपत्यकामा प्रचलित जात्राहरूमा विशेष गरेर तीनवटा जात्राहरू निक्कै मह□वपूर्ण र प्रसिद्ध मानिन्छन् । जस्तो–पहिलो भक्तपुरको बिस्केट जात्रा, दोस्रो पाटनको मच्छेन्द्रनाथको जात्रा र तेस्रो काठमाडौँको इन्द्रजात्रा । यी जात्राहरू मध्ये दोस्रो र तेस्रो जात्राको दिन राजकीय स्तरमा सार्वजनिक बिदा दिने चलन छ । तर भक्तपुरको बिस्केट जात्राको दिन त्यस्तो सुविधा आजसम्म दिइएको पाइँदैन । शायद उक्त दिन विक्रम संवत्सरको नववर्षको पहिलो दिन स्वतःऔपचारिक बिदा हुने भएकोले हो कि? वास्तवमा विक्रम संवत् नेपालभित्रको संवत् नभएता पनि सरकारी मान्यता र प्रचलनमा व्यापकता भएकोले यस संवत्ले वैशाख संक्रान्तिकै दिन नयाँ वर्षमा प्रवेश गर्ने भएकोले उक्त दिन अधिराज्यभरि सार्वजनिक बिदा दिने चलन हाम्रो देशमा रही आएको छ । अर्को कुरा पाटनको मच्छेन्द्रनाथको भोटो देखाउने जात्रा अनि काठमाडौँको इन्द्रजात्राहरूमा राष्ट्रप्रमुखको रूपमा पहिले महाराजाधिराजहरू र अहिले राष्ट्रपति सवारी हुने प्रचलन रही आएको छ । तर यस्तो प्रचलन भक्तपुरको बिस्केट जात्रामा पाइँदैन । यसैले बिस्केटका बेला जात्राका प्रमुख विधिविधानहरूमा राष्ट्रको संप्रभुको रूपमा राजकीय खड्गले नै राष्ट्रप्रमुखको प्रतिनिधित्व गर्दछ ।– भक्तपुर तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यज्यूबाट मिति २०६४/१२/१५ गते प्राप्त जानकारीको आधारमा ।

[६] www.explore Himalaya.com/worldheritagesite; retrieved in 2011 Dec.24.

[७] देवीप्रसाद लम्साल(सं), *भाषा वंशावली, भाग २*, काठमाडौँ : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ५४ ।

सौर्यमान अनुसार संचालन हुने नेपालकै प्रसिद्ध जात्राको रूपमा यस जात्रालाई लिने गरिएको छ । वास्तवमा नेपाली समाजमा तन्त्रविधिबाट संचालन हुने प्रायःजसो प्रमुख जात्राहरू चान्द्रमान अनुसार हुने गरेकोमा अपवादका रूपमा यो बिस्केट जात्रा एउटा भने सौर्यमान अनुसार सञ्चालन हुँदै आएको छ। सौर्यमानको विक्रम संवत्सरको अघिल्लो वर्षको अन्तिम दिन लिंगो उभ्याएर त्यसको भोलिपल्ट अर्थात् नववर्षको पहिलो दिन लिंगो ढालेर जात्रा सम्पन्न गर्ने परम्परा भक्तपुरको एउटा खास विशेषता हो । यद्यपि यो जात्रा भक्तपुरमा मात्र नभएर भक्तपुर वरपरका अन्य सात स्थान वा प्रदेशहरूमा पनि हुने गर्दछ तर ती सातै स्थानका जात्राहरू भक्तपुरकै बिस्केट जात्राको प्रतिरूप हो । यस जात्राको प्रमुख सांस्कृतिक कार्य भनेको विश्वकेतु वा विश्वध्वजा (Banner of the World) फहराउनु हो ।[८] अर्कोकुरा, यसलाई मसानघाटमा मनाइने जात्राको रूपमा पनि लिने गरिन्छ । किनकि यो जात्रा मूल नगरबाहिर रहेको चुपींघाट (ल्योसींखेल) नामक मसानघाटमा मनाइन्छ । उपत्यकाका प्रायःजसो प्रमुख जात्राहरू सम्बन्धित नगरको मूलस्थानभित्र मात्र प्रचलित हुँदै आएको परिप्रेक्ष्यमा यो जात्रा चाहिं भक्तपुर नगरबाहिर हनुमन्ते नदी किनार भद्रकाली पीठनेर चुपींघाट (ल्योसींखेल) नामक मसानघाटमा मनाइन्छ ।[९] यसैले यो जो कोहीका लागि पनि विष्मयकारी लाग्न सक्दछ । तर पनि यसरी मसानघाटमै जात्रा गर्नुको पछाडि के अभिप्राय रहेको देखिन्छ भने मृत आत्माहरू प्रेतयोनीमा नपरुन्, शिवलोक प्राप्त गरुन् भन्ने हो, किनकि शैव धर्मका प्रमुख देवता शिवजी गाँजा, भांग आदि सेवन गरेर भष्म दलेर मसानमा लीन रहने भएकोले शैव तान्त्रिकहरूको तन्त्रसाधना गर्ने उपयुक्त थलो यही मसानघाट नै हो । यसैले मसानघाटमा मनाइने जात्राको रूपमा पनि यसको मह□व रहेको छ ।[१०] यताबाट देशमा कुनै किसिमको अनिष्ट नहोस, रोगब्याधि नफैलियोस, सुख, शान्ति, समृद्धि फैलिराखोस भनेर भूतप्रेत, पिशाच जस्ता दुष्ट आत्माहरूलाई सम्मन गर्ने उद्देश्यले पनि यो जात्रा संचालन भइरहेको हो भन्ने कुरा थाहा हुन आउँछ । वास्तवमा मसान मानवको कल्याण नचाहने भूतप्रेत, पिशाच, बोक्सी, डंकिनी जस्ता अनेक थरीका अदृश्य शक्तिहरूको मुख्य बासस्थान मानिन्छ । अतः तान्त्रिक विधिविधानले सम्पन्न हुने बिस्केटजात्रा मसानमै गर्नुको अर्थ त्यस्ता शक्तिलाई तन्त्रसिद्धिबाट दमन गर्नु रहेको बुझिन्छ ।

---

[८] गोपाल धौबन्जार, *बिस्केट जात्रा : अष्ट प्रदेश उत्सव,* ललितपुर : जोशी रिसर्च सेन्टर, वि.सं. २०६५, पृ. ५८ ।

[९] प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१०] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग,* (अप्रकाशित विद्यावारिधि शोधग्रन्थ), कीर्तिपुर : त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५०, पृ. १९८ ।

कसै–कसैले यस जात्रालाई मातृसत्ताको अन्त्य भई पुरुषसत्ता स्थापना भएको खुसीयालीमा मनाउन थालिएको जात्रा पनि भन्ने गरेको पाइन्छ । किनकि राजकुमारीको शक्तिको स्रोतको रूपमा रहेको नागनागिनीलाई युवक पुरुषले मारेपछि नै यो जात्राको चलन प्रारम्भ भएको हो[११] भन्ने किम्बदन्तीय भनाइ रहेको छ ।

यो जात्रा जिब्रो छेड्ने जात्राको रूपमा पनि प्रसिद्ध रहेको छ । विशेष गरेर बिस्केटकै क्रममा वैशाख २ गते भक्तपुरदेखि करीब ४ कि.मी. पश्चिममा रहेको थिमी, नगदेश र बोडेमा क्रमशः बालकुमारीजात्रा, सिद्धिगणेशजात्रा, जिब्रो छेड्ने जात्रा आदि संचालन हुँदै आएका छन् ।

यो जात्रा विशेष गरेर विश्वनाथ भैरवको जात्राको रूपमा प्रसिद्ध रहेको छ । किनकि भैरवको प्रतीकको रूपमा चैत्र मसान्तका दिन ठड्िने लिंगोको टुप्पोमा फहराइने जोडी ध्वजालाई अभिलेखीय प्रमाणका आधारमा विश्वध्वजा, वीरध्वजा, विश्वकेतु आदि भनिएबाट यस तथ्यको पुष्टि हुन्छ ।[१२] र सो जोडी ध्वजालाई भैरव र शक्तिको प्रतीकको रूपमा मानिन्छ । अनि जात्रा हुने मूलस्थान भद्रकाली पीठ नै रहेबाट पनि यो कुरा स्पष्ट हुन्छ । भद्रकाली पीठनेरको ल्योसिंगाः (लिंगो ठड्िने खाल्डो) लाई प्रतीकात्मक रूपमा भद्रकालीको योनी र लिंगोलाई भैरवनाथको लिंग मानिन्छ । जब त्यस खाल्डोमा परेर लिंगो ठडिन्छ, तब उपस्थित दर्शक हर्ष र खुसीले झुम्मिन्छन् । वातावरण रोमान्चक बन्न पुग्छ । किनकि त्यस क्रियालाई भैरव–भद्रकाली बीचको समागम वा शिव र शक्ति आपसमा लीन भएको प्रतीक अर्थमा लिने गरिन्छ ।[१३] यसबाट विश्वमा शान्ति छाउने, समस्त जीव र जगत्को कल्याण हुने, कहीं पनि दुर्भिक्ष, अनिष्ट, अनिकाल नआउने जनविश्वास आम मानिसमा रहेको थाहा पाइन्छ । यताबाट यस जात्राको खास अभिप्राय लिंगो ठड्याएर आम दर्शकलाई मनोरन्जन मात्र पुऱ्याउने नभएर भैरव र भैरवीलाई आपसमा समागम गराउनु पनि रहेको देखिन्छ, जुन क्रिया तान्त्रिक दृष्टिकोणले निकै मह□वपूर्ण मानिन्छ ।

---

[११] हरिराम जोशी, *नेपालका चाडपर्व,* ललितपुर : जोशी रिसर्च सेन्टर, वि.सं. २०६०, पृ. १६ ।

[१२] हाल बिस्केट जात्रामा उठाइने ध्वजामा विश्वध्वजा, यस अघिका ध्वजामा वीरध्वजा अनि डिल्लीरमण रेग्मीको मिडियभल नेपाल दोश्रो भागमा यसलाई विश्वकेतु भनिएको छ ।– प्रत्यक्ष अध्ययन अवलोकन र लीलाभक्त मुनंकर्मीबाट प्राप्त जानकारीको आधारमा ।

[१३] (क) स्थानीय नेवारी परम्परा र संस्कृति सम्बन्धी ज्ञाता ८२ वर्षीय नारायण हाडासँग मिति २०६५/८/२० गते भएको छलफलको क्रममा उहाँबाट प्राप्त जानकारीको आधारमा ।
(ख) वास्तवमा लिंग र योनी –यी दुई नै सृष्टिको मूल रहस्य हो । पुरुष र स्त्रीको पारस्परिक संयोग बिना सृष्टि प्रभृति हुन सक्दैन । शिव र शक्ति, ईश्वर र माया, पुरुष र प्रकृति चाहे जुनै नाम लिए पनि सर्वत्र नै यी दुई मूल शक्तिको पारस्परिक संघर्षबाट नै सृष्टि कार्य सम्पन्न हुने गर्दछ । – महामहोपाध्याय गोपीनाथ कविराज, *भारतीय संस्कृति और साधना,* पटना : विहार राष्ट्र भाषा परिषद्, वि.सं. २०१९, पृ. ५०८ ।

बिस्केट जात्रा निश्चित् रूपमा भक्तपुरमा मनाइने भएपनि यो नेपाली मात्रका लागि मह□वपूर्ण मानिएको छ, किनकि यो जात्राको हाम्रो सांस्कृतिक जीवनमा मह□वपूर्ण स्थान छ । आधुनिकीकरणसँगै मानिसमा आएको समानता र भातृत्वको चेतना अनि उदार विचारले बिस्केटको मह□व नेवारहरूका लागि मात्र नभई अरु जातिहरूका लागि पनि उत्सव बनेको छ । नेवारेत्तर समाजमा चलेको वैशाख संक्रान्तिका दिन शिवपुरीस्थित बागमतीको उद्गम बागद्वार र टोखा नजिक सपनतीर्थमा स्नान–पूजा गरेर अनि मध्यान्हमा बिस्केट जात्रा हेर्न जाने चलनले पनि यस पर्वलाई केवल एक स्थान र एक समाजको घेरामा रहन नदिएर राष्ट्रिय पृष्ठभूमिमा देखाउँदछ ।[१४] नेपाल धर्म निरपेक्ष भए सँगसँगै नेपाली सांस्कृतिक जगत्मा यसको मह□व बढेको छ । किनकि नेपालका हिमाल, पहाड, तराइमा बसोबास गर्ने विविध जातजातिका चाडपर्वलाई पनि दशैं, तिहार सरह नै राष्ट्रिय पर्वको रूपमा मान्यता दिइसकेकोले पनि यसको मह□व अझ बढेको छ । वास्तवमा आजको नेपाली समाज बहुभाषिक, बहुधार्मिक एवं बहुजातीय समाज हो, जहाँ सबैका आ–आफ्नै विविधतापूर्ण सामाजिक, सांस्कृतिक क्रियाकलाप हुने गर्दछन् र बिस्केट जात्रा पनि नेपाली बहुसांस्कृतिक परिचयको एउटा उपज हो ।

## ५.२ बिस्केट सम्बन्धी धारणा र मान्यता

विभिन्न ऐतिहासिक स्रोत सामग्री लगायत लेखक, विद्वान, संस्कृतिविद्हरूले बिस्केट जात्रा सम्बन्धमा आ–आफ्नै किसिमका उच्चारण, परिभाषा, धारणा, मान्यता, टिप्पणीहरू प्रस्तुत गर्ने गरिएको पाइन्छ । जस्तो :–स्थानीय बुद्धिजीवी तथा लेखकहरूले यस जात्रालाई बिई (सर्प, नाग) सँग सम्बन्धित जात्रा हो भन्ने अर्थ लगाई क्रमशः बिस्का जात्रा, बिस्खाजात्रा[१५], बिईस्याड जात्रा, बिइस्यांग खाया जात्रा[१६], बिसिखात, बिसिकाया जात्रा[१७], बीसिका[१८], विश्वख्वाल यात्रा[१९], बीस्याको[२०], बी सितः, बीया जात्रा, बिस्यात[२१] आदि भन्ने

---

[१४] रवि चालिसे, *हाम्रा चाडपर्व*, काठमाडौँ : सूचना विभाग, श्री ५ को सरकार, वि.सं. २०३९, पृ. ७ ।

[१५] भक्तपुरका स्थानीय बासिन्दा लगायत वरपरका सबै नेवारहरूले यसलाई बिस्का वा बिस्खा जात्रा भन्ने गर्छन् । तर काभ्रेपलान्चोकको धुलिखेलवासीहरू यसलाई “बिख्याजात्रा” भन्ने गर्छन् ।

[१६] सत्यनारायण प्रजापति, “बिस्केट जात्रा”, *नेपाली संस्कृति,* वर्ष ५, अङ्क ३, पृ.३७ ।

[१७] केदारनाथ प्रधान, “भक्तपुरको बिस्केट जात्रा र यसको प्रागऐतिहासिक मह□व”, *प्राचीन नेपाल,* संख्या १०९ (पुष–माघ २०४५), पृ. १५ ।

[१८] सत्यमोहन जोशी, *नेपाली चाडपर्व,* काठमाडौँ : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३९, पृ. ७५ ।

[१९] पुण्यरत्न वज्राचार्य, *हाम्रो चाडपर्व,* काठमाडौँ : रत्न पुस्तक भण्डार, वि.सं. २०४३., पृ. २ ।

[२०] (क) मेरी एम. एण्डरसन, *दि फेष्टिबल्स अफ नेपाल,* लण्डन : जर्ज एलेन एण्ड अनवीन, ई.सं. १९७१, पृ. ४१ ।
(ख) एन्नी बरगती, *गड्स, मैन एण्ड टेरिटोरी* , न्यू दिल्ली : मनोहर पब्लिकेसन्स, ई.सं.१९९५, पृ. १७२ ।

गरिएको छ। यसरी बी (सर्प) स्यातः (मारिए) पछिको जात्राको रूपमा यसलाई परिभाषा गर्दै बिस्यातः भन्ने नेवारी शब्दको अपभ्रंशबाट नै बिस्केट भएको हो भन्ने मान्यता अगाडि सारिएको छ। तर किम्बदन्तीमा उल्लिखित सर्प मरेको (बी स्यातः) घटनालाई आधार मानेर यस जात्राको नाम बिस्केट हुन पुग्यो भन्ने परिभाषा वा धारणामा कुनै सत्यता रहेको देखिंदैन। किनकि ऐतिहासिक प्रमाणहरूले अर्कै कुरा व्यक्त गर्दछ।

ऐतिहासिक प्रमाणहरूमा यस जात्राको उल्लेख निम्नअनुसार गरिएको पाइन्छ। जस्तै– भाषा वंशावलीमा बिशकाट जात्रा[२२], जितामित्र मल्ल र भूपतीन्द्र मल्लका भक्तपुर दरबार इलाकाका क्रमशः ने.सं. ८०८ र ने.सं. ८१८ को अभिलेखहरूमा बिस्क्यात जात्रा[२३], यक्ष मल्लको ने.सं. ५६१ को भक्तपुर टौमढी टोलको अभिलेखमा विश्वयात्रा[२४], मल्लकालीन "वर्षकृति" थ्यासफूमा विश्वजात्रा भनिएको छ।[२५] त्यस्तै पंचाङ्ग पात्रोहरूमा यस जात्रालाई विश्वध्वजोत्थानम् भनेर उल्लेख गरिन्छ। जात्राको पूजा विधानहरूमा मूलाचार्यहरूले संकल्प वाक्यहरू उच्चारण गर्दा विश्वजात्रा महापावने भनेर गरिन्छ।[२६] ने.सं. ६४१ को भूमि सम्बन्धी एउटा तमसुक–ताडपत्रमा विसक जात्रा[२७], ने.सं. ५०१ को नेवारी लिपिमा लेखिएको अमरकोषमा "विश्वकेतु" शब्दको पर्याय बिसिक दिइएको पाइन्छ[२८], ने.सं. ८१२, ८१९, ८३१, ८४१ का थिमीमा प्राप्त शिलालेखहरूमा विश्वजात्रा, बोडेमा प्राप्त ने.सं.९२२, १०२४ को शिलालेख र ने.सं.८०४ को एउटा ताडपत्रमा बिस्क्यात, पशुपति ताम्रपत्रमा विश्वसंक्रान्ति, ने.सं.७३३, ७९८, ८२७ का हस्तलिखित ग्रन्थहरूमा बिस्कात, ने.सं.७४०, ७४७, ७५५ का हस्तलिखित ग्रन्थहरूमा बिस्क्यात शब्द उल्लेखित छ।[२९] बिस्केट जात्राका तान्त्रिक विधिविधान सम्बन्धी नेवारी लिपि र संस्कृत तथा नेवारी भाषामा लेखिएका असंख्य हस्तलिखित ग्रन्थहरूको शीर्षक नै विश्वयात्रा उल्लेखित छ, जुन राष्ट्रिय अभिलेखालयमा

---

[२१] लीलाभक्त मुनकर्मी, *बिस्केट जात्राको संस्कृति,* भक्तपुर : भक्तपुर नगर पालिका, वि.सं. २०५३, पृ. १।

[२२] लम्साल, पा.टि.नं.७, पृ. ५४।

[२३] डि.आर.रेग्मी, *मिडियभल नेपाल, चौथो भाग,* कलकता : के.एल.मुखोपाध्याय, ई.सं. १९६६, पृ. २१३ र २२३।

[२४] डि.आर.रेग्मी, *मिडियभल नेपाल, तेस्रो भाग,* कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ६३–६७।

[२५] श्रेष्ठ, पा.टि.नं. १०, पृ. ९५।

[२६] भक्तपुर तलेजु मन्दिरका पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट मिति २०६४/१२/१५ गते प्राप्त जानकारीको आधारमा ।

[२७] शंकरमान राजवंशी (सं), *भूमि सम्बन्धी तमसुक – ताडपत्र, भाग ४,* काठमाडौं : पुरात□व विभाग, वि.सं. २०४४, पृ. २ ।

[२८] पुरुषोत्तलोचन श्रेष्ठ, *भक्तपुरको नवदुर्गा गण,* भक्तपुर : बबिता श्रेष्ठ, वि.सं. २०६०, पृ. १७० ।

[२९] गौतम तिमिला, *ख्वपया बिस्का जात्राः छगूअध्ययन,* (अप्रकाशित स्नातकोत्तर तहको शोध प्रबन्ध), नेपालभाषा केन्द्रीय विभाग, त्रि.वि., वि.सं. २०६५, पृ. ८५।

संग्रहित छन् ।[३०] शाहकालीन ध्वजा अभिलेखहरूमा वीरध्वजा भनिएको छ ।[३१] २०६४ चैत्र १६ गते शनिवार प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाले बिस्केट जात्राको लागि चढाउनु भएको ध्वजामा "विश्वध्वजा" उल्लेख छ ।[३२] यसप्रकार बिस्केटको पूर्वरूप विश्वयात्रा, विश्वजात्रा, बिशकजात्रा, विश्वकेतु, बिसिक, बिस्क्यात, बिशकाट थियो भन्ने देखिन्छ ।

नेवारी भाषा तथा संस्कृतिका ज्ञाता काशीनाथ तमोटका अनुसार खगोल तथा ज्योतिष शास्त्रीय सिद्धान्त मुताविक विश्वब्रम्हाण्डको केन्द्रविन्दु सूर्य मेष संक्रान्तिका दिन विषुवत्रेखा (भूमध्यरेखा) मा पर्ने भएको र त्यसदिन मनाइने जात्रा भएकोले यसलाई विषुवत् जात्रा भनिएको र कालान्तरमा गएर यही विषुवत् शब्द विकृत भएर विश्वयात्रा हुन आएको हो । उहाँ अझै अगाडि थप्नु हुन्छ – वास्तवमा यस दिन जात्रा (उत्सव) मनाउनाले आरोग्य, सु–स्वास्थ्य, समृद्धि, सुभिक्ष प्राप्त हुने हुनाले यस्तो जात्राको प्रचलन यहाँ मात्र नभएर संसारका अन्य भूभाग विशेष गरेर बंगलादेश, भारत, पश्चिम नेपाल (यहाँ यस बेला विशु पर्व मनाउने गरिन्छ) लगायत अन्य स्थानहरूमा पनि रहेको देखिन्छ ।[३३] सूर्यको गतिको ज्ञान दिन अनि विश्वशान्तिको कामनाको प्रतीक स्वरूप लिंगो उभ्याइने गरिन्छ ।[३४]

प्रतीकात्मक रूपमा यस जात्रालाई वैशाखी वा मेष संक्रान्ति जात्रा, भक्तपुरे जात्रा, ख्वपःया जात्रा, भैरवको जात्रा आदि भन्ने चलन छ । नेवारहरू लिंगो उभ्याउने जात्रालाई ल्योसीं थनेगु जात्रा भन्दछन् ।[३५] उक्त जात्रामा लिंगोको टुप्पामा दुईवटा ध्वजा (पताका) फर्फराएको हुन्छ, जसलाई नागनागिनीको प्रतीक मानी योसीं वा ल्योसींद्यः जात्रा भनिएको हो । योसीं वा ल्योसींको अर्थ हुन्छ – प्रेमीप्रेमिकाको युगल जोडी । तर यस सम्बन्धमा

---

[३०] *विश्वयात्रा कुलुज्योता विधान,* राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ माइक्रोफिल्म रिल नं.बी १९७/९,
*नेपाल वर्षक्रिया* , ऐ.ऐ., माइक्रोफिल्म रिल नं.बी.४३७/१५
*विश्वयात्रा दुमाजु विधि,* ऐ.ऐ., माइक्रोफिल्म जी.९०/११,
*वैष्णवी देवी विश्वयात्रा* ,ऐ.ऐ., माइक्रोफिल्म ए.६२४/२३,
*नेपाल वर्षक्रिया,* ऐ.ऐ., माइक्रोफिल्म ए.६१०/१७ का साथै इ.१९२९/६ देखि इ.१९२९/१८ सम्मका विश्वयात्रा सम्बन्धी हस्तलिखित ग्रन्थहरू ।

[३१] भैरवनाथ मन्दिर टौमढी र आगमछें लाकुलाछेंमा राखिएका वि.सं. १८५४ को राजा रणबहादुर शाह र वि.सं. २००४ मा श्री ५ त्रिभुवनले चढाएका बिस्केटका पुराना ध्वजाहरू छन्, जुन ध्वजामा वीरध्वजा उल्लेख छ ।

[३२] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[३३] विषुवत् शब्द विकृत भएर कसरी "विश्व" शब्द ब्युत्पन्न हुन गयो भन्ने सम्बन्धमा "वि" पुरै यथावत्, "षु" को आधा ष मात्र, "व" पुरै यथावत र "त्" पुरै लोप भएर विश्व बनेको हो ।– काशीनाथ तमोटबाट मिति २०६६/७/२१ गते शनिवार प्राप्त जानकारीको आधारमा ।

[३४] विनोदराज शर्मा, "योसिंद्यः – केही जानकारी", *पासुका,* वर्ष १, अंक ९, (२०५४ जेठ), पृ. १ ।

[३५] प्रजापति, पा.टि.नं. १६, पृ. ३७ ।

विनोदराज शर्माको धारणा यस्तो छ 'बिस्केटको लिंगोलाई स्थानीय जनजिब्रोमा योसींद्यः भन्ने चलन छ । दोलखा भीमसेनको अवतार योग सिद्धि वा "योगासीं" बाट नै योसीं भएको र भक्तपुरवासीका प्रिय (योम्ह) सिद्ध–योगसीं नामक देव (भैरव) नै योसीं हो ।[३६] उपत्यकामा भीमसेनलाई पनि भैरवकै रूपमा मान्ने गरेको पाइन्छ ।[३७] भैरवको जात्रा भएकोले नै यसलाई योसींद्यः जात्रा भनिएको हो । स्थानीय जनजिब्रोमा लिंगोलाई योसीं वा ल्योसीं नै भन्ने प्रचलन रहेको पाइन्छ । ऐतिहासिक प्रमाणहरूमा यसलाई ऐवसीन, एवसि, ऐवसिं, योसिं भनिएको पाइन्छ । जस्तो – ने.सं. ७९४ देखि ८६० सम्मको ऐतिहासिक घटनावली उल्लेख भएको एउटा थ्यासफूमा ऐवसि र ऐवसीन[३८], २२ पत्र संख्या रहेको एउटा मल्लकालीन हस्तलिखित ग्रन्थमा योसिं[३९] र १३ पत्र संख्या रहेको अर्को मल्लकालीन हस्तलिखित ग्रन्थमा एवसिं भनिएको छ ।[४०] यसबाट के कुरा स्पष्ट हुन्छ भने वर्तमानमा प्रचलित योसीं वा ल्योसींको पूर्वरूप ऐवसिं वा एवसीन हो भन्ने जनिन्छ । समयको परिवर्तनसंगै भाषामा परिवर्तन आउने र यसै अनुसार यसको उच्चारणमा पनि भिन्नता आएको देखिन्छ । यसैकारण "एवसिं" शब्द अपभ्रंश भइ योसीं वा ल्योसीं बन्न पुगेको कुरा स्पष्ट थाहा हुन्छ । ल्योसींको अर्थ चाहिं तान्त्रिक विधिपूर्वक बोका पूजा गरेर छानेर ल्याइएको काठ हो । किनकि नेवारी भाषामा "ल्यो" शब्दले छान्नु र "सीं" शब्दले काठ भन्ने जनाउँछ ।[४१]

बिस्केटको लिंगोलाई "यःसिं" पनि भन्ने चलन छ । "यः" भनेको इन्द्र र "सिं" भनेको लिंगो वा ध्वज भएकोले यसिंद्यः भनिएको हो । यसबाट इन्द्र र भैरव एउटै हुन् भन्ने देखिन्छ र यसको आधार हाम्रो संस्कृतिमा यत्रतत्र भेट्टिन्छ । जस्तो– वर्षामा बिजुली चम्किनुलाई भैरवको मुखाग्नी बलेको, बादल गर्जिनुलाई भैरवनाद भएको आदि भनिन्छ । यसलाई वज्रपात पनि भनिन्छ । वज्र इन्द्रको आयुध हो । इन्द्रजात्राको बेला भक्तपुरमा यंवाद्यः (यम द्यः) उभ्याइन्छ, जुन बिस्केटको बेलाको लिंगो (यसिंद्यः) कै अनाकृति रूप हो । एउटा वर्षारम्भ अर्को वर्षान्तका बेला भक्तपुरमा यःसिंद्यः उभ्याइन्छ, ढालिन्छ । यसबाट यःसिं शब्द इन्द्रसिं शब्दकै परिवर्तित रूप हो भन्ने देखिन्छ । अर्को कुरा, आकाशका सबै ताराहरूलाई देवीदेवता मान्ने हो भने सूर्य ताराहरूका राजा अर्थात् इन्द्र भन्न सकिन्छ ।

---

[३६] विनोदराज शर्मा, "भक्तपुरको बिस्केट जात्राः जात्रा एक नाम अनेक," *खोपृङ,* वर्ष १४, अंक १३, (वि.सं. २०६२), पृ. ४३ ।

[३७] हरिराम जोशी, "भैरवः एक सांस्कृतिक अध्ययन", *पासुका,* वर्ष २, अंक ५, (२०५४ माघ), पृ. ५ ।

[३८] रेग्मी, पा.टि.नं. २३, पृ. ३४१ ।

[३९] *नेपालवर्षक्रिया,* राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म रिल नं. बी ४३७/१५ को पत्र १ ।

[४०] *नेपालवर्षक्रिया,* राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म रिल नं. बी ४३७/१६ को पत्र १ ।

[४१] धौबन्जार, पा.टि.नं. ८, पृ. ५० ।

सौरमान अनुसार वर्षारम्भको उत्सवमा इन्द्रको काठ उभ्याउनु र ढाल्नु अद्‌भुत होइन । यतिबेला नै आकाश भैरवको जात्रा हुनुपछाडि आकाश भैरव नै इन्द्रको पर्याय हो भन्ने देखिन आउँछ ।[४२] विश्वजात्रा सम्बन्धी एउटा हस्तलिखित ग्रन्थमा पनि बिस्केटको लिंगोलाई क्रमशः महेन्द्रध्वज, ऐन्द्रध्वज, शक्रध्वज आदि भनिएको पाइन्छ ।[४३]

माथि उल्लिखित लिंगोको टुप्पोमा फहराउने एकजोडी लामो पताकालाई नागनागिनीको प्रतीक मानिए पनि त्यसमा नागनागिनीको कुनै स्पष्ट चिन्ह वा संकेत भेटिँदैन बरु त्यसमा श्री ३ आकाश भैरवको मूर्ति (चित्र) अंकित रहेको छ । टौमढी टोलको आकाश भैरवलाई विश्वनाथ भैरव पनि भनिने हुँदा विश्वनाथको यस पताकालाई विश्वध्वजा भनिएको हो ।[४४] लिंगोमा फहराउने ती एकजोडी ध्वजालाई भैरव र शक्तिको प्रतीक मानिन्छ । यो कुरा लिंगो जात्रा हुने मूलस्थान भद्रकाली पीठ नै रहेको आधारमा पनि थाहा हुन्छ ।[४५] वास्तवमा विश्वजात्रा (बिस्केट) का प्रमुख देवता लिंगो विश्वनाथ भैरव हुन् । यसै आधारमा यस लिंगोमा फहराउने एकजोडी ध्वजा विश्वध्वजा, वीरध्वजा, विश्वकेतु नामले प्रसिद्ध रहँदै आएको कुरा माथि उल्लेखित अभिलेखीय प्रमाणका आधारमा थाहा हुन्छ । मनुको गौतमीतन्त्रबाट प्रभावित भएर डिल्लीरमण रेग्मीज्यूले पनि यस जात्रालाई विश्वध्वज वा विश्वकेतु जात्रा नामकरण गर्नु भएको छ, जसको शाब्दिक अर्थ संसारको ध्वजा भन्ने हुन्छ । विश्वकेतुबाट नै बिस्केट भएको दाबी उहाँको छ ।[४६] कसै–कसैले राजा विश्वमल्लले चलाएको जात्रा भएकोले यसलाई “विश्वजात्रा” पनि भन्ने गर्छन् ।[४७] तर यो भनाइ सत्य देखिंदैन । किनकि विश्वमल्ल राजा हुनु भन्दा सयौं वर्ष अघिदेखि नै यो जात्रा प्रचलित रहेको तथ्य यक्षमल्लको ने.सं.५६१ को विश्वयात्रा उल्लेखित अभिलेखले पुष्टि गर्दछ ।

संस्कृतिविद् तीर्थलाल नःघभनी विश्वयात्राको परिभाषा यसरी गर्नुहुन्छ – सूर्यका अनेक नामहरू रवि, आदित्य, भास्कर, दिवाकर भए जस्तै विश्व पनि एक भएको र सूर्यले मेष राशि देखि मीन राशि सम्म १२ राशि चाहारिंदा एक वर्ष लाग्छ र यही परिक्रमालाई विश्वयात्रा भनिएको हो । मेषदेखि मीनसम्म अर्थात् वैशाखदेखि चैत्रसम्म विश्व (सूर्य) द्वारा

[४२] रमापतिराज शर्मा, “हामी कहाँका भैरव – एउटा अध्ययन”, *पासुका,* वर्ष ३, अंक १० (२०५६ असार), पृ. ३ ।

[४३] *नेपालवर्षक्रिया,* राष्ट्रिय अभिलेखालय, हस्तलिखितग्रन्थ, माइक्रो फिल्म रिल नं.बी. ४३७/१६ को पत्र १० ।

[४४] प्रजापति, पा.टि.नं. १६, पृ. ३७ ।

[४५] पुरुषोत्तमलोचन श्रेष्ठ, “भक्तपुरमा वीर शैव मतको विकास र प्रभाव”, *खोपृङ,* वर्ष ८, अंक ८ (२०५६), पृ. ५ ।

[४६] डि.आर.रेग्मी, *मिडियभल नेपाल, दोस्रो भाग,* कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ६५० ।

[४७] प्रजापति, पा.टि.नं. १६, पृ. ३७ ।

निर्विघ्नपूर्वक यात्रा सम्पन्न गरिने हुँदा त्यस खुसीयालीमा चैत्र मसान्तका दिन ध्वजोत्थान गरी त्यसको भोलिपल्ट मेष संक्रान्तिका दिन विधिवत् ध्वजा विसर्जन गरिने यस जात्रालाई विश्वयात्रा भनिएको हो[४८] र यो जात्रा गर्नुको मुख्य अभिप्राय सालभर कहीं कतै अनिष्ट, अनिकाल, दुर्भिक्ष नहोस् भन्ने हो । तन्त्रका श्लोक र पूजाविधिमा सूर्यलाई मार्तण्ड भैरव भनी सम्बोधन गरिएको पाइन्छ ।[४९] यसका अतिरिक्त यस जात्रालाई "शत्रुहन्ताजात्रा" नामले पनि सम्बोधन गरिन्छ । यो जात्रा हेर्नाले शत्रुनाश भएर जाने जनविश्वास भएकोले यसलाई "शत्रुहन्ताजात्रा" भनिएको हो । अनि शत्रु भनेको रोग, भोक, शोक, दु:ख, कष्ट आदि हो, किनकि मनुको गौतमीतन्त्रमा यस जात्राको बारेमा यस्तो उल्लेख छ –

"चैत्रेच विश्वयात्रायां ध्वजस्योत्स्थान कंचरेत् ॥
सर्वदु:खानिन श्यन्ति सर्वशत्रुक्षयायच ॥
ध्वज भंजनं पश्चात् क्रियते संक्रमे दिने ॥ दुर्भिक्षनाशनं... "

अर्थात् जसले चैत्र महिनामा विश्वध्वजा (पताका) फर्फराउँछ र मेष संक्रान्तिका दिनमा सो उत्सव समाप्त गर्छ । त्यसको सबै दु:ख हट्छ, शत्रुको नाश हुन्छ ।[५०]

यताबाट विश्व कल्याण हेतु सबैतिर उत्साह, उमंग, सुख शान्ति छाइरहोस् भन्नाका लागि सूर्य मीन राशिबाट मेष राशिमा प्रवेश हुने सुअवसर पारेर विश्वजात्राको ध्वजा फहराउने परम्परा अगाडि बढेको देखिन्छ । विश्वजात्रामा फहराउने ध्वजा भएकोले त्यस ध्वजालाई विश्वकेतु भनिएको र यही विश्वकेतु कालान्तरमा गएर अपभ्रंश भइ बिसिकेत हुन गएको हो । यही बिसिकेतबाट बिसिकात हुँदै बिस्केट भन्न थालिएको हो ।[५१] न कि बी स्यात: (सर्प मरेको) घटनालाई आधार मानेर बिस्केट भएको । नेवारी समाजमा सुरु–सुरुमा कसै–कसैद्वारा बिसिकातलाई बिसियात भनियो होला । पछिबाट समाजका तथाकथित पढे लेखेका उच्च वर्गद्वारा "यात" को अर्थ यात्रा भनेर बिसियातको पूर्ण अर्थ मरेको सर्पको जात्रा भनी अर्थ लगाउन थालियो । यसै अनुरूप किम्बदन्ती पनि बनाइयो र अन्त्यमा लिंगो जात्रालाई सर्वसाधारण जनताले अजिंगर अजिंगरनीको जात्रा भनी लिन थाले, तर यो भनाइ बिल्कुलै तथ्यहीन र कपोलकल्पित छ भन्ने देखिन्छ । यद्यपि बहुसंख्यक मानिसहरू यो कुरा मान्न तयार छैनन्, तर त्यसोभएपनि जात्राको स्थलगत अध्ययनका क्रममा देखिने भैरव,

---

[४८] तीर्थलाल नघ:भनी, "भक्तपुरको लिंगो जात्रा", *अभिलेख,* वर्ष १६, अंक १६ (वि.सं. २०५५), पृ. ३८–३९ ।

[४९] *ऐजन,* पृ. ४२–४३ ।

[५०] *नेपालवर्षक्रिया,* राष्ट्रिय अभिलेखालय, हस्तलिखितग्रन्थ, माइक्रो फिल्म रिल नं. बी ४३७/१५, पत्र १ ।

[५१] न:घभनी, पा.टि.नं. ४८, पृ. ३९ ।

भैरवीका तान्त्रिक विधिबाट गरिने जपतप, पूजापाठ, होम, यज्ञयज्ञादी, भजनकीर्तन जस्ता धार्मिक तथा साँस्कृतिक गतिविधिहरूबाट यो जात्रा नागनागिनी सम्बन्धी जात्रा होइन भन्ने तथ्य पुष्टि हुन्छ ।[५२]

वास्तवमा नागनागिनी सम्बन्धी किम्बदन्तीलाई नै प्रमाण मानेर लिंगोमा फहराउने ध्वजालाई नागनागिनी (अजिंगर, अजिंगरनी) को मृत शरीर मानेर त्यसैको स्मृतिमा वर्षेनी यो जात्रा प्रदर्शन गरिएको हो भन्ने भनाइ धेरैको छ । तर यो गलत भनाइ हो । प्रचार प्रसारले वास्तविक कुरालाई विस्थापित गरी बिस्यातः सर्प मारेको जात्रा भनेर आम संचार माध्यम तथा इतिहासकारहरूले समेत गलत जानकारी सम्प्रेषण गरेर इतिहास बंग्याउने काम गरिरहेका छन् । यथार्थमा बिस्यातःबाट बिस्केट भएको नभइ विश्वकेतुबाट बिस्केट भएको र भाषाशास्त्रको दृष्टिले पनि उपरोक्त कुराको पुष्टि हुन्छ ।[५३] जात्राको बेला ठडिएको लिंगोमा भ्वाट्ट आखाँ पर्दा त्यसको टुप्पोदेखि तलतिर झरेका एक जोडी ध्वजा एक छिनको लागि नागनागिनी झैं लाग्दछन् । अझ त्यसमाथि नागनागिनी झैं लामो परेर तलतिर लत्रन पुगेका ती ध्वजाहरू हावा चल्दा नाग गुँडुल्किए झैं देखिने हुनाले जनजीवनमा ती ध्वजाहरू नागनागिनीकै प्रतीक हुन भन्ने विश्वास प्रचलित रहन पुगेको अनुमान हुन्छ ।[५४] शायद यसैकारण यस विषयमा कलम चलाउने केही विद्वान लेखकहरूले अनेक अर्थ निकाली वास्तविक कुरालाई बिर्सिदिएको आभास हुन्छ । यथार्थमा किम्बदन्तीमा वर्णित नागनागिनीलाई यस ध्वजामा दर्शाइएको छैन । यसर्थ यो जात्रा नागनागिनी सम्बन्धी जात्रा होइन भन्ने तथ्य पुष्टि हुन्छ । यस ध्वजामा आकाश भैरवको मूर्ति (चित्र) अंकित रहेको र आकाश भैरव नै टौमढी टोलको विश्वनाथ भैरव भएकोले यो ध्वजा विश्वनाथ भैरवको ध्वजा हो[५५] र यस अर्थमा यो बिस्केट जात्रा पनि विश्वनाथ भैरवकै जात्रा हो भन्ने कुरा स्पष्ट हुन्छ ।

भगवान इन्द्रको ध्वजलाई इन्द्रध्वज भनिए झैं विश्वनाथ भैरवको ध्वज भएकोले यसलाई विश्वध्वज भनियो । यस सम्बन्धी जात्रा भएकोले यसलाई विश्वजात्रा वा विश्वध्वज जात्रा भनिएको हो अर्थात् मेष संक्रान्तिका दिन मनाइने विश्व जात्राका प्रमुख देवता लिंगो

[५२] स्थलगत अध्ययनबाट प्राप्त जानकारी ।

[५३] शर्मा, पा.टि.नं. ३६, पृ. ४३–४४ ।

[५४] श्रेष्ठ, पा.टि.नं. ४५, पृ. ५ ।

[५५] भक्तपुर टौमढी टोलका आकाश भैरवलाई विश्वनाथ भैरव पनि भन्ने गरिन्छ ।

नै विश्वनाथ भैरव हुन् ।[५६] निकै लामो आकारको विश्वध्वजा फहराउने परम्परालाई विस्तारै गलत अर्थ लगाउँदै नागनागिनीको प्रतीक सम्झेर त्यसै अनुरूप किम्बदन्ती बनाइ प्रचार प्रसार हुन गएको देखिन्छ । किनभने नेवारीमा लामोलाई ताहा भन्ने र नागनागिनीलाई पनि यदाकदा ताहा भनिने भएकोले बिस्केटको ध्वजा र नागनागिनीलाई एउटै अर्थ लगाउन सजिलो भयो । मध्यकालको अन्ततिर विश्वकेतु शब्द अपभ्रंश भइ बिस्क्यात भन्ने चलन चलेको थियो र यसबाट पनि यस जात्रालाई नागनागिनीसित सम्बन्धित देखाउन अझ बल पुऱ्यायो । कसरी भने बिस्क्यात र बिस्यात शब्दको ध्वनि मिल्दोजुल्दो भएकोले स्थानीयवासी नेवारहरूले बिस्क्यातलाई बिस्यातः शब्दको रूपमा लिए र नागनागिनी मरेको घटनासित मिल्ने गरी किम्बदन्ती बनाए । तर विश्वकेतु वा विश्वध्वजा नागनागिनीको प्रतीक होइन भन्ने कुरा ध्वजाको प्रकृतिले नै दर्शाउँछ । यदि त्यो ध्वजा नागनागिनीको प्रतीक भई दिएको भए त्यसको संकेत ध्वजाको कुनै भागमा देखिनु पर्ने हो । तर सिंगो ध्वजामा त्यस्तो कुनै संकेत पाइँदैन ।[५७] यताबाट पनि यो ध्वजा विश्वनाथ भैरवकै ध्वजा हो भन्ने स्पष्ट हुन्छ । यसकारण यो जात्रा नागनागिनी सम्बन्धी जात्रा कदापि होइन । यो भक्तपुरवासीका आराध्यदेव, सहकालका प्रतीक श्री विश्वनाथ भैरवनाथको जात्रा हो भन्ने कुरामा कसैको दुइमत हुन सक्दैन ।

यस देखि बाहेक विश्वकेतु ध्वजालाई विश्वनाथ भैरवकै ध्वजा हो भन्ने कुरा निम्न तथ्यहरूका आधारमा पनि जान्न सकिन्छ । जस्तो– लिंगो उभ्याउने मुख्य स्थानलाई भेलुख्यः, भेलुखेल, भैलःगा, भलूगाः र भैलःगम आदि मान्दै आएको छ । अपितु भैरवको पीठ भएको स्थानलाई मात्र नेवारीमा यसरी भन्ने चलन छ । तर यहाँ भैरवको पीठ अवस्थित छैन । बरु यहाँ अष्टमातृका गण मध्येकी एक बिष्णुदेवी, वैष्णवीको पीठ अवस्थित छ । यसैले यस स्थानलाई वैष्णवी स्थल वा वैष्णवीगम भनिएको भए स्वाभाविक लाग्दथ्यो तर त्यसो भनिएन भैरवखेल वा भेलुखेल नै भनिँदै आएको छ, जहाँ भैरवको पीठ नै छैन, त्यस क्षेत्रलाई भैरवखेल (भेलुखेल) किन भनियो ? यो ज्यादै विचारणीय प्रश्न रहेको छ ।

---

[५६] (क) ध्वजा उत्थान गरी जात्रा गर्ने प्रचलन नेपाल एक ठाउँमा बाहेक अन्त कहीं पनि बाँकी छैन । जब कि रथ यात्रा गर्ने परम्परा भने नेपालका साथै भारतमा पनि प्रचलित रहेको थाहा हुन्छ । भारतको गुजरात राज्यको द्वारकामा प्रत्येक वर्ष असार शुक्ल द्वितीयाको दिन १६ वटा पाङ्ग्राहरू भएको विशाल जगन्नाथ रथ यात्रा सातदिनसम्म चल्ने गर्दछ सो जात्रामा जगन्नाथ, बलभद्र र शुभद्राका तीनवटा बेग्ला–बेग्लै रथहरू जगन्नाथ मन्दिरबाट तानेर गुन्दी चेवारीसम्म पुऱ्याइन्छ ।–बजेन्द्रनाथ शर्मा, *फेष्टिबल्स अफ इण्डिया,* नयाँ दिल्ली : अभिनव पब्लिकेसन्स, ई.स. १९७८, पृ. २२ ।
(ख) लिंगो उभ्याउने परम्परा भक्तपुर बाहेक काभ्रेपलाञ्चोकको सांगा र श्रीखण्डपुरमा रहे पनि ध्वजा फहराउने चलन त्यहाँ पाइँदैन । –प्रधान, पा.टि.नं. १७, पृ. १६ ।

[५७] धौबन्जार, पा.टि.नं. ८, पृ. ३६ ।

वास्तवमा यसको सही जवाफ के हुन सक्दछ भने – भैरवको प्रतिविम्ब स्वरूपको विश्वकेतु लिंगो वर्षेनी उभ्याउने (गाड्ने) ठाउँ भएकोले नै नेवारी भाषामा यो स्थान भेलुखेल, भैल:गा, भेलुख्य: को रूपमा प्रचलित हुन पुगेको देखिन्छ ।[५८] भैरवनाथ मन्दिरको माथिको तलामा भण्डार गरिराखेको एउटा जीर्ण ध्वजामा

"नेपाल भूपाल ....... श्री ...... ष्ट ........ पाडौं म श्री ...... जगत
प्रकाश सिंह .......................... श्री महाकाल भैरव ............."

भन्ने अभिलेख उल्लेख छ । यस अभिलेखबाट जगतप्रकाश सिंहले लिंगोलाई "श्री महाकाल भैरव" भनी सम्बोधन गरी ध्वजा चढाएको हो भन्ने स्पष्ट हुन्छ र यसबाट लिंगो भैरवको प्रतीक हो भन्ने प्रतीत हुँदा संस्कृतिविद् लीलाभक्त मुनंकर्मीले यो ध्वजा राजा जगतप्रकाश मल्लले चढाएको भन्ने तर्क दिनु भएको छ ।[५९] परन्तु जगतप्रकाश मल्लका पालाका धेरै जसो अभिलेखहरू प्रकाशमा आइसकेको र ती कुनैमा पनि राजा जगतप्रकाशको नामको पछाडि सिंह जोडिएको नपाइएकोले उक्त अभिलेख राजा जगतप्रकाश मल्लको नभएर कुनै एक सज्जन व्यक्तिको हुन सक्ने तर्क तीर्थलाल न:घभनीज्यूको रहेको छ ।[६०] वास्तवमा पुरानो ध्वजा जीर्ण भएपछि भैरवनाथलाई नयाँ ध्वजा चढाउने कार्य राज्य प्रमुखको रूपमा राजा, महाराजाहरूबाट मात्र सम्पन्न हुन सक्ने तथ्य अन्य ध्वजाहरूमा उल्लिखित प्रमाणहरूको आधारमा स्पष्ट भएकोले यो ध्वजा चढाउने व्यक्ति पनि अरु कोही नभएर स्वयं राजा जगतप्रकाश मल्ल नै हो भन्ने देखिन्छ ।

त्यस्तै वि.सं. १८५४ मा श्री ५ रण बहादुर शाहले लिंगोलाई चढाएको ध्वजाको अभिलेखमा "ॐ स्वस्ति ॥ श्री आकाश भैरवलाई श्री ५ रण बहादुर शाहले वीरध्वजा बनाई चढायूँ । श्री शाके सम्वत् १७१८, वि.सं. १८५४, कलि सम्वत् ४८९७, नेपाल सम्वत ९१७ चैत्रमासे शुक्ल पक्ष द्वादशी तिथौ ........ शनीश्चरबार[६१] भन्ने उल्लेख छ । यस अभिलेखमा पनि विश्वकेतु (लिंगो) लाई आकाशभैरव भनी सम्बोधन गरिएको छ । यसबाट पनि लिंगोलाई भैरवको प्रतिविम्ब मानेको स्पष्ट देखिन्छ । यसका अतिरिक्त लिंगोमा झुण्ड्याउने पताका वा ध्वजालाई वीरध्वजा भनी स्पष्ट रूपमा उद्धृत गरिएको छ । अर्को ध्वजा जुन श्री ५ त्रिभुवनले वि.सं. २००४ मा भैरवनाथलाई चढाएको देखिन्छ, यसमा "स्वस्ति श्री आकाश

[५८] न:घभनी, पा.टि.नं. ४८, पृ. ३९ र ४३ ।
[५९] मुनंकर्मी, पा.टि.नं. २१, पृ. १४ ।
[६०] न:घभनी, पा.टि.नं. ४८, पृ. ३९ र ४३ ।
[६१] मुनंकर्मी, पा.टि.नं. २१, पृ. १५ ।

भैरवलाई श्री ५ महाराजधिराज त्रिभुवन वीर विक्रम शाहदेवबाट “वीरध्वजा” बनाई चढाञू । श्री विक्रम संवत् २००४ साल, शाके सम्वत १८६९, नेपाल सम्वत १०९८ फागुण मासे ....... गुरुवासरे ।”[६२] भन्ने अभिलेख उल्लेख छ । यस अभिलेखमा पनि लिंगोलाई आकाश भैरव र ध्वजा (पताका) लाई वीरध्वजा नै भनी सम्बोधन गरिएको छ । यसप्रकार शाहकालीन यी दुई अभिलेखबाट पनि विश्वकेतु वा लिंगोलाई स्पष्ट शब्दमा आकाश भैरव भनी सम्बोधन गरिएकोले जोडी ध्वजा नागनागिनी वा अजिंगर दम्पतीको प्रतीक होइन भन्ने स्पष्ट हुन आउँछ ।

जात्राको दिन लिंगो उभ्याउनु अघि लिंगोको टुप्पो तिर दायाँ ८ हात र बायाँ ८ हात लामो रुखको हाँगो हातको निमित्त र टाउकोको निम्ति रुखका झ्याउ राखेर टाउको देखि दुवै हातमा नीलो ३२ हातको कपडाले मोडी बाँध्ने कार्य विधिपूर्वक सम्पन्न भएपछि मात्र लिंगो उभ्याउने जात्रा सुरु हुन्छ ।[६३] यस तथ्यबाट पनि लिंगो भैरवको प्रतीक हो भन्ने देखिन्छ । किनकि भैरवको रूपवर्ण अक्सर गरी नीलै हुन्छ । यसैकारण भैरवनाथको पूजा गर्दा नीलो वस्त्र चढाउने परम्परा अद्यावधि प्रचलित छ । यसप्रकार भक्तपुरको बिस्केट जात्रामा फहराउने वीरध्वजा वा विश्वकेतु एक किसिमको वीरताको प्रतीक हो, विश्व विजयको द्योतक हो भन्नुमा अत्युक्ति नहोला । तर विद्वान पार्थमणि भट्टराईले भने अलि फरक ढंगबाट उक्त ध्वजालाई विश्वकेतु नभनेर वृषकेतु भन्न पुगेका छन्, जसको अर्थ शिवध्वज, इन्द्रध्वज, विष्णुध्वज आदि हुन्छ भनिएको छ ।[६४]

बिस्केटको लिंगोलाई भैरवनाथको प्रतीक किन र कुन आधारमा मानिएको हो भन्ने सम्बन्धमा स्पष्ट रूपमा बुझ्नको लागि निम्न तथ्य अझ सहायक सिद्ध हुने देखिन्छ । सूर्यका अनेक नामहरू जस्तो – आदित्य, रवि, दिवाकर, भास्कर, भए झैं विश्व पनि एक हो भन्ने कुरा माथि नै उल्लेख भइसकेको छ । त्यस्तै सूर्यलाई भैरव पनि भन्ने गरिएको तथ्य निम्न भविष्य पुराणका श्लोकहरूबाट पुष्टि हुन्छ ।

“बैकर्तनौ विवस्वाद्यं मार्तण्डो भास्करो रवि ॥
लोक प्रकाशकः श्री माष्लोक चक्षुं ग्रहेश्वर ॥
लोक साक्षी त्रिलोकेशः कर्ता हर्ता तमिन्नहा ॥

---

[६२] *ऐजन* ।

[६३] स्थलगत अध्ययनवाट प्राप्त जानकारीको आधारमा ।

[६४] पार्थमणि भट्टराई, “बिस्केटजात्रा–एक अटुट परम्परा”, *कान्तिपुर कोसेली,* (२०५१ वैशाख १०), पृ. क ।

तपन स्तापन श्चैव शुचि स्पताश्व वाहन ॥"

यस उक्तिबाट सूर्यको नाम रवि, भास्करका साथै मार्तण्ड पनि हो भन्ने थाहा हुन्छ ।[६५] भविष्य पुराणकै ७१ अध्यायमा ब्रम्हाजीले गरेको सूर्यको स्तोत्रमा यसरी लेखेको छ ।

"नमः सूर्याय नित्याय खये कार्य भानवे ॥
भास्कराय मतङ्गाय मार्तण्डाय विवश्वते ॥"

अर्थात् नित्य रवि, अर्क, भानु, भास्कर, मतङ्ग, मार्तण्ड तथा विवस्वान नामहरूले युक्त भगवान सूर्यलाई मेरो नमस्कार छ ।[६६] यस श्लोकबाट पनि सूर्यलाई भास्करका साथै मार्तण्ड नामले पनि सम्बोधन गरिन्छ भन्ने स्पष्ट हुन्छ । यसका अतिरिक्त "बृहत पुरश्चर्यार्णव ग्रन्थमा यस्तो श्लोक उल्लेख भएको पाइन्छ ।

"संस्मृत्य भैरवंदेव मार्तण्डारव्य मुभापतिम् ॥
मुलेन मनुनादेवि सुर्यस्य मनुनाथ बा ॥
मायावीजं समुदधृत्य सोडहँ तुषिपरितकम् ॥
मार्तण्ड भैरवङेतं प्रकाश शक्ति संयुक्तम् ॥
एव ते धों ग्नि जायेति दद्यादधं त्रयं सुधी ॥"

यस तन्त्र श्लोकबाट सूर्यलाई मार्तण्ड भैरव भनी सम्बोधन गरेको देखिन्छ । साथै एउटा तान्त्रिक पूजाविधिमा "मर्मनाभि सियतं देवं मायत्री पद भूषितम् ॥
कुटमेव स्थितं देव महामार्तण्ड भैरवम् ॥
.................. श्री सूर्याय नमः ॥" उल्लेखित पाइन्छ ।

यस श्लोकबाट पनि सूर्य मार्तण्ड भैरव भएको पुष्टि हुन्छ ।[६७]

लीलाभक्त मुनंकर्मीले बिस्केट जात्राका लागि लिंगोको रूपमा सोझो र सीधा अनि गोल परेको ५५ हात लम्बाइको सल्लाको रुख हुनु जरुरी छ भन्नु भएको छ ।[६८] तर यदि यो भनाइमा सत्यता छ भने ५५ हातको होइन ५४ हातको हुनुपर्छ किनभने तन्त्रको जगतमा ५४ भैरवको विशेष स्थान छ । एक–एक हातको एक एक भैरवको प्रतीक ५४ भैरव ५४ हातको हुनुपर्छ भन्ने अनुमान गर्न सकिन्छ ।[६९] यस भनाइबाट पनि लिंगो भैरवको प्रतीक हो भन्ने पुष्टि हुन्छ ।

---

[६५] हनुमानप्रसाद पोद्दार, *संक्षिप्त भविष्य पुराण,* गोरखपुर : गीता प्रेस, वि.सं. २०६५, पृ. १३३ ।
[६६] *ऐजन,* पृ. ९७ ।
[६७] नःघभनी, पा.टि.नं. ४८, पृ. ४२–४३ ।
[६८] मुनंकर्मी, पा.टि.नं. २१, पृ. १५ ।
[६९] नःघभनी, पा.टि.नं. ४८, पृ. ४३ ।

अतः उल्लिखित तथ्यहरूका आधारमा भक्तपुरमा मनाइने प्रसिद्ध बिस्केट जात्रा (लिंगो जात्रा) का प्रमुख देवता विश्वनाथ भैरव नै हो भन्ने कुरामा कुनै सन्देह गर्नुपर्ने आवश्यकता रहँदैन । लिंगोको टुप्पामा फहराइने ध्वजा पनि विश्वनाथ भैरवकै ध्वजाहरू हुन् र यी विश्वनाथ भैरव आकाश भैरवको नामले पनि लोकप्रिय छ ।[७०] वास्तवमा ध्वजा अभिलेख लगायत अन्य लिखित प्रमाणहरूमा पनि यी देवतालाई आकाश भैरवकै रूपमा सम्बोधन गरिएको पाइन्छ ।

मार्तण्ड तन्त्रले पनि विश्वकेतु लिंगो महाकाल भैरव वा विश्वनाथ भैरव नै हो भन्ने स्पष्ट पारेपछि अर्थात् लिंगो भैरवको प्रतिमूर्ति मानिएपछि यस जात्राको मह□व अझ बढ्न गएको छ । यस परिप्रेक्ष्यमा जात्राको बेला स्थानीयवासीहरूमा घातुलयमा आधारित यो गीत युगौं युगदेखि निकै लोकप्रिय हुँदै आएको पाइन्छ ।

"सुथः न्हापां दनावने
चुपिंगाले मो ल्हुए ।
भैरव दरशन याए ॥"

अर्थात् वैशाख संक्रान्तिका दिन बिहान सबेरै उठी चुपींघाटमा नुहाइ भैरव दर्शन गर्दछु । यी उल्लिखित विभिन्न तथ्यहरूका आधारमा भैरव नै विश्वकेतु लिंगो हो भन्ने कुरा स्पष्ट हुन आउँछ । यसैकारण सत्रौं शताब्दीमा आएर राजा जगज्योतिर्मल्लले भैरव र उनकी शक्ति भैरवी (भद्रकाली) को रथयात्रा गर्नुपर्ने चलन पनि थपिदिए ।[७१] यसलाई आजको जस्तो विशाल पांग्रा सहितको मन्दिर आकारको रथ अनि रथ गुड्ने पक्की ढुंगाको खोल्सो बनाउने कार्य ने.सं. ८२१ मा राजा भूपतीन्द्र मल्लद्वारा सम्पन्न भए पछि यो जात्रा दुईदिनबाट बढेर नौ दिनको हुन पुग्यो ।[७२]

यसप्रकार विभिन्न विद्वानहरूले बिस्केट जात्राका बारेमा आ–आफ्ना तर्क, परिभाषा, धारणा, मान्यताहरू प्रस्तुत गर्नु भएपनि यथार्थमा बिस्केटलाई देश र जनताको समृद्धि र कल्याण गर्ने अनि व्यापक विश्वशान्तिको कामना गर्दै वर्षेनी आयोजना हुने यात्रा (जात्रा) मान्न सकिन्छ । यसै भएकोले यस जात्राको नाम विश्वयात्रा उपयुक्त रहेको ठहर हुन्छ ।

---

[७०] श्रेष्ठ, पा.टि.नं. १०, पृ. ९६ ।

[७१] रेग्मी, पा.टि.नं. ४६, पृ. ६५२ ।

[७२] राजा भूपतीन्द्र मल्लले ने.सं. ८२१ फागुण कृष्ण द्वादशीको दिनमा सुनको जलप लगाएको तामाको ३ तल्ले छाना राखेर मन्दिर आकारमा ठूला पांग्रा हाली विशाल रथ तयार पारी भैरव–भद्रकालीको रथयात्रा चलाइ देशमा ठूलो रमिता देखाए ।– लीलाभक्त मुनंकर्मी, *नेपालको सांस्कृतिक तथा ऐतिहासिक दिग्दर्शन,* भक्तपुर : भवानी केशरी, वि.सं. २०४१, पृ. १७७ ।

किनकि माथि उल्लिखित तथ्यहरूका आधारमा विश्व नै सूर्य हो । सूर्यले १२ राशि चाहारिंदा एक वर्ष लाग्ने र यही परिक्रमा निर्विघ्नतापूर्वक सम्पन्न हुनुलाई विश्वयात्रा भनिएको हो । अनि सूर्य नै इन्द्र हो र इन्द्र नै भैरव हो भन्ने तथ्य पनि माथि उल्लेख गरिसकिएको छ । सूर्य विश्वब्रम्हाण्डको केन्द्रविन्दु हो । मिश्र, मेसोपोटामिया, युनानी, सिन्धु घाटीका प्राचीन सभ्यताहरू हुन् वा आजको आधुनिक भौतिकवादी संसार जुनसुकै देशकाल, परिस्थितिमा सूर्यको मह□वपूर्ण स्थान रहेको छ । यो बिना संसारको कल्पना सम्म पनि गर्न सकिंदैन । यसर्थ सूर्यलाई विभिन्न धर्मशास्त्रहरूमा भगवानका रूपमा अनि विज्ञानका पुस्तकहरूमा एउटा शक्ति पुंजको रूपमा व्याख्या गरिएको छ । यसको मह□व कतिको रहेछ भन्ने कुरा स्वतः थाहा हुन्छ । यसरी प्राचीनकालदेखि आजसम्म पनि शक्तिदेवको रूपमा सूर्यलाई पूजा, उपासना गर्दै आउनु स्वाभाविक नै लाग्दछ । अन्तरिक्षका सारा ग्रह, ताराहरूलाई देवी देवता मान्दा सूर्य ताराहरूका राजा अर्थात् इन्द्र मान्न सकिन्छ । अनि तिनै इन्द्र भैरव पनि हुन् भन्ने प्रमाण वर्षाका बेला मेघ गर्जिनु, बिजुली चम्किनुलाई भैरवनाद, भैरवको मुखाग्नी बलेको मान्नुबाट थाहा हुन्छ, अर्को अर्थमा यसलाई इन्द्रको वज्रपात पनि मान्ने चलन छ । यसप्रकार मेष संक्रान्तिका दिन उभ्याइने भगवान विश्वेश्वर वा विश्वनाथ भैरवको लिंगो (य:सिं) लाई शास्त्रहरूमा इन्द्रध्वजको प्रतीक मानिएकोले इन्द्र र भैरव एउटै हुन भन्ने तथ्य स्पष्ट हुन आउँछ । यथार्थमा देवराज इन्द्र वैदिककालदेखि वर्षावृष्टिका देवता मानिंदै आएको र अर्कोतिर महादेवको रौद्ररूप भैरवलाई पनि स्थानीय जनजीवनमा सहकालका प्रतीक मानिने भएकाले उद्देश्यगत आधारमा दुवै देवता एउटै हुन् भनिएको हो ।

यसैकारण बिस्केटलाई देश र देशवासीको समृद्धि र कल्याणको साथै व्यापक अर्थमा विश्वमा शान्तिको कामना गर्ने चाडको रूपमा लिन सकिन्छ । साथै यो चाड सौरमास अनुसारको विक्रम संवत्सरको नववर्ष मै मानिने भएको हुनाले यसलाई नववर्षको आरम्भ गर्ने प्रतीकमात्र होइन, बसन्त ऋतुको आगमनको संकेत पनि मान्न सकिन्छ । अनि हिउँदका सुख्खा दिनहरूलाई बिदाइ गरेर जताततै हरियाली छर्ने शुभ लक्षणको रूपमा पनि लिन सकिन्छ । मुख्य मह□वपूर्ण कुरा के हो भने यहाँका अधिकांश बासिन्दाको जीवन खेतीकिसानीमा आधारित छ । कृषि उत्पादनमा आत्मनिर्भर छ । के खाउँ के लाउँको समस्या यहाँ छैन । यही आर्थिक समृद्धिको पृष्ठभूमिमा यहाँ अनेकन आश्चर्यलाग्दो कला संस्कृतिको विकास संभव हुन गएको देखिन्छ । अतः प्रकृतिपूजक यहाँका बासिन्दाहरूद्वारा समयमा पानी परोस्, बालीनाली सप्रियोस्, कतै सुख्खा नलागोस्, रोगब्याधि नफैलियोस्, कुनै किसिमको

दुर्भिक्ष नहोस्, सबैतिर मंगलैमंगल होस् भन्नाका लागि वर्षारम्भ हुनु अघि सहकालका देवता आकाशभैरव (विश्वनाथ भैरव) लाई खुसी र सन्तुष्ट पार्नका लागि लिंगो उभ्याइ जात्रा गर्ने प्रचलन प्रारम्भ भएको देखिन्छ । वस्तुतः यहाँको समाजमा आकाश भैरव, मच्छेन्द्रनाथ र भगवान इन्द्र यी ३ देवतालाई वृष्टि, बादल, वर्षा र सहकालसित सम्बन्धित देवता मानिन्छन् ।

यसैकारण यी त्रिदेवलाई खुसी र सन्तुष्ट तुल्याइ राख्नका लागि वर्षारम्भ देखि वर्षान्तसम्म अर्थात् वैशाखसंक्रान्ति देखि भाद्र शुक्ल पूर्णिमासम्म क्रमशः बिस्केट जात्रा, रातो मच्छेन्द्रनाथको जात्रा अनि इन्द्रजात्रा गर्ने परम्पराको थालनी भएको मान्न सकिन्छ । अनौठो संयोग के भने यी तीनै थरीका जात्राहरू उपत्यकाका तीनवटै अलग–अलग शहरहरूमा फरक–फरक पृष्ठभूमि र शैलीमा प्रचलित भएपनि तीनवटै जात्राहरूको मूल उद्देश्य एउटै रहेको थाहा हुन्छ अर्थात् बेलामा वर्षा भएर कृषि उत्पादन राम्रो होस् र सहकाल फैलियोस् भन्ने नै हो ।

## ५.३ बिस्केट जात्राको ऐतिहासिक पक्ष

### ५.३.१ प्रचलित अनुश्रुति

इतिहास लेखनमा प्रामाणिक अर्थात् पुरातात्विक स्रोत उपलब्ध नभएको अवस्थामा सहायक स्रोतको रूपमा रहेका साहित्यिक स्रोतहरूलाई पनि आधार मानेर इतिहास लेख्नु पर्ने बाध्यता रहन्छ । साहित्यिक स्रोत अन्तर्गत पुराण, वंशावली लगायत किम्बदन्ती, अनुश्रूति, लोककथन आदि रहेका छन् । वास्तवमा मानदेवको चाँगु अभिलेख प्राप्त हुनुभन्दा अघिको नेपालको प्राचीन कालको इतिहास पुराण, वंशावली, अनुश्रूतिहरूमा नै आधारित छन् ।

हाम्रो समाजमा प्रचलित रहेका अधिकांश चाडपर्व, जात्रा उत्सवहरू यहीबेलादेखि प्रारम्भ भएको हो भन्ने बारे प्रामाणिक इतिहास उपलब्ध छैन । यसैकारण अनादिकालदेखि प्रचलनमा रहेका जात्रा उत्सवहरू यही समयदेखि सुरुवात भएको भनी किटान साथ भन्न सकिने अवस्था छैन । यसका लागि किम्बदन्ती, अनुश्रूति, लोककथनहरूलाई नै आधार मान्नुपर्ने बाध्यता रहेको छ । तर सही के हो गलत के हो भन्ने बारेमा विश्लेषण हुनु जरुरी हुन्छ । हरेक समाजमा प्रचलित रहेका चाडपर्व, जात्रा, उत्सवको परम्परा समाजमा घटेका कुनै न कुनै घटनासित सम्बन्धित हुन्छन् । फेरि–फेरि सम्झिन योग्य रहेका घटनाहरूलाई लिएर विभिन्न चाड र परम्पराको थालनी गरिएका हुन्छन् । यसैले संस्कृतिलाई मानवनिर्मित

वातावरणको अंग मानिन्छ ।[७३] वास्तवमा वर्तमानमा धार्मिक, सांस्कृतिक पर्वको रूपमा प्रचलित रहेका अधिकांश जात्राहरू इतिहासको कुनै काल खण्डमा भएका विशेष घटनाको सम्झना गराउन, देवीदेवतालाई शान्त पार्न, मेघ, वर्षा, वृष्टि र सहकालका देवतालाई खुसी पार्न, दैवी अवतारका व्यक्तिहरूको जन्मोत्सव मनाउन, अलौकिक घटना जस्ता सम्झन लायकका घटनाहरूको संस्मरण गर्न, गराउने हेतुले उत्पति भएका हुन् ।[७४] सम्झनायोग्य घटनाहरूले कथाको पनि रूप लिएको हुन्छ, जसलाई किम्बदन्ती, लोककथा र दन्त्यकथा पनि भन्ने गरिन्छ । यस्ता कथाहरू पुस्ता–दरपुस्ता सुनाउँदै सुनिँदै जाँदा अनेक कल्पना वा आवरण जोडिँदै जान्छ र त्यसमाथि धार्मिक वा पौराणिक प्रभाव पनि मिसिएपछि कथाको रूप तिलस्मी हुँदै विश्वास गर्न समेत नसकिने जस्तो अवस्थामा पुग्न सक्छ । परिणामस्वरूप एउटै कथाको पनि स्थानगत र जातिगत भेदले एकभन्दा बढी रूप पनि देखिन सक्छ । ठीक यस्तै, भक्तपुरको बिस्केट जात्राको उत्पतिसित जोडिएका अनुश्रूतिका कथावस्तुहरू आपसमा केही अंशमा मेल खाएपनि अधिकांश मिलेका छैनन र जसबाट घटनाको वास्तविकता बुझ्न कठिनाइ महसुस हुन्छ ।[७५]

लीलाभक्त मुनंकर्मीद्वारा बिस्केट जात्राको उत्पति सम्बन्धमा चार वटा किम्बदन्तीहरू प्रस्तुत गरिए पनि वस्तुतः यस जात्रासित सम्बन्धित दुई वटा अनुश्रूति मुख्य र बहुचर्चित छन् ।[७६] जुन अनुश्रूति नाग वा अजिंगर दम्पतिको दुःखदायी अन्त्यको कथासँग गाँसिएका छन् । यहाँ तिनै अनुश्रूतिहरूलाई सर्वप्रथम उल्लेख गरी त्यसपछि तिनको विवेचना गरिनेछ ।

पहिलो अनुश्रूति अनुसार लिच्छवी राजा शिवदेव द्वितीयको पालामा पूर्वतिरबाट किरातीहरूले हमला गर्दा राजा साँखुको वज्रयोगिनीको शरणमा गए । वज्रयोगिनीले तान्त्रिक शेखर आचाजु (कर्माचार्य) सित सल्लाह लिन भने र राजाले सो बमोजिम गरे । शेखरले आफू बाघ बनी अरु हजार बाघ तयार पारी राती हमला गरी किरातीहरूलाई धपाए र पछि उनैले दिएका अक्षेताद्वारा राजाले बाघलाई हानेपछि बाघ बनेका आचाजु आफ्नो स्वरूपमा आए । आचाजुको यस कार्यबाट खुसी भई राजाले उनलाई सिन्दुर जात्रा गरी घर पठाए । आचाजुकी श्रीमती नररूपाले आफ्ना पतिको पराक्रम थाहा पाई आफूले कहिले नदेखेको अजिंगरको रूप हेर्ने इच्छा गरिन् । आफ्नो अजिंगरको रूप हेरेपछि आफूले दिएको मन्त्र

[७३] एम. जे. हर्षकोविज, *कल्चरल एन्थ्रोपोलोजी,* न्यूदिल्ली : अक्सफोर्ड एण्ड आइ.बी.एच. पब्लिसिङ, ई.सं. १९७४, पृ. ३०५ ।

[७४] एण्डरसन, पा.टि.नं. २०(क), पृ.२६–२७ ।

[७५] प्रधान, पा.टि.नं. १७, पृ. १८ ।

[७६] मुनंकर्मी, पा.टि.नं. २१, पृ.२–१२ ।

गरिएको एक मुठी अक्षेताले हान्न भनी आचाजुले पत्नीलाई भने आफू मन्त्रवाचन गरी तुरुन्तै अजिंगर बने । तर अजिंगरको रूपदेखि डराएकी नररूपा अक्षताले हान्नु पर्ने कुरा बिर्सी भागिन् र अजिंगर बनेका आचाजु तिनले अक्षेताले हानी देली भनी पछि पछि गए । डराएर भागेकी नररूपाको पटुका फुस्केर कस्नको लागि हातमा भएको अक्षेता मुखमा राखी खान पुगिन् र उनी पनि अजिङ्गर बनिन् । यसरी अजिंगर बनेको दम्पति आफ्नो पूर्वरूपमा फर्किन मंन्त्रको गुह्य जानेका राजाले देखुन् भनी दरबारको अगाडि पुच्छरले टेकेर उभिन पुगे । अजिंगरको उपस्थितिबारे राजालाई जानकारी दिंदा हेर्न नगई उनले कुनै हानी नोक्सानी नगर्न मात्र भने । फलतः आचाजु दम्पति निराश भइ योसिंखेलमा गइ भद्रकाली पीठनेर रहेको प्वालमा गइ आत्महत्या गरी मरे ।

त्यसपछि राज्यमा अनिकाल परेर हाहाकार भयो र यसको कारण अजिंगर दम्पतिको मृत्यु हो भन्ने हल्ला चल्यो । यस्तो स्थितिमा दरबारमा सबैले राजालाई शान्ति स्वस्ति गर्ने सल्लाह दिए । सो कामको लागि राजाले उनै आचाजुलाई बोलाउन पठाउँदा कसैले पनि भेटाउन सकेनन् । राजा आफै तिनको घर जाँदा घर खुल्ला नै रहेको देखी पस्दा दुईवटा अजिंगर घस्रेर हिंडेको पद चिन्ह देखी त्यसलाई पछ्याएर जाँदा योसिंखेलको प्वालमा मृत अजिंगर दम्पतिको लास देखे । चोला फेर्न जान्ने आचाजुको गुह्य बुझेका राजाले तिनलाई आचाजु दम्पति नै हो भन्ने कुरा बुझे र राज्यका तान्त्रिकहरूलाई बोलाउँदा पनि केही लागेन र गुरुको मृत्युमा ठुलो शोक मनाए । उनै गुरुको पराक्रम र गुणको बखान कालान्तरसम्म सबैले थाहा पाउन भन्ने उद्देश्यले ती दुवैको लासलाई वर्षको अन्तिम दिन (चैत्र मसान्त) मा योसिंखेलमा लामो काठको लिंगोमा झुण्ड्याई सार्वजनिक प्रदर्शन गर्ने प्रचलनको सुरुवात गरे, जुन पछि गएर बिस्केट जात्रा नामले प्रसिद्ध भयो ।

दोस्रो अनुश्रूति राजकुमारीको नाकबाट निस्केका एक जोडी नागनागिनीलाई एक परदेशी युवकद्वारा मारिएको घटनासित सम्बन्धित छ । यही अनुश्रूति नै बढी तथ्यपूर्ण अर्थात् सत्यको निकट रहेकोले मह□वपूर्ण छ भन्ने भनाइ संस्कृतिविद् स्वर्गीय लीलाभक्त मुनंकर्मीको रहेको छ ।

दोस्रो अनुश्रूति यसप्रकारको रहेको छ – परापूर्वकालमा एउटा प्रतापी राजा थिए, जसकी एउटी राम्री छोरी थिइन् । उनले आफ्नी छोरीको विवाह गरिदिने धेरै प्रयास गरे, तर दुलाहा हुने उम्मेदवार व्यक्तिले एकरात पनि उनकी छोरीसित बिताउन सक्दैनथे । यसैकारण

राजाले आफ्नी छोरीसित एक रात बिताउन सक्ने व्यक्तिलाई अपार धन सम्पति र राज्यसहित छोरीको विवाह गरिदिने उर्दी लगाए । धेरै व्यक्तिले दुलाहा हुन खोजे पनि ती मारिए वा मरे । यसको रहस्य प्रकाशमा आएको थिएन, तर मरेका व्यक्तिको लास जलाउन मुर्दा राख्ने खट र बोक्ने मलामी गुठीको समेत बन्दोबस्त गर्नुपरेको थियो ।

एकदिन अर्को कुनै राज्यको एउटा प्रतापी राजकुमार घुमफिर गर्दै आउँदा आफ्नो समूहबाट छुटिएर घनाजंगलभित्रको बीचमा परे । त्यहीं खोला छेउ एक करुण अवस्थाकी झ्याँक्रो फिजाइ बसिरहेकी जीर्ण वृद्धालाई देखे । राजकुमारले ती वृद्धालाई यसरी एकान्तमा बस्नुको कारण र तिनको परिचय जान्न खोज्दा तिनले राजाकी छोरीको व्यहोरा सुनाइन् । दुलाहाको उम्मेदवारलाई सुतिसकेपछि राजकुमारीको नाकको प्वालबाट एक जोडा सानो सर्प निस्केर ठूलो अजिंगर हुने र तिनले मार्ने गरेको कुरा बताईन् । यसबाट असंख्य युवकहरूको ज्यान गइसकेकोले यस समस्याबाट त्राण पाउन ती वृद्धाले राजकुमारलाई सो स्थानबाट केही पर जाँदा पूर्वतिर एउटा खड्ग (चुपी) पाइने र त्यही खड्गको प्रहारबाट राजकुमारीको नाकबाट निस्कने जोडी अजिंगर धराशायी हुने रहस्य बताइन् । साथै त्यसपछि राजाकी छोरीसित विवाह गरी भाग्य खुल्ने कुरा बताइ वृद्धा अन्तर्ध्यान भइन् । राजकुमारले केही पर पूर्वतिर लाग्दा त्रिवेणी खोला (योसिंखेलको पश्चिमतिरबाट बगेको खोल्सो) मा वृद्धाले भने अनुसार खड्ग फेला पारे र सो लिई राजाकी छोरी माग्न पुगे । दुवै दुलाहा–दुलही राती कोठामा सुत्दा दुलही निदाएको बेला एक जोडा सानो सर्प निस्केर ठूलो अजिंगर भइ राजकुमारलाई डस्न लाग्दा खड्गले दुई टुक्रा पारी काटि दिए । भोलिपल्ट बिहान सधैं झैं नवदुलाहा बनेका राजकुमारको लास अन्त्येष्टी गर्न मुर्दा खट लिई गुठीयारहरू उपस्थित भए । तर राजकुमार जिवित नै रहेको र राजकुमारको बदला एक जोडा अजिंगरको लास मात्र देखियो । साथै अजिंगर दम्पतीले मर्नुभन्दा अघि राजकुमारलाई तिमी बडा पुरुषार्थी रहेछौ । हामीले यस देशमा धेरै पराक्रमी राजकुमारहरूलाई मारिसकेका छौं र अब हामी दुवै एक ठाउँमा मर्न लाग्यौं । हामी मरेपछि हाम्रो पुरुषार्थ देखाउनका निमित्त सबैले देख्ने गरी जात्रा चलाइ दिन अनुरोध गरे । यी सबै कुरा थाहा पाएपछि राजाले उक्त राजकुमार सित छोरीको विवाह गरिदिनुको साथै अजिंगर दम्पतीको लासलाई खटमा राखी जात्रा गरी योसिंखेलमा लगी विसर्जन गरिदिए । राजा हुन पुगेका राजकुमारले राजदरबारमा धेरै ज्योतिषहरू भेला गरी अजिंगर दम्पतिको अनुरोध सुनाए । अन्त्यमा मरेको अजिंगर दम्पतिको लासलाई हरेक वर्ष चैत्र मसान्तका दिन सबैले देख्ने गरी लामो काठ वा लिंगोमा

झुण्ड्याई त्यसको २४ घण्टा पछि लिंगोलाई ढालेर विसर्जन गराउने बन्दोबस्त गरे । यसैलाई पछि गएर बिस्केट जात्रा भनियो ।

### ५.३.२ अनुश्रुति माथि विवेचना

माथि उल्लिखित अनुश्रूति वा किम्बदन्तीहरूमाथि ऐतिहासिक दृष्टिले विवेचना गर्दा दोस्रो भन्दा पहिलो अनुश्रूति वास्तविक घटना हुन सक्ने अनुमान ऐतिहासिक कालक्रमका दृष्टिले गर्न सकिन्छ । यद्यपि लीलाभक्त मुनंकर्मी दोश्रो अनुश्रुतिमा बढी सत्यता भएको दावी गर्नु हुन्छ ।[७७] तर साफल्य अमात्य, सत्यमोहन जोशी, चुन्दा वज्राचार्यज्यूहरूले पहिलो अनुश्रुतिलाई नै प्रकाश पार्नुभएकोले[७८] पहिलो नै सत्यको निकट हुन सक्ने अनुमान गर्न सकिन्छ । किनकि यस अनुश्रूतिमा उल्लेखित घटनाक्रम समय, काल, परिस्थितिसँग मिल्दो–जुल्दो रहेको अनुमान हुन्छ । जस्तो कि अनुश्रूतिमा उल्लिखित लिच्छवीकाल, राजा शिवदेव द्वितीय अनि पूर्वतिरबाट किरातीहरूको आक्रमण जुन छ, यसबारे विवेचना गर्दा प्राचीन नेपालको राजनैतिक इतिहासमा लिच्छवीहरूको आगमनसँगै किरातीहरूको पलायन भएको थियो अर्थात् लिच्छवीहरूसँग मुकाबिला गर्न नसकेर किरातीहरू उपत्यकाबाट भागेर पूर्वतिर लागेका थिए । उपत्यकामा लिच्छवीहरूको शासन छँदा पूर्वी नेपालको तामाकोशी र अरुण कोशीको बीचको भूभागमा किरातीहरूको सामन्त शासन चलेको थियो । यस तथ्यलाई मानदेवको चाँगु अभिलेख लगायत वंशावलीले पनि पुष्टि गर्दछ ।[७९] यसैले अनुश्रूतिमा उल्लिखित पूर्वका किरातीहरूको उपत्यका माथिको हमला आफ्नो गुमेको केन्द्रीय राज्य फेरि फिर्ता लिने उद्देश्यले गरेको हुन सक्छ । यसैले यदि प्राचीन नेपालको इतिहासमा यो घटना (किराती आक्रमण)भएको भएपनि त्यो अनौठो मान्नुपर्ने छैन । जहाँसम्म पूर्वका किरातीहरूको आक्रमणको मुकाबिला वा प्रतिकार गर्ने सवाल छ, त्यसमाथि विवेचना गर्दा आफूभन्दा बलिया शत्रुले आफ्नो राज्यमा आक्रमण गर्न लाग्दा त्यसको प्रतीकार वा प्रतिरोध

---

[७७] मुनंकर्मी, पा.टि.नं. ७२, पृ.२९३ ।

[७८] (क) साफल्य अमात्य, "बिस्केट यात्रा अफ भक्तपुर, थिमी एण्ड बोडे" *खोपृङ,* वर्ष ११, अंक १०, (२०५९), पृ. ६०-६१ ।
(ख) जोशी, पा.टि.नं. १८, पृ. ७५-७६ ।
(ग) बिस्केट जात्रा मान्ने कुरामा विभिन्न किसिमका धारणा पाइन्छन् । जसमध्ये धेरै जसोले विश्वास गरिरहेको धारणा यस्तो छ ।- राजा शिवदेवले तन्त्रविद् शेखर आचार्य र उनकी धर्मपत्नी नररूपाकोको नाममा उनीहरूले आत्महत्या गरेकै ठाउँमा प्रतिवर्ष एउटा विशाल लिंगो गाडी त्यसका टुप्पामा दुई अजिङ्गरका प्रतीक स्वरूप लामो पताका फर्फराएर 'स्मृतिदिवस' मनाउने परम्परा चलाए । सो बिसिक जात्रा अर्थात् बिस्केट जात्राको नामले प्रसिद्ध भयो । - चुन्दा वज्राचार्य, *मध्यकालया छुं घटनावली छगू अध्ययन,* यें: सफूधुकू, ने.सं. ११०७, पृ. २३ ।

[७९] (क) धनवज्र वज्राचार्य, *लिच्छवीकालका अभिलेख,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रि.वि., वि.सं. २०३०, पृ. २३ ।
(ख) धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल (सं.), *गोपालराज वंशावली,* काठमाडौं: नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, पृ.१८ 'ख' पत्र ।

भौतिक वा सैन्य क्षमताले गर्न सकेन भने त्यसस्थितिमा शासक वर्गले दैवी वा तान्त्रिक शक्तिबाट गर्ने परम्परा नेपालमा प्राचीनकालदेखि रहँदै आएको देखिन्छ । गोपाल राजवंशावलीका अनेक ठाउँहरूमा तान्त्रिक देवीदेवताहरू, तान्त्रिक पूजा विधानहरू, तान्त्रिक देव–देवीहरूमा बलि दिएको उल्लेख, दीक्षा, आगम आदि यस्ता कुराहरू परेका छन्, जसको आधारमा तात्कालीन समयहरूमा तन्त्रप्रधान धर्म जनजीवनको अभिन्न क्रियाकलाप भइरहेको तथ्य बुझ्न सकिन्छ ।[८०] वास्तवमा सिद्धि प्राप्त तन्त्र शक्तिको बलबाट यहाँका सिद्ध पुरुषहरूले अनेक जीवहरूको रूप लिन सक्ने तथ्य, जामुना गुभाजु सम्बन्धी रोचक लोककथनहरू[८१], मल्लराजाहरूले तलेजुभवानीसँग पासा खेल्ने[८२], सहकालका देवता मानिएका मच्छेन्द्रनाथलाई कामरूपबाट उपत्यकामा ल्याउँदा भमराको रूपमा ल्याइएको प्रसङ्ग[८३], बिस्केट जात्रा हेर्न आएका मनुष्यरूपी काशीविश्वनाथलाई मन्त्रशक्तिद्वारा यहीं प्रतिस्थापन गरिएको[८४] जस्ता अनेक उदाहरणहरूबाट के कुरा पुष्टि हुन्छ भने तन्त्र सिद्धिमा असंभव भन्ने केही पनि छैन, जे पनि हुन सक्छ भन्ने विश्वास यहाँको तात्कालीन जनजीवनमा रहेको भेटिन्छ ।

यस अनुश्रूतिमा पनि किरातीहरूको मुकाबिला गर्न नसकिने देखेपछि राजा शिवदेव देवी वज्रयोगिनीको शरणमा गएको र देवीकै सल्लाह मुताविक तन्त्रगुरु शेखर आचार्यको तान्त्रिक शक्तिको चमत्कारपूर्ण सहयोगले हमलावर (किरातीहरू) लाई भगाई देश रक्षा गरेको कुरा उल्लेख छ । वास्तवमा देश रक्षाको प्रयोजनार्थ शत्रु उपर विजय प्राप्त गर्ने एक मह□वपूर्ण सुरक्षा माध्यमको रूपमा तात्कालीन शासकहरूले तान्त्रिक विधिको सहारा लिने गरेको कुरा अन्य तथ्यहरूबाट पनि खुल्न आउँछ । जस्तो उदाहरणको रूपमा हेवज्र तन्त्रका प्रवल उपासक पश्चिमका खस शासकहरूलाई लिन सकिन्छ । वज्रयान अन्तर्गतको एक

[८०] श्रेष्ठ, पा.टि.नं. १०, पृ. ७७ ।

[८१] मुनंकर्मी, पा.टि.नं. ७२, पृ. २६१–२६३ ।

[८२] भक्तपुरका राजा जगज्योतिर्मल्लसँग तुलजा भवानी मानिसको रूप लिई सधैं पासा खेल्न आउने गर्थिन् तर पछि राजाले चियो चर्चा गरेकोले दुर्गा लोप भइन् भनेर वंशावलीमा लेखेको पाईन्छ । –*ऐजन,* पृ. १५४ ।

[८३] (क) गोरखनाथका पनि गुरु मच्छेन्द्रनाथलाई ल्याउन भारतको कामरूप कामाक्ष प्रस्थान गरे । मच्छेन्द्रनाथको शरणमा परी समस्या जाहेर गरेपछि उनी नेपाल आउन राजी भएर आफू भमराको रूपमा नेपाल आउने वाचा दिए । उनी आएको थाहा पाएपछि गोरखनाथले आफ्नो गुरुको सम्मानको लागि आसनबाट उठ्दा नागहरू फुत्किएर वृष्टि भएको कुरा वंशावलीमा उल्लेख गरिएको छ । यसरी १२ वर्षसम्म वृष्टि नभएको र उनको आगमनपछि वर्षा भएर जनजीवन सामान्य भएकोले यहाँको समाजमा उनीप्रति आस्था, भक्ति, सम्मान बन्न पुग्यो । –सरिता के.सी., *नेपाली संस्कृतिमा नाथ सम्प्रदायः एक अध्ययन* (अप्रकाशित स्नातकोत्तर तहको शोध प्रवन्ध), नेपाली इतिहास, संस्कृति पुरात□व केन्द्रीय विभाग, त्रि.वि., वि.सं. २०६१, पृ. २९ ।

(ख) सिद्धी ब. रञ्जितकार, *"रथ जात्रा अफ रातो मच्छिन्द्रनाथ"*, एनसियन्ट नेपाल, नं.१४१, (जुन १९९८) पृ.२६ ।

[८४] डानियल राइट, *हिष्ट्री अफ नेपाल,* न्यू दिल्ली : कस्मो पब्लिकेसन्स, ई.सं. १९८३, पृ. १८० ।

प्रसिद्ध तन्त्र मानिएको हेवज्र तन्त्रको मन्त्र पटल अध्यायमा मन्त्रबलद्वारा शत्रु उपर विजय गराउने विधिको उल्लेख पाइन्छ ।[८५]

तन्त्रकै कुरा गर्दा तान्त्रिक रूपबाट राजधानी नगरलाई यन्त्राकार आकृति प्रदान गरी सो यन्त्रका सम्बद्ध घेरामा तान्त्रिक देवीदेवताहरू स्थापना गरिएको तथ्य आज पनि देख्न सकिन्छ । यस्ता देवीदेवताहरूमा अष्टमातृका, दश महाविद्या, भैरव, गणेश, त्रिपुरसुन्दरी, नवदुर्गा आदि प्रमुख हुन् ।[८६] यी देवीदेवतालाई देश रक्षा गर्ने, सहकाल ल्याउने, विपत्तिहरूबाट जोगाउने देवताका रूपमा मान्ने गरिन्छ । वास्तवमा यहाँका हरेक शहर, गाउँ बस्तीहरूमा यसका आ–आफ्नो संरक्षक देवीदेवताहरू रहेको विश्वास गरिन्छ । जसको सम्मानमा वार्षिक जात्राहरू हुने गर्दछन् ।[८७]

यसरी तन्त्रशक्ति मह□वपूर्ण रहेको देखिन्छ तर यस शक्तिको दुरूपयोग हुन जाँदा कसरी एउटा सिद्धपुरुष आफ्नी पत्नी सहित नागनागिनी (अजिंगर, अजिंगरनी) को चोलामा आत्महत्या गरेर मर्न बाध्य भए भनेर यसमा देखाइएको छ, अनि देशरक्षक त्यत्रा महान गुरुको सम्झनामा यो जात्राको चलन सुरु भएको भनिएको छ । तर किम्बदन्ती यथार्थमा किम्बदन्ती नै हुन्छ, जसमा कुनै सत्यता हुँदैन, तर पनि समाजले किम्बदन्ती सम्बन्धी मान्यतालाई चटक्क छोड्न पनि सक्दैन । यसैले यस्ता मान्यताहरू समयको गतिसँगै अघि बढिरहेका हुन्छन् । पिंढी दर पिंढी सुन्दै र सुनाउँदै जाने क्रम चलिरहेको हुन्छ ।

अर्को किम्बदन्तीमा राजकुमारीको नाकको प्वालबाट एक जोडी मसिना सर्प निस्केर भयङ्कर डरलाग्दो अजिंगरको रूप लिने र त्यसले हरेक रात राजकुमारीसँग सुत्न आएका एउटा नवदुलाहा राजकुमारलाई डसेर मार्ने गरेको र यसैक्रममा एकरात राजकुमारी निदाउने बितिकै तिनको नाकबाट निस्केका एक जोडी नागनागिनीलाई नवदुलाहाका रूपमा आएका एक साहसी परदेशी राजकुमारद्वारा मारिएपछि सोही घटनाको सम्झनामा यो जात्रा चलेको भन्ने कथा वर्णित छ र उक्त राजकुमारको नाम भद्रमल्ल भएको र भद्रमल्ल भक्तपुरका राजा भएपछि उनी र उनका उत्तराधिकारीहरू नाग जातिका मल्ल भन्न थालियो भन्ने भनाइ नेपाली सांस्कृतिक पर्व र जात्रा सम्बन्धमा कलम चलाउने विदेशी विद्वान मेरी

[८५] पुरुषोत्तमलोचन श्रेष्ठ, *त्रिपुर र युथुनिमम राजकुल,* भक्तपुर : भक्तपुर नगरपालिका, वि.सं. २०५८, पृ. १८ ।

[८६] *ऐजन* ।

[८७] एण्डरसन, पा.टि.नं. २०(क), पृ. १९४ ।

एम. एण्डरसनको रहेको छ ।[८८] तर भक्तपुरको समग्र इतिहास अध्ययन गर्दा पनि भद्रमल्ल भन्ने राजाको नाम कहीं कतै उल्लेख भएको पाइँदैन ।

यस अनुश्रूतिलाई सतहबाट अध्ययन गर्दा कुनै रोचक दन्त्यकथा जस्तो देखिन्छ तर गहिरिएर अध्ययन गरेको खण्डमा यसले अर्कै कुनै लाक्षणिक अर्थ प्रस्तुत गरेको महसुस हुन्छ । जस्तो राजकुमारीसँग हरेक रात एक जना नयाँ दुलाहाले सुहागरात मनाउने त्यसपछि उसको त्यही रात अन्त्य हुने कुराले तात्कालीन समाजको स्वरूप आजको जस्तो नभई अर्कै अर्थात् मातृसतात्मक रहेको देखिन आउँछ । किनकि पितृसतात्मक समाजले एउटी कुमारी केटी (अनुश्रूतिकी राजकुमारी) ले दिनदिनै पुरुष फेर्ने कार्यलाई सहन सक्तैन । त्यसमाथि केटीको बाबु (अनुश्रूतिमा राजा भनिएको छ) स्वयम्ले आफ्नी छोरीसित रात बिताउन सक्नेलाई अपार धनसम्पतिका साथै आधा राज्य पनि दिने घोषणा गरिएको छ । यहाँ राजाको उल्लेख गरिएपनि मुख्य पात्र राजकुमारी नै रहेको र राजकुमारीको शक्तिको स्रोत नागदम्पति नै रहेकोले यो अनुश्रूति मातृसतात्मक समाजको भन्ने देखाउँछ । संस्कृतिविद् हरिराम जोशीज्यूले पनि यस अनुश्रूतिका आधारमा यस जात्रा सम्बन्धी आफ्नो धारणा यसरी राख्नु भएको छ । पुरातन व्यवस्थाको अन्त्य भई नयाँ व्यवस्था थालनी भएको खुसीयालीमा अर्थात् मातृसत्ताको अन्त्य भएर पितृसत्ता स्थापना भएको खुसीयालीमा यो जात्रा मनाउन थालिएको हो । उहाँका अनुसार प्राचीन समयमा हिमाली भेगका अन्य राज्यहरूमा जस्तै यहाँ पनि नाग जातिको मातृसत्तात्मक अर्थात् स्त्रीको शासन चलेको थियो । स्त्रीको हातबाट शासन सत्ता फुत्काउन अनेक प्रयास भएको, यसका लागि राजकुमारीसँग सुहागरात (जोशीज्यूले महारानी भन्नु भएको छ) बिताउन जाने हरेक पुरुषको मृत्यु हुने र अन्त्यमा राजकुमारीको शक्तिको स्रोतको रूपमा रहेको एकजोडी नागनागिनीलाई एक साहसी परदेशी पुरुषद्वारा मारिएपछि यहाँ पितृसत्ता स्थापना भएको र त्यसैको खुसीयालीमा यो जात्रा मनाउन थालिएको हो । यसरी मातृसत्ताको लासमाथि उठेको पुरुष सत्ताको प्रतिरूप नै बिस्केट जात्रा हो भनिएको छ ।[८९]

तर केदारनाथ प्रधानका अनुसार आफ्नी छोरीको विवाहको घोषणा बाबु (राजा) द्वारा भएकोले यो अनुश्रूति पितृसत्तात्मक समाज कालको देखिन्छ । अर्को कुरा सर्प मार्ने युवकलाई एकान्त जंगलमा देखिएकी वृद्धाले राजकुमारी सम्बन्धी गुप्त रहस्यको जानकारीका अलावा

---

[८८] *ऐजन,* पृ. ४२ ।

[८९] हरिराम जोशी, *पेजेज अफ दि फरगटेन पास्ट,* ललितपुर : सुशीलराम जोशी, ई.सं. १९९८, पृ. ४१ ।

हतियार (खड्ग) प्राप्तिको स्रोत समेत उपलब्ध गरिदिएको उल्लेखले त्यसबेला मातृसत्तात्मक समाजको अन्त्य भइ नयाँ पितृसत्तात्मक व्यवस्थाको विरुद्ध कतै–कतै मातृसत्ताका पक्षपातीहरूको संघर्ष हुँदै गरेको समयकाल भनी अनुमान गर्न सकिन्छ ।[९०] साथै प्रधानज्यूले यस अनुश्रूतिमा वर्णित कथालाई उपत्यकाको आदिम नाग जातिसँग सम्बन्ध देखाइ कथाकी राजकुमारीलाई नागजातिका नायिका मान्नु भएको छ । नाग जातिभित्र संभवतः आन्तरिक संघर्ष भएको, जसमा मारिएका नाग दम्पति एउटा पक्षको र राजकुमारलाई दुलाहा मर्नुको रहस्य र खड्गबारे बताउने वृद्धा अर्को पक्षको अनि नाग जातिका नायिका वा राजकुमारीसित विवाह गर्ने युवक वा राजकुमार र उसको समूह नयाँ जाति वा नागजातिकै पितृसत्तात्मक समाजको पक्षधर समूह हुन सक्छ । यसरी दुई भिन्न समूहका बीच संघर्ष भई एउटा पक्षले राजकुमारीसित मिली अर्को पक्षका विरुद्ध प्रतिरोध संघर्ष चलाएको हुनुपर्छ । यस प्रतिरोधलाई संभवतः अर्को पक्षका वृद्धाले नयाँ जातिका वा विजेता समूहका युवक (अनुश्रूतिमा राजकुमार) लाई पहिलो पक्षको गोप्य कुराको जानकारी अनि हतियार समेत उपलब्ध गराई पहिलो पक्षलाई पराजित गरेको हुनुपर्छ । नयाँ जातिका राजकुमारले समाजको हैकम प्राप्त गरेपछि नागजातिले पुनः प्रतिरोध संघर्ष चलाउने साहस नगरुन् भनेर आतङ्कित पार्न विद्रोहीको गति यस्तै हुन्छ भनी सार्वजनिक प्रदर्शन गरेको जात्रा नै बिस्केट जात्रा हो ।[९१]

यसरी बिस्केट जात्रा सम्बन्धी अनुश्रूति वा आख्यानले आदिम कालमा यहाँ स्त्री राज्य भएको कुराको संकेत गर्दछ । पुरुष वर्गले स्त्रीको हातबाट शासन बागडोर फुत्काउने अनेक प्रयास गरेपनि तिनीहरू बिफल रहे । नाग जातिकी स्त्री नै विजयी रहिन् । तर परिवर्तनशील यस संसारमा कुनै पनि कुरा स्थायी रहँदैन । त्यसो भने झैं अन्त्यमा एक परदेशी युवकद्वारा स्त्री (राजकुमारी वा महारानी) को शक्तिको स्रोतको रूपमा रहेको नागनागिनी मारिएपछि यहाँ मातृसत्ताको अन्त्य र पितृसत्ताको उदय भएको पुष्टि मिल्दछ ।[९२] यसै तथ्यलाई बिस्केट जात्रा सम्बन्धी अनुश्रूतिले स्पष्ट गर्दछ । वास्तवमा प्रागऐतिहासिक कालमा नेपाल उपत्यका पानीले भरिएको एउटा तलाउ थियो, जसलाई नागदह भनिन्थ्यो । यस दहको वरिपरि बस्नेलाई नागजाति भनिन्थ्यो । यी नागहरू कसरी यहाँ आइपुगे भन्दा महाभारतकालतिर भारतमा नाग संहार अभियान चल्दा बासुकी, कर्कट र काली कविलाका नागहरू यतातिर

---

[९०] प्रधान, पा.टि.नं. १७, पृ. १७ ।

[९१] *ऐजन,* पृ.२०–२१ ।

[९२] जोशी, पा.टि.नं. ११, पृ १५–१६ ।

आएर बसेका थिए ।[९३] यसरी उपत्यका जलमग्न तलाऊकै रूपमा रहेको बेला देखि यहाँ नागजातिको बसोबास थियो । कालान्तरमा दहको पानी बगेर बाहिर गएपछि यो ठाउँ बस्ती योग्य भयो र चारैतिरबाट मानिसहरू यता आएर बस्न थाले ।[९४] जे होस् बिस्केट जात्रा सम्बन्धी आख्यानले प्रागऐतिहासिक कालमा नेपाल पनि Amazon Country (मातृसत्तात्मक राज्य) थियो भन्ने संकेत गर्दछ । अन्त्यमा माथि उल्लिखित दुवै अनुश्रूति नागदम्पतीको मृत्यु, तिनको लास, लासलाई सार्वजनिक प्रदर्शन गर्ने स्थल, प्रदर्शन गरिने क्रिया आदि सम्बन्धमा सामन्जस्यता रहेपनि नाग वा अजिंगर दम्पतिको दुःखद अन्त्यको स्वरूप र जात्रा उत्पतिको घटना वा समयकालमा भिन्नता रहेको देखिन्छ । जस्तो– पहिलो अनुश्रूतिमा अजिंगर दम्पतिको अन्त्य आत्महत्याद्वारा भएको छ भने दोस्रोमा खड्ग प्रहारद्वारा भएको देखिन्छ । त्यस्तै अनुश्रूतिकाल पनि पहिलो उत्तरलिच्छवीकालको र दोस्रो आदिमकालको रहेको बुझिन्छ ।

वर्तमान जात्राको दोस्रो अनुश्रूतिसँग केही कुरामा सामन्जस्यता रहेको देखिन्छ । जस्तो – राजकुमारले खड्ग (चुपी) प्राप्त गरेको स्थानलाई हाल चुपींघाट भन्ने गरिएको, जहाँ मेष संक्रान्तिको दिन बिहान सबेरै स्नान गरेपछि मात्र उभ्याइएको लिंगो (विश्वध्वजा) लिंगो उभ्याउने, मलामी जात्रा (भाजँखःचा) टौमढी बहतालबाट योसिंखेलसम्म पुऱ्याउने आदि परम्परा रहेबाट दोस्रो अनुश्रूति यथार्थ हो कि जस्तो लाग्दछ ।

तर उल्लिखित अनुश्रूति (किम्बदन्ती)हरूमाथि जस्तोसुकै तर्कहरू प्रस्तुत गरेर सत्य सावित गर्न खोजेपनि अनुश्रूति अनुश्रूति नै हुन्छ, प्रामाणिक इतिहास हुन सक्तैन । इतिहास निर्माणका लागि लिखित स्रोतहरूको आवश्यकता पर्दछ । तर त्यसो भएपनि समाजले अनुश्रूति वा आख्यान सम्बन्धी मान्यता वा धारणालाई चटक्क छोड्न पनि सक्तैन । यसैले यस्ता मान्यताहरू समयको गतिसँगै अघि बढिरहेका हुन्छन् । पिंढी दरपिंढी सुन्दै र सुनाउँदै जाने क्रम चलिरहेको हुन्छ । अपितु यसको विश्वसनियतालाई मापन गर्ने स्तर मात्र युग अनुसार परिवर्तित हुँदै जान्छ । जस्तो पहिलेको समाज बन्द, अशिक्षित, अज्ञानी,

[९३] मोदनाथ प्रश्रित, “कसरी विकसित भयो नेपाली राष्ट्रियता”, *अन्नपूर्ण पोष्ट,* २०६६ कार्तिक ७ गते शनीबार, पृ. ७ ।

[९४] नाग प्रागऐतिहासिककालीन असभ्य, जंगली जाति थिए । तिनीहरू आर्यहरू भन्दा भिन्न थिए । सर्पलाई देवता मान्ने भएकाले तिनलाई नाग भनिएको हो । प्राचीनकालमा मयूरलाई पूजा पाठ गर्नेलाई मौर्य भनिए झैं तिनलाई नाग भनिन्थ्यो । तिनीहरू उपत्यका वरिपरि रहेको पहाडी गुफा, कुना, कन्दरा अनि नदी वा तालका किनारमा बस्दथे । तिनीहरूका मुख्य खाना गिट्टा, भ्याकुर, जंगली जनावर, चरा, माछा थिए । खेतीपातीको ज्ञान तिनमा थिएन । पछि गोपालवंशीहरू आएपछि मात्र नेपालमा खेतीपातीको चलन सुरु भएको थियो ।– हरिराम जोशी, “दि नागा ट्राइब्स”, *रोलम्बा,* भो.४, नं. १, (जनवरी–मार्च १९८४), पृ. १६–१८ ।

अन्धविश्वासी र रुढिग्रस्त समाज भएकोले यस्ता किम्बदन्ती सम्बन्धी धारणालाई आँखा चिम्लेर स्वीकारेकोले यसले व्यापकता पाउँदै गयो । तर अहिलेको आधुनिक समाज खुल्ला, शिक्षित र कुनै पनि कुरालाई तर्क र तथ्यको आधारमा मात्र विश्वास गर्ने वैज्ञानिक दृष्टिकोण बोकेको समाज भएकोले किम्बदन्ती सम्बन्धी प्रचलित मान्यता सत्य होइन भन्ने धारणा जनसमक्ष आएको थाहा हुन्छ ।

यथार्थमा यो जात्रा नागनागिनी सम्बन्धी जात्रा होइन, जुन तथ्यलाई निम्न आधारमा अझ स्पष्ट पार्न सकिन्छ ।

यसजात्राका सुरुदेखि अन्त्यसम्मका सम्पूर्ण गतिविधिहरूको सुक्ष्म ढंगले अध्ययन, विश्लेषण गर्दा पनि यो जात्रा नागनागिनीसम्बन्धी जात्रा हो भन्ने संकेत कतैबाट मिल्दैन ।

स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनकासाथै लिखित सामग्रीहरूको समेत अध्ययन गर्दा यो जात्रा पूर्णरूपले धार्मिक पृष्ठभूमिमा आधारित तान्त्रिक विधिले सम्पन्न हुने जात्रा रहेको तथ्य स्पष्ट हुन आउँछ ।

यो जात्रा भक्तपुरका प्रमुख देवता भैरवनाथको जात्रा हो । यस कुराको पुष्टि शाह कालीन ध्वजाअभिलेखहरूबाट हुन आउँछ । भैरवनाथमन्दिर टौमढी र लाकोलाछेँस्थित आगमघरमा रहेका वि.सं. १८५४ र वि.सं. २००४ सालका दुईवटा पुराना ध्वजाहरूमा लिंगोलाई स्पष्ट शब्दमा आकाश भैरव र ध्वजालाई वीरध्वजा सम्बोधन गरिएको पाइन्छ । जस्तैः वि.सं. १८५४ मा श्री ५ रणबहादुर शाहले लिंगोलाई चढाएको ध्वजा अभिलेखमा "ओम् स्वस्ति ॥ श्री आकाश भैरवलाई श्री ५ रणबहादुर शाहले वीरध्वजा बनाई चढायूँ" भनेर लिंगोलाई आकाशभैरव भनी सम्बोधन गरिएको छ ।

जात्राकोबेला लिंगोको टुप्पातिर प्रतीकात्मक रूपमा रहेको शिर र हातमा बेरिने ३२ हाते नीलो कपडाले पनि लिंगो भैरवकै प्रतीक  हो भन्ने कुरा थाहा हुन्छ, किनकि भैरवको रूपवर्ण अक्सर गरी नीलै हुन्छ । यसैले भैरवको पूजा गर्दा नीलो वस्त्र चढाउने परम्परा आजपनि पाइन्छ । यताबाट पनि यो जात्रा भैरवकै जात्रा हो भन्ने कुराको पुष्टि हुन्छ ।

भैरवनाथगुठीले नै विश्वध्वज लिंगोजात्रा संचालन गर्दै आएकोले पनि यो जात्रा भैरवकै जात्रा भएको प्रमाणित हुन्छ ।

स्थानीय रूपमा प्रख्यात देवदेवीको जात्रा भएको कारणले गर्दा स्थानीय बासिन्दाको धार्मिक भावनामा कुनै चोट नपुगोस् भनेर राज्यले यस जात्राको संचालन कठिन र चुनौतिपूर्ण स्थितिमा पनि संचालन गर्दै आइरहेको तथ्य सर्वविदित छ ।

यदि यो जात्रा नागनागिनी सम्बन्धी जात्रा भएको भए नागनागिनीको प्रतीक मानिएको जोडी ध्वजामा त्यस सम्बन्धी कुनै संकेत पाइनुपर्ने थियो, तर ध्वजामा त्यस्तो कुनै चिन्ह भेट्टिंदैन । बरु त्यसमा आकाश भैरवको मूर्तिचित्र अंकित रहेको पाइन्छ ।

अतः यी तथ्यहरूबाट माथि उल्लिखित किम्बदन्ती सम्बन्धी मान्यता सत्य होइन भन्ने कुरा स्पष्ट हुन्छ ।

## ५.४ बिस्केट जात्राको परम्परा

नेपाल उपत्यकामा बिस्केट जात्राको परम्परा कहिलेदेखि प्रारम्भ भयो भन्ने सम्बन्धमा विभिन्न विद्वानहरूबीच फरक–फरक मत रहेको पाइन्छ । कसैले प्रागऐतिहासिककालदेखि, कसैले लिच्छवीकालदेखि, कसैले पूर्वमध्यकालदेखि यस जात्राको परम्परा प्रारम्भ भएको भन्ने मानी आएका छन् । हरिराम जोशी, केदारनाथ प्रधान, निरीश नेपाल आदि विद्वानहरूले यस जात्राको परम्परा प्रागऐतिहासिककालमै प्रारम्भ भएको मानेका छन् । विशेष गरेर नेपाल उपत्यका पानीको तलाउको रूपमा छँदै त्यस वरपर बस्ने नागजातिकै पालादेखि अर्थात् समाजको स्वरूप मातृसत्तात्मक रहेको बेलादेखि यसको प्रचलन सुरु भएको मान्ने गरिन्छ । माथि नै उल्लेख गरी सकिएको छ कि वरिष्ठ संस्कृतिविद् हरिराम जोशीज्यूले यस जात्रालाई मातृसत्ताको अन्त्य र पितृसत्ताको स्थापनाको प्रतिरूप मानेका छन् । अझ उहाँले बिस्केट जात्रा सम्बन्धी आख्यानले प्रागऐतिहासिक कालमा नेपाल नागजातिको मातृसत्तात्मक राज्य थियो अर्थात् संप्रभुशक्ति स्त्रीको हातमा थियो भनी स्पष्ट पार्नु भएको छ ।[९५] त्यस्तै इतिहासविद् केदारनाथ प्रधानले यस जात्रालाई प्राचीन नागजातिसँग सम्बन्धित भएको भन्दै मातृसत्ता अन्त्य भई पितृसत्ता भर्खर–भर्खर स्थापना भएको र त्यस सत्ताको विरुद्ध कतै–कतै मातृसत्ता पक्षधरहरूले विद्रोह गर्दै गरेको बेला विद्रोहीहरूको गति यस्तै हुन्छ भनी देखाउन वा आतङ्कित पार्न मारिएका नागदम्पतिको लासलाई एउटा लामो काठको टुप्पोमा झुण्ड्याएर सार्वजनिक प्रदर्शन गरिएको परम्परा नै बिस्केट जात्रा हो भनेका छन् ।[९६] मानवशास्त्री निरीश नेपालले यस जात्राबारे केही उल्लेख

[९५] हरिराम जोशी, "बिस्केटजात्रा", *खोपृङ*, वर्ष ३, अंक ३, (वि.सं. २०५१), पृ. १९ ।

[९६] प्रधान, पा.टि.नं. १७, पृ. १७ ।

नगरेता पनि नेपाल उपत्यका नागदहको रूपमा छँदा त्यस वरपर बस्ने बासिन्दा नागजातिका थिए भनेका छन् ।[९७] कालान्तरमा उपत्यकामा मानव बस्तीको विकास भएपछि नागवंश समाप्त हुन गएको देखिन्छ ।[९८]

लीलाभक्त मुनंकर्मीज्यूले बिस्केट जात्राको परम्परा परापूर्वकाल अर्थात् लिच्छवीकालदेखि भएको हो भनी मानेका छन् ।[९९] यस अर्थमा भक्तपुरले राजधानी शहरको रूपमा प्रतिस्थापित हुनु भन्दा अघिदेखि नै यो जात्रा प्रचलित हुँदै आएको थियो भन्ने अनुमान हुन्छ । नील गुत्सो र वनहार्ड कोल्वरले पनि भक्तपुर नगरको रूपमा स्थापित हुनुभन्दा अघिदेखि नै यो जात्रा चलेको थियो भन्ने उल्लेख गरेका छन् ।[१००] तर कसै–कसैले भक्तपुर राजधानी नगरको रूपमा स्थापित भएपछि मात्र यस जात्राको प्रचलन सुरु भएको मानेका छन्, अर्थात् भक्तपुर शहर जति पुरानो हो यो जात्राको प्रचलन पनि त्यति नै पुरानो हो ।[१०१] यसबाट भक्तपुर शहरको स्थापनासँगै यस जात्राको प्रचलन सुरु भएको देखिन्छ । डि.आर. रेग्मीले आफ्नो संग्रहमा रहेको एउटा संस्कृत वंशावलीलाई उद्धृत गर्दै यस जात्राको चलन १६ औं शताब्दीका राजा विश्वमल्लको पालादेखि सुरु भएको[१०२] र रथयात्राको चलन भने १७ औं शताब्दीका जगज्योतिर्मल्लको पालादेखि सुरु भएको मानेका छन् ।[१०३] यसका साथै उहाँका अनुसार भक्तपुरमा १६ औं शताब्दीदेखि पाइएका धेरैजसो अभिलेखहरूमा शक र नेपालसंवत् सँगसँगै विक्रमसंवत् पनि उल्लेख गरिएको

---

[९७] गोपालवंशीहरू यहाँ आउनु भन्दा अघि देखि यहाँ नागजातिहरू रहने गर्दथे । त्यतिखेर मातृसतात्मक स्वरूपको समाज थियो । त्यतिखेर सातगाउँले जात्रा निक्कै प्रसिद्ध थियो । ती सात गाउँहरूमा सतुङ्गल, बोसिगाउँ, मच्छेगाउँ, टौखेल, कीर्तिपुर, लोहँकोट, नागम (पांगा) आदि काठमाडौँदेखि दक्षिण पश्चिमी उच्च भेग पर्दथ्यो ।– निरीश नेपाल, "अ पीप इन्टु आवर पास्ट", *रोलम्बा,* भोलुम ३, नं. १, (जनवरी–मार्च १९८३), पृ. ३२ ।

[९८] नेपाल महात्म्य अनुसार भगवान श्रीकृष्णले नागहरूका मुखिया बानासुरलाई परास्त गरेर दहको पानीलाई बाहिर पठाएर यो ठाउँलाई बस्ती योग्य बनाए । त्यसपछि उनीसंगै आएका गोपालहरूले यहाँ बस्ती बसाए । यसरी गोपालहरूको प्रादुर्भावसंगै नागवंश समाप्त हुन पुगेको देखिन्छ ।– जोशी, पा.टि.नं. ८९, पृ. ३८ ।

[९९] मुनंकर्मी, पा.टि.नं. २१, पृ. १ ।

[१००] यसको प्रमुख आधार भैरवको रथयात्रा प्रारम्भ हुने मूलस्थान टौमढीचोकलाई लिन सकिन्छ, जुन समग्र नगरको केन्द्र वा मध्यविन्दु हो । यद्यपि बिस्केटको क्रममा यो रथजात्रा मल्लकालदेखि मात्र सुरु भएको मानिन्छ । तर त्यसो भएपनि यसले के देखाउँदछ भने टौमढी चोकदेखि दक्षिणी पश्चिमी भेगलाई तल्लो टोल (क्वने) र त्यसदेखि उत्तर पुर्वीभेगलाई माथिल्लो टोल (थ:ने) भन्ने गरिन्छ । जात्राको क्रममा सम्पूर्ण नगर थने र कोने गरी २ भागमा बाँडिन्छ । रथयात्राको क्रममा दुवैतिरका बासिन्दाले रथलाई अगाडि र पछाडिबाट तानेर आ–आफ्नो इलाकातिर लाने प्रतिस्पर्धापूर्ण प्रयास गर्दछ । त्यसबेला भक्तपुरवासीहरूमा थने र क्वनेको स्थानीय भावना तीव्र रूपमा देखा पर्दछ । यसबाट भक्तपुर नगरको रूपमा स्थापित हुनुभन्दा अघि यो दुई प्रमुख गाउँहरूमा विभाजित थियो र यो जात्रा पनि त्यसैबेला देखि प्रचलित थियो भन्ने देखिन्छ ।–नील गुत्सो र वर्नहार्ड कोल्वर, *भक्तपुर,* वेसवडेन: कमीसन्स भर्लाज फ्रान्ज स्टेनर, ई.सं. १९७५, पृ.२० र ४८–५० ।

[१०१] (क) लक्ष्मी श्रेष्ठ, *बिस्केट जात्रा,* (स्नातकोत्तर तहको शोध प्रबन्ध), नेपाली इतिहास, संस्कृति तथा पुरात□व केन्द्रीय विभाग, त्रि.वि., कीर्तिपुर, वि.सं.२०५१, पृ २७ ।
(ख) बरगती, पा.टि.नं. २०(ख), पृ. १८४ ।

[१०२] रेग्मी, पा.टि.नं. ४०, पृ. ६५० ।

[१०३] *ऐजन,* पृ. ६५२ ।

पाइन्छ ।[१०४] यसबाट तात्कालीन समयमा भक्तपुरमा विक्रमसंवत्को पनि प्रचलन रहेको बुझिन्छ । त्यस्तै भाषा वंशावलीमा यो जात्रा जगज्योतिर्मल्लको पालादेखि सुरु भएको भनिएको छ ।[१०५] इतिहासविद् सूर्यबिक्रम ज्ञवालीज्यूले पनि भादगाउँको प्रसिद्ध बिस्केट नामको जात्राको प्रारम्भ जगज्योतिर्मल्लले गरेका हुन् भनी भन्नुभएको छ ।[१०६] तर धेरै मानिसहरू यो जात्रा मल्लकाल भन्दा अघिदेखि चलिआएको भनी विश्वास गर्दछन् । अनुश्रूति, जनभावना र जात्रासम्बन्धी क्रियाकलापहरूको विचार गर्दा पनि यो जात्रा प्राचीनकाल देखि चलिआएको अनुमान हुन्छ ।[१०७] एकथरी वंशावलीमा राजा यक्षमल्लको समयदेखि भक्तपुरमा यो जात्राको प्रचलन सुरु भएको भन्ने उल्लेख गरिएको छ । परन्तु त्यो भनाइ तात्कालिन प्रमाणहरूबाट पुष्टि हुँदैन । यक्षमल्ल आफैले राखेको पशुपति ताम्रपत्रमा "विश्वसंक्रान्ति कोन्हु चतामंदे त्यवछिकेन द्वाको छोडाव येंने"(विश्वसंक्रान्तिका दिन चतामधि ४ माना चामलले भए जति पकाएर चढाउनु) भन्ने उल्लेख भएबाट वैशाखसंक्रान्तिलाई विश्वसंक्रान्ति भनेर विश्वजात्राको अस्तित्वलाई मान्यता दिएको स्पष्ट हुन्छ । त्यस्तै वि.सं. १४९८ को यक्षमल्लकै टौमढी टोलको अभिलेखमा "विश्वजात्राकोन्हु" भनेर बिस्केटजात्रालाई लक्ष्य गरी त्यसबेला गर्नुपर्ने कार्य तोकिएको देखिन्छ ।[१०८] यसबाट परापूर्वकालदेखि प्रचलित यो जात्रा मध्यकालमा आइपुग्दा राजा एवं प्रजाका लागि मह□वपूर्ण चाड एवं पर्वको रूपमा रहेको थियो भन्ने थाहा हुन्छ । हरिराम जोशीज्यूले उपत्यकाका प्रायःजसो जात्राहरू चान्द्रमान अनुसार हुने भएको तर अपवादको रूपमा यो बिस्केट जात्रा भने सौर्यमान अनुसार मनाइने परम्पराले यो जात्राको सुरुवात कतै नेपालमा विक्रमसंवत्को प्रचलनसँगै भएको होइन भन्ने प्रश्न गर्न सकिन्छ भन्नु भएको छ । यस हिसाबले यो जात्राको परम्परा नेपालमा ईश्वी संवत्को १२ औं शताब्दीदेखि चलेको देखिन्छ ।[१०९] पुण्यरत्न वज्राचार्यले यो जात्रा ३९१-९२ वर्ष पुरानो मानेका छन् ।[११०] तीर्थलाल नःघभनीज्यूले विश्वजात्रा भनेको लिंगो जात्रा हो र यो जात्रा ने.सं. ४१४ (वि.सं.१३५३) मा राजा अनन्तमल्लका पालादेखि

---

१०४ *ऐजन,* पृ. ६५० ।

१०५ लम्साल, पा.टि.नं ७, पृ. ५४ ।

१०६ सूर्यविक्रम ज्ञवाली, *नेपाल उपत्यकाको मध्यकालीन इतिहास,* काठमाडौं : रोयल नेपाल एकेडेमी, वि.सं. २०१९, पृ. १०५ ।

१०७ प्रजापति, पा.टि.नं. १६, पृ. २७ ।

१०८ नयनाथ पौडेल, *राजा यक्षमल्ल र उनको समय,* विद्यावारिधि शोधग्रन्थ, त्रि.वि., मानविकी तथा सामाजिक शास्त्र संकाय, वि.सं. २०६६, पृ. २८८ ।

१०९ वि.सं. ११८९ र १२४० अर्थात् ने.सं.२ ५२ र ३०३ मा लिखित रत्न करण्डिका तथा इतिहास समुच्चय नामका हस्तलिखित ग्रन्थहरूको प्राप्तिले उपर्युक्त अनुमानमा सघाउ पुऱ्याएको छ । -जोशी, पा.टि.नं. ९५, पृ. १९ ।

११० वज्राचार्य, पा.टि.नं. १९, पृ. ३ ।

चलिआएको हो भनेका छन् ।[१११] गोपाल धौवन्जारले बिस्केट जात्राको परम्परा मल्लकालीन सशक्त शासक यक्ष मल्लको पालादेखि सुरु भएको भन्दै यक्ष मल्लले वरपरका राज्यहरूमाथि विजय प्राप्त गरेपछि त्यस खुसीयालीमा यो जात्रा मनाउन थालिएको हो भनेका छन् ।[११२]

त्यस्तै काशीनाथ तमोटज्यूले गोपालराजवंशावलीमा बिस्केट जात्राको उल्लेख नपरेको हुनाले यो जात्रा पछिल्लो समयमा आएर मात्र प्रचलित हुन आएको मान्नु हुन्छ । वहाँका अनुसार गोपालराज वंशावली राजा जयस्थिति मल्लको पालामा राजधानी भक्तपुरमा बसेर लेखिएको हुनाले यदि त्यसबेला यो जात्रा प्रचलित भएको भए अवश्य पनि यसको उल्लेख गोपाल राजवंशावलीमा हुने थियो । जबकि यसमा पाटनको मच्छेन्द्रनाथजात्रा, कान्तिपुरको इन्द्रजात्रा लगायत अन्य स्थानहरूका जात्राहरूको उल्लेख छ ।[११३] तर गोपालराज वंशावलीमा बिस्केटवारे उल्लेख नभए पनि अर्वाचिन वंशावलीहरूमा भने यसवारे उल्लेख गरिएको पाइन्छ ।[११४]

यसप्रकार भक्तपुरको प्रसिद्ध जात्रा बिस्केटको प्रचलन कहिलेदेखि प्रारम्भ भएको हो भन्ने सम्बन्धमा विद्वानहरू बीच फरक–फरक धारणा रहेको देखिन्छ । कसैले प्राग ऐतिहासिककालदेखि, कसैले प्राचीन (लिच्छवी) कालदेखि, कसैले पूर्वमध्यकाल आदि समय सीमा अनुमान गरेर यस जात्राको परम्परा सुरु भएको मानी आएका छन् । तर हालसम्मको अध्ययनबाट के कुरा स्पष्ट भइसकेको छ भने बिस्केट जात्रा नागनागिनी सम्बन्धी जात्रा होइन यो जात्रा विश्वनाथ भैरवको जात्रा हो । यसैले यस जात्रालाई विश्वयात्रा, विश्वध्वज जात्रा आदि भनिएको छ । जहाँसम्म यस जात्राको परम्परा कहिलेदेखि सुरु भयो भन्ने प्रश्न छ, त्यस सम्बन्धमा निम्न लिखित तथ्यहरू प्रस्तुत गर्न सकिन्छ ।

नेपाल अनादिकालदेखि हिमालय पर्वतको काखमा अवस्थित रहेको एउटा सुन्दर शान्त र पवित्र देवभूमि हो । हिमालय पर्वत नै भगवान शिवजीको बासस्थानका साथै क्रीडास्थल पनि भएकोले शिवजीले बेला–बेलामा अनेक रूप धारणा गरी लीला गरेको वर्णन हाम्रा धर्मग्रन्थ तथा पुराणहरूमा उल्लेख भएको पाइन्छ ।[११५] बिस्केट जात्राका प्रमुख देवता

---

[१११] तीर्थलाल नःघभनी, "टौमढीका भैरव", *अभिलेख,* वर्ष १७, अंक १७, (वि.सं.२०५६), पृ. ५१ ।

[११२] धौबन्जार, पा.टि.नं. ८, पृ. ४१-४२ ।

[११३] सँस्कृतिविद् काशीनाथ तमोटबाट मिति २०६६/७/२१ गते प्राप्त जानकारीको आधारमा ।

[११४] हरिभक्त खोंजुश्रेष्ठ, *धुलिखेलको साँस्कृतिक सर्वेक्षण प्रतिवेदन,* कीर्तिपुर : त्रिभुवनविश्वविद्यालय, अनुसन्धान महाशाखा, वि.सं. २०४३, पृ. ७८ ।

[११५] नेपाल महात्म्य तथा हिमवत्खण्ड जस्ता पौराणिक ग्रन्थ अनुसार भगवान शिवजीले मृगको रूपमा क्रीडा गरेको वन भएकोले नै पशुपतिनेरको जंगललाई मृगस्थली भनिएको हो भन्ने थाहा हुन्छ । त्यस्तै किरातकालमा शिवजीलाई किरातहरूका कुलदेवता मानिन्थ्यो । आज पनि पशुपतिनेर किरातेश्वर महादेवको लिंग रूप जुन विद्यमान छ, त्यो स्पष्टतः किरातसँग सम्बद्ध रहेको ज्ञात हुन्छ । -जगदीशचन्द्र रेग्मी, *नेपालको धार्मिक इतिहास,* काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३०, पृ. १–२ ।

भैरवनाथ पनि शिब कै एक रूप हो । विशेष गरेर भयावह, विध्वँसक र उग्ररूपको शिवलाई भैरव भनिन्छ ।[११६] भैरव शिवकै एक रूप हो भन्ने सम्बन्धमा अनेक पौराणिक कथाहरू प्रचलित पाइन्छ । जसको वर्णन सम्बन्धित अध्यायमा गरिएको छ । शिवलाई प्रमुख देवता मान्ने शैव सम्प्रदायहरूमा पनि विशेष गरेर वीर शैवहरू तान्त्रिक विधिबाट लिंगो पूजा गरी विश्वेश्वर वा विश्वनाथ भैरवको आराधना गर्दछन् । वीर शैवहरूका प्रमुख देवता विश्वेश्वर वा विश्वनाथ भैरव हुन् । यसर्थ नेपालमा बिस्केट जात्राको परम्परा पनि वीर शैव सम्प्रदायहरूको प्रादुर्भाव सँगै भएको भन्ने जान्न सकिन्छ । र यो परम्परा लिच्छवीकाल विशेष गरेर अंशुबर्माकै पालादेखि लोकप्रिय थियो भन्ने थाहा हुन्छ । किनकि लेलेको शिवदेव र अंशुवर्माको संवत् ५२६ (वि.सं. ६६१) को अभिलेखमा विश्वेश्वर देवताको उल्लेख भएको पाइन्छ ।[११७] यसका अतिरिक्त भैरवनाथलाई प्रमुख देवता मान्ने पाशुपत कापालिक वा मुण्डश्रृंखलिक सम्प्रदाय पनि एक हो । पाशुपत कापालिकहरूको अवस्था लिच्छवीकालमै उच्च रहेको र त्यसबेला तिनीहरूले राजकीय समर्थन समेत प्राप्त गरेको तथ्य अंशुबर्माको संवत् ३२ को सांगा अभिलेखबाट पुष्टि हुन्छ । उक्त अभिलेखमा मुण्डमालाधारी रौद्ररूपी महादेव अथवा भैरवनाथको स्तुति गरिएको उल्लेख पाइन्छ ।[११८] वास्तवमा कापालिकहरूमा शिवलाई नै भैरवको रूपमा मान्ने, भैरवको पूजा उपासना गर्दा मान्छेको खप्पर, मान्छेकै रगत र सुराले गर्ने परम्परा रहेको देखिन्छ । अनि भैरवको शक्तिको रूपमा भैरवीको पनि पूजा गरिन्थ्यो ।[११९] कापालिक पाशुपतहरू भैरवनाथको उपासना गर्ने हुँदा अंशुवर्माले भारतको प्रयागसम्म पुगी तन्त्रोत्त विधिबाट भैरव ल्याई आफ्नो दरबार नजिक स्थापना गरेको अनुश्रूति वंशावलीमा पाइन्छ ।[१२०] यिनीहरूको मूल विशेषता मुण्डमाला लगाउने भएकोले तान्त्रिक स्वरूप थाहा हुन्छ । यिनको उल्लेख जिष्णु गुप्तको पालाको छत्रचण्डेश्वर अभिलेखमा पनि भएको छ ।[१२१] मुण्डमाला लगाएका शिव र भैरवका असंख्य मूर्तिहरू उपत्यकामा यत्रतत्र देख्न सकिन्छ । जसमध्ये हनुमानढोकाको कालभैरव, इन्द्रचोकको महादेव, किलागलको शिव, भक्तपुर सुकुलढोकाको भीमसेनस्थानको खोपाको भैरवमूर्ति,

---

[११६] श्रेष्ठ, पा.टि.नं. १०१, पृ. ३१ ।

[११७] वज्राचार्य, पा.टि.नं. ७९, पृ. २८३ ।

[११८] *ऐजन*, पृ. ३३६ ।

[११९] जगदिशचन्द्र रेग्मी, “नेपालमा पाशुपत सम्प्रदायः एक अध्ययन”, *नेपाली संस्कृति*, अंक उल्लेख नभएको, वि.सं. २०४७, पृ. ८ ।

[१२०] नयनाथ पौडेल, (सं.) *भाषा वंशावली, भाग १*, काठमाडौँ : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२०, पृ. ८४ ।

[१२१] वज्राचार्य, पा.टि.नं. ७८(क), पृ. ४२७ ।

भक्तपुर मिनिबस पार्कमा रहेको महाकाल भैरवको मूर्ति प्रसिद्ध छन् ।[122] यसरी नेपालमा भैरवनाथलाई मान्ने परम्परा प्राचीनकालदेखि नै रहेको तथ्य उल्लिखित शैव सम्प्रदाय र तिनका गतिविधि सम्बन्धी अभिलेख, वंशावली र मूर्तिहरूबाट थाहा हुन्छ ।

यसका अतिरिक्त लिच्छवीकालका अभिलेखहरूमा ध्वज गोष्ठीहरूको उल्लेख यत्रतत्र पाइएको आधारमा त्यसबेला यहाँ ध्वजा उत्थान गरी जात्रा गर्ने प्रचलन लोकप्रिय रहेको, जसमध्ये विश्वयात्रा (विश्वध्वजयात्रा) पनि एक थियो भन्ने जानिन्छ । संस्कृतिविद् पुरुषोत्तमलोचन श्रेष्ठले पनि लिंगो खडा गरी ध्वजोत्थान गरिने प्राचीन प्रमुख जात्राहरूमा इन्द्रजात्रा, हाँडीगाउँको जात्रा र भक्तपुरको विश्वजात्रालाई उदाहरणको रूपमा लिन सकिन्छ भन्नु भएको छ ।[123]

विश्वजात्रा वा बिस्केटलाई विश्वध्वज जात्रा पनि भनिने गरेको[124] र नेपालमा ध्वजा उत्थान गरी जात्रा गर्ने चलन निक्कै पुरानो रहेको तथ्य प्राप्त लिच्छवीकालीन अभिलेखहरूको आधारमा थाहा पाइन्छ ।[125] शिवदेव, अंशुवर्माको संवत् ५२० को खोपासी अभिलेखबाट द्वारोद्घाटनयात्रा, कैलाशयात्रा आदि शैवयात्राहरू चलेका थिए भन्ने बुझिन्छ ।[126] शिवदेव, अंशुवर्माकै संवत् ५२६ को लेले अभिलेखमा अनेक नामका गोष्ठीको साथै ध्वज गोष्ठीको पनि उल्लेख हुन आएको छ ।[127] र ध्वजाको बन्दोबस्तका लागि ध्वजगोष्ठी बनेको आधारमा लिंगोमा ध्वजा फहराई जात्रा गर्ने चलन त्यसबखत लोकप्रिय थियो भन्ने देखिन्छ । अंशुवर्माको संवत् ३० को हाँडीगाउँ अभिलेखमा जात्रालाई राम्ररी संचालन गर्न ध्वजमनुष्य (राजकीय ध्वजा बोक्ने मानिस) लाई २ पुराण २ पण दिने भनिएको छ ।[128] त्यस्तै नेपालमा अहिलेसम्म पाइएका मुद्राहरूमा सबैभन्दा प्राचीन मुद्रा

---

[122] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[123] श्रेष्ठ, पा.टि.नं. ४५, पृ. ४ ।

[124] राष्ट्रिय अभिलेखालयमा संग्रहित हस्तलिखित ग्रन्थहरू, ज्योतिष शास्त्रको पंचाङ्ग पात्रो लगायत ध्वजा अभिलेखहरूमा यस जात्रालाई विश्वयात्रा, विश्वध्वजजात्रा आदि भनी उल्लेख गरिएको छ ।

[125] (क) नेपालमा अहिले सम्म प्राप्त भएका अभिलेखहरूमा सबैभन्दा पुरानो अभिलेख लिच्छवी राजा मानदेव प्रथमको संवत् ३८६ को चाँगुनारायणको अभिलेख मानिन्छ । अभिलेख कुँदिएको शिलास्तम्भलाई गरुडस्तम्भ भनिन्छ । किनकि यस स्तम्भको टुप्पोमा मन्दिरतर्फ हात जोडेर स्तुति गरिरहेको गरुडको मूर्ति आसिन छ । राजा मानदेवले पूर्व र पश्चिमका सामन्त शासकहरूको विद्रोहलाई दमन गरेर फर्केर आएपछि आफ्नी आमा राज्यवतीका साथ हर्षोल्लासका साथ चाँगुनारायणमा आएर आफ्नो विजय वर्णन भएको गरुडध्वज स्थापना गरे । –वज्राचार्य, पा.टि.नं. ७९, पृ. २७ । (ख) विश्वध्वजा जस्तै गरुडध्वजा स्थापना गरेर विजय उत्सवका साथ जात्रा गर्ने चलन त्यति बेलै थियो भन्ने तथ्य यसबाट पनि पुष्टि हुन्छ ।

[126] *ऐजन*, पृ. २७४ ।

[127] *ऐजन*, पृ. २८३ ।

[128] *ऐजन*, पृ. ३०२ ।

मानाङ्क मुद्रा भएको र त्यस मुद्राको एकातर्फ श्री मानाङ्क लेखिएको र अर्कातर्फ सिंहले ध्वजा समातेको चित्र अंकित रहेको छ, त्यस्तै चित्र अंशुबर्माका मुद्राहरूमा पनि भेट्टिन्छ ।[१२९] यसबाट पनि त्यसबेला ध्वजा स्थापना गरी जात्रा गर्ने चलन प्रचलित रहेको थाहा हुन्छ ।

वैदिक कालमा देवताहरू कतै लामो यात्रामा प्रस्थान गर्दा वा कुनै युद्धमा जाँदा आफू सवार रथको पार्श्व भागतिर ध्वजा फहराएर जाने चलन रहेको पाइन्छ । यसरी ध्वजा फहराउनुको मुख्य अभिप्राय शत्रु परास्त गरी विजय श्री प्राप्त गर्नु अथवा सर्वत्र शान्तिको कामना गरी यात्रा सफल पार्नु आदि रहेको देखिन्छ ।[१३०] यसरी वैदिककालदेखि नै सर्वत्र मंगल र शान्ति स्थापनार्थ ध्वजा उत्थान गरी उत्सव गर्ने परम्परा रहेको पृष्ठभूमिमा मनुको गौतमी तन्त्रमा समेत यस विश्वकेतु वा विश्वध्वजा जात्राको उपादेयताबारे वर्णन गरिएको छ ।[१३१] यसआधारमा भक्तपुरको प्रसिद्ध जात्रा बिस्केटको परम्परा वैदिककालदेखि रहेको बुझ्न सकिन्छ । तर त्यसो भएतापनि लिखित र ऐतिहासिक प्रमाणहरूका आधारमा हेर्ने हो भने यस जात्राको प्रचलन लिच्छवीकालको उतरार्द्धदेखि मात्र प्रारम्भ भएको मान्न सकिन्छ । किनकि ध्वजाजात्राको प्रबन्ध मिलाउने “ध्वजगोष्ठी” र ध्वजोत्थान गर्ने “ध्वजमनुष्य” शब्दको उल्लेख लिच्छवीकालीन अभिलेखहरूमा भएको पाइन्छ । ध्वजोत्थान गरी उत्सव मनाउने परम्पराको प्रचलन त्यसबेलादेखि नै रहेको तथ्य यताबाट थाहा हुन आउँछ ।

यसरी लिच्छवीकालदेखि प्रारम्भ भएको यस जात्रालाई मल्लकालमा आउँदा अझ भव्यता र सजधजका साथ मनाउन थालिएको देखिन्छ । विशेष गरेर राजा जगज्योतिर्मल्लको पालामा आएर यस जात्रालाई अझ भव्यताका साथ मनाउन यसमा भैरव–भद्रकालीको रथजात्रा समेत समावेश गरी दुई दिनबाट लम्ब्याएर नौ दिनसम्म चल्ने जात्रामा परिणत गरियो । यसैले कतै–कतै यस जात्रालाई जगज्योतिर्मल्लले प्रारम्भ गरेपनि भनिएको पाइन्छ ।[१३२] तर वास्तवमा यो कुरा सत्य होइन ।

तात्कालीन घटनाक्रमलाई अध्ययन गर्दा मल्लकालीन सशक्त शासक यक्षमल्लको मृत्युपश्चात् उनका छोराहरूको कलहपूर्ण नीतिले गर्दा शक्तिशाली उपत्यका राज्य तीनवटा

---

[१२९] हरिराम जोशी, *उत्तर प्राचीन कालीन मुद्रा,* काठमाडौं : साझा प्रकाशन, वि.सं. २०३३, पृ. २२ ।

[१३०] नेपालको उत्तरी हिमाली भेकका बौद्धमार्गी लामाहरूका गुम्बा, घ्याङ, चैत्यजस्ता पवित्र स्थान वरिपरि लामो बाँसको लिंगो गाडी त्यसको टुप्पोदेखि फेदसम्म बौद्ध लामा तन्त्रसँग सम्बन्धित विभिन्न शुभ चिन्ह अंकित लामो ध्वजा फहराउने चलन आज पनि देख्न सकिन्छ । ध्वजा फहराउनुको मुख्य अभिप्राय दुष्ट आत्माहरू दुषित वायु भइ वरिपरि आउन नसकोस् भन्ने हो । यसरी ध्वजा फहराउनु कुनै पनि धर्ममा शुभ नै मानिन्छ ।

[१३१] “नेपाल वर्षक्रिया”, राष्ट्रिय अभिलेखालय, हस्तलिखितग्रन्थ, माइक्रोफिल्म रिल नं. बी. ४३७/१५ पत्र संख्या १ ।

[१३२] लम्साल, पा.टि.नं.७, पृ. ५४ र ज्ञवाली, पा.टि.नं. १०६, पृ. १०५ ।

स्वतन्त्र राज्यहरूमा विभाजित हुनपुग्यो । यसरी उपत्यकाको विभाजन पश्चात् तीनवटै राज्यहरूमा आपसी शत्रुता पनि बढ्दै गयो । यसैको फलस्वरूप यी राज्यहरूबीच विभिन्न क्षेत्रमा प्रतिस्पर्धा बढ्न थाल्यो । जसमध्ये सांस्कृतिक प्रतिस्पर्धा पनि एक थियो । यसै सन्दर्भमा काठमाडौँ उपत्यकाका दुईवटा राज्यहरू कान्तिपुर र पाटनमा प्रख्यात जात्राहरू क्रमशः इन्द्रजात्रा र मच्छेन्द्रनाथ जात्राको प्रचलन धेरै पहिले देखि थियो । तर उपत्यका विभाजन पश्चात् भक्तपुर राज्यको आफ्नो त्यस्तो कुनै छुट्टै भव्य रथयात्रा थिएन । भक्तपुर राज्यका लागि यो प्रतिष्ठाको कुरो थियो । अतः भक्तपुर राज्यका तात्कालीन राजाहरूले आफ्नो राज्यमा पनि त्यस्तै एउटा छुट्टै तर भव्य रूपको जात्रा संचालन गर्ने प्रबन्ध मिलाउन थाले । यसका लागि राज्यभित्र परम्परादेखि चल्दै आएको विश्वध्वज जात्रालाई राजकीय जात्राको रूपमा स्वीकारी यसमा भैरव–भद्रकालीको रथयात्रा गर्ने परम्परा समेत समावेश गरेर बिस्केट जात्रालाई विस्तृत रूप प्रदान गरे ।[१३३] यस कार्यमा विशेष गरेर विश्वमल्ल, जगज्योतिर्मल्ल, भूपतीन्द्रमल्ल आदि राजाहरूको नाउँ उल्लेखनीय रहेको पाइन्छ ।

यसबाट परम्परादेखि प्रचलित हुँदै आएको विश्वनाथ भैरवको विश्वध्वज जात्राको मह□व अझ बढ्न गएको देखिन्छ । कसरी भने विश्वध्वज (लिंगो) जात्राको चार दिन अघिबाट भैरव भद्रकालीको रथयात्रा प्रारम्भ गरी विश्वध्वज (लिंगो) जात्राको चार दिन पछि गएर भैरव भद्रकालीको रथयात्राको समापनसँगै सम्पूर्ण बिस्केट चाड समाप्त हुने परम्पराले विश्वनाथ भैरवको प्रतीक विश्वध्वजा (लिंगो) लाई नै समग्र जात्राको केन्द्रीय र मह□वपूर्ण स्थान दिएको थाहा हुन्छ ।

हुन पनि चैत्र मसान्तको दिन साँझपख विश्वध्वजोत्थान जात्रा सम्पन्न भएपछि अर्थात् लिंगो ठड्ने बित्तिकै त्यस खुसीयालीमा त्यसै रात टोल–टोलबाट गणेश, इन्द्रायणी, वाराही आदि सम्पूर्ण देवदेवीहरूलाई मूलदेवगृहबाट खटजात्रा गरी सम्बन्धित पीठहरूमा लगेर राखिन्छ । भोलिपल्ट मेष संक्रान्तिका दिन तलेजु मूलचोकमा जोगीचक्र पूजा (घासापालु), दुमाजुदेवी जात्रा, इन्द्रायणीदेवीलाई जात्रा गरी पीठबाट लायकू स्वर्णद्वार सामुन्ने पुऱ्याइन्छ । त्यसपछि विश्वध्वज जात्रा विसर्जन पश्चात् पनि मूल नगरभित्र र बाहिर विभिन्न स्थानहरूमा अनेक देवदेवीका जात्राहरू दिनदिनै हुने गर्दछ । यो क्रम "द्यः थाँहा बिज्याकेगु" अर्थात् भैरवनाथ मूलदेवगृह प्रवेश नगरेसम्म भइरहन्छ ।

---

[१३३] रेग्मी, पा.टि.नं. ४०, पृ. ६५२ ।

**निष्कर्ष**

बिस्केट जात्राका प्रमुख देवता विश्वनाथ भैरव वा आकाश भैरव भक्तपुरवासीहरूका आराध्यदेव हुन भन्ने देखिन्छ । उनी बुद्धि, बल, ऐश्वर्यका प्रतीक हुन् । साथै समग्र भक्तपुरकै संरक्षक देवता पनि हुन् ।[१३४] यसैले भक्तपुरमा जतिपनि चाडपर्व, जात्राहरू छन् तिनीहरूमा भैरवको पूजा वा जात्रा अनिवार्य रूपले समावेश हुन्छन् ।[१३५] जस्तो कि भक्तपुरका जात्राहरू– गाईजात्रा, इन्द्रजात्रा, दशैंको पायो (खड्ग) जात्रा, नवदुर्गाको माछा मार्ने जात्रा, फागु महोत्सव आदि सबै जात्रा उत्सवहरूमा भैरवनाथको भूमिका महत्वपूर्ण रहेको पाइन्छ अर्थात् भैरवलाई अनिवार्य रूपमा पूजाआजा गरेपछि मात्र त्यस्ता जात्राको समापन हुने गर्दछ । उदाहरणको रूपमा बिस्केट जात्रामा भैरवको रथारोहण (द्यः थाँहा बिज्याकेगु) सँगै सम्पूर्ण बिस्केट जात्रा समाप्त हुने, गाईजात्राको दिन अपरान्ह ५:०० बजेतिर लाकोलाछेंबाट भैरवको गाई घुमाउन ल्याएपछि उक्त दिनको जात्रा समाप्त हुने, इन्द्रजात्राको पछिल्लो दिन टौमढी टोलबाट "पुलु भैरव" नगर परिक्रमा गराएपछि जात्रा समाप्त हुने, विजया दशमीको दिन श्री नवदुर्गा गणको कालभैरवले टौमढी टोलको समुङ्गा भैरवको प्रसाद ग्रहण गरी तलेजु भवानीले दर्शन भेट गरेपछि पायो जात्रा समाप्त हुने गर्दछ । त्यस्तै फागु महोत्सवको अन्तिम दिन दतात्रयचोकको भीम भैरवको जात्रा सम्पन्न भएपछि फागुको पर्व समाप्त हुने गर्दछ ।[१३६] यसरी भैरवनाथको सम्मान नगरीकन यहाँ कुनै पनि जात्रा उत्सवहरूको समापन गरिदैन । यसैले नगरको मध्यविन्दु (माभ्ग) मा पर्ने गरेर उनको मन्दिर निर्माण गरिएको छ ।[१३७] उनी उपत्यकाका सबभन्दा पुराना भैरवहरूमध्ये एक मानिन्छन् ।[१३८] उनी सम्बन्धी असंख्य किम्बदन्तीहरू यहाँ प्रचलित छन् । जसमध्ये उनको शिर छेदन गरी यहीं प्रतिस्थापन गरिएको किम्बदन्ती निकै लोकप्रिय छ । यसैले काशी विश्वनाथको शिर छैन, भक्तपुरको भैरवनाथको शरीर छैन भन्ने कहावत यहाँ बहुप्रचलित छ । यसबाट काशी विश्वनाथ नै भक्तपुरको भैरवनाथ हो भन्ने थाहा हुन्छ । भक्तपुरवासीहरू वर्षेनी भैरवनाथको पूर्ण दर्शन गर्न काशी जाने चलन रहेबाट पनि यस कुराको पुष्टि हुन्छ ।

---

[१३४] सत्यनारायण प्रजापति, "भैरव र भक्तपुर", *रोलम्बा,* भोलुम ११, नं. २ (ई.सं. १९९१), पृ. २४ ।

[१३५] जोशी, पा.टि.नं. ३७, पृ. ३ ।

[१३६] प्रजापति, पा.टि.नं. १३४, पृ. १९ ।

[१३७] लम्साल, पा.टि.नं. ७, पृ. ५२ ।

[१३८] ज्ञानेन्द्र बहादुर श्रेष्ठ, *काठमाडौं उपत्यकाका केही महत्वपूर्ण चाडपर्वहरू–एक अध्ययन,* (अप्रकाशित स्नातकोत्तर तहको शोधप्रबन्ध), इतिहास केन्द्रीय विभाग, त्रि.वि., कीर्तिपुर, ई.सं. १९७८, पृ. ११ ।

मल्लकालमा एकपटक यी भैरवले रिसाएर विध्वंस मच्चाउन थाले । राजा भूपतीन्द्रमल्लले आफ्ना गुरु पुरोहितहरूको सल्लाह अनुसार भैरवको मन्दिर अगाडि एक शक्तिदेवी (सिद्धी लक्ष्मी)को मन्दिर स्थापना गरी भैरवलाई शान्त पारेका थिए । उक्त मन्दिर अद्यावधि पाँच तल्ले मन्दिरको नामबाट प्रसिद्ध रहेको छ ।[१३९]

वस्तुतः एउटै वाक्यमा भन्नुपर्दा शान्ति, समृद्धि र सहकालका देवता श्री ३ आकाश भैरव वा विश्वनाथ भैरव वा टौमढी टोलको भैरवनाथलाई खुसी र सन्तुष्ट तुल्याई राख्नका लागि उनकै सम्मानमा वर्षेनी भक्तपुरमा बिस्केट जात्रा मनाउने परम्परा चलि आएको हो ।

[१३९] *ऐजन* ।

# अध्याय छ

# जात्राका प्रमुख देवीदेवता र पूजाका विधिविधान

## ६.१ परिचय

बिस्केट भक्तपुरका स्थानीय जनसमुदायले नौ दिनसम्म विविध सांस्कृतिक क्रियाकलाप गरेर धुमधामले मनाइदै आइरहेको भक्तपुरको एउटा प्रख्यात जात्रा हो । बिस्केट जात्राका प्रमुख देवीदेवता र विधिविधानहरूलाई सूक्ष्मरूपले अध्ययन विश्लेषण गर्दा यो जात्रा मानव मात्रको सुख, शान्ति, समृद्धिका निम्ति मात्र नभएर समग्र जीव र जगतकै कल्याण अथवा विश्वशान्तिका लागि मनाउने गरिएको हो भन्ने व्यापक र गहन अर्थबोध हुन आउँछ । वैदिक परम्पराबाट पृथक रही विशुद्ध तान्त्रिक पद्धति अनुरूप जात्राका प्रमुख देवदेवीहरूलाई गरिने अनुष्ठानहरू शास्त्रीय परम्परा, नेवारी रीतिरिवाज, मौलिक परिवेश आदिमा आधारित रहेको हुनाले यस जात्रालाई नेपालको मात्र नभएर सम्पूर्ण दक्षिण एशियाकै एउटा उत्कृष्ट र अनुपम संस्कृतिको रूपमा प्रस्तुत गर्न सकिन्छ । भैरवनाथ, उनका बाहन बेताल र भगवतीले बलि लिने कुरा हिन्दु समाजमा स्वीकार्य मान्न सकिएपनि गणेश लगायत अष्टमातृका गणले दोपाया, चौपाया जीवको बलि लिने परम्परा भारतवर्षमा कहीं पनि भेटिंदैन । तर बिस्केट जात्राको अवसरमा गरिने विधिविधानहरूमा प्रमुख देवीदेवता लगायत जात्रामा निस्कने सबै देवीदेवतालाई भोग बलिसहित न्याङ सम्हेय्बजी[1] चढाएर पूजा–आराधना गर्ने चलन भक्तपुरको बिस्केट जात्राको मौलिक सांस्कृतिक विशेषता हो ।

यस जात्राका समग्र विधिविधानलाई विचार गरेर हेर्दा यसमा निम्न अनुसार तीन पक्षहरू रहेको देखिन आउँछ ।

---

[1] सक्नेले जीव बलिसहित नसक्नेले केवल सम्हेय् बजी मात्र चढाएर देवदेवीको पूजा गर्ने चलन यहाँ व्यापक रूपमा चलेको पाइन्छ । किनकि यहाँको तान्त्रिक पूजापद्धतिमा विधिसम्मत ढंगले पूजा गर्दा सर्वप्रथम सम्हेय् चढाउनु आवश्यक हुन्छ । सम्हेय्मा मूलरूपले पाँचवस्तुहरू स्या:बजी (भुटेको चिउरा), कालो भटमास, अदुवा, छोयला (मासु) र मदिरा अनिवार्य रूपमा हुनैपर्छ । यी पाँच वस्तुहरू हाम्रो जीवनसँग सम्बन्धित छन् । कसरी भने हाम्रो जीवन पृथ्वी, जल, तेज, वायु र आकाश गरी पंचत□वबाट बनेको छ । सम्हेय्लाई पनि पंचत□वकै प्रतीक अर्थमा लिन सकिन्छ । जस्तो कि पृथ्वी त□वको रूपमा यसमा मासु राखिन्छ, किनकि मानव शरीर पनि मृत्युपश्चात् माटो (पृथ्वी) मा मिल्दछ । त्यस्तै जल त□वको रूपमा अदुवालाई राखिन्छ किनकि अदुवामा पानीको भाग महिनौ महिनासम्म रहिरहन्छ । अनि तेज त□वको रूपमा मदिरालाई राखिन्छ । मदिराले मानिसको तात्ने क्षमता वृद्धि गर्छ । वायु त□वको रूपमा कालो भटमासलाई राखिन्छ । भटमास ज्यादा खायो भने पेटमा वायु गर्छ । त्यसपछि सम्हेय्मा सबभन्दा बढ्ता राख्नु पर्ने वस्तु स्याबजी (चिउरा) हो । यसलाई आकाशत□व मानिन्छ । यसप्रकार सम्हेय् बजीलाई पंचत□वात्मक जीवको रूपमा राखी शक्ति साधना गर्ने अर्थमा देवतालाई चढाउने तान्त्रिक सिद्धान्त हो । सक्नेले साँच्चिकै दोपाया, चौपाया पशुलाई मारेर बलि चढाउने गर्छन् भने नसक्नेले सम्हेय्बजीलाई नै जीव सम्झेर देवतालाई चढाउने गर्छन् । यसरी यहाँको तान्त्रिक पूजा पद्धतिमा सम्हेय्बजीलाई आवश्यक त□व मानिन्छ ।– बलदेव जुजु, *वंघ: त्वा:या आजु द्य: व यें देय,* काठमाडौं : इन्द्र जवाहर सहयोग गुठी, ने.सं. ११३०, पृ. ३९–४० ।

पहिलो – विश्वध्वज जात्रा (लिंगो उभ्याउने जात्रा)

दोस्रो – भैरव–भद्रकालीको रथ जात्रा ।

तेस्रो – अष्टमातृका लगायत अन्य स्थानीय देवदेवीहरूको खटजात्रा ।

विश्वध्वज जात्राको प्रमुख उद्देश्य विश्वशान्ति, मानव कल्याण, सुख, समृध्दि, शत्रुनाश आदि हुन् । खगोल विज्ञान र ज्योतिष शास्त्र मुताविक विषुवत् संक्रान्तिका दिन सूर्य पृथ्वीको भूमध्यरेखामा (विषुवत् रेखामा) पर्न आउने भएकोले उक्त दिन विश्वध्वजा फहराएर जात्रा गर्नाले विश्वशान्ति, लोककल्याण र समृद्धि प्राप्त हुने, शत्रु नाश हुने जस्ता शास्त्रीय मान्यता रहेको पाइन्छ ।[२] यहाँका नेवारहरूका अन्य सबैजसो जात्रा उत्सवहरू चान्द्रमान अनुसार सञ्चालन भइरहेको सन्दर्भमा यो बिस्केट जात्रा एउटा भने सौर्यमान अनुसार निर्धारित दिनमा सञ्चालन गर्नुको मुख्य तात्पर्य पनि यही नै हो भन्ने देखिन्छ । सौर्यमानको विक्रम संवत्सँग जोडिएको हुनाले यस जात्राले एउटा वर्षको अन्त र अर्को वर्षको प्रारम्भ भएको संकेत दिन्छ ।[३] यद्यपि लिंगो उभ्याएर जात्रा गर्ने चलन अन्यत्र पनि पाइन्छ[४] तर रथयात्राका साथ ध्वजा फहराएर जात्रा गर्ने चलन भक्तपुर एक ठाउँमा बाहेक अन्त कहीं पनि पाईंदैन ।[५] यस जोडी ध्वजालाई किम्बदन्ती अनुसार कहिले नागनागिनीको प्रतीक कहिले तान्त्रिक आचाजु शेखर र उनकी पत्नी नररूपाको प्रतीक मानिए पनि[६] ध्वजा अभिलेखहरूमा भने विश्वध्वजा, वीरध्वजा आदि भनिएको पाइन्छ,[७] जसको अर्थ विश्वको ध्वजा भन्ने हुन्छ, जुन ध्वजा फहराउनाले विश्वमा शान्ति छाउने, सबैतिर कल्याण हुने विश्वास गरिन्छ । यथार्थमा विश्वध्वजामा अंकित आकाशभैरवको मूर्ति चित्र, अष्टमंगल लगायत अन्य शुभचिन्हहरूले पनि उपरोक्त तथ्यलाई पुष्टि गर्दछ ।[८] यसरी विश्वशान्तिको कामनाका निम्ति यो जात्रा गरिएको भन्ने थाहा हुन आउँछ ।

---

[२] “वर्ष क्रिया” नेपाल राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ माइक्रोफिल्म नं. ४३७/१५–पत्रसंख्या १ ।

[३] रवर्ट आइ.लेभी, *मेसोकज्म,* दिल्लीः मोतीलाल बनारसीदास पब्लिसर्स, ई.सं. १९९२, पृ. ४६६ ।

[४] सौर्यमान अनुसार नयाँवर्षको दिन केवल लिंगो मात्रै वा ध्वजासहितको लिंगो उभ्याउने परम्परा दक्षिण एशियामा अन्यत्र पनि पाइने गर्थ्यो । वैदिक युगमा देवर्षि नारदका साठी पुत्रहरू मध्ये पहिलो पुत्र जन्मेको खुसीयालीमा यो ध्वजा रोपण गरिएको थियो र अर्को भनाई अनुसार यसै दिन त्रेतायुगमा राम र सीता लङ्कामा रावणलाई पराजित गरेर अयोध्या फर्केको खुसीयालीमा त्यहाँका जनताले ध्वजा रोपण गरेका थिए । तर यी भनाईहरू वास्तविक विश्लेषण हुन सक्दैनन् । वास्तवमा सबैतिर सुख, शान्ति र सौभाग्य फैलियोस् भन्ने कामनाका लागि नै लिंगो उभ्याइन्छ ।– एम.एम अण्डरहिल, *दि हिन्दु रेलिजिअस यअर,* लण्डन : अक्सफोर्ड युनिभर्सिटी प्रेस, ई.सं. १९२१, पृ. ४१–४२ ।

[५] (क) योगी नरहरिनाथ (सं.), *देवमाला वंशावली,* काठमाडौँ : श्रीपीरहन्त क्षिप्रानाथ योगीराज, वि.सं. २०१३, पृ. ५३ ।
(ख) देवीप्रसाद लम्साल(सं.), *भाषा वंशावली, भाग २,* काठमाडौँ : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ५४ ।

[६] लेभी, पा.टि.नं. ३, पृ. ४७८ ।

[७] वि.सं. २०६४ चैत्र १६ गते रोज ७ (शनीवार) का दिन प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाले चढाउनु भएको ध्वजामा विश्वध्वजा भनिएको छ भने त्यस अघिका श्री ३ रण बहादुर शाह, श्री ५ त्रिभुवनले चढाएका ध्वजाहरूमा वीरध्वजा भनी उल्लेख भएको छ । – प्रत्यक्ष अध्ययन अवलोकन र लीलाभक्त मुनंकर्मीबाट प्राप्त जानकारीको आधारमा ।

[८] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा । वर्तमान वीरध्वजामा उत्कीर्ण अभिलेखको मूल अंश परिशिष्ट नं. ज को चित्र संख्या ४३ र ४४ मा दिइएको छ ।

भैरवभद्रकालीको रथजात्रा गर्नुको मुख्य तात्पर्य स्थानीय नेवार लोक जीवनका हरेक क्रियाकलापसँग सम्बन्धित रही आएका तान्त्रिक देवता भैरव र तिनकी शक्ति भैरवी वा भद्रकालीलाई खुसी र प्रसन्न पार्नु हो । यी देवता आफ्ना गाउँठाउँका संरक्षक र सहकालको प्रतीकका रूपमा पुज्य छन् । वास्तवमा तान्त्रिक भूमि भक्तपुरमा नवदुर्गा, अष्टमातृकाभैंm भैरवभैरवीको पनि सम्मानित स्थान छ । आराध्यदेव भैरवनाथको जात्रा गर्नाले अतिवृष्टि वा अनावृष्टिको भय नहुने, समयमा पानी पर्ने, कृषि बाली सप्रिने, चारैतिर उत्साह उमंग छाउने विश्वास स्थानीय मानिसहरूमा पाइन्छ ।[९] भैरवनाथ स्वयं महादेवको प्रतिरूप हुन् । पानी माग्ने यात्रामा आकाशतिर हेरेर "हरहर महादेव पानी दे" भन्ने चलन यहाँ अझै पनि छ । त्यस्तै आकाशमा मेघ गर्जनु, बिजुली चम्कनुलाई भैरवनाद भएको, भैरवको मुखाग्नी बलेको प्रतीकात्मक अर्थमा लिइन्छ ।[१०] यसरी भैरवलाई वृष्टिबादल र सहकालका देवताको रूपमा मान्ने गरिन्छ । त्यसैगरेर भक्तपुरमा परापूर्वकालदेखि आजसम्म पनि भद्रकालीलाई नकिंजु अजिमा अर्थात् मुख्य अजिमाको रूपमा पुजिन्छ । देश र देशवासीलाई आपत् विपद्बाट सुरक्षा दिने संरक्षक देवी भएकाले उनलाई नकिंजु अजिमा भनिएको हो ।[११] बिस्केटको अवसरमा भैरवसँगै उनको पनि भव्य जात्रा गरिन्छ । जात्रामा सुरुदेखि अन्त्यसम्मका प्रमुख विधिविधानमा उनी मुख्य देवीका रूपमा देखा पर्छिन् । भक्तपुरको लोकजीवनमा के पनि भनाइ पाइन्छ भने भैरवको रथजात्रा र विश्वध्वज जात्रा हुनुभन्दा धेरै पहिलेदेखि भक्तपुरमा नकिंजु अजिमा (भद्रकाली) को जात्रा हुने गर्दथ्यो । कालान्तरमा आएर मात्र विश्वध्वजा जात्रा, भैरवको रथजात्रा, गणेश लगायत अन्य देवदेवीका जात्रा गर्ने प्रचलन सुरु भएको हो ।[१२] यसबाट बिस्केट जात्राको मूलस्रोत आदिमकालको मातृसत्तात्मक समाजका नकीं अजिमा (मुख्य नईकेनी बज्यैआमा) भद्रकाली हुन भन्ने थाहा हुन आउँछ । भक्तपुरको जात्रा हेर्न आएका काशीका विश्वनाथ भैरवलाई यहाँका तान्त्रिक आचाजुले चिनेर शिर छेदन गरी यहीं प्रतिस्थापन गरेको अनुश्रुतिले पनि यस तथ्यलाई बल पुऱ्याउँदछ । यो अनुश्रुति सम्बन्धी वर्णन अगाडि गरिएको छ । जे होस् जात्राका बेला सम्पूर्ण नगरवासीहरू क्षेत्रगत आधारमा दुई प्रतिस्पर्धी समूहमा विभाजित भएर रथलाई अगाडि र पछाडिबाट

---

[९] भैरव भजन गुठीका ८२ वर्षीय सदस्य लाकुलाछें निवासी नारायणदास घेमोसुसँग २०६५/१२/२५ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[१०] रमापतिराज शर्मा, "हामीकहाँका भैरव–एउटा अध्ययन", *पासुका,* वर्ष ३, अंक १० (असार २०५६), पृ. ५ ।

[११] बिस्केट चाडको दौरानमा भद्रकाली विशेषतः सम्मानपूर्वक नकीं अजिमा (अजिमाहरू मध्येकी मुख्य अजिमा) कहलाउँछिन् ।– लेभी, पा. टि.नं. ३, पृ. ७४० ।

[१२] भैरव गुठीका मूल नाइके वर्ष ७७ का ज्ञानबहादुर छुकाङसंग मिति २०६७/४/२४ गते भैरवनाथ मन्दिर भित्रै लिएको अन्तर्वार्ताबाट प्राप्त जानकारीको आधारमा ।

तानेर आ–आफ्नो इलाकातिर लाने कोशिस गर्दछन् ।[१३] यसरी नगरवासीहरू बीच हुने यस धार्मिक जात्रामा जीत, हार जुन पक्षको भएपनि यसले सामाजिक सद्भाव, आपसी मित्रता, स्वस्थ मनोरन्जन, धर्म र पुण्यको प्राप्ति अनि मौलिक र परम्परागत संस्कृतिको जगेर्ना जस्ता उद्देश्यमूलक सन्देश दिन खोजेको आभास हुन्छ ।

बिस्केटका क्रममा नगरका विभिन्न स्थान वा टोलहरूमा परापूर्वकालदेखि स्थापना भएका अष्टमातृका लगायत अन्य देवीदेवताको देश र देशवासी (नगर र नगरवासी) लाई संरक्षण प्राप्त भई नै राखोस् भन्ने उद्देश्यले ती विविध देवदेवीका खटजात्राहरू पनि गर्ने गरिन्छ ।[१४] विशेष गरेर यस्ता स्थानीय जात्राहरू चैत्र मसान्तदेखि वैशाख ४ गतेसम्म हुन्छन् । यस्ता जात्राहरू गर्नुको मुख्य उद्देश्य पनि धर्म र पुण्य प्राप्त गर्ने, मनोरन्जन लिने र सामाजिक सद्भाव र मित्रता कायम गर्ने रहेको थाहा हुन आउँछ ।

यसप्रकार बिस्केट जात्राका अवसरमा भक्तपुरका असंख्य देवीदेवताहरूको पूजापाठ, भजनकीर्तन, नाचगान, जात्राहरू जस्ता विधिविधानहरू परम्परागत तान्त्रिक पद्धति र ज्योतिष सिद्धान्त बमोजिम सम्पन्न गर्ने गरिन्छ । तर विचारणीय कुरा के देखिन आउँछ भने यस अवसरमा भक्तपुरका प्रसिद्ध देवीदेवताहरू जस्तो तलेजु, नवदुर्गा, महादेव, नारायण, सरस्वती आदिका पूजापाठ र जात्राहरू हुँदैनन् ।[१५] बिस्केट जात्रामा मह□वपूर्ण भूमिका खेल्ने प्रमुख देवीदेवताहरू निम्न अनुसार रहेका पाइन्छन् ।

## ६.२ प्रमुख देवीदेवता

### ६.२.१ भैरव

बिस्केट जात्राका प्रमुख देवता भैरवनाथ हुन्, जसलाई टौमढी टोलको आकाशभैरव वा काशीका विश्वनाथ भैरव पनि भन्ने गरिन्छ । तन्त्र, रहस्य र दैवी शक्तिले सम्पन्न भैरव अति शक्तिशाली देवता हुन्, जसले देवाधिदेव महादेवको उग्र र डरलाग्दो स्वरूपको

---

[१३] जात्राका बेला देखिने यस परिदृश्यलाई एकजना पश्चिमेली विद्वानले “अथाह सागरमा तैरिरहेको पानीजहाज” को संज्ञा दिएका छन् ।

[१४] पूर्वमध्यकालका राजा आनन्ददेव प्रथमले गाउँ नै गाउँले भरिएको भक्तपुरग्रामलाई विस्तार गरी बाह्र हजार घर धुरी भएको “भादगाउँ” शहर निर्माण गर्दा देशको सुरक्षालाई ध्यानमा राखी देशवासीलाई भयरहित तुल्याउन भक्तपुर देशको मध्य भागमा त्रिपुरासुन्दरीको देवीको प्रतिष्ठा गरी चारैतिर अष्टमातृका गणले परिवेष्ठित गरी देशनिर्माण गराएका थिए । देशमा अष्टमातृका गणको स्थापना भएपछि तिनको पूजा उपासना, जात्रा एवं नाच प्रदर्शन गर्दा निम्न अनुसारका भयहरूबाट देश र जनता सुरक्षित रहने विश्वास गरिन्छ । – राजभय, चोरभय, पानीको भय, आगोको भय, वायुको भय, शत्रुको भय, मल(चट्याङ)को भय, भूकम्प तथा दुर्भिक्षको भय । – लीलाभक्त मुनंकर्मी, *संक्षिप्त मातृका वर्णन तथा देवी नाच*, काठमाडौं : कुमारी प्रकाशन, वि.सं. २०६४, पृ. ४६–४७ ।

[१५] स्थलगत अध्ययन, अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

प्रतिनिधित्व गर्दछ ।[१६] भैरवनाथ सहकालका देवता मानिन्छ ।[१७] जुनबेलादेखि भैरवनाथलाई भक्तपुरमा स्थापना गरियो, त्यसैबेलादेखि नेपालमा सहकाल भित्रिएको विश्वास गरिन्छ । यसर्थ भैरवनाथलाई खुसी र प्रसन्न तुल्याई राख्नको निम्ति भक्तपुरवासीले भव्यरूपमा बिस्केट जात्रा मनाउने गरेका हुन् । किनकि भैरवनाथ किसानहरूका देवता हुन्[१८] र भक्तपुर किसानहरूको बाहुल्यता भएको शहर हो । नेवार समाजमा भीमसेनलाई पनि भैरवकै रूपमा मान्ने चलन छ, यसबाट यहाँ वाणिज्यका देवताका रूपमा पनि भैरवलाई लिइने गरेको देखिन्छ ।[१९] साथै बौद्ध नेवारहरूले समेत भैरवलाई पंचबुद्ध मध्येका अक्षोम्य बुद्धका सन्ततिको रूपमा मान्छन् । शिरमाथि अक्षोम्य बुद्धको आकृतियुक्त भैरवका मूर्तिहरू धेरै नै पाइन्छन् ।[२०] शैव सम्प्रदाय अन्तर्गत वीर शैव मतका प्रसिद्ध देवता विश्वेश्वरलाई पनि विश्वनाथ भैरवको रूपमा मानिन्छ । लिंगोलाई विश्वेश्वर वा विश्वनाथ भैरव मान्ने वीर शैवसम्प्रदायहरूमा लिंगो ठड्याएर उत्सव मनाउने लोकप्रिय परम्परा रहेको पाइन्छ ।[२१] विश्वनाथ भैरव आकाशभैरवको नामले पनि लोकप्रिय छ । वीर शैवहरूले काशीलाई प्रमुख तीर्थस्थल र भक्तपुर टौमढी टोलको जंगम मठलाई प्रमुख स्थलको रूपमा मान्ने गर्छन् ।[२२] मध्य तथा उत्तर भारतका विभिन्न स्थानमा भैरवलाई भैंरो नामकरण गरी पुज्ने गरिन्छ । जसको प्रमुख तीर्थस्थल काशी नै हो । काशी बाहेक काठमाडौं उपत्यकामा भैरवको विशेष

---

[१६] मेरी एम. एण्डरसन, *दि फेष्टिवल्स अफ नेपाल,* लण्डनः जर्ज एलेन एण्डवीन, ई.सं. १९७१, पृ. ४३ ।

[१७] भक्तपुर टौमढी टोलका भैरव साक्षात् काशीका विश्वनाथ हुन् भन्ने मान्यता जनमानसमा पाइन्छ । प्रचलित किम्वदन्ती अनुसार भक्तपुरमा जात्रा हेर्न आएका विश्वनाथलाई तन्त्रशक्तिको बलमा समात्न खोज्दा सो कुरा थाहा पाई जमीन मुनिबाट लोप हुन खोज्दा हतारमा शिरछेदन गरी यहीं स्थापना गरियो । यसरी शिर यहाँ र बाँकी शरीर काशीमै पुगेकोले यहाँको भैरवनाथको शरीर छैन, काशीको विश्वनाथको शिर छैन भन्ने भनाई लोकप्रिय रहेको छ । जुनबेलादेखि भक्तपुरमा भैरवनाथ प्रतिस्थापन भए, त्यसैबेला देखि नेपालमा सहकाल प्रारम्भ भयो । खेतबाट प्रशस्त उब्जनी हुन थालेकोले कृषकहरू खुसीले रमाउन थाले । कृषि फसल मात्र राम्रो भएको नभएर अन्नका दाना समेत ठूला फल्न थाले । चामलको एउटै गेडा धेरै जनाको भोजनका लागि पर्याप्त हुन्थ्यो । यसैले भक्तपुरमा अद्यापिसम्म पनि भात पस्कने भनिदैंन, भात काट्ने भनिन्छ । यसरी भैरवनाथको अनुकम्पाले सहकाल भित्रिएकोले प्रसन्न भएको एकजना स्थानीय किसानले भैरवनाथकहाँ दुईदाना चामल चढाउन ल्याए, जुन चामल अद्यापि मन्दिरमा देख्न सकिन्छ । यस अन्नलाई सहकालको अन्न भनेर साँझ बिहान भैरवनाथसँगै पूजाआजा गरिन्छ । – भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङबाट २०६७ । ४ ।२३ गते प्राप्त जानकारी ।

[१८] राजबली पाण्डेय, *हिन्दुधर्मकोश,* लखनऊ, उत्तर प्रदेशः हिन्दी संस्थान, हिन्दी समिति, प्रयाग, वि.सं. २०५३, पृ. ४८२ ।

[१९] (क) नेपालका विभिन्न मन्दिरमा प्राप्त शिलालेखहरूका आधारमा भैरवका विभिन्न नामहरू मध्ये एउटा नाम भीमसेन पनि हो भन्ने कुरा प्रष्ट हुन्छ । कीर्तिपुरस्थित बाघभैरवको ने.सं. १०७ को एक अभिलेखमा उक्त भैरवलाई भीमसेनको संज्ञा दिइएको छ । त्यस्तै भक्तपुर तचपाल टोलको भीमसेनलाई पनि भीमभैरव भन्ने गरिन्छ । यसरी भीमसेन र भैरव एउटै भएको देखिन्छ । – स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।
(ख) संस्कृतिविद् हरिराम जोशीज्यूले पनि आफ्नो अनुसन्धानको क्रममा भैरवको एक नाम भीमसेन रहेको कुरा प्रष्ट पार्नु भएको छ ।– हरिराम जोशी, *हिन्दुदेवीदेवता,* काठमाडौं : श्री ५ को सरकार, संचार मन्त्रालय, वि.सं. २०४०, पृ. ७२ ।

[२०] हरिराम जोशी, "भैरवः एक सांस्कृतिक अध्ययन", *पासुका,* वर्ष २, अंक ५, (२०५४ माघ), पृ. ५ ।

[२१] यसबाट बिस्केट जात्रा वस्तुतः वीर शैव सम्प्रदायसित सम्बध्द रहेको बुझिन्छ । तापनि यो एउटै सम्प्रदायमा मात्र सीमित नरहेर साझा संस्कृतिको रूपमा सबैले मान्दै आएको पाइन्छ । – पुरुषोत्तम लोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग,* (अप्रकाशित विद्यावारिधि शोधग्रन्थ), त्रि.वि., वि.सं. २०५०, पृ. ७२ ।

[२२] *ऐजन,* पृ. ९४ र ९६ ।

पूजाआजा र जात्रा हुने स्थानमा भक्तपुर पर्दछ । भक्तपुरलाई भैरवको विशेष स्थानको रूपमा लिन सकिन्छ । संस्कृतिविद् जीतबहादुर मानन्धरले भक्तपुरलाई त भैरव प्रधान नगर नै हो भनेर वर्णन गर्नु भएको छ । भक्तपुरका टोल–टोलमा भैरवका थुप्रै ठुला–साना मन्दिर र पीठहरू छन् ।[२३] यसरी भक्तपुरमा सबै जातजाति र धर्म सम्प्रदायका नेवार बासिन्दाहरूका प्रमुख देवताका रूपमा भैरव रहेका छन् ।

स्थानीय बासिन्दाका प्रिय देवता भएकाले भक्तपुरमा अनेक नामका असंख्य भैरवहरू भेटिन्छन् । यी भैरवहरू कहिले आसनमा, कहिले अन्य मुख्य देवताको साथमा, कहिले भैरवीलाई अंगालोमा लिएको, कहिले शक्तिसित मैथुन गरिरहेको अवस्थामा छन् । साथै यहाँ काठका[२४] र ढुंगाका भैरव मूर्ति[२५] पनि प्राप्य छन् । यसका साथै भैरवका रेखाचित्रहरू पनि उपलब्ध छन् । भैरव कहिले माटाका बनाइन्छ, चिउरा ठड्याएर पनि बनाइन्छ अनि परालकै पनि बुनिन्छ । मूर्त, अमूर्त, मन्त्रका, यन्त्रका अनि भावका पनि भैरव भेट्टिन्छन् । त्यस्तै यहाँ भैरव पाटीमा छन्, देवगृहमा छन्, तोरणमा छन्, खाल्डामा छन्[२६], भुइँमा छन्, धारामा छन्, बाटामा छन्, मसानमा पनि छन् । यसरी भक्तपुर शहर भैरवमय बनेको छ । तर यी समस्त भैरवहरूमा मुख्य भैरव टौमढी टोलका आकाश भैरव हुन् भन्ने बुझिन्छ । तलेजु मन्दिरमा भक्तपुरको संकल्प वाक्य पढ्दा "तुलजा आकाश भैरव विराजित भक्त पतने महानगरे" भनेर पढिन्छ ।[२७] यसबाट भक्तपुरको प्रमुख देवता भैरव नै हो भन्ने कुरामा कुनै शंकाको ठाउँ रहँदैन । यसर्थ आराध्यदेव भैरवनाथकै सम्मानमा वर्षको एक पटक भक्तपुरमा बिस्केट जात्रा मनाउने गरिएको हुनाले यस जात्राका मुख्य देवता पनि भैरवनाथ नै हुन् भन्ने कुरामा कसैको दुईमत हुन सक्तैन । भक्तपुरमा भैरवनाथको स्थान कतिसम्म उच्च छ भन्ने कुरा यहाँ प्रचलित जति पनि चाडपर्व र जात्राहरू छन्, तिनीहरू सबैमा भैरवको पूजा, जात्रा

---

[२३] स्थलगत अध्ययनबाट प्राप्त जानकारी ।

[२४] दृष्टान्तका रूपमा भक्तपुर दरबार इलाका प्रवेश गर्ने मुख्य प्रवेशद्वारको भित्तामा नृत्य मुद्राका काष्ठ निर्मित भैरवलाई लिन सकिन्छ ।

[२५] स्थान विशेषका अनाकृत (स्वरूपवेगरका) ढुङ्गालाई पनि भैरव मान्ने चलन भक्तपुरमा पाइन्छ । जस्तै– उदाहरणको रूपमा नगरपालिका भवन अगाडिको चोकुमुरु भैलःद्यः, ताला डम्फो माथिको कापालिक भैलःद्यः टौमढीको स्वभुंगा भैलःद्यः आदिलाई लिन सकिन्छ ।

[२६] बुलुचा टोलको बटुक वा श्वेत भैरव खाल्डोमा अवस्थित भैरव हुन् ।

[२७] शर्मा, पा.टि.नं. १०, पृ. ३ ।

अनिवार्य रूपले समावेश हुने गरेवाट थाहा हुन्छ ।[२८] अन्य देवीदेवताको गणमा पनि भैरवको प्रमुख स्थान भएको तथ्य भक्तपुरको प्रख्यात नवदुर्गा गणनाचबाट थाहा हुन आउँछ । यस नाचमा महाभैरवको प्रमुख हात रहन्छ ।[२९] भैरव महिमाकै वर्णन गर्दा तलेजु मूलचोकको पूर्वतर्फ रहेको भैरवचोक (सदाशिव चोक) का काष्ठ निर्मित अट्ठार आसनका भैरवहरूलाई उल्लेख गर्न सकिन्छ ।[३०]

यसप्रकार हेर्नमा डरलाग्दो देखिएपनि भक्तपुरवासीहरूमा भैरवप्रतिको श्रद्धा अगाध छ । यसैले होला भक्तपुरवासीहरूमा भैरवको पूर्णदर्शन गर्न जीवनमा एकपटक भएपनि काशी जाने चलन अद्यावधि लोकप्रिय रहेको पाइन्छ । किनकि काशीको प्रसिद्ध विश्वनाथ र यहाँको भैरवनाथलाई एउटै देवताको रूपमा मानिन्छ ।

तन्त्रमा आधारित नगर भएकोले यहाँ हरेक टोल बस्तीको रक्षार्थ टोल, चोक, दोबाटो, चौबाटो आदि स्थानहरूमा छत्रपालको रूपमा भैरव रहने मान्यता छ । अनि नगर (देश) रक्षाका लागि नगर वरिपरि तान्त्रिक दृष्टिबाट प्रतिस्थापित अष्टमातृका गणका पीठ सँगसँगै तिनका पतिका रूपमा हरेक पीठमा एक–एक गरी अष्ट–भैरवहरू पनि प्रतिस्थापन गरिएका छन् ।[३१] यस अतिरिक्त समग्र नेपाल मण्डललाई बाह्य अनिष्टबाट रक्षा गर्न उपत्यका वरिपरिका प्रमुख स्थानहरूमा बाटुलो घेराको साङ्लो बनाएर विविध नामका भैरवहरू प्रतिस्थापित छन् । जस्तो कि पूर्वी नाकामा सांगा भैरव, त्यसपछि दक्षिण पूर्वमा अथवा कटुन्जेमा सुशील भैरव, त्यसभन्दा अलि पश्चिममा टीका भैरव (चापागाउँ) त्यसपछि अझ पश्चिममा हयग्रीव भैरव (बुंगमती), दक्षिण पश्चिममा बाघ भैरव (कीर्तिपुर) अनि पश्चिममा हल्चोक भैरव, त्यस्तै उत्तर पश्चिममा नुवाकोट भैरव (त्रिशुली) तथा उत्तरमा

---

[२८] गाईजात्राको दिन अपरान्ह ४, ५ बजेतिर लाकोलाछें टोलबाट भैरवको गाई (भैलःद्यःया ताहा साँ) नगर घुमाउन ल्याएपछि त्यसदिनको सम्पूर्ण गाईजात्रा समाप्त हुने गर्छ । त्यस्तैगरी इन्द्रजात्रामा पछिल्लो दिन टौमढी टोलको भैरवनाथको पुलु भैरव वा पुलुकिसी जात्राले नगर परिक्रमा गरेपछि सम्पूर्ण इन्द्रजात्रा समाप्त हुने गर्छ । अनि सात दिनको फागु महोत्सवमा पनि दत्तात्रय चोकमा भीम–भैरवको जात्रा सम्पन्न भएपछि सम्पूर्ण फागु पर्व समाप्त हुने गर्छ । यसरी भक्तपुरमा हुने सांस्कृतिक पर्व, जात्राहरूमा भैरवनाथको मह□वपूर्ण स्थान रहेको छ । – सत्यनारायण प्रजापति, "भैरव र भक्तपुर," *रोलम्बा,* अंक ११, संख्या २ (अप्रैल–जुन १९९१), पृ. ४२ ।

[२९] (क) पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरको नवदुर्गा गण,* भक्तपुर : बबिता श्रेष्ठ, वि.सं. २०६०, पृ. ४२ ।
(ख) शर्मा, पा.टि.नं. १०, पृ. ४ ।

[३०] तान्त्रिक स्वरूपका ती अष्टादश भैरव मूर्तिहरू कुनै बेताल आसनका, कुनै राँगो आसनका, कुनै साँढे, कुनै घोडा, कुनै काग, कुनै हाँस, कुनै गरुड आसन गरी अनेक आसनका रहेका छन् । – स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[३१] मुनंकर्मी, पा.टि.नं. १४, पृ. ६१–७० ।

साँखुको क्षेत्रपाल भैरव प्रतिष्ठापित रहेका छन् ।[३२] यसबाट समग्र नेपाल उपत्यकाकै रक्षक देवताका रूपमा भैरव रहेको तथ्य स्पष्ट हुन आउँछ ।

### ६.२.२ भैरवको उद्भव

संस्कृत शब्द "भाया" र "रव" मिलेर भैरव शब्द बनेको हो ।[३३] नेवारहरू भैरवलाई भेलु वा भैलःद्यः भन्दछन् । भैरव भगवान शिवको अर्को रूप हो । शिवलाई भव, रुद्र, सव, पशुपति, कपर्दो, शम्भु, शंकर आदि पनि भनिन्छ । पुराणहरूमा शिवलाई दुई प्रकारले व्याख्या गरिएको पाइन्छ । १) सृष्टिकर्ता २) सम्हारकर्ता अर्थात् एउटा सौम्य र अर्को भयावह अथवा विध्वंसक रूप । भयावह, विध्वंसक र उग्ररूपको शिवलाई नै भैरव भन्ने गरिएको हो ।[३४] भैरव शिवकै एक रूप हो भन्ने सम्बन्धमा पौराणिक ग्रन्थहरूमा अनेक कथाहरूको वर्णन पाइन्छ । भैरवतन्त्र नामक ग्रन्थमा ५२ लाख भैरवभैरवीहरूको वर्णन पाइन्छ ।[३५] प्रारम्भमा भैरव "त्रिदेव" मध्येका अन्तिम देवता शिवको बाचक रूप थियो । वैदिककालमा भयावह रूपमा चिनिने रुद्र देवताको स्वभाव बिस्तारै परिवर्तन हुँदै गएर सौम्य रूपको शिव, शंकर, शम्भु, महादेव, भोलेनाथ आदि भनेर चिनियो । तर पनि उनको रौद्र रूप लुप्त हुन सकेन । त्यही रुद्रकै परिवर्तित रूपमा भैरवलाई लिन सकिन्छ । यही प्रसंगलाई विद्वान डा. यदुवंशीले यसरी व्यक्त गरेका छन् । आफ्नो उग्र रूपको शिवलाई क्रुर, भयावह र महाविनाशकारी देवता मानी चण्ड, भैरव, महाकाल आदि उपाधि दिइएको छ । भैरव रूपमा शिवको पूजा आराधना गर्दा नर बलिको पनि उल्लेख पाइन्छ । भक्तहरूले शिवलाई भैरव रूपमा पूजा गर्ने र नर बलिको छिन्नमस्ताबाट निस्किएको रगत नै पूजाको रूपमा चढाउने गर्दथे ।[३६] त्यस्तै पंचमुखी शिवको दक्षिण अघोर मूर्ति भैरवको रूप मानिन्छ र यहाँ विशेष पूजामा बलि चढाउने प्रथा पनि छ ।[३७] यसरी संहारकारी देवताको उग्र रूप नै भैरव भएको थाहा हुन आउँछ ।

हर्ष चरित भन्ने प्राचीन ग्रन्थमा शिव र विष्णु क्रमशः भैरव र नरसिंहको रूपमा अवतरित भएको उल्लेख छ ।[३८] वास्तवमा भगवान विष्णुका सबै अवतारको उद्देश्य दानवलाई दण्ड दिनको लागि भएको थियो भने शिवको भैरव अवतारको उद्देश्य भने

---

[३२] मिलनरत्न शाक्य, *दि कल्ट अफ भैरव इन नेपाल,* न्यू दिल्ली : रूपाको, ई.सं. २००८, पृ. २०३ ।

[३३] संस्कृत शब्द भायाको अर्थ भयानक अट्टहांसद्वारा डरलाग्दो आवाज निकाली वातावरणलाई त्रासदीपूर्ण बनाउने भन्ने हुन्छ । यही भाया शब्दमा रव प्रत्यय जोडिएर भैरव बनेको हो । – *ऐजन,* पृ. १ ।

[३४] www.http.//en.wikipedia,org./wiki/bhairab; retrieved in 2011Feb.11.

[३५] शाक्य, पा.टि.नं. ३२, पृ. २०० ।

[३६] यदुवंशी, *शैवमत,* पटना, विहारः राष्ट्रभाषा परिषद्, ई.सं. १९९५, पृ. ९५ र १५७ ।

[३७] वीणा पौडेल, *काठमाडौं उपत्यकाका प्रमुख उमामहेश्वर र भैरवमूर्तिहरू,* काठमाडौं : साझा प्रकाशन, वि.सं. २०६०, पृ. १०१ ।

[३८] *ऐजन,* पृ. १०७ ।

ब्रम्हालाई दण्ड दिनु रहेको देखिन्छ । सृष्टिकर्ता भएर पनि झुठो बोल्ने, घमण्ड गर्ने र अपशब्द बोल्ने भनेर शिवको भैरव स्वरूपले ब्रम्हाको एउटा शिर छेदन गरेको वर्णन पुराणमा पाइन्छ ।[३९] पुराणहरूमा उल्लेख भएका वर्णन अनुसार एकपटक शिवजीको अनुपस्थितिमा ब्रम्हा र विष्णु बीच "त्रिदेव" मध्ये को ठूलो भन्ने ठुलो विवाद चल्यो । दुवैले आ–आफ्नो मह□व देखाइ आफूलाई सबैभन्दा ठूलो ठहराए । यसैक्रममा ब्रम्हाले शिवजीको अनादर गरे । यसैबेला त्यस तिरस्कारबाट क्रोधित भएर शिव उत्पन्न भए । शिव ज्यादै रिसाएको हुनाले कालो र अग्निको लपेटाहरू निकाली भैरव रूपमा परिवर्तन भए । उनले ब्रम्हामाथि आक्रमण गरी पाँच टाउका मध्ये एक टाउको निमोठी फ्याँकी दिए । तर ब्रम्हा ब्राम्हण भएको हुनाले भैरवलाई ब्रम्हहत्या लाग्यो । ब्रह्महत्या जस्तो महापापबाट मुक्त हुन भैरवले शिवकै आदेशबाट छेदन भएको शिरलाई हातमा लिइ अनेकौं तीर्थस्थलहरूको भ्रमण गरे । अन्त्यमा बाराणसी (काशी) मा पुगेपछि उनले पापबाट मुक्ति पाएर आफूले बोकी ल्याएको ब्रम्हा शिर पनि त्यहीं विसर्जन गरे ।[४०] यसरी शिवको उग्ररूप भैरवको बारेमा शिव महापुराणमा विष्तृत वर्णन पाइन्छ । ब्रम्हाजीले शिवजीको निन्दा गरेको र मिथ्या बोलेको हुनाले क्रुर भएका शिवको भृकुटीबाट उद्भव भएका आदिपुरुष नै भैरव हो भन्ने थाहा हुन आउँछ ।

अग्नि पुराणमा भैरवको जन्म र उनले श्रापको रूपमा रुख हुनु परेको घटनाको उल्लेख छ । भैरवले जन्मने बित्तिकै शिवको आज्ञा बिना सम्पूर्ण देवताको बध गरे, जसको कारण शिवले तिनलाई वृक्ष हुने श्राप दिए । देवताहरूलाई दमन गरेको हुनाले भैरव दमनक नामको रुखमा परिणत भए । अझै पनि दमनक (तातिरी) को रुखमा पूजा गर्ने चलन भारतमा छ । पछि शिवको रिस शान्त हुँदा तिनलाई श्राप मोचन गरी क्षेत्रपालको रूपमा तिनको सर्वप्रथम पूजा नगरी अन्य देवीदेवताको पूजा उपासना गर्नाले कुनै फल प्राप्त नहुने कुराको घोषणा गरे ।[४१]

स्वस्थानी महात्म्यमा भैरवको उत्पति शक्ति पीठहरूको उत्पति सँग–सँगै भएको वर्णन उल्लेख पाइन्छ । सतीदेवीका शरीरका अंगहरू जुन–जुन स्थानमा पतन भए, ती–ती

---

[३९] ज्वालाप्रसाद चतुर्वेदी (अनु.), *सम्पूर्ण श्री शिवपुराण,* हरिद्वार : रणधीर प्रकाशन, मिति अनुल्लिखित, पृ. २३८–२४१ ।

[४०] www.httpM//en.wikipedia.org./wiki/bhairab; retrieved in 2o11 Feb.11.

[४१] बलदेव उपाध्याय (सं.), *अग्नि पुराण* (अध्याय ८०, श्लोक १३), बाराणसी : चौखम्बा संस्कृत संस्थान, वि.सं. २०६२, पृ. ११२–१३ ।

स्थानमा पीठ उत्पति भए । अनि प्रत्येक शक्ति पीठका रक्षक भएर भैरव स्वरूपले स्वयं शिव ती पीठहरूमा रहे ।[४२] यसैकारण भैरवको संख्या असंख्य मानिएको छ ।

वामन पुराणमा अन्धक र महादेव बीच युद्ध हुँदा महादेवको शिरबाट पूर्व, दक्षिण, पश्चिम तथा उत्तरतिर बगेको रगतबाट क्रमशः विदुराज भैरव, रामराज भैरव, स्वच्छन्दराज भैरव एवं लम्वितराज भैरव लगायत अष्ट–भैरवको उत्पति भएको आख्यान पाइन्छ ।[४३]

मेघदूतमा शिवलाई कैलाश निवासी भन्नुका साथै अति उग्र भैरव रूपमा तिनको ताण्डव नृत्यको पनि चर्चा गरिएको छ । महाभारत द्रोण पर्वमा शिवका दुई शरीर भएको कुरा वर्णित छ । एक शिव वा सौम्य तथा दोस्रो घोर । यिनै दुई शरीरबाट उनका अनेकौं रूपहरू प्रकट भए । शिवका घोर रूपको दर्शन महाभैरवको रूपमा अहिच्छत्राको मृतफलकमा भेट्टिएको छ । यसको अतिरिक्त कुषाण पूर्वकालदेखि शिवका मुखलिङ्गहरूमा तिनको अघोर मुखको दर्शन बराबर हुन लागेको थियो ।[४४] यसरी भैरवको उत्पतिको बारेमा अनेक पुराण तथा धार्मिकग्रन्थहरूमा उल्लेख भएको पाइन्छ । ती वर्णनहरूमा एकरूपता नदेखिएतापनि भगवान शिवको प्रलयकारी भीषण र भयानक उग्र स्वरूप नै भैरव भएको थाहा हुन आउँछ ।

### ६.२.३ प्रतिमा लक्षण

भैरवको शारीरिक संचरनाबारे विभिन्न धार्मिकग्रन्थहरूमा अलग–अलग वर्णन उल्लेख भएको पाइन्छ । जस्तै :– अग्नि पुराणमा कुकुरमाथि सवार, भयङ्कर र डरलाग्दो रूप, शिरमा अर्धचन्द्र र लट्टा परेको केश, हातमा तरवार, त्रिशुल, पास (डोरी), धनुषवाण आदि लिएको, सर्पको गहना लगाएको र हात्तीको छाला बेरेको आदि लक्षणले युक्त देवता भैरव हुन भनिएको छ ।[४५]

विष्णु धर्मोत्तर पुराणमा लामो पेट, गोलाकार र पिङगाकाररूप, पिङ्गल नेत्र, दाह्रा निस्केको, करार मुख, फुलेको नाक, मुण्डमालाधारी, भीषण सर्पको गहना लगाएको, कालो

---

[४२] (क) बुद्धिसागर पराजुली, *श्री स्वस्थानी व्रतकथा,* काठमाडौं : रत्न पुस्तक भण्डार, मिति अनुल्लिखित, पृ.११५–१२६ ।
(ख) www.http.//en.wikipedia,org./wiki/bhairab;retrieved in 2011 Feb.11.

[४३] श्यामसुन्दरलालजी त्रिपाठी (टीकाकार), *वामनपुराण* (अध्याय ७०), बम्बई : खेमराज श्रीकृष्णदासजी प्रकाशन, ई.सं. १९९२, पृ. १९९ ।

[४४] जोशी, पा.टि.नं. २०, पृ. ७९ ।

[४५] हनुमानप्रसाद पोद्दार(सं), *अग्नि पुराण (*हिन्दी), गोरखपुर : गीता प्रेस, ई.सं. १९७१, पृ.४३९–४४० ।

वर्णको, हात्तीको छाला ओढेको, धेरै हात भएको र अनेक अस्त्रशस्त्र लिएको, तिखो नङ्ग र छड्के हेर्ने भैरवको वर्णन गरिएको छ ।[४६]

तर नेपाल उपत्यकाका सबैजसो प्रख्यात भैरवहरू माथि उल्लेख भएजस्तो हात पाउ सहितको सिंगै शरीर भएका होइनन् । केवल शिर मात्रका हुन् । जस्तै– काठमाडौं इन्द्रचोकको आकाशभैरवको मूर्ति शिर मात्रको छ । तीन नेत्र, गाला हुप्प परेको, ब्रह्माको शिर आफ्ना शिरमा धारण गरेको, अग्नि प्रज्वलित आँखी भौं भएका, दुईटा दन्तनिकाली डिच्च हाँसेका र कानमा नागका कुण्डली लगाइएका सुन्दर अजङ्ग आकृतिका छन् ।[४७] त्यस्तै शिर मात्र भएका हनुमानढोका देगुतले नजिकका ढलौटका श्वेतभैरव, बुङ्गमतीका हयग्रीवभैरव, पशुपतिभित्रका कीर्तिमुखभैरव र शिवालयपिच्छेका दक्षिण ढोकासँगै रहेका भैरवका मुखाकृति उस्तै प्रकारका छन् । साथै ज्ञानेश्वरका आनन्दभैरव, पशुपतिका उन्मतभैरव, पाटन कुम्भेश्वरका उन्मतभैरवको मुखाकृति पनि उही प्रकारका छन्, एकै मिलानका छन् । यस अतिरिक्त जयबागेश्वरी मन्दिरको भित्तामा लेखिएका भैरव, बनेपा चण्डेस्वरीमन्दिरका भित्तामा लेखिएका भैरव र टीकापुरभैरवमन्दिरको भित्तामा लेखिएका टीकाभैरवका मुखाकृति पनि एकैनासका छन् । तर यहाँनेर ध्यान दिन योग्य कुरा के छ भने भक्तपुर टौमढी टोलको भैरव अर्थात् बिस्केट जात्राका प्रमुख देवता भैरवनाथको मुखाकृति भने माथि उल्लेख गरिएका भैरवहरूका मुखाकृति भन्दा सर्वथा भिन्न देखिन्छ । यद्यपि यहाँका भैरव पनि केवल शिर मात्रका छन् । तर मानव मुखाकृतिका छन् । यस मुखाकृतिको आधारमा तथा उल्लिखित भैरवहरूको मुखमण्डलको नजीर अनुसार भैरव भन्न सुहाउँदैन । तर पनि आकाश भैरव भनी श्रद्धापूर्वक पूजा–उपासना गरिंदै आएको छ ।[४८] यी भैरवको प्रतिमा लक्षण निम्नअनुसार रहेको देखिन्छ । तीनवटा ठूलठूला आँखा, कानमा ठूलठूला कुण्डल जस्तो बुट्टेदार गहना लगाएको, शिरमा विशाल मुकुट, अग्लो र फुलेको नाक, मुख खुलिरहेको र दाँत देखिरहेको पाइन्छ ।[४९]

यसरी प्रतिमा लक्षणका आधारमा भक्तपुरको भैरव अन्यत्रको भैरव भन्दा फरक भएको थाहा हुन्छ । यहाँका भैरव मानवाकृतिको हुनुको पछाडि लोकोख्यान के पाइन्छ भने

---

[४६] (क) कृष्णदास, क्षेमराज (सं.), *विष्णु धर्मोत्तर पुरांणम्,* दिल्ली : माग पब्लिसर, ई.सं. १९९८, पृ. १–४ ।
(ख) गोविन्दप्रसाद भट्टराई, *मूर्तिकला,* काठमाडौं : इल्या भट्टराई, वि.सं. २०४१, पृ. ८७ ।

[४७] पौडेल, पा.टि.नं. ३७, पृ. ७९ ।

[४८] तीर्थलाल नःघभनी (राजभण्डारी), "टौमढीको भैरव", *अभिलेख,* वर्ष १७, अंक १७, (वि.सं. २०५६), पृ. ४१ ।

[४९] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

भारतस्थित काशीका विश्वनाथ मानव रूप धारण गरेर भक्तपुरको जात्रा हेर्न आए । तर मानव रूप धारण गरेपनि उनी सबैभन्दा अग्ला देखिन्थे । एकजना तान्त्रिकले आफ्नो विद्याद्वारा दिव्यदृष्टि लगाई हेर्दा उनी काशीका विश्वनाथ भएको थाहा पाए । यसैले तान्त्रिकले आफ्नो तन्त्रशक्तिद्वारा उनलाई पक्रन खोजे । मनुष्यरूपी विश्वनाथले यो कुरा थाहा पाई तिनको जालबाट फुत्कन जमीनमा दवेर लोप हुन खोजे । मानवरूपी विश्वनाथको शिर मात्र बाँकी रहँदा तान्त्रिकले आफ्नो भएभरको शक्ति लगाई त्यसको टुप्पी समाती आफ्नो कम्मरमा रहेको हँसियाले शिर छेदन गरिलिए । विश्वनाथको त्यो छेदन गरी लिएको शिरलाई मानिसहरूले भैरवनाथको रूपमा पुज्न थाले । यहाँ भएको भैरवनाथ काशी विश्वनाथकै शिर हो भन्ने कुरा काशीमा भएको विश्वनाथको टाउको विहिन शरीरबाट थाहा हुन्छ ।[५०] यसप्रकार भक्तपुर टौमढी टोलको भैरवनाथको प्रतिमालक्षण मानव मुखाकृतिसँग मिल्न पुगेको हो ।

विभिन्न धर्मग्रन्थहरूमा शिवको पाँचवटा मुख बारे निम्न अनुसार वर्णन गरिएको पाइन्छ । जस्तै –

| दिशा | शिवको रूप | पंचत□व | अवतार |
|---|---|---|---|
| पूर्व | तत्पुरुष | वायुत□व | महादेव |
| दक्षिण | अघोर | तेजत□व | भैरव |
| पश्चिम | सद्योजात | पृथ्वी | नन्दि |
| उत्तर | वामन | जल | उमा |
| उर्ध्व (माथि) | इशान | आकाश | सदाशिव |

नेपालमा पाइएका धेरैजसो शिवलिङ्गहरूमा पनि यही पाँचवटा रूपलाई प्रधानता दिइएको पाइन्छ ।[५१] जसरी यो चराचर जगतको सृष्टि पंचत□व (वायु, तेज, पृथ्वी, जल, आकाश) बाट भएको छ, त्यसरी नै पंचत□वको सृष्टि शिवबाट भएको छ भन्ने विश्वास गरिन्छ । यसर्थ शिवका विभिन्न रूप नै पंचत□वका साधन हुन् । उनैबाट यो जगतको सृष्टि, पालन र संहार भएको छ । पंचमुखी शिवको दक्षिण मुख अघोर रूप नै भैरव हो ।

भैरवको चौसट्ठी रूपको वर्णन विभिन्न धार्मिक ग्रन्थहरूमा गरिएको पाइन्छ । जस्तो शारदी नवरात्रमा पुजिने अष्टभैरवहरू यसप्रकार छन् –महाभैरव, संहारभैरव, असिताङ्ग भैरव,

[५०] डेनियल राइट, *हिस्ट्री अफ नेपाल,* न्यू दिल्ली : कस्मो पब्लिकेसन्स, ई.सं. १९८३, पृ. १८० ।

[५१] डिल्लीराज शर्मा, "सृष्टिको प्रतीक लिङ्ग पूजा", *प्राचीन नेपाल,* संख्या ९८–९९, वि.सं. २००७, पृ. ३० ।

रुरु भैरव, कालभैरव, क्रोध भैरव, कपाल भैरव तथा रुद्र भैरव । तन्त्र एवं पुराण अनुसार असिताङ्ग, रुरु, चण्ड, क्रोध, उन्मत, कपाली, भीषण तथा संहार गरी आठ भैरवहरू छन् । यी अष्टभैरवहरूका आठ शक्तिस्वरूपा भैरवीहरू छन् । उपर्युक्त आठ भैरवहरू प्रत्येकका अन्य आठ–आठ भैरवहरू समेत गरी जम्मा भैरवहरूको संख्या चौसट्ठी मानिएको छ ।[५२]

### ६.२.४ नेपालमा भैरवपूजाको परम्परा

उपर्युक्त तथ्यहरूका आधारमा भैरव भगवान शिवकै एक रूप भएको कुरा स्पष्ट हुन्छ । अब यहाँनेर प्रश्न यो उब्जन सक्छ कि नेपालमा भैरव पूजाको प्रचलन कहिलेदेखि भएको हो ? यस सम्बन्धमा विस्तृत रूपमा बुझ्न नेपालमा शैव सम्प्रदायको प्राचीनताबारे जान्नु जरुरी हुन्छ । यद्यपि यस सम्बन्धमा विद्वानहरूबीच मतभिन्नता रहेको पाइन्छ, तर पनि नेपाल महात्म्य, हिमवत्खण्ड र वंशावली जस्ता स्रोत–सामग्रीहरूका आधारमा नेपालमा शैवधर्म अति प्राचीनकालदेखि लोकप्रिय रहेको थाहा हुन्छ ।[५३]

महाभारत वनपर्वमा कुन्तीपुत्र अर्जुनले यहाँ आएर किरातेश्वर महादेवसँग युद्ध गरेको र पछिबाट महादेव भन्ने थाहा भएपछि अर्जुनले महादेवलाई खुसी पारी पाशुपत अस्त्र पाएको कथा वर्णित छ ।[५४] यद्यपि कुरु क्षेत्रको युद्धमा अर्जुनले उक्त अस्त्र प्रयोग गरेको देखिंदैन ।

किराती राजा यलम्बरले कौरव पक्षको तर्फबाट महाभारतको युद्धमा भाग लिन जाँदा श्रीकृष्णले थाहा पाइ शिर छेदन गरिदिए र त्यही शिर काठमाडौं, इन्द्रचोकको आकाश भैरव हो भन्ने भनाइ केही संस्कृतिविद्हरूको रहेको छ ।[५५]

नेपालमा गोपाल, महिषपाल जस्ता वैष्णवहरूको प्रादुर्भाव हुनु भन्दा धेरै पहिले देखि शैव धर्म प्रचलित थियो । विशेष गरेर यहाँका किरातीहरूमा शैवधर्म लोकप्रिय थियो । यस तथ्यको पुष्टि पशुपतिनेरको किरातेश्वर महादेवको लिङ्गरूपको मूर्तिबाट हुन्छ ।[५६] त्यसभन्दा अघि नेपाल उपत्यकाको उत्पतिका क्रममा सर्वप्रथम यहाँ पशुपतिको ज्योतिर्लिङ्ग उत्पति

---

[५२] जोशी, पा.टि.नं. २०, पृ. ५ ।

[५३] जगदीशचन्द्र रेग्मी, *नेपालको धार्मिक इतिहास,* काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३९, पृ. ३ ।

[५४] (क) *संक्षिप्त महाभारत वनपर्व,* तृतीय संस्करण, काठमाडौं : नेपाली भाषा प्रकाशिनी समिति, वि.सं. १९९९, पृ.२१६–२१८ ।
(ख) हनुमानप्रसाद पोद्दार (सं.), *संक्षिप्त शिवपुराण(हिन्दी),* गोरखपुरः गीता प्रेस, वि.सं.२०५२, पृ. ४०९–४१३ ।
(ग) जयदयाल गोयन्का (सं), *संक्षिप्त महाभारत (प्रथमखण्ड) वनपर्व,* गोरखपुर : गीताप्रेस, वि.सं. २०६७, पृ. २५५–२५७ ।

[५५] (क) सत्यमोहन जोशी, *नेपाली चाडपर्व,* काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३९, पृ. ३१ ।
(ख) धुस्वाँ सायमी, *दि लोटस एण्ड दि फ्लेम,* काठमाडौं : रत्न पुस्तक भण्डार, ई.सं. १९८०, पृ. १२–१३ ।

[५६] रेग्मी, पा.टि.नं. ५३, पृ. ४ ।

भएको कथा वंशावलीमा पाइन्छ ।[५७] यसैले यहाँ सुरुदेखि नै शैव धर्मको प्रभाव परेको कुरा देखा पर्दछ । नेपालका त्रिशुलीदेखि पश्चिम गण्डकी क्षेत्र वैष्णव क्षेत्र र त्रिशुलीदेखि पूर्वको पशुपति क्षेत्रको नामले प्रख्यात थियो ।[५८]

यसरी हिमालयको काखमा अवस्थित पवित्र र पुण्यभूमि अनि त्यसमाथि देवाधिदेव महादेव श्री पशुपतिनाथको ज्योतिर्लिङ्गको उत्पति पनि यतै भएकोले परापूर्वकालदेखि यहाँ शैव धर्म लोकप्रिय रह्यो ।

पशुपतिनाथ मन्दिर र त्यस वरपरका धार्मिक क्षेत्रले नेपालमा शैव धर्मको प्राचीनतालाई स्पष्ट पार्दछ । भगवान शिवले मृगरूप धारणा गरी क्रिडा गरेको स्थल मृगस्थली, किरातेश्वरमहादेवको मूर्ति, विरूपाक्षको मूर्तिहरूका साथै आर्यघाट, सूर्यघाट, तीलगंगा, देवपाटन आदि स्थानहरूमा पाइएका लिच्छवीकालीन अभिलेखहरू लगायत मध्यकालीन कलाकृतिहरू यहाँ प्रशस्त देख्न सकिन्छ । जसको आधारमा यहाँ शैव धर्म विकसित अवस्थामा थियो भन्ने थाहा हुन्छ । उपत्यका र उपत्यका वरपर प्रशस्त संख्यामा शिवलिङ्गहरू पाइएबाट यो तथ्य स्पष्ट हुन्छ । यसरी नेपालमा शैव धर्म लोकप्रिय रहेको स्पष्ट हुन्छ । शैव धर्ममा पनि विशेष गरेर मुण्ड श्रृंखलिक र कापालिक सम्प्रदायहरू शिवलाई भैरवको रूपमा मान्ने गर्दछन् । कापालिकहरूले भैरवको पूजा उपासना गर्दा मानिसको खप्पर, मानिसकै रगत र सुराले गर्दछन् । उपासकले ती सामग्रीहरू धारण गर्ने र सेवन पनि गर्दथे । भैरवको शक्तिको रूपमा भैरवीको पूजा गरिन्थ्यो ।[५९]

राजा भास्कर बर्माले गोकर्णमा स्थूलकाय श्री भैरवको स्थापना गरेको, अंशुवर्माले भारतको प्रयागसम्म पुगेर त्यहाँका भैरवलाई सेवा गरी प्रसन्न पारेर आफ्नो दरबार नजिक बटुक भैरव स्थापना गरेको[६०] तथा पूर्वमध्यकालका राजा आनन्ददेवले भक्तपुरलाई राजधानी नगरको रूपमा बसाउँदा भैरवनाथलाई देशमध्ये पारी प्रतिस्था गरेका तथ्यहरू ऐतिहासिक स्रोतसामग्रीहरूमा वर्णित छन् ।[६१]

यसरी यहाँ भैरव पूजा गर्ने परम्पराको थालनी लिच्छवीकालमै भइसकेको थाहा हुन्छ । तर त्यसो भएता पनि यस पूजाले व्यापकता मल्लकालमा आएर पाएको देखिन्छ ।

---

[५७] नयनाथ पौडेल (सं.), *भाषा वंशावली, भाग एक,* काठमाडौं : पुरात□व विभाग, वि.सं. २०२०, पृ. ६ ।

[५८] योगी नरहरीनाथ (सं.), *हिमवतखण्ड,* वनारस : गोरक्ष टिल्ला, .वि.सं. २०१३, पृ. १०० ।

[५९] जगदीशचन्द्र रेग्मी, "नेपालमा पाशुपत सम्प्रदायः एक अध्ययन", *नेपाली संस्कृति,* (वि.सं. २०४७), पृ. ८ ।

[६०] पौडेल, पा.टि.नं. ५७, पृ. ५४ र ८४ ।

[६१] नाथ, पा.टि.नं. ५ (क), पृ. ५२ र लम्साल, पा.टि.नं. ४ (ख), पृ. ८ ।

वास्तवमा मल्लकाल भैरवपूजाका लागि स्वर्णकाल थियो । त्यसबेला जिवित एवं मूर्ति दुवै रूपमा भैरव पूजा हुन्थ्यो ।[६२]

नेपालमा भैरवलाई मुख्य देवता मान्ने कापालिक सम्प्रदाय भन्नाले नेवार समाजका जोगी, योगी, कुस्ले, दर्शनधारी, कपाली आदि निम्न वर्ग पर्दछन् , जसलाई स्थानीय बोलीमा जुगी वा कुस्ले भनिन्छ । उपत्यकाका उग्र भैरव, काली, उन्मत भैरव, रातो मच्छेन्द्रनाथ, महाकाल, बज्रजोगिनी आदि तान्त्रिक र बौद्ध देवीदेवताहरूले नरमुण्डमालाका गहना धारण गरेकाले यहाँ यी कापालिकहरूको संख्या व्यापक रहेको अनुमान गर्न सकिन्छ ।[६३]

यसरी सुरुमा भैरव समाजका निम्नतम् वर्गका देवता थिए । तर पछि गएर यी देवता समाजका सबै वर्गद्वारा अति नै मान्य देवता हुन गएको देखिन्छ ।[६४] हिन्दु र बौध्द दुवै धर्म सम्प्रदायले यिनलाई मान्छन् । भारतको राजस्थान र नेपालमा यिनलाई एउटा मह□वपूर्ण देवताको रूपमा लिने गरिन्छ ।[६५] विशेष गरेर अनेक ग्रहदशा शान्त पार्न, शत्रु विनाश गर्न, आफ्नो भाकल पूरा गर्न भैरवको पुजा उपासना गर्ने गरिन्छ । भैरवको पूजा गर्दा तान्त्रिक विधि अर्थात् पंच मकार विधि अपनाएर हाँसको अण्डा, माछा, मासु, जाँड, रक्सी सहित सम्हेय्वजी आदि चढाएर गर्ने गरिन्छ । भैरव स्थानमा पञ्चबलि दिने प्रथा पनि छ ।[६६] विशेष गरेर बौध्द नेवारहरू पंच मकार विधिले र हिन्दु नेवारहरू भैरवका प्रिय नैवेद्य, लड्डू, मासको बारा, पशुबलि, फलफूलका साथ पंचोपचार विधिले पूजा गर्दछन् ।[६७] बिस्केट जात्राका प्रमुख देवता भैरव सुरुमा विश्वनाथ र पछिबाट आकाश भैरवका नामबाट प्रख्यात भए । यी देवताका तीन रूप छन् ।

(१) महादेव
(२) भैरवनाथ
(३) नृत्यनाथ

---

[६२] रमा पाण्डे, "नेपालमा भैरव पूजाको मह□व", *रोलम्बा,* अंक १३, नं. ३, (जुलाइ–सेप्टेम्बर १९९३), पृ. ११ ।

[६३] मत्स्येन्द्रनाथका शिष्य गुरु गोरखनाथ, गोरखनाथको शिष्य पद्म संभव भएकोले बौद्ध र कपाली सम्प्रदायबीच निकट सम्बन्ध रहेको अनुमान गर्न सकिन्छ । पहिले–पहिले कपाली जातिका विशेष व्यक्तिले बालाचरेदेखि सिलाचरे (बाला चर्तुदशीदेखि शिवरात्री) का दिनसम्म महादेवको भेष धारण गरी डमरु बजाएर हातमा त्रिशुल बोकी भिक्षाटन गर्न जाने परम्परा थियो । भिक्षुलाई भगवान बुद्धको प्रतीक मानिएझैं नेवार समाजमा यस्ता भेषधारी कापालिक महादेवलाई साक्षात शिवको अवतार मानिन्थ्यो । – तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट २०६४/१२/२५ गते प्राप्त जानकारीको आधारमा ।

[६४] जोशी, पा.टि.नं. २०, पृ. ५ ।

[६५] www.http://en,wikipedia.org./wiki/bhaira b; retrieved in 2011 Feb. 11.

[६६] पौडेल, पा.टि.नं. ३७, पृ. १०३ ।

[६७] पाण्डे, पा.टि.नं. ६२, पृ. १४ ।

पूर्णिमा, अष्टमी, शनिवार र विशेष पर्व दिनमा बाहेक अरुबेला भैरवनाथलाई विशेष सिंहासनमा राज गराइन्छ । त्यसबेला महादेवको रूपमा पंचामृतबाट पूजाआजा गरिन्छ । त्यसै गरेर जब तीन तल्ला भएको आसनमा विराजमान गराइन्छ तब भैरवनाथकै रूपमा पशुबलिदिई पूजा आराधना गरिन्छ र विशेष दिनहरूमा नृत्यनाथको रूपमा नृत्य, वाद्यवादन र अन्य संगीतको पूर्णताको विशेष नासः पूजा गरिन्छ ।[६८] यसैकारण, भक्तजनहरू समय हेरेर विभिन्न अवस्थामा विभिन्न अवतार मानी भैरवको दर्शन–पूजन गर्ने गर्दछन् ।

### ६.२.५ भद्रकाली

भैरवकी शक्ति भैरवी वा भद्रकाली हुन् । यिनलाई स्थानीय जनजिब्रोमा “नकिंजु अजिमा” भन्ने गरिन्छ ।[६९] भैरवकी शक्ति भएकीले नै बिस्केटमा भैरवसँगसँगै यिनको पनि रथजात्रा गर्ने गरिन्छ । किनकि शिवको साथमा शक्तिको पनि मह□वपूर्ण स्थान रहन्छ । दुवैको एकसाथ पूजाउपासना गरी जात्रा गर्नाले त्यसले सार्थक मह□व राख्ने कुरा तन्त्रमा उल्लेख पाइन्छ । वास्तवमा भन्ने हो भने भैरवको जात्रा भन्दा भद्रकालीको जात्रा ऐतिहासिक दृष्टिले मह□वपूर्ण रहेको कुरा स्थानीय बुढापाकाहरू व्यक्त गर्दछन् । किनकि भैरवनाथको रथजात्राको परम्परा प्रचलित हुनु भन्दा धेरै पहिले देखि यहाँ भद्रकालीको जात्रा हुँदै आएको देखिन्छ ।[७०]

प्रचलित लोकोख्यान अनुसार भद्रकाली भक्तपुरवासीहरूका आदिशक्तिदेवी हुन् । भक्तपुर शहरको निर्माण पनि यिनकै आदेशबाट भएको भनिन्छ । भक्तपुरवासीहरूले रक्षा देवीका रूपमा आजसम्म पनि यिनलाई ईष्टदेवी मानी पूजा–अर्चना गर्दै आइरहेको पाइन्छ ।[७१] तान्त्रिक मतमा पुरुष देवताको गौणस्थान रहने र स्त्री देवताको गुरुत्तर स्थान मानिने हुन्छ ।[७२] भक्तपुर पनि तन्त्रप्रधान भूमि हो । यसैले आठ अजिमा (अष्टमातृका) हरू मध्ये मुख्य अजिमा (नकिंजु अजिमा) को रूपमा यहाँ भद्रकालीको मह□वपूर्ण स्थान रहेको छ ।

---

[६८] (क) भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७/४/२३ गतेबाट प्राप्त जानकारीको आधारमा ।
(ख) सत्यनारायण प्रजापति, “बिस्केट जात्रा”, *नेपाली संस्कृति,* वर्ष ५, अंक ३, वि.सं. २०४६, पृ. ४४ ।

[६९] भक्तपुरमा स्थापित अष्टमातृका मध्येकी जेठीबाठी भएकीले यिनलाई नकिंजु अजिमा भनिएको हो । अन्य बेला वैष्णवीका रूपमा देखिएपनि बिस्केटका अवसरमा भैरवकी शक्ति भैरवीका रूपमा यिनको पनि भव्य जात्रा हुन्छ । –लेभी, पा.टि.नं.३, पृ.७४० ।

[७०] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ्गबाट २०६७।४।२३ गते प्राप्त जानकारीको आधारमा ।

[७१] प्रजापति, पा.टि.नं. ६८(ख), पृ. ३७ ।

[७२] हरिराम जोशी, *नेपालका चाडपर्व,* ललितपुर : जोशी रिसर्च इन्स्टिच्युट, वि.सं. २०६०, पृ. ५८ ।

यसैले होला भक्तपुरमा भैरवनाथको पीठ छैन तर भद्रकालीको पीठ र मन्दिर दुवै छ । भद्रकालीको पीठ नजिकै बिस्केटको मुख्य जात्रा (लिंगो उभ्याउने जात्रा) सम्पन्न हुन्छ ।

यसरी भक्तपुरमा आदिमातृशक्ति देवीका रूपमा भद्रकालीको ऐतिहासिक मह□व निकै उच्च रहेको देखिन्छ । तर त्यसोभएपनि बिस्केटको मुख्य देवता भनेर भैरवलाई नै मानिन्छ । उनको शक्तिका रूपमा मात्र भद्रकालीलाई लिने गरिएको छ । जात्रामा भैरवले मुख्य भूमिका खेल्छ भने भद्रकालीको उपस्थिति उनकै पार्श्व भागमा मात्र हुन्छ । तथापि बिस्केटसित जोडिएका आख्यानहरूले भद्रकालीलाई नै मुख्य चरित्र मानेको छ । शहरको जुन भागमा जात्रा केन्द्रित हुन्छ, त्यो उनकै स्थान हो । बिस्केट उनकै जात्रा हो भन्ने भनाइ पनि पाइन्छ ।[७३]

वास्तवमा शिव र शक्ति, पुरुष र प्रकृति, ईश्वर र माया अथवा लिङ्ग र योनी आदि जुनै नाम दिएपनि यी दुईको संयोगबाट नै सृष्टिकार्य प्रभृति हुन्छ र संसार चलिरहन्छ । यसै गरेर भक्तपुरमा पनि मेष संक्रान्तिको दिन साँझपख विश्वध्वजोत्थान जात्राको समापन पश्चात् भैरव र भद्रकालीको रथलाई तानेर ल्याइ तीनपटकसम्म एक आपसमा जुधाउने जुन परम्परा विद्यमान छ, त्यसलाई भैरव र भद्रकाली बीचको आपसी समागमको रूपमा हेर्ने गरिन्छ । साथै यसलाई शिव र शक्ति आपसमा एकाकार भएको प्रतीकात्मक अर्थमा पनि हेर्ने गरिएकोले यसको दार्शनिक पक्ष निकै मह□वपूर्ण रहेको छ । किनकि भैरवनाथ शिवको प्रतीक र भद्रकाली शक्तिको प्रतीकको रूपमा लिइन्छ ।

यद्यपि विभिन्न धर्मदर्शनहरूको विश्लेषण गरेको खण्डमा हरेक धर्मले आफ्नै मह□व र उच्चतालाई उजागर गर्ने कोशिस गरेको हुन्छ । जस्तो कि शैव धर्मले यो चराचर जगत्को सृष्टि हुनुभन्दा पहिला शिवको उत्पति भएको हो र शिवले नै सम्पूर्ण ब्रम्हाण्डको उत्पति गरे भनेर शिवको मह□वलाई उच्चता दिई व्याख्या गरेको छ भने शाक्त ग्रन्थहरूमा शक्तिलाई अझ उच्च देखाउन शिवको उत्पति नै शक्तिले गरेको हो भनिएको छ ।[७४] वास्तवमा शक्ति नै शिव भन्दा आदि हुन् । तिनी नै शिवकी जननी हुन् र शक्ति बिना शिव शव (लास) मात्र हुन्छ । अर्थात् शक्ति विश्व ब्रम्हाण्डको केन्द्रविन्दु भएकोले उसैले हरेक वस्तु सञ्चालन गर्दछ । पुरुष अर्थात् शिव Passive agent (निष्क्रिय वस्तु) मात्र हो जो स्त्री

[७३] रवर्ट आइ. लेभी, “बिस्केट जात्राको अन्तर्कथा”, *पासुका,* वर्ष १, अंक ८ (वैशाख २०५४), पृ. ३१ ।

[७४] जीतबहादुर मानन्धर, *विरन्ची नारायण,* काठमाडौँ : श्रीमती तारादेवी, वि.सं. २०४६, पृ. ३१ ।

अर्थात् शक्तिद्वारा मात्र प्रस्तुत हुन सक्दछ ।[७५] तसर्थ यो  जगतको सृष्टि, पालन र संहार शक्तिमा अडिएको छ भनी शाक्तग्रन्थहरूमा देखाइएको छ । यताबाट शक्तिबिनाको शिव चामल बिनाको धान, तेल बिनाको दियो अथवा दृष्टि बिनाको नेत्र जस्तै भएको थाहा हुन आउँछ ।

पौराणिक ग्रन्थहरूका आधारमा शैव र वैष्णव धर्म भन्दा शाक्त धर्मको विकास पछि भएको बुझिन्छ ।[७६] तापनि विश्वका प्राचीन सभ्यताहरूको अवलोकनबाट आदिमकालदेखि नै मातृशक्तिको प्रधानता भएको बुझिन्छ । मातृदेवीको पूजा उपासना गर्ने परम्परा आदिमकालमा भूमध्यसागरदेखि भारतीय भूमिसम्म फैलिएको थियो ।[७७] सिन्धु घाटीको सभ्यतामा प्राप्त नारी मूर्ति, सैन्धव सभ्यताको हडप्पामा प्राप्त एक मुहरमा प्रदर्शित चित्रमा स्त्रीको गर्भाशयबाट एउटा बोट निस्किराखेको देखाइएको छ । जसबाट यसको सम्बन्ध पृथ्वी देवीसित थियो अर्थात् स्त्रीशक्तिबाटै यथार्थत सम्पूर्ण विश्व ब्रम्हाण्डको उत्पत्ति भएको थियो भन्ने जानिन्छ ।[७८]

पछि गएर समाजमा पितृसत्ताको बोलवाला कायम भए तापनि मातृशक्तिको पूजा गर्ने परम्परा लोप भएन । वैदिककालमा पुरुष देवताको बाहुल्यता कायम रहेतापनि स्त्री देवताहरू पनि पुरुष देवतासँगसँगै समाजमा लोकप्रिय रहे । देवमाता अदिती, दानवमाता दिती, उषा, सरस्वती, वाक, गायत्री आदि त्यस समयका प्रमुख देवीहरू हुन् ।[७९] यसरी पौराणिक ग्रन्थहरूमा शक्तिको स्पष्ट रूपमा उल्लेख भएको नपाइएता पनि प्रामाणिक रूपमा अध्ययन गर्दा यो चराचर जगतमा शिव र शक्तिको विकास सँगसँगै भएको बुझिन्छ ।

उपनिषद् तथा पुराणहरूमा देवीको उत्पति र महिमा सम्बन्धमा अनेक कथाहरू उल्लेख भएको पाइन्छ । स्वस्थानी महात्यमा पनि शिवको शक्ति (सतीदेवी)को शरीरका कोषहरूबाट अनेकौ देवीहरूको उत्पति भएको कथा वर्णित छ ।[८०] शाक्त सम्प्रदायमा प्रचलित विभिन्न देवीहरूमध्ये एक प्रमुख देवी भद्रकाली पनि हुन् । अष्टमातृका गणभित्र पर्ने

---

[७५] इन्द्र मजपुरिया र पेट्रिसिया रोवर्टस, *लिभिङ भर्जिन गडेज कुमारी,* यू.पी. सहारनपुर इण्डिया : एक गुप्ता, ई.सं. २००७, पृ. १४ ।

[७६] वेदकालीन समाजमा पुरुष देवताहरू नै मूलरूपमा लोकप्रिय रहेकाले त्यसबेलाको समाज पितृसत्तात्मक सिध्दान्तबाट अत्यधिक प्रभावित रहेको देखिन्छ ।–शिवदत्त ज्ञानी, *वेदकालीन समाज,* वाराणसीः चौखम्बा विद्या भवन, ई.सं. १९६७, पृ. २६२ ।

[७७] साय्मी, पा.टि.नं. ५५(ख), पृ. २१ ।

[७८] (क) *ऐजन* , पृ. ११८ ।

(ख) वेदकालीन समाज पितृसत्तात्मक रहे पनि परिवारको आन्तरिक जीवनमा भने शक्ति(स्त्री)कै स्थान सर्वोच्च रहेको थियो । यसैकारण ऋग्वेदमा स्त्रीलाई जायदस्तं (स्त्री नै घर हो) भनिएको छ ।–*ऋग्वेद* ९।१०२।४ ।

[७९] मुनंकर्मी, पा.टि.नं. १४, पृ. १३ ।

[८०] पराजुली, पा.टि.नं. ४२ (क), पृ. ११५–११६ ।

आठवटा देवीहरू मध्येकी एक देवी वैष्णवी भद्रकालीको अर्को रूप हो । मल्ल राजाहरूले इष्टदेवीका रूपमा मान्ने दुमाजुदेवी पनि भद्रकाली नै हुन् । भक्तपुरमा भद्रकालीको देवगृह इच्छुटोलमा र पीठ भेलुखेल (योसिंखेल) मा अवस्थित छ ।

यसरी बिस्केट जात्राको एउटा केन्द्रीय पात्रका रूपमा देखापर्ने आदि मातृशक्तिदेवी भद्रकालीको धार्मिक र ऐतिहासिक दृष्टिकोणबाट निक्कै उच्च स्थान रहेको पाइन्छ ।

### ६.२.६ प्रतिमा लक्षण

बिस्केट जात्राकी प्रमुख देवी भद्रकालीको प्रतिमा लक्षण निम्न अनुसार रहेको पाइन्छ । जस्तै : शरीर भरि बहुमुल्य रत्नले जडित आभुषण लगाएकी, मुकुट पहिरेकी, दुवै कानमा कुण्डल र गलामा श्रीयन्त्रको कण्ठहार लगाएकी यी देवी अन्य अष्टमातृका देवीहरूको तुलनामा दुव्ली, पातली हुनुका साथै अनुहारमा पनि आँखाभित्र गडेको, गालाभित्र पसेको, हेर्दै डरलाग्दी देखिन्छिन् । निधारमा चन्द्रमा सहित तीन नेत्र र नीलकमल जस्तो वर्ण भएकी, उनेको कपालको माला लगाएकी हुन्छिन् । साथै हातका नाडीमा बाजु र खुट्टामा पाउजेव लगाएकी हुन्छिन् । यिनका १६ हातहरूमा निम्न आयुधहरू धारण गरिरहेको पाइन्छ । जस्तो – दायाँ अष्ट बाहुमा बरद मुद्रा, जनै, सुल, जिउँदो नाग, बाण, वज्र, काँसको सिन्हमु, शक्ति । साथै बायाँ अष्ट बाहुमा कपाल पात्र, ज्वालान्हायक (काँसको ऐना), धनुष, परिध, घण्टा, पाश, मुद्‌गल(हथौडा), कत्री ।[८१]

संस्कृतिविद् जीत बहादुर मानन्धरले  चामुण्डा देवीलाई नै भद्रकाली हो भन्नु भएको छ ।[८२] जसको प्रतिमा लक्षण यस्तो छ – मांसविहिन हाड छालाको शरीर धारण गरेकी, दुवै स्तन झोलिएको, पेट भित्र दविएको, विविध आयुध धारण गरेकी, नरशवमाथि उभिएकी, तीन नेत्र भएकी देवी नै चामुण्डा हुन् ।

भद्रकालीलाई भैरवको शक्ति मानिएको हुनाले भैरवी पनि भन्ने गरिन्छ । तर भैरवीको प्रतिमा लक्षण भद्रकालीको भन्दा फरक रहेको पाइन्छ । जस्तो – कमलमाथि बसेकी, रगतले स्तन पोतेकी, मुण्डमाला लगाएकी, तीन नेत्र भएकी, चन्द्रमा जस्तो तेजिलो

---

[८१] मुनंकर्मी, पा.टि.नं. १४, पृ. ३७ ।

[८२] मानन्धर, पा.टि.नं. ७४, पृ. १०८ ।

रत्न जडिएको मुकुट लगाएकी, जपमाला, पुस्तक, वर र अभय मुद्रा प्रदर्शन गरेकी, सूर्यजस्तो रातो कान्ति भएकी देवी भैरवी हुन् ।[८३]

सिद्धिविद्याका देवी मातृकागण – अष्टमातृका, दश महाविद्या र पन्ध्र सिद्धिविद्यामा समाहित देवीहरूको एउटै नाम भएपनि तिनका भेद, वर्ण र आकृति फरक फरक छन् । यसै अनुसार पन्ध्र सिद्धिविद्याकी भद्रकालीको प्रतिमा लक्षण यस्तो छ – हाड र छालाको ढाँचा मात्र देखिने गाला चाउरिएको, आँखा भित्रसम्म धसेको वृद्धमाताको स्वरूपमा भद्रकाली देखिन्छिन् । कालो वर्ण, भोक प्यासले सताएको मलिन अनुहार, जिब्रो बराबर बाहिर निकालिरहने यी देवीले हरियो पहिरन लगाएकी हुन्छिन् । साथै घाँटीदेखि खुट्टासम्म लत्रिने गरी नरमुण्डमाला लगाएकी हुन्छिन् । कम्मर र खुट्टामा घंघलाको माला लगाएकी हुन्छिन् । आफ्ना अष्ट भुजामा विविध आयुधहरू लिएकी हुन्छिन् ।[८४]

उल्लिखित तथ्यहरूका आधारमा देवी भद्रकालीको प्रतिमा लक्षणमा एकरूपता रहेको पाइँदैन । विविध स्वरूप र परिस्थिति अनुरूप प्रतिमा लक्षणमा पनि विविधता झल्किएको पाइन्छ ।

यसप्रकार बिस्केट जात्रामा भैरवको शक्तिको रूपमा भद्रकालीको पनि मह□वपूर्ण स्थान रहेको पाइन्छ ।

### ६.२.७ बेताल

बिस्केट जात्राका अर्का प्रमुख देवता बेताल हुन्, जसलाई स्थानीय जनजिब्रोमा बेतःद्यः, बेतःअजाजु आदि भन्ने गरिन्छ । प्रचलित भाषामा यिनलाई वीर बेताल पनि भन्ने गरिन्छ । बेताल भैरवनाथका मूल बाहन हुन् । जात्राको बेला भैरवनाथको रथको अगाडिपट्टि उठेको बेतासीं (बेतालको आसन) मा बेतालको मूर्तिलाई बाँधेर राखिन्छ । अरुबेला भैरवनाथको मन्दिरदेखि पूर्वतिर रहेको पाटीको माथिल्लो खण्डको दलिनमा घोप्टो पारेर बाँधेर राखिन्छ ।[८५] विशेष अवसरमा मात्र बेताललाई सीधा पारेर पूजा–अर्चना गर्ने गरिन्छ । किनकि यिनी अत्यन्त चंचल देवता हुन् । भैरवको वाहन भएको कारणले गर्दा नै बिस्केटमा भैरवलाई सम्पूर्ण यात्रा अवधिभरि बेतालले अघि लागेर साथ दिएको हुन्छ ।[८६]

---

[८३] मुनंकर्मी, पा.टि.नं. १४, पृ. ७९ ।

[८४] *ऐजन,* पृ. ११८ ।

[८५] स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।

[८६] एण्डरसन, पा.टि.नं. १६, पृ. ४४ ।

भक्तपुरका बासिन्दाहरू बेताललाई नवदुर्गालाई झैं जिउँदो देवता मानेर देश र बन्धुबान्धव रक्षक देवताका रूपमा बडो श्रद्धाका साथ पूजाआजा गर्ने गर्दछन् । हुन पनि स्थानीय जनविश्वास अनुसार जब भक्तपुरमा कतैबाट कुनै विपत्ति वा अनिष्ट आइलाग्ने गर्छ तब त्यतिबेला सहयोगीका रूपमा नवदुर्गासंगै बेताल पनि आइपुग्ने गर्छ भन्ने धारणा पनि विद्यमान छ ।[८७] यसकासाथै बेतालका बारेमा अनेकौं जनश्रुति पनि विद्यमान छन् । यस्ता जनश्रुतिले स्थानीय संस्कृतिमा मह□वपूर्ण स्थान ओगटेको पाइन्छ । बेतालका बारेमा प्रचलित अर्को लोककथा अनुसार–एकपल्ट भक्तपुरमा शत्रुले हमला गरेकाले बिस्केट जात्रामा कुनै नरनारी देखा परेनन् । तब त्यसबेला ब्रतबन्ध नै नगरेको बालकका रूपमा वीर बेताल देखा पर्‍यो । जसले एक हातले विशाल भैरव र भद्रकालीको रथ तानेर लिंगो उभ्याउने स्थान भेलुखेल (योसिंखेल) पुर्‍याई अर्को हातले लिंगो उभ्याई विश्वध्वजा फहराइदिए । यो दृश्य देखेर प्रभावित भइ भक्तपुरेहरूले शत्रुसँग लड्ने हिम्मत गरेर शत्रुलाई निक्कै टाढासम्म लखेट्न सफल भए ।[८८] यसैले त्यसबेला देखि बिस्केट जात्रा हुने मुख्य स्थानहरू टौमढी, लयको, लाकोलाछें टोलहरूमा कुनै नचिनेको बालक आइ केही कुरा माग्छ भने सो बालक बेतालको अवतार हो भनी विश्वास गर्नेहरू थुप्रै पाइन्छन् ।

त्यस्तै, अर्को लोककथा अनुसार पाँच तल्ले मन्दिर बनाउँदा सहयोग गर्न आउनेलाई भात ख्वाउने चलन थियो । एउटा भुसतिघ्रे पनि प्रत्येक दिन भात खान आउने गर्दथ्यो तर काम भने केही पनि गर्दैनथ्यो । धेरै मानिसले त्यो बढी भात खाने मान्छेको बारेमा गुनासो पोखे, तर राजाले भने हाँसेर केही भन्दैनथे । एक पाथी चामलको भात खाने भएकाले त्यसलाई “फछिथो” (पाथे) नाम राखे । जब मन्दिरको गजुर देवल माथि कसैले पुर्‍याउन सकेन तब त्यो मान्छेले पुर्‍याइदियो । त्यहाँदेखि त्यो मान्छे कहिल्यै देखिएन । सबैले अनुमान गरे त्यो मान्छे साक्षात् वीर बेताल नै हो ।[८९]

प्रचलित जनविश्वास अनुसार बेतालको व्रतबन्ध नभएको विश्वास गरिन्छ । यसलाई आफ्नो संस्कृतिमा समाहित गर्दै बेताल चोक (भुछेननी)का कुनै पनि परिवारमा अद्यापि व्रतबन्ध गर्ने चलन छैन ।

[८७] प्रजापति, पा.टि.नं. ६८ (ख), पृ. २५ ।

[८८] मूल भैरव नाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट २०६७/४/२३ गते प्राप्त जानकारी ।

[८९] प्रजापति, पा.टि.नं. ६८(ख), पृ. २६ ।

बेताल खेतीपातीका प्रमुख रक्षक देवता पनि हुन् । यसैले मेष संक्रान्तिका दिन जब बेताल पूर्व मुख हुन्छ, तब कुखुराको पोथी चढाइन्छ । यसरी कुखुराको पोथी बलि चढाएर पूजा गरेमा खेतीपातीमाथि हुने सबै अनिष्ट नासिने र बढी भन्दा बढी उत्पादन हुने जनधारणा रहेको पाइन्छ ।[९०]

### ६.२.८ प्रतिमा लक्षण

झट्ट हेर्दा बेताल मानिस जस्तै देखिन्छ । बेतालको प्रतिमा लक्षण वा शारीरिक संरचना निम्न अनुसार रहेको पाइन्छ ।

डल्ले डल्ले, केही पुड्को, हातगोडा मोटो भएपनि कम्मर छाँटिएको, विशाल ललाट भएको, जुङ्गा मुठे देखिन्छ ।[९१] प्रतिमा लक्षणको आधारमा भक्तपुरवासीहरू मेहनती, बलियो, दृढ संकल्पी र अनुशासित छोराको उदाहरण दिनु परे बेतालको उदाहरण दिने गर्दछन् ।

पहिले बिस्केट जात्राको समयमा सियाबजी (भुटेको च्युरा) महमा मुछेर बेतालको मूर्ति बनाउने चलन थियो, तर पछि आएर "ब्रम्हसिं" (वरुण काठ) नामक विशेष काठबाट बेतालको मूर्ति बनाई सुनको मोलम्बा गर्ने चलन आएपछि उक्त पुरानो चलन हराएर गयो । मूर्ति तयार भएपछि त्यसलाई जिवित रूप दिन अथवा जिउँदो रूपमा प्रस्तुत गर्न एक किसिमको संस्कार गर्नुपर्छ, जसलाई जीवन्यास भनिन्छ । हाल भएको बेतालको मूर्तिको वि.सं. २०३८ साल चैत्र महिनामा जीवन्यास गरिएको थियो ।[९२]

बिस्केट शुभ हुने वा अशुभ हुने भन्ने कुरा बेतालको मुखाकृतिको लक्षणबाट पनि अनुमान गर्न सकिन्छ । स्थानीय ज्योतिषको धलःपौ (टिपोट) मा जब वीर बेतालको अंगभंग र अपमान हुन्छ तब भक्तपुरमा हाहाकार मच्चिन्छ भनेर लेखिएको छ ।[९३] भैरवनाथलाई पूजा चढाउँदा बेताललाई पनि छुट्टै भाग पन्छाएर चढाउनु पर्दछ, अन्यथा पूजाको फल अनिष्ट हुन्छ भन्ने जनविश्वास रहेको पाइन्छ ।[९४]

भैरवनाथको रथमा बेताल सवार नभइकन जात्राका मुख्य देवता भैरवनाथको आरोहण गर्न मिल्दैन र भैरवनाथको रथारोहण नभइकन बिस्केट जात्रा आरम्भ पनि हुँदैन ।

---

[९०] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[९१] *ऐजन* ।

[९२] प्रजापति, पा.टि.नं. ६८(ख), पृ. २६ ।

[९३] लाकुलाछें निवासी ज्योतिष दैवज्ञ जोशीको संकलनमा रहेको वंशावलीको टिपोटबाट ।

[९४] लीलाभक्त मुनंकर्मी, *बिस्केट जात्राको संस्कृति,* भक्तपुर : भक्तपुर नगरपालिका, वि.सं. २०५३, पृ. ४३ ।

अतः यताबाट वीर बेताल भैरवनाथका बाहनका रूपमा मात्र देखिएपनि तिनको उपस्थिति बिना रथजात्रा शुभारम्भ नहुने भएकोले यस जात्रामा तिनको पनि अहम् भूमिका रहेको थाहा हुन आउँछ ।

### ६.२.९ गणेश

बिस्केटमा जात्रा गरिने देवी–देवताहरूमा गौरी पुत्र गणेश पनि एक हुन्, जसलाई स्थानीय जनजिब्रोमा गनेद्यः, इनाद्यः आदि भन्ने गरिन्छ । प्रचलित भाषामा भने गणपति, बिनायक, मंगल आदि भन्ने गरिन्छ । शैव र शाक्त तन्त्रमा गणेशको पनि मह□वपूर्ण स्थान रहेको छ । यसैकारण जात्राको समयमा भैरव, भद्रकालीका साथै टोल–टोलमा गणेशको पनि खटयात्रा निकालिन्छ । वास्तवमा गणेश गणपत्यहरूको मात्र आराध्यदेव नभइ सौर, शैव, वैष्णव तथा शाक्त सम्प्रदायभित्र पनि अग्रपूजाका अधिकारीका रूपमा सर्वमान्य देवता हुन् ।[९५] यसर्थ भक्तपुरवासीहरूले गणेशजीलाई पनि बिस्केट जात्राका एक मह□वपूर्ण देवताको रूपमा पुज्ने गर्दछन् ।

वैदिक पुराणहरूमा गणेशको पूजा नगरी अन्य देवीदेवताहरूको पूजा गरेमा फल प्राप्त हुँदैन भनी गणेशको ठूलो मह□व दर्शाइएको छ । उनी भाग्य र सफलताका प्रतीक अनि बाधा, अडचन पन्छाइ दिने देवताका रूपमा प्रसिद्ध छन् ।[९६] आज पनि आफुले चिताएको कुरा पुगोस्, घर परिवारमा सुख शान्ति छाओस् भनेर प्रत्येक जसो घरमा नित्य झैं सर्वप्रथम गणेशको पूजा गरिन्छ । यस अतिरिक्त यहाँका टोलटोलमा पनि विभिन्न आसन र शैलीका अनेक नामका साना ठूला गणेशका मूर्ति र मन्दिर पाइन्छन् । तान्त्रिक प्रवाहको फलस्वरूप यहाँ आकृतियुक्त भन्दा अनाकृत अर्थात स्वरूपवेगरका प्रस्तर गणेश मूर्तिहरू ज्यादै प्रसिध्द छन् ।[९७] परापूर्वकालमा स्थापित यी प्रत्येक गणेशका आफ्नै धार्मिक मह□व र ऐतिहासिक पृष्ठभूमि रहेको देखिन्छ ।[९८] वर्षको एकपटक बिस्केटको अवसर पारेर यिनको जात्रा गरिन्छ । यहाँका प्रसिद्ध गणेशहरूमा चोंगा गणेश, इनागा गणेश, मुलाखु गणेश, बालाखु गणेश, चलाखु गणेश, जेठा गणेश, छुमा गणेश, याछें गणेश, यातु गणेश, इनारे (सूर्यविनायक) गणेश आदि छन् ।

---

[९५] जीतबहादुर मानन्धर, *श्री गणेशायनमः*, काठमाडौं : श्रीमती तारादेवी मानन्धर, वि.सं. २०५१, पृ. २ ।

[९६] ध्रुवकृष्ण दीप, *दि नेपाल फेष्टिवल्स*, काठमाडौं : रत्न पुस्तक भण्डार, ई.सं. १९९९, पृ. ३१–३२ ।

[९७] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनका आधारमा ।

[९८] मानन्धर, पा.टि.नं. ९५, पृ. ३ ।

पौराणिक कथाहरूमा भगवान शिव र पार्वती पुत्र गणेश मानिएको छ । कथा अनुसार पार्वतीले आफ्नो शरीर माडेर निकालेको मयल जम्मा गरी गणेशको सृष्टि गरेर ढोकामा द्वारपालको रूपमा राखिन् । शिवजी बाहिरबाट घुमेर आउँदा उक्त द्वारपालले भित्र पस्न दिएनन् । शिवजीले रिसले आफ्नो त्रिशुलले उक्त बालकको शिर छेदन गरी भित्र पसे । तर उक्त बृतान्त सबै पार्वतीले थाहा पाई ठूलो बिलौना गरी रुन कराउन थालिन् । पार्वतीको बिलौना सहन नसकेर शिवजीले आफ्ना गणहरूलाई बाटोमा जे पाउँछौं त्यसैको शिर लिएर आउने आज्ञा दिए सोही मुताविक हात्तीको टाउको लिएर आए । शिवजीले उक्त हात्तीको टाउको बालकको शरीरमा जोडी जिउँदो बनाए र आफ्ना गणहरूको मालिक (गणपति) बनाई सबै देवताहरू मध्ये पहिले पुजिने अधिकार प्रदान गरे ।[९९]

गणेशको मात्र पूजा आराधना गर्ने एउटा छुट्टै गणपत्य सम्प्रदायको विकास भारतमा देखिए पनि नेपालमा यस्तो सम्प्रदायको विकास भएको पाइँदैन ।[१००] तर पनि शैव तथा शाक्त सम्प्रदायमा गणेशको मह□व अग्रपंक्तिमा रहेको पाइन्छ ।

बिस्केट जात्रा भैरव, भद्रकालीसँग मात्र सम्बन्धित नभइ गणेशसँग पनि सम्बन्धित भएको कुरा निम्न अनुश्रुतिबाट थाहा पाइन्छ ।

परापूर्वकालमा भक्तपुर जंगलले ढाकिएको थियो । त्यसबेला दुवाकोटमा राजदरबार थियो । त्यहाँका राजा शिकार खेल्दै हालको भोलाछें (भक्तपुरकै) जंगलमा आइपुगे । त्यहाँ राजाले मुसा र बिरालो एक अर्कामा खेल्दै गरेको देखे । त्यो खेल बडो मनोरञ्जनात्मक भएको हुनाले राजाले बडो चाख दिएर हेरिरहेका थिए । त्यसैबेला मुसाले बिरालोलाई समातेर आफ्नो ओडारतिर घिसार्दै लग्यो । राजा एकदम अचम्ममा परे । किन यस्तो उल्टो भएको बिरालोले मुसा समात्नु पर्ने ठाउँमा मूसाले बिरालालाई समातेको । यो कुनै साधारण मूसा होइन । यसमा केही रहस्य लुकेको छ भनी राजा विस्तारै चाल मार्दै मूसाको पिछा गर्न थाले । उक्त मूसा जंगलबीचको एउटा रुखको प्वालभित्र पसेर अदृश्य भयो । राजाले त्यस रुख भित्र के रहेछ भनी प्वालबाट हेर्दा गणेशजीको दर्शन पाए । राजाले तुरुन्तै गणेशजीलाई सादर प्रणाम गरे । राजाको यस्तो भक्तिदेखि मूसारूपी गणेश प्रसन्न भएर के आज्ञा गरे भने अहिले मैले तिमीलाई दिने कुरा केही छैन । तसर्थ तिमी लयकोे भन्ने जंगलमा एक्लै बसेकी

---

[९९] (क) बेणीमाधव ढकाल, *श्री गणेश पुराणम्*, काठमाडौं : विद्यार्थी पुस्तक भण्डार, वि.सं. २०६६, पृ. ७५–७६ ।
(ख) हनुमानप्रसाद (सं.), *संक्षिप्त शिवपुराण*, गोरखपुर : गीता प्रेस, वि.सं. २०५२, पृ. २९२–२९७ ।
[१००] रेग्मी, पा.टि.नं. ५३, पृ. १७३ ।

वृद्धासित तरवार माग । त्यही तरवारबाट तिम्रो मनोकांक्षा पूर्ण हुन्छ भनी गणेशजी अन्तर्ध्यान भए । यसरी यिनै गणेशजीको आज्ञा बमोजिम राजाले व्यवस्थित रूपमा भक्तपुर शहर बसाए ।[१०१] यसैकारण यिनलाई आदिगणेशको संज्ञा पनि दिइन्छ[१०२] र बिस्केट जात्रामा गणेशको बडो श्रद्धा भक्तिपूर्वक पूजाआजा गरी खटयात्रा सम्पन्न गरिन्छ । राजाले मूसो खोज्न गएको ठाउँको गणेश भएको हुनाले त्यसलाई नेवारी भाषामा छुँ मा गणेश भन्ने गरिएको हो ।[१०३]

### ६.२.१० प्रतिमा लक्षण

गणेशलाई हिन्दु नेवारहरूले मात्र नभएर बौद्ध नेवारहरूले पनि ठूलो श्रद्धाका साथ पुज्ने गर्छन् । उही एउटा गणेशको मूर्तिलाई हिन्दुहरू शिव पुत्रको रूपमा र बौद्ध नेवारहरू तान्त्रिक देवता विघ्नान्तकको रूपमा मान्ने गर्छन् ।[१०४] यसरी गणेशको मूर्तिमा धार्मिक सहिष्णुता र समन्वयको भाव लुकेको पाइन्छ । शाक्त तन्त्रवाट प्रभावित यहाँको नेवार समाजमा गणेशको पूजामा समेत माछा, मासु, जाँड, रक्सी, फुल चढाउने गरिन्छ । उनलाई “हिफो द्यः” भनेर दोपाया चौपाया पशु बलि दिइन्छ ।[१०५] यो यहाँको आफ्नै मौलिक संस्कृति हो । साधारणतया सिद्धिदाता भनेर चिनिने सफलताका देवता गणेशका चार हात, ठूलो पेट, छोटो कद, सुदृढ शरीर, हात्ती सुँढे शिर हुन्छ । जसको एउटै मात्र दाँत पूर्ण छ भने अर्को दाँत भाँचिएको हुन्छ ।[१०६]

मुग्दल पुराणमा ३२ किसिमका गणेशको वर्णन गरिएको छ, जसमध्ये सिंहमाथि सवार गणेश निक्कै मह□वपूर्ण देखिन्छ, जसलाई हेरम्ब गणेश भनिन्छ । यसको एउटा सुन्दर मूर्ति पाटन दरबार परिसरमा अद्यावधि देख्न सकिन्छ ।[१०७] विष्णु धर्मोत्तर पुराणमा हात्तीको मुख, मानिसको शरीर, ठूलो पेट, चार हात, दाँया हातहरूमा त्रिशुल र

---

[१०१] भद्रकाली गुठीका नाइके इन्द्र लिवि (वर्ष ६०) बाट २०६७/७/२७ गते प्राप्त जानकारी ।

[१०२] भक्तपुरमा आदिगणेशको संज्ञा दिइने यी छुमा गणेशलाई चित्रकला आदि सीप सिकाई दिने विश्वकर्मा नै मानिन्छ ।- मानन्धर, पा.टि.नं. ९५, पृ. १४ ।

[१०३] लीलाभक्त मुनंकर्मी, *नेपालको सांस्कृतिक तथा ऐतिहासिक दिग्दर्शन,* भक्तपुर : भवानी केशरी, वि.सं. २०४१, पृ. १२५-१२६ ।

[१०४] बलराम कायस्थ, *भक्तपुर शहरमा मनाइने केही ऐतिहासिक चाडपर्वहरू* (अप्रकाशित स्नातकोत्तर शोधप्रबन्ध) इतिहास केन्द्रीय विभाग, त्रि.वि. किर्तिपुर, वि.सं. २०५०, पृ. ५२ ।

[१०५] सुरेन्द्रमान श्रेष्ठ, *नेवाः संस्कृतिया इतिहास,* येंः इन्द्र जवाहर सहयोग गुठी, ने.सं. ११२९, पृ .१८६ ।

[१०६] पौराणिक कथनअनुसार गणेशले यो दन्त महाभारत लेख्नलाई कलमको रूपमा प्रयोग गरेका थिए ।– दीप, पा.टि.नं. ९६, पृ. ३० ।

[१०७] *ऐजन,* पृ. ३१ ।

अक्षमाला र बायाँ हातहरूमा मोदकपूर्ण पात्र र परशु धारण गर्ने, एउटा मात्र दाँत बाहिर निस्केको, पलेंटी कसेको, एक पाउ आसनमा एक पाउ भुइँमा राखेका, सुँढको अगाडि लड्डुको पात्र रहेको, ठाडा कान गरेका, बाघको छाला र सर्पको जनै लगाएका गणेशको वर्णन उल्लेख भएको पाइन्छ ।[१०८] तर पुराणमा चार हातको वर्णन भएतापनि नेपाल उपत्यकामा दुई हात, चार हात, सोह्र हात, बत्तीस हात भएका गणेश मूर्तिहरू पाइन्छन् ।[१०९]

### ६.२.११ अन्य देवीदेवताहरू

माथि उल्लिखित प्रमुख देवीदेवताका अतिरिक्त बिस्केट जात्रामा संलग्न हुने अरु पनि थुप्रै देवी देवताहरू छन् । नगरका टोल–टोलमा भएका अनेक नामधारी भैरव, मातृका गण, गणेश आदिको बिस्केटमा बडो धुमधामले पूजाआजा गर्ने, बलि चढाउने, खटयात्रा गर्ने गरिन्छ । यी देवीदेवताहरू जात्रामा सहभागी भएर आ–आफ्ना मूलदेवगृह फिर्ति हुनुपुर्व बिस्केटजात्रा समापनको एक दिन अघि तत्–तत् स्थानमा नै गएर नगरब्यापी रूपमा नगरवासीहरूले यी देवीदेवतालाई सगुन प्रदान गर्ने एक सांस्कृतिक मेलाको परम्परा चल्दै आएको छ, जसलाई “द्यःस्वगं बियेगु” (देवतालाई सगुन दिने) भनिन्छ ।[११०] ती देवदेवीका नाम र अवस्थान सूची निम्न अनुसार रहेका छन् ।

| **देवदेवी** | **अवस्थान–इलाका** |
|---|---|
| (१) भद्रकाली | भुजिंकोखा फल्चा (पाटी), टौमढी टोल |
| (२) बेताद्यः (वीर बेताल) | गाःहिटी टोलमा भैरवनाथको रथको “असिं” |
| (३) सभुंग भैलद्यः (क्रोध भैरव) | बोलाछें टोलस्थित जंगममठको सामुन्ने स्वस्थान |
| (४) आकाश भैरव (विश्वनाथ भैरव) | चपाछें, लाकोलाछें |
| (५) इनारे गणेद्यः (सूर्यविनायक) | तालाक्वटोल जाने बाटोको फल्चा |
| (६) बुल्चा भैलद्यः (श्वेत भैरव वा बटुक भैरव) | चखुँचाछें, बोलाछें टोल |
| (७) ज्याठा गणेश | तःननी, तालाक्व टोल |
| (८) लाहा मदु योसिंद्यः | तालाक्व टोल |
| (९) मनकामना | मलाछें गःचा |
| (१०) वाराही | तेखाचो टोलस्थित देवगृहकै छिंडी |

[१०८] भट्टराई, पा.टि.नं.४६ (ख), पृ. ८९ ।

[१०९] रेग्मी, पा.टि.नं. ५३, पृ. १७३ ।

[११०] भैरवनाथ गुठीका नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गतेबाट प्राप्त जानकारीको आधारमा ।

| | |
|---|---|
| (११) चोंगा गणेश | तेखाचो टोलस्थित तेखापुखु (पोखरी) सामुन्नेको फल्चा |
| (१२) फैत्वाका गणेश | हनुमान फल्चा तंक्वे |
| (१३) इनागा गणेश | इताछें फल्चा |
| (१४) इन्द्रायणी | खौमा टोलको देवगृहको छिंडी |
| (१५) तलेजु | स्वर्णद्वार, भक्तपुर राजदरबार |
| (१६) पंध्वाखा गणेश | स्वर्णद्वार बायाँपट्टिको गणेश |
| (१७) बालाखु गणेश | तांच्वय फल्चा, यालाछें टोल |
| (१८) त्रिपुरासुन्दरी | तुलाछें टोलको देवगृहको उत्तरपट्टिको फल्चा |
| (१९) छुमा गणेश | देवगृह अगाडिको फल्चा |
| (२०) महाकाली | हिटीफुसे फल्चा, लालाछें टोल |
| (२१) महालक्ष्मी | थालाछें फल्चा |
| (२२) ख्वाना भैलःद्यः | मिलाकोछें फल्चा, थालाछें टोल |
| (२३) बालकुमारी (खिनावःद्यः) | गुच्चात्वः, तचपाल टोल |
| (२४) सालां गणेश | सालाने, तचपाल टोल |
| (२५) भाजं भैलद्यः | मठ फल्चा, क्वाठण्डौं टोल |
| (२६) कुतिप्वाकः गणेश | क्वाठण्डौं टोलको पोखरी अगाडिको फल्चा |
| (२७) यातु गणेश | गुन्चा क्वाठण्डौं टोल |
| (२८) गुन्चा बालकुमारी | गःछें टोलको नवदुर्गा देवगृहको उत्तरपट्टिको ताहाफल्चा |
| (२९) यामिसिक बालकुमारी | त्वाचा फल्चा, सुर्जमाह्री टोल |
| (३०) ध्वाखासिं गणेश | सुर्जमाह्री फल्चा |
| (३१) माचो भैलद्यः (रुरु भैरव) | जेंलाटोलको फल्चा |
| (३२) तलातुन्थी गणेश | तौलाछें टोलको दबुचा |
| (३३) ब्रम्हायणी | तचपाल टोलस्थित वानेलायकू पस्ने खुला प्रवेशमार्ग सामुन्नेको फल्चा (हाल विलुप्त) |
| (३४) महेश्वरी | ताहा फल्चा, इनाचो टोल |
| (३५) चोरचा गणेश | देवगृहको मूलढोका बाहिर, चोर्चा, इनाचो टोल |
| (३६) तांच्वय गणेश | गोलमढी टोलको गणेश मन्दिरको दक्षिण पट्टिको फल्चा |
| (३७) याछें गणेश | याछें फल्चा (विगत केहीवर्ष देखि चलेको) |
| (३८) लालाछें गणेश | लालाछें टोलको चारकुने फल्चा |
| (३९) दही विनायक | टिबुक्छें टोलको फल्चा |
| (४०) कुमारी | क्वाछेंटोल स्थित कुमारी देवगृहको छिंडी[१११] |

[१११] श्रेष्ठ, पा.टि.नं. २९ (क), पृ. १४०–१४१ ।

## ६.३ बिस्केट जात्राका प्रमुख विधिविधानहरू

बिस्केट जात्रामा मुख्य भूमिका खेल्ने प्रमुख देवीदेवता भनेका भैरव र भद्रकाली नै हुन् । यी दुवै देवताहरू नवदुर्गा र तलेजु जस्तै भक्तपुरका प्रख्यात देवता हुन् । जस्तोसुकै आपद् विपद् पर्दाखेरि पनि भक्तपुरवासीलाई साथ दिँदै आएका रोचक अनुश्रुतिहरू छन् । दुवै देवीदेवताका आ–आफ्नै देवगृह(मन्दिर), गुठी, गुठीसंचालकहरू, पुजारी, पूजाविधानहरू रहेका छन् । भैरवनाथको मन्दिर नगरको मध्यविन्दु वार्ड नं. ११ को टौमढी टोलमा र भद्रकालीको देवगृह वा मन्दिर वार्ड नं. १३ को इच्छुटोलमा अवस्थित छ । तान्त्रिक देवता भएकाले पंचमकार विधिवाट यिनको पूजा उपासना गरिन्छ । यसैले यिनको पूजामा मास, मत्स्य, अण्डा, जाँड रक्सी आदि वस्तुहरू सहित दोपाया, चौपाया पशुहरूको भोगबलि चल्दछ । बिस्केट जात्राका विविध विधिविधानवारे लेखिएका थुप्रै हस्तलिखित ग्रन्थहरू पाइएका छन्, जो राष्ट्रिय अभिलेखालय काठमाडौँमा संग्रहित छन् । यी ग्रन्थहरू संस्कृत र नेवारी भाषामा अनि प्रचलित नेवारी लिपिमा लिपिवध्द छन् । यस्ता ग्रन्थहरूमा जात्रामा देवतालाई आह्वान गर्ने विधिबारे लेखिएको “विश्वयात्रा निमन्त्रण विधि” देखि लिएर बिस्केट जात्राको समापन पश्चात् अर्थात् देवतालाई स्वस्थान फर्काइसकेपछि गरिने “बिचापूजा विधि” सम्मका हस्तलिखित ग्रन्थहरू रहेका छन् ।

यद्यपि बिस्केट जात्रा हरेक वर्ष चैत्र महिनाको २७ गतेबाट औपचारिक रूपमा प्रारम्भ हुने गर्दछ । तर त्यसो भएपनि त्यससम्बन्धी विधिविधानहरूको थालनी त्यसभन्दा महिनादिन अघिबाटै सुरु हुने गर्दछ । यसक्रममा सर्वप्रथम बिस्केटको एक महिनाभन्दा अघि भैरवनाथको “तुकंछा” भन्ने पूजा हुन्छ । यस पूजामा जात्रा चलाउने भैलः नायो (भैरव गुठीका नाइके) हरू, जो स्थानीय किसानहरू हुन्छन्, तिनीहरूबाट भैरवनाथको पूजा गरिन्छ । यस पूजाको प्रसादको रूपमा उसिनेको तोरीको साग लाकोलाछें टोलका सबै बासिन्दाहरूलाई बाँडिन्छ ।[११२]

“तुकंछा पूजा” को तीन दिनपछि भैलःनायो (भैरव गुठीका नाइके) हरूबाटै बिस्केट जात्रामा भैरवनाथका लागि भनेर अलग्गै बनाइएको विशुद्ध र चोखो रक्सी सर्वप्रथम भैरवनाथलाई विधिपूर्वक चढाउने कार्य सम्पन्न गरिन्छ । यस पूजालाई “न्याङ्छा पूजा” भनिन्छ ।[११३]

---

[११२] भैरव गुठीका नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारीको आधारमा ।

[११३] (क) कायस्थ, पा.टि.नं. १०४, पृ. २१ ।
(ख) यस पूजाको प्रसादको रूपमा आठ पाथी रातो जाँड (आले कथ्वं) स्थानीयवासीहरूमा बाँड्ने गरिन्छ । विशेषतः न्याङछा पूजालाई बिस्केट पर्व आगमनको पूर्वसुचकको रूपमा लिइन्छ । अर्थात् अब बिस्केट आउन धेरै दिन बाँकी छैन भनेर सबैको मुहारमा खुसीयाली छाउन थाल्छ । – भैरव नाइके मोतीबहादुर सुवाल ।

"न्याङ्छा पूजा"को चार दिन पछि भैरवनाथ कहाँ "स्वाङ्छा पूजा" सम्पन्न गरिन्छ । यो पूजा पनि जात्रा सञ्चालक गुठीका सदस्यहरू अर्थात् भैरव नाइकेहरूबाटै सम्पन्न हुन्छ ।[११४]

यहाँनेर ध्यान दिनुपर्ने कुरा के छ भने बिस्केट जात्रा सौर्यमान अनुसार सञ्चालन हुने जात्रा हो । तर त्यसो भएपनि माथि उल्लिखित पूजाविधानहरू सौर्यमान अनुसार नभएर चान्द्रमान अनुसार चल्ने गर्दछ ।[११५] अनि जात्रापूर्व यी पूजाविधानहरू सम्पन्न गर्नुको खास तात्पर्य के देखिन्छ भने वर्षदिनभरि देवता मन्दिरको गुप्तस्थानमा रहने अथवा स्वर्गमा रहेको विश्वास गरी जात्राको बेला (एकपटक मात्र) सार्वजनिक हुने भएकोले तिनलाई जात्रामा निमन्त्रण दिनको निम्ति विविध कर्मकाण्ड गर्नुपर्ने आवश्यकता अनुरूप यी पूजा विधानहरू चलाइएका हुन् ।[११६]

बिस्केटको औपचारिक जात्रा चैत्रमसान्तको चार दिन अघि भैरव भद्रकालीको रथ यात्राबाट प्रारम्भ हुन्छ भने मूलजात्रा चैत्रमसान्त र वैशाखसंक्रान्तिका दिन हुने विश्वध्जोत्थान अर्थात् लिंगो उभ्याउने र ढाल्ने जात्रा हो । अतः मूलजात्राको १५, २० दिन अघिबाट एकातिर भैरव, भद्रकालीको काठका रथहरू निर्माण गर्ने कार्य जोडतोडका साथ प्रारम्भ गरिन्छ भने अर्कातर्फ लिंगोका लागि आवश्यक काठ लिन सम्बन्धित गुठीका सदस्यहरू लगायत स्थानीय टोलका बासिन्दाहरू लिंगो वनतिर लाग्छन् ।

### ६.२.१ रथ निर्माण सम्बन्धी विधिविधान

यससिलसिलामा चैत्र महिनाको १०, १२ गते देखि नै पाँच तल्ले मन्दिर अगाडिको खुल्ला चोकमा बिस्केटको रमझम देखिन थाल्छ अर्थात् भैरव र भद्रकालीका रथ निर्माण कार्य सुरु हुन थाल्छ ।[११७] यस कार्यमा नासमना र तेखाचो टोलका शिल्पकार (सिकर्मी) हरू र दत्तात्रय सकुलानेका मानन्धरहरू सक्रियपूर्वक लाग्दछन् ।[११८] धेरैजसो काठपात अघिल्लै वर्षको प्रयोग गरिन्छ । फेरि प्रयोग गर्न नमिल्ने भएमा त्यस ठाउँमा नयाँ काठपात गुठी

---

[११४] प्रजापति, पा.टि.नं. ६८ (ख), पृ.३६ ।

[११५] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७/४/२३ गते प्राप्त जानकारीको आधारमा ।

[११६] *विश्वयात्रा निमन्त्रण विधि*, राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म रिल नं. १९२९/६, पत्र संख्या १२ । यस ग्रन्थको मूलअंश परिशिष्ट ख मा दिइएको छ ।

[११७] २०६५ सालको बिस्केट जात्राका लागि २०६४ चैत्र १४ गतेबाट भैरव भद्रकालीको रथ निर्माण कार्य प्रारम्भ गरिएको थियो । – स्थलगत अध्ययन अवलोकनबाट प्राप्त जानकारी ।

[११८] दत्तात्रय सकुलाने (हाल मूलढोका) का वर्ष ७६ का पद्मबहादुर मानन्धरबाट मिति २०६७/४/४ गते प्राप्त जानकारीको आधारमा ।

संस्थानले उपलब्ध गराउँदछ ।[११९] तर वंशावलीमा भने कान्तिपुरका राजाको स्वीकृतिमा पशुपति श्लेषमान्तक वनबाट काठपात ल्याएर भक्तपुरमा भैरवनाथको रथ बनाउने कुरा उल्लेख पाइन्छ ।[१२०] रथ निर्माण गर्दा काठको काम जति सिकर्मीले र रथका अवयव (पार्टपूर्जा) हरूलाई मोटो बेतका डोरीले बाँध्ने काम जति मानन्धर जातिले तथा रंगरोगनले रथलाई सिंगार्ने काम चित्रकार (पुं) ले गर्दछन् ।[१२१] यसरी जात्राको एक, दुई दिन अघिसम्ममा पुरानै रथका अवयवहरूलाई जोडजाड गरी रंगरोगन लगाएर नयाँ बनाइन्छ । भैरवनाथको रथ विशाल काठको पांग्रा माथि अडिएको तीनतल्ले सुनौला धातुको छाना भएको रथ हो भने भद्रकालीको रथ त्यसभन्दा सानो दुईतल्ले छाना भएको रथ हो ।

गजुर र छाना धातुको हुनु बाहेक सम्पूर्ण रूपमा काठैकाठबाट बनेको पेगोडा शैलीको भैरवनाथ विराजमान हुने रथलाई नेपाली कलाको एक अनुपम नमूनाको रूपमा लिन सकिन्छ । झट्ट हेर्दा कुनै मन्दिरलाई नै उठाएर ल्याइएको जस्तो भान पर्न आउँछ । विशाल चारवटा कलात्मक पांग्रा जडिनु नै यस रथको मुख्य विशेषता हो । रथका यी चार वटा पांग्रालाई हिन्दुहरूका चारवटा पवित्र ग्रन्थ वेद सम्झिइन्छ ।[१२२] रथको निर्माण श्रीयन्त्रको आधारमा गरिएको हुन्छ, जसले शिव (भैरव) र उनको शक्तिको एकात्मक प्रतिनिधित्व गर्दछ ।[१२३] प्रत्येक पांग्रामा त्रिनेत्र (तीनवटा ठूल्ठूला आँखा)को चित्र अंकित गरिएको हुन्छ, जसलाई विश्वनाथ महादेव, आकाश भैरव र नृत्येश्वरको प्रतीक अर्थमा लिने गरिन्छ अर्थात् समय र परिस्थिति अनुरूप एउटै देवताले कहिले महादेव, कहिले भैरव र कहिले नृत्येश्वरको रूप लिने गर्छन् ।[१२४] तीन तहको छाना भएको यस रथको हरेक छानाको वरिपरि राता कपडाको झल्लर र मसिना घण्टाहरू झुण्ड्याइएको हुन्छ । चारैतिर सःझ्याल जस्तो देखिने कलात्मक झ्यालहरू र प्रत्येक झ्यालमाथि कलात्मक काठको तोरण अनि प्रत्येक तोरणमा भैरव, कुमार, गणेशका सुन्दर र कलात्मक मूर्तिहरू कुँदिएका हुन्छन् । छाना अड्याउन चारै सुरमा टुँडालको प्रयोग गरिएको छ, जसमा भैरवको मूर्ति कुँदिएको छ ।

---

[११९] भैरव र भद्रकालीको रथ निर्माण कार्यमा हेटौडाको वनबाट रथमा प्रयोग हुने सान्दानको काठ उपलब्ध हुँदै आएको छ । बेतासींको लागि सूर्यविनायक जंगलबाट चिलाउने काठ प्रयोग हुँदै आएको छ । –गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७/७/१४ गते प्राप्त जानकारी ।

[१२०] लम्साल, पा.टि.नं. ५ (ख), पृ. ५४ ।

[१२१] वर्ष ७६ का पद्मबहादुर मानन्धरबाट २०६७/४/४ गते प्राप्त जानकारी ।

[१२२] एलिजावेथ चालिएर र विशुवलिंगम, "भैरव एण्ड गडेजः ट्रेडिसन, जेण्डर एण्ड ट्रान्सग्रेसन", *वाइल्ड गडेजेज इन नेपाल एण्ड इण्डिया,* वर्न : पेटरलाङ्ग, ई.सं. १९९६, पृ. २८३–२८४ ।

[१२३] एण्डरसन, पा.टि.नं. १६, पृ. ४४ ।

[१२४] भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७/४/२३ गते प्राप्त जानकारीको आधारमा ।

रथको सबभन्दा तल्लो भागमा मेरुदण्ड (Chessis) को रूपमा पांग्राका धुरा (Axis) माथि बीच खण्डमा एउटा बडेमाको लामो र मोटो खम्बा तेर्साएर राखिएको हुन्छ । यसको अगाडि पछाडि दुवैतिरको भाग बाहिर निकालिएको हुन्छ । अगाडिको भाग बाङ्गिएर माथि उठेको अर्थात् ढुंगेधाराको हिटीमंग जस्तो बडो कलात्मक हुन्छ । झट्ट हेर्दा टाउको उठाएको सर्प जस्तै देखिन्छ । त्यसमाथि अगाडि फर्काएर भैरवको बाहन वीर बेताल विराजमागराइन्छ ।[१२५] यसको अगाडि पछाडि दुवैतिर मोटा–मोटा डोरीहरू बाँधिएका हुन्छन् ।[१२६] त्यही डोरीको सहायताले रथ निश्चित् स्थानमा ल्याउने, लाने गरिन्छ । ती डोरीलाई अष्टमातृकाको प्रतीक मानिन्छ । यहाँनेर रथका प्रत्येक अंग, प्रत्यङ्गलाई धार्मिक दृष्टिबाट अनेक प्रतीक अर्थ दिइएको आधारमा यो विशाल रथ एउटा सुक्ष्म रूपको धार्मिक संसार नै हो कि जस्तो लाग्छ ।

### ६.२.२ विश्वध्वज लिंगोको दश कर्म विधि

अघिल्ला अध्यायहरूमा नै उल्लेख गरिसकिएको छ कि जात्राको मुख्य आकर्षण विश्वध्वज लिंगो हो, जसलाई स्थानीय बासिन्दाहरू विश्वनाथ भैरवको प्रतीक रूपमा मान्ने गर्छन् । अतः वनबाट ल्याइएको एउटा सामान्य सल्लाको रुखलाई देवताको रूपमा पुज्न तान्त्रिक विधिबाट जीवन्यास दिनु आवश्यक र अनिवार्य परम्परा मानिन्छ । त्यसपछि देवत्व प्राप्त गरेको त्यस लिंगोको पूजा उपासना र जात्रा सम्बन्धी विधिविधानहरू अघि बढाइने गरिन्छ ।

यसक्रममा सर्वप्रथम जात्राको १५, २० दिन अघिबाटै विशेष गरेर तलेजुका पुजारी (जोशी) ले ज्योतिष पध्दति मुताविक शुभ ठहर्‍याएको दिनमा भक्तपुरदेखि पूर्व चित्तपोल गा.वि.स. ८ मा रहेको सल्लाघारी लिंगो वनमा भक्तपुरबाट गोलमढी टोलका मानन्धरहरू अनि टौमढी, लय्को, लाकोलाछें टोलका स्थानीय बासिन्दाहरू, पूजाआजा, बाजागाजा, लावालस्करका साथ लिंगोको काठ लिन त्यसतर्फ जान्छन् । कुन रुख लिंगोका लागि उत्तम छ भनी छनौट गर्न पूजा गरेर लगिएको बोका त्यस जंगलमा छोडिन्छ । त्यस बोकाले जुन रुखलाई छुन्छ, त्यही रुख लिंगोका लागि सर्वोत्तम मानिन्छ ।[१२७] रुख छानिसकेपछि त्यसमा बोका बलि दिएर विधिपूर्वक पूजा गरिन्छ । यसरी रुखमा बलि दिएर पूजा गर्नुको मुख्य

---

[१२५] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१२६] रथ तान्ने डोरी र रथका काठहरू बाँध्नको लागि आवश्यक पर्ने बेत भारतको सिलगुडीबाट ल्याइ जात्रा संचालन गरिन्छ ।– गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७/७/१४ गते प्राप्त जानकारी ।

[१२७] चालिएर र अन्य, पा.टि.नं. १२२, पृ. २७९–२८० ।

अभिप्राय त्यसमा अवस्थित सम्पूर्ण प्राणीहरूलाई बसाई सर्नको लागि आह्वान गर्नु हो ।[१२८] त्यसपछि रुख काटेर ढालिन्छ । रुखको टुप्पो बाहेक सबै हाँगाबिँगाहरू छाटिन्छ । रुखको टुप्पोलाई देवताको शिर मानिन्छ ।[१२९]

के पनि भनाइ पाइन्छ भने लिंगो हुने सौभाग्य पाउने त्यस वनका सबै रुखहरू सोझो र सुरिलो भइ बढ्ने गर्छन् ।[१३०] लिंगोका लागि सल्लाको रुख ज्यादा प्रयोग गरिंदै आएको भएपनि धुपी, कपूर, चाँप, लप्सी र कल्की जातका रुखहरू पनि प्रयोग गर्न सकिन्छ ।[१३१] तर हालसम्मको इतिहास हेर्दा सल्लाकै रुख मात्र लिंगोको रूपमा प्रयोग हुँदै आएको तथ्य भेट्टिन्छ ।

जात्रामा एउटा मात्र लिंगो उठाएपनि जंगलबाट भने एक जोडी नै लिंगो ल्याउने गरिन्छ । लिंगोलाई डोरीले बाँधेर खोलै–खोलाको बाटो भएर भक्तपुर शहरतिर ल्याइन्छ । यसरी ल्याउँदा बीच बाटोमा पर्ने उभ्कान भंज्याङ्ग भन्ने ठाउँमा पुगेपछि बलि सहित पूजा गरी सम्हेय्बजी खाने चलन छ । यदि बाटोमै सूर्यास्त भएमा अर्को दिन सूर्योदय भएपछि तानिन्छ । कथंकदाचित कुनै ठाउँमा तान्न अप्ठेरो भएमा तान्त्रिक विधिपूर्वक “न्याङसम्हेय्बजी” चढाएर पूजा गरिन्छ ।[१३२] यसरी पूजा गर्नाले लिंगो मार्गमा बाधा पुऱ्याउने अदृश्यशक्तिहरू पन्छिने र लिंगो तान्न सजिलो हुने विश्वास गरिन्छ । तर आजभोलि लिंगो वनबाट लिंगो ल्याउने सम्पूर्ण कार्य गुठी अड्डाले ठेक्कामा गराउन थालेको छ । जस्तो हाल बिस्केट जात्रामा उठाउने गरेको लिंगो (थान २) वि.सं. २०६६ सालमा ल्याइएको हो । यो लिंगो ल्याउने ठेक्का सुडाल गा.वि.स.का आसकुमार न्हेमाफुकीले २ लाख ५ हजार रूपैंयामा पाएका थिए ।[१३३]

यसरी ल्याइएको एक जोडी लिंगोलाई तान्त्रिक विधिले मानिसलाई झैं संस्कार कर्म गरिन्छ । मानिसलाई पास्नी, ब्रतवन्ध, विवाह जस्ता कर्मकाण्ड गरी जीवन्यास दिए जस्तै ती दुवै लिंगोलाई पनि क्रमशः भाले–पोथीको वर्गीकरण गरी जीवन्यास दिने प्रचलन छ । पूर्ण

---

[१२८] “इहास्मीन वृक्षेतरौयानी भूतानि च सन्ति तेभ्यो भूतेभ्यः स्वस्ति श्रेयोस्तु । वो युष्मार्क नमस्कारो भवतु । इममुपहारमिमं बलिंगृहीत्वा बासपर्ययः कियतामन्यत्र वासंगृहं कल्पयत्विति ॥१७॥” (यस वृक्षमा जति जीव छन्,ती सबैको कल्याण होस् । तपाईहरू सबैलाई नमस्कार । यो उपहार अर्थात् बलिलाई ग्रहण गर्नुभइ तपाईहरू अन्यत्र निवास गर्नुहोस)– बराह मिहिर(अनु.आचार्य नागेन्द्र पाण्डेय), *बृहत्संहिता, द्वितीय भाग,* बाराणसी : हरिश्चन्द्रमणि त्रिपाठी, ई.सं. २००५, पृ. ३४५–४६ ।

[१२९] चालिएर र अन्य, पा.टि.नं. १२२, पृ. २८० ।

[१३०] प्रजापति, पा.टि.नं. ६८ (ख), पृ. ४२ ।

[१३१] लिंगो वनमा लिंगोका रुखहरू अभाव हुन थालेपछि त्यहाँ आयोजना गरिएको वृक्षारोपण कार्यक्रममा वन कार्यालय भक्तपुरका प्रमुख शान्तमाया श्रेष्ठले २०६६/४/२७ गते दिनु भएको जानकारी ।

[१३२] कायस्थ, पा.टि.नं. १०४, पृ. १४ ।

[१३३] गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७/७/१४ गते प्राप्त जानकारी ।

जीवत्व प्राप्त गरेको उक्त लिंगोको टुप्पातिर हरिया रुखका हाँगा र झारपातहरू राखी, नीलो कपडाले बेरी क्रमशः टाउको र हात बनाइन्छ । यसको टुप्पोदेखि केही तलतिर हातरूपी तेर्सिने काठले गर्दा यो क्राइष्टको प्रतीक चिन्ह जस्तो लाग्छ । यसैकारण केपुचिन मिसनरीहरूले यसलाई पहिलो पल्ट देख्दा क्राइष्टको रूपमा मानिलिएको थियो ।[१३४] त्यसको मुनितिर दुईवटा विशाल ध्वजा झुण्ड्याइन्छ, जुन ध्वजालाई वीरध्वजा, विश्वध्वजा, स्थानीय जनबोलीमा हलिंपत आदि भन्ने गरिन्छ । यो ध्वजा पुरानो भइ जीर्ण नभएसम्म अर्को नयाँ बनाइदैन । यसको निर्माणमा अद्यावधि भक्तपुरका अनेक वर्ग, जाति र परिवार संलग्न रहीआएका छन् । यस सम्बन्धी विस्तृत अध्ययन अगाडिको अध्यायमा गरिएको छ । लिंगोको कोखामा दायाँ बाँया दुवैतिर ४, ४ वटा ८०, ९० हातको लामो, मोटो डोरीले बाँधेर लिंगो उभ्याइन्छ । ती आठवटा डोरीलाई अष्टमातृकाका प्रतीकका अर्थमा लिने गरिन्छ । अष्टमातृकाको अदृश्य शक्ति भएको कारणले गर्दा नै जब आठैवटा डोरी तनक्क तन्किन्छ, तब लिंगो जुरुक्क माथि उठ्छ भन्ने धारणा पाइन्छ । लिंगोमा डोरी बाँध्ने काम सिपालु व्यक्तिले गर्ने हुनाले डोरी जति तान्यो उति नै कसिने किसिमको हुन्छ । यसैले हालसम्म डोरी खुस्केको सुन्नु परेको छैन ।[१३५] यो काम गोलमढी टोलका मानन्धर जातिले गर्दै आएका छन् ।[१३६] तर हाल आएर यो काम ठेक्कामा गर्ने, गराउने प्रवृति विकास हुन थालेको छ । जसबाट यसको गुणस्तरियतामा कमी आई लिंगो तान्दा डोरी चुँडिने घटना समेत हुन थालेको छ ।

लिंगो उभ्याउनका लागि आवश्यक पर्ने अन्य सामग्रीहरूमा कैंची काठ २४, भाटा काठ ६०, लम्फा काठ (आठ हाते)४ र (नौ हाते) ९, नीलो जीन कपडा १० गज, लिंगो बाँध्ने डोरी ८, कैंची बाँध्ने डोरी (आवश्यकता अनुसार) रहेका छन् ।[१३७] जीन कपडा बजारबाट र काठपातहरू गुठी संस्थानको सिफारिसमा वन कार्यालय भक्तपुरले सूर्यविनायक जंगलबाट उपलब्ध गराउँदै आएको छ ।

### ६.२.३ राजकीय प्रतीक रूपमा मान्य खड्ग

---

[१३४] सायमी, पा.टि.नं. ५५(ख), पृ. ४७ ।

[१३५] प्रजापति, पा.टि.नं. ६८ (ख), पृ. ४४ ।

[१३६] पद्मबहादुर मानन्धर (वर्ष ७७) बाट मिति २०६७/४/४ गते प्राप्त जानकारी ।

[१३७] गुठी संस्थान भक्तपुरको तथ्याङ्कबाट प्राप्त जानकारी ।

बिस्केट जात्राका प्रमुख विधिविधानहरूमा राजकीय खड्गको उपस्थिति आवश्यक मानिन्छ । अतः जात्राको अघिल्लो दिन अपरान्ह ३, ४ बजेतिर यो खड्ग काठमाडौंबाट आएको सम्झेर जात्रासँग सम्बन्धित पदाधिकारीहरू बाजागाजा लिएर शहरदेखि पश्चिमतिरको सल्लाघारी जाने गर्छन् । त्यहाँ रातो कपडामा बेरिएको उक्त खड्गलाई विधिपूर्वक पूजा गरिन्छ । त्यसपछि सो खड्ग वा तरवार तलेजुका पुजारी राजोपाध्याय ब्राम्हणलाई टीकाटालो गरी फूलमाला लगाइ विधिपूर्वक हस्तान्तरण गरेर दिइन्छ । यसरी खड्ग हस्तान्तरण गरेर लिएपछि कुस्लेहरूको मुवाली बाजा अघि लगाई राजकीय खड्ग लिएको सो लस्कर सल्लाघारीबाट भक्तपुर शहरतिर प्रस्थान गर्दछ ।[१३८] यस सांस्कृतिक कार्यलाई बिस्केट जात्रा सुरु हुन लागेको पूर्व संकेतको रूपमा लिइने गरिन्छ ।

वास्तवमा यो शाही तरवार सार्वभौम राज्यको प्रतीकको रूपमा लिइन्छ । मल्ल कालमा मल्ल राजाहरू आफैं जात्रामा सहभागी हुने गर्दथे, तर उपत्यकामा गोर्खाको शासन प्रारम्भ भएपछि यो स्थिति कायम राख्न संभव भएन । यसर्थ राजाको प्रतीकको रूपमा अथवा राज्यको प्रतिनिधिको रूपमा यो तरवार पठाइएको हो भन्ने जनधारणा रहेको पाइन्छ ।

पाटनको मत्स्येन्द्रनाथ जात्रा, काठमाडौंको नानीचा जात्रा(कुमारी जात्रा) र पचली भैरव जात्रामा राज्यको सार्वभौम सर्वोच्च व्यक्तिको रूपमा राजा आफै सवारी हुने परम्परा रहेको छ भने भौगोलिक दूरीका कारणले गर्दा भक्तपुरको बिस्केट जात्रा, बनेपाको चण्डेश्वरी जात्रा, दोलखाको भीमसेन जात्राहरूमा चाहिं राजाको प्रतीकको रूपमा तरवार मात्र पठाइने चलन छ ।[१३९] यसप्रकार यो तरवार नआइपुगेसम्म भक्तपुरमा बिस्केट जात्रा प्रारम्भ गरिंदैन ।[१४०] यसबाट यो जात्राको संचालनमा राज्य व्यवस्थाको पनि स्वीकृति र सहमति रहेको छ भन्ने कुरा प्रमाणित हुन्छ ।

पहिले–पहिले भए यो तरवार छेभडेल अड्डामा राखिन्थ्यो । तर अहिले गुठी अड्डामा राखिएको पाइन्छ ।[१४१] तर गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेलले जानकारी गराउनु भए अनुसार यो तरवार हनुमानढोका दरबारमा रहने गर्छ । बिस्केट जात्राको केही दिन अगाडि जात्रा सञ्चालनका लागि तरवारको माग गरी पत्र लेखी

---

[१३८] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१३९] भक्तपुर तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्य (वर्ष ५२) बाट मिति २०६४/१२/२५ गते प्राप्त जानकारीको आधारमा ।

[१४०] भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७/४/२३ गते प्राप्त जानकारी ।

[१४१] लीलाभक्त मुनंकर्मीबाट २०६४/८/१४ गते प्राप्त जानकारी ।

पठाएपछि उक्त तरवार भक्तपुर ल्याइन्छ ।[१४२] जे होस् राजा वा राष्ट्र प्रमुख काठमाडौँमा रहने भएकाले यो तरवार काठमाडौँबाट आएको सम्झेर सल्लाघारीसम्म लिन जाने चलन छ । सो तरवार लिने व्यक्ति, पहिले–पहिले तलेजुका पुजारी ब्राम्हण हुने गर्थे, तर अहिले गुठी संस्थानका कर्मचारी हुन्छन्, जसलाई टीकाटालो गरी तरवार सुम्पिने गर्दछ, जुन तरवार राजा नन्ददेव (आनन्ददेव) को हो भन्ने जनविश्वास स्थानीय बुढापाकाहरूको रहेको छ । तरवार शहरभित्र ल्याउँदा पहिले–पहिले बाटोमा देख्ने जतिले त्यसप्रति सम्मान दर्शाउन टोपी फुकाल्ने गर्दथे, तर अचेल भने यो चलन हराइसकेको छ ।[१४३]

यसप्रकार राजप्रतिनिधिको प्रतीक वा राज्य प्रशासनको स्वीकृतिको संकेत स्वरूप रहेको यो तरवार (राजकीय खड्ग) को जात्रा सञ्चालनमा मह□वपूर्ण स्थान रहेको पाइन्छ ।

### ६.२.४ देवीदेवताका पूजाविधि

जात्रापूर्व जात्राका मूलदेवता भैरवनाथको आह्वानार्थ जसरी विविध पूजाविधानहरू सम्पन्न गरिन्छ, त्यसै गरेर जात्राका मूलदेवी वा भैरवकी शक्ति भद्रकालीको पनि विधिपूर्वक पूजाविधानहरू सम्पन्न गर्ने गरिन्छ । साथै देवतालाई जात्रामा सहभागी हुन आह्वान गरिएपछि जात्रा अवधिभरि जात्राक्षेत्रमा लसुन, प्याज, छ्यापी खान नहुने, केटाकेटीले बाहेक अन्यले नयाँ लुगा लगाउन नहुने, नयाँ घर बनाउन नहुने, चर्खा कात्न नहुने, नयाँ भाँडा वर्तन प्रयोगमा ल्याउन नहुने, झ्यालबाट तल हेर्न नहुने, जुत्ता चप्पल लाउन नहुने अनि बिस्केट सम्बन्धी काम कुरा बाहेक अन्य काम गर्न नहुने परम्परा अद्यावधि स्थानीयवासीहरू विशेष गरेर जात्रा सञ्चालन हुने प्रमुख क्षेत्रका बासिन्दाहरूमा प्रचलित रहेको पाइन्छ ।[१४४] सुन्दाखेरि यस्ता कुराहरू अन्धविश्वास जस्तै लाग्दछन्, तर वास्तवमा यदि "त्यो मत्यो" (गर्न हुने नहुने) काम कुरा प्रति ध्यान दिइएन भने सम्बन्धित देवीदेवता रुष्ट भइ जात्रामा अनिष्टका घटना घट्ने संभावना प्रबल रहन्छ भन्ने धार्मिक विश्वास स्थानीयवासीमा रहेको पाइन्छ ।

भद्रकालीलाई जात्रामा सहभागी हुन मन्दिरको गुह्यस्थानबाट बाहिर ल्याउने क्रममा भद्रकाली गुठीका मूलनाइके (पुजारी) ले जात्राको पाँच दिन अघि बेलुका ९, १० बजेतिर

[१४२] गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७/७/१४ गते प्राप्त जानकारी ।
[१४३] स्थानीय नारायणदेवी अधिकारी (वर्ष ७५) र रामबहादुर श्रेष्ठ (वर्ष ८२) बाट मिति २०६४/१२/२५ गते प्राप्त जानकारी ।
[१४४] भैरव नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट २०६७/७ /१८ गते प्राप्त जानकारीको आधारमा ।

चतामरी सहित अबीर, केशरी, फूल, अक्षता, जाँड, रक्सी, माछा, मासु, वस्त्र, फलफूल, भेटी आदि सामग्री चढाएर विधिपूर्वक पूजा गर्छन् । यस पूजाको प्रसादको रूपमा "चतामरी" स्थानीय बासिन्दाहरूमा बाँड्ने गरिन्छ ।[१४५]

जात्राको पहिलो दिन (चैत्र मसान्तको चार दिन अघि) इच्छुटोल स्थित भद्रकाली मन्दिरका पुजारीले चोखोनितो भइ पंचोपचार सामग्रीद्वारा बडो श्रद्धाभक्तिपूर्वक देवीको पूजाउपासना गरेपछि भक्तजनहरूले भजनकीर्तन गाउँदै देवीलाई मूलमन्दिरबाट बाहिर ल्याइ खटमा राख्दछन् । उक्त खटलाई अगाडिबाट चार जना र पछाडिबाट चार जनाले बोकी जात्रा गर्दै इच्छुटोलबाट दक्षिण घट्खा बजारको चौबाटोमा ल्याइन्छ । त्यहाँ पहिलेदेखि सजाएर राखिएको "नकिंजु खचा" (भद्रकालीको चारपांग्रे रथ) मा देवीलाई विमानखटबाट झिकी विराजमान गराइन्छ । देवीको दर्शन गर्न त्यहाँ  घुईचो लाग्ने गर्छ । तर यस अघि यो जात्रा चलाउन राजदरबार (गुठी संस्थान) बाट भैरव र भद्रकालीमा "द्यः लिवय पूजा" र "लायकू पूजा" ल्याइन्छ । सो पूजा समाप्त भएपछि मात्र भैरव र भद्रकालीलाई रथमा आरोहण गराइ जात्रा चलाइन्छ ।[१४६] यताबाट सम्बद्ध देवतामा यो पूजाभाग पठाउनुको मुख्य अभिप्राय स्थानीय क्षेत्रमा संचालन हुने जात्रा भएपनि त्यसमा राज्य (केन्द्र) को पनि स्वीकृति वा सहमति रहेको पुष्टि गर्नलाई हो ।

तत्पश्चात देवी सवार रथलाई तानेर टौमढी भुजिंकोखामा लगिन्छ । त्यहाँबाट फर्काएर गाःहिटी मुनि लिविचोकको लय्को देवल, जुन देवल जात्राको बेलामा मात्र भद्रकाली देवी विराजमान हुने विशेष देवगृह हो, बाहिर रथ रोकिन्छ । त्यहाँ भद्रकाली गुठीका मूल नाइके पुजारीले  देवीलाई रथबाट ओराल्दै अघि–अघि जलधारा छर्दै लसकुस (स्वागत) गरेर लय्को देवलको सिंहासनमा विराजमान गराइन्छ । त्यसपछि त्यहाँ विभिन्न पूजासामग्री जस्तो चन्दन, अक्षता, अबीर, धूपबत्ती, फूलपाती, नैवेद्य, सम्हेय्बजी, गोजा[१४७] र चिउराबाट बनाइएको डल्लो रोटी आदिका साथै बोका, भेडा, हाँस, कुखुराको बलि चढाई पूजा गरिन्छ ।[१४८]

भैरवको शक्ति भैरवी अथवा भद्रकाली जस्तै भैरवनाथ पनि वर्षको एक पटक बिस्केट जात्राको बेलामा मात्र सार्वजनिक हुने अथवा बाहिर निस्कने र अरुबेला गुप्त रूपमै

---

[१४५] भद्रकाली गुठीका मूलनाइके माइला जधारी (वर्ष ७१) बाट २०६७/७/२७ गते प्राप्त जानकारीको आधारमा ।

[१४६] प्रजापति, पा.टि.नं. ६८ (ख), पृ. ३२ ।

[१४७] चामलको भातबाट बनाइने एक किसिमको पिरामिड आकारको साना–साना डल्ले रोटीलाई गोजा भनिन्छ । तान्त्रिक विधिले पूजा गर्दा वा ब्रतबन्ध आदि संस्कार कर्म गर्दा गोजा चढाउने गरिन्छ ।

[१४८] भद्रकाली गुठीका नाइके इन्द्र लिवि (वर्ष ६०) बाट मिति २०६७/७/२७ गते प्राप्त जानकारी ।

आफ्नो देवगृहको गुह्यस्थानमा बस्ने जनविश्वास पाइन्छ । यसै अनुरूप उक्त दिन भैरवको आगमनका लागि बिहानैदेखि भैरव गुठीका मूलनाइकेले विभिन्न पूजा सामग्री चन्दन, अबीर, अक्षता फूल, नैवेद्य, धुप, दीप, सम्हेय्‌बजी, पशुपंछीको बलि सहित पूजा गरी निमन्त्रण गर्दछ । पूजा सकेपछि भैरवनाथलाई रथमा राखी गाःहिटी पुऱ्याएपछि त्यहाँबाट लाकुलाछेंको चपाल (बिस्केट जात्राको बेलामा मात्र भैरवनाथ विराजमान हुने विशेष देवगृह) मा विराजमान गर्न लगिन्छ । यसरी यस दिन गरिने पूजा विधिलाई “द्यः क्वहाँ बिज्याकिगु पूजा” भनिन्छ । यस साँस्कृतिक कार्य पश्चात् नै भक्तपुरमा बिस्केट पर्व प्रारम्भ भएको मानिन्छ ।

लाकुलाछेंको चपालमा भैरवनाथ विराजमान भएपछि त्यहाँ लमोथापन पूजा र महाबलि पूजा सम्पन्न गरिन्छ ।

जात्राको तेस्रो दिन लय्‌को देवलमा भद्रकालीको नित्यपूजा मात्र गरिन्छ भने लाकोलाछें चपालमा भैरवलाई विधिपूर्वक राँगो बलि चढाई “लाकोफेतु साइत” पूजा सम्पन्न गरिन्छ । यस पूजाको प्रसादको रूपमा भैरवनाथ गुठीको नाइके हुन पाउने लाकुलाछेंका पचास घरका पुरुष सदस्यहरू प्रत्येकलाई आठ–आठ टुक्राका दरले बलि चढाइएको राँगाको मासु बाँड्ने र एकमुरी दशपाथी चामलबाट बनाइएको “कथ्वँः” नामक बाक्लो जाँड पिलाइने गरिन्छ ।[१४९]

अघिल्ला अध्यायहरूमा नै उल्लेख गरिसकिएको छ कि बिस्केटको मुख्य जात्रा भनेको चैत्र मसान्तका दिन आरम्भ गरेर वैशाख संक्रान्तिका दिन विसर्जन गरिने विश्वध्वज (लिंगो) जात्रा हो । विश्वध्वज जात्रा हेर्न हरेक वर्ष चैत्र मसान्तका दिन साँझपख भैरव र भद्रकाली दुवै देवदेवीलाई आ–आफ्ना रथमा सवार गराइ प्रमुख जात्रास्थल ल्योसींखेल (चुपींघाट नेरको चउर) मा ल्याइपुऱ्याउने गरिन्छ । त्यसपछि मात्र विश्वध्वज (लिंगो उठाउने) जात्रा प्रारम्भ गरिन्छ । दुवै देवदेवीले आ–आफ्नै रथमा सवार भइ उक्त जात्रा हेर्ने गर्छन् । लिंगो उठिसकेपछि दुवै देवदेवीलाई रथबाट ओराली जात्रास्थलमा रहेका आ–आफ्ना मन्दिरमा विराजमान गराइन्छ ।

तर यसअघि उक्तदिन (चैत्र मसान्तका दिन) बिहान सबेरै देखि लाकुलाछें चपालमा भैरवनाथकहाँ भैरव नाइकेहरूले शुद्ध भई विधिविधानपूर्वक पूजा गर्छन् । त्यसपछि परम्परागत विधि अनुसारको सरकारी पूजा आउँछ जसलाई “द्यः लिवय् पूजा” भनिन्छ ।

[१४९] प्रजापति, पा.टि.नं. ६८(ख), पृ. ३५ ।

उक्त पूजामा पूजासामग्रीका साथ बलिका लागि दुईवटा कालो बोका समेत ल्याइएको हुन्छ । एउटा बोका भैरवका लागि र अर्को बोका भद्रकालीका लागि हो । तर कुन बोका कुन देवतालाई भनी निर्क्यौल गर्न दुवै बोकालाई गाःहिटीको दोबाटोमा छाडिन्छ । जुन बोका लाकुलाछेंतिर लाग्छ त्यो भैरवलाई र जुन बोका लय्कोतिर लाग्छ त्यो भद्रकालीलाई बलि चढाइन्छ ।[१५०] यो "द्यः लिवय् पूजा" सम्पन्न भएपछि चपालमा सर्वसाधारण भक्तपुरका स्थानीय बासिन्दाको पूजा लिने काम हुन्छ । त्यसबेला त्यहाँ हाँस, कुखुरा, बोका, भेडा आदि दोपाया, चौपाया पशुपन्छीको बलि चढाएर पूजा गरिन्छ ।[१५१]

ज्योतिषको साइत अनुसार अपरान्ह ४ बजेतिर कुस्लेहरूको परम्परागत मुवाली बाजा सहित लायकू दरबारबाट राजाको प्रतीकको रूपमा रहेको राजकीय खड्ग लिएर तलेजुको मूलपूजारी, गुरु पुरोहित, भैरवनाइकेहरूको टोली रथ राखिएको ठाउँ गाःहिटी आइपुग्छन् । यसको केही समयपछि लाकोलाछें चपालबाट भैरवनाथलाई बाजागाजासहित सिंगारेर ल्याई रथ आरोहण गराइन्छ । पहिलो दिनको जात्रामा जस्तै राजकीय खड्ग सहित सबै पदाधिकारी रथमा सवार भएपछि रथलाई तानेर जात्रास्थल ल्योसींखेल पुऱ्याइन्छ । त्यसपछि भद्रकालीलाई पनि रथमा राखेर जात्रास्थल पुऱ्याइन्छ ।[१५२]

लिंगो उभिएपछि त्यस खुसीयालीमा भक्तपुर नगरभरिका स्थानीय देवीदेवतालाई मूल देवगृहबाट खटजात्रा गर्दै आ–आफ्ना पीठमा लगिन्छ । यस्ता जात्राहरूमा वाराहीको तिंप्वा जात्रा र इन्द्रायणीको त्वारेवा जात्रा प्रसिद्ध छन् ।[१५३]

लिंगो उभिनु अघि र लिंगो उभिएपछि पनि भक्तपुर लायकू दरबार भित्रको तलेजु मूलचोक देखि उत्तर पश्चिममा अवस्थित दुमाजुदेवी कहाँ पनि तान्त्रिक विधिपूर्वक पूजापाठ गर्ने, महादीप बाल्ने, दोपाया, चौपाया पशुबलि चढाउने, देवीको जात्रा गर्ने जस्ता बिस्केट सम्बन्धी सांस्कृतिक कार्यहरू सम्पन्न गरिन्छ, यसलाई कोलुक्यात जात्रा पनि भनिन्छ । वास्तवमा चैत्र मसान्तका दिन अपरान्ह तलेजु मूलचोकभित्र दुमाजुदेवीको विश्वध्वजा (यात्रा) सम्बन्धी पूजा सम्पन्न भएपछि नै राजखड्ग (शाही तरवार) विधिपूर्वक मूलजात्रास्थल ल्योसींखेल पुऱ्याएपछि नै लिंगो उभ्याउने जात्रा प्रारम्भ गरिन्छ ।[१५४]

---

[१५०] *ऐजन,* पृ. ३४ ।

[१५१] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

[१५२] *ऐजन* ।

[१५३] मुनंकर्मी, पा.टि.नं. ९३, पृ. ५१–५२ ।

[१५४] पुरुषोत्तमलोचन श्रेष्ठ, "दुमाजुदेवी–भक्तपुर", *प्राचीन नेपाल,* संख्या १५६ (असार २०६१), पृ. १७ ।

लिंगो उभ्याउनु अघि लिंगो स्थल भद्रकाली पीठमा गंगा पूजा गरिन्छ । विधिपूर्वक लिंगो उभ्याएपछि आ–आफ्ना रथमा सवार भैरव र भद्रकालीलाई क्रमशः च्यासींमण्डप र भद्रकाली पीठमा लगेर राखिन्छ । यसक्रममा त्यहाँ महादीप बाल्ने, ५० घरका रकमीलाई भात खुवाउने, कालरात्री पूजा गर्ने जस्ता तान्त्रिक पूजाविधानहरू सम्पन्न गरिन्छ ।[१५५] कालरात्री पूजामा देवतालाई भोग चढाएका बोका वा भेडाको आन्द्रा फुकी मालाजस्तो पारेर देवताको वरिपरि लगाइने गरिन्छ । भैरवनाथलाई च्यासींमण्डपमा आसिन गराएपछि त्यहाँ नियमानुसार सरकारी पूजा पनि हुन्छ । त्यसपछि राजकीय खड्ग सहित सबै पदाधिकारीहरू कुस्लेहरूको मुवाली बाजाका साथ लायकु दरबार फर्कन्छन् ।[१५६]

भोलिपल्ट (मेषसंक्रान्तिका दिन) त्यहाँ स्नान, दान, पूजापाठ गर्नाले धर्मपुण्यका अतिरिक्त सुस्वास्थ्य र आरोग्य प्राप्त हुने धार्मिक मान्यता र विश्वास पाइन्छ ।[१५७] यसैकारण बिहान सबेरैदेखि मूलजात्रास्थल ल्योसींखेल नजिकको चुपींघाटमा स्नान गरी पीठमा रहेकी भद्रकाली, च्यासींमण्डपमा विराजमान भैरव र अघिल्लो दिनसाँझ उभ्याइएको विशाल विश्वध्वजा सहितको लिंगोको दर्शन, पूजन र प्रसाद ग्रहण गर्न स्थानीय बासिन्दाकासाथै वरपरबाट समेत असंख्य नरनारीहरू आउने गर्छन् ।

मेष संक्रान्तिकै दिन अपरान्ह ३, ४ बजेतिर इन्द्रायणीलाई पीठबाट खटजात्रा गर्दै लायकू दरबारको सुवर्णद्वार सामु ल्याइपुऱ्याएपछि त्यसको फूलप्रसाद लगेर तलेजुमा गर्नुपर्ने सम्पूर्ण विधिविधान सम्पन्न गरेपछि उक्त दिनको विश्वध्वज जात्रा समापनका लागि गुरु पुरोहित र भैरव नाइकेहरू राजकीय खड्ग लिएर जात्रास्थल ल्योसींखेल प्रस्थान गर्दछन् । त्यहाँ पुगेर विधिपूर्वक विश्वध्वज लिंगोमा पूजा सम्पन्न गरेपछि लिंगो ढाल्ने जात्रा अथवा विश्वध्वज जात्राको समापन सुरु गरिन्छ तर यसअघि भैरव र भद्रकालीलाई पंचोपचार पूजा गरी पीठबाट आ–आफ्नो रथमा विधिपूर्वक आरोहण गराइन्छ ।[१५८]

---

[१५५] (क) भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट २०६७/४/२३ गते प्राप्त जानकारीको आधारमा ।
(ख) गंगापूजामा बलि दिएको राँगोको टाउको, जुन यसबेलासम्म टुक्रा–टुक्रा पारेर फोडिसकेको हुन्छ ,लाई स्यालले लान्छ कि भनेर रातभर भद्रकाली नाइकेहरू पीठमा नै रुँगेर बस्ने गर्छन् । भोलिपल्ट बिहान सूर्योदय हुनुभन्दा अघि आचाजु पुजारीले र सूर्योदय पश्चात् भद्रकाली नाइकेहरूले पूजा गर्छन् । त्यसपछि मात्र सर्वसाधारण जनताको पूजा थाप्ने कार्य हुन्छ । – भद्रकाली गुठीका मूलनाइके माइला जधारी (वर्ष ७१) बाट २०६७/७/२७ गते प्राप्त जानकारीको आधारमा ।

[१५६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१५७] "वैशाखं सकले मासं मेष संक्रमणे रवेः ।
प्रातः सनियमः स्नास्ये प्रीयतो मधुसुदनः।"– सुदामा मिश्र शास्त्री, *धर्मसिन्धु*, वाराणसी : चौखम्वा संस्कृत संस्थान, वि.सं. २०४८, पृ. ८६ ।

[१५८] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

अब विश्वध्वज लिंगो ढाल्ने जात्रा सुरु हुन्छ । यसक्रममा सर्वप्रथम लिंगोमा बेरिएर रहेका आठवटै डोरीहरूलाई फुकालेर वरिपरि तान्दै हल्लाइन्छ । निन्द्राको तन्द्रामा रहेको जस्तो देखाउन लिंगोलाई दुई तीन पटक हल्लाउँदै यताउति झुलाइन्छ । यी सब दृश्य आ–आफ्नो रथबाट दुवै देवताले हेरिरहेको विश्वास गरिन्छ । अन्त्यमा लिंगोका आठवटै डोरीको सन्तुलन मिलाएर बिस्तारै पश्चिमतिर ढालिन्छ ।

लिंगो ढालिसकेपछि देवता सवार दुवै रथलाई ल्योसींखेलबाट गाःहिटी ल्याइन्छ । यसक्रममा भैरवको रथ अघि–अघि र भद्रकालीको रथ पछि–पछि हुन्छ । रथ तान्दा कुनै किसिमको कठिनाइ आइपरेमा वा रथ अगाडि पछाडि कतै चलेन भने त्यतिखेर जंगममठबाट वीरशैव तान्त्रिक विधिले मुछेर तयार पारेको दही चिउरा भैरवनाथको रथतिर छरेर पूजा गर्ने चलन छ । यस्तो पूजाबाट रथ तान्न सजिलो हुन्छ भन्ने जनविश्वास पाइन्छ ।[१५९] गाःहिटी ल्याइपुऱ्याएपछि सो रथलाई त्यहाँ उत्तर फर्काएर निर्दिष्ट स्थानमा राखिन्छ । यसरी भैरवको रथलाई ठीक ठाउँमा राखिसकेपछि भद्रकालीको रथलाई पनि तानेर ल्याई त्यहाँस्थित नरसिंह मन्दिर घुमाई दक्षिण फर्काएर भैरवनाथको रथको ठिक सामुन्ने पारिन्छ । अर्थात् भैरवको रथ तलतिर र भद्रकालीको रथ माथिल्लो स्थानमा राखिन्छ । यसपछि भद्रकालीको रथलाई पछाडिबाट ठेलिन्छ र रथ भिरालोबाट गुड्दै भैरवको रथसँग जुध्न पुग्छ । यो रथ जुधाउने कार्य तीन पल्टसम्म गरिन्छ ।[१६०] यो रथ जुधाउने जात्रालाई भैरव–भद्रकाली बीच आपसमा समागम भएको प्रतीकात्मक अर्थमा लिने गरिन्छ ।

रथ जुधाउने कार्य पश्चात् दुवै देवदेवीहरू रिसाएको विश्वास गरी आ–आफ्नै स्थानतिर लगिन्छ । भद्रकालीको रथलाई तानेर नासमना घट्खा टोल पुऱ्याएर माझ ढोकाबाट देवीलाई लसकुस (स्वागत) गर्दै ईच्छु टोलस्थित मूलदेवगृहमा लगेर राखिन्छ । तर भैरवनाथलाई चपालको विशेष देवगृहमा नै लगिन्छ ।[१६१]

यस रथ जुधाउने जात्रा पश्चात् नै त्यसपछिका दिनमा क्रमशः जेठा गणेश र बटुक भैरव, महाकाली र महालक्ष्मी, ब्रम्हायणी र महेश्वरी आदि देवीदेवताका खट जुधाउने जात्रा प्रारम्भ हुने गर्दछ ।[१६२]

---

[१५९] श्रेष्ठ, पा.टि.नं. २१, पृ. ९७ ।

[१६०] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१६१] भद्रकाली गुठीका नाइके इन्द्र लिवि (वर्ष ६०) बाट २०६७/७/२७ गते प्राप्त जानकारी ।

[१६२] प्रजापति, पा.टि.नं. ६८(ख), पृ. ३५ ।

वैशाख संक्रान्तिको भोलिपल्ट भैरव र भद्रकालीकहाँ नित्यपूजा मात्र हुन्छ । पर्सि पल्ट भने ईच्छुटोलको देवगृहमा त्यहाँका मूलनाइकेले साँझपख देवीलाई नयाँ वस्त्र पहिराई पंच उपचारले पूजा गरी विमान खटमा राखी बोकेर पहिलो दिनको जात्रामा जस्तै घट्खा बजारको चौबाटोमा ल्याई रथमा सवार गराइन्छ ।[१६३] त्यसपछि देवी सवार रथलाई तानेर टौमढी चोकको उत्तरपश्चिमी कुनास्थित चण्डिका भुजिंकोखा देवल सामु पुऱ्याइन्छ । देवीलाई रथबाट ओराली उक्त देवलमा राखिन्छ । यसदिन भैरवनाथ कहाँ भने नित्यपूजा मात्र गरिन्छ ।

समग्र बिस्केट जात्रा समापनको पूर्व सन्ध्या अर्थात् वैशाख ४ गते जात्राका मूल देवता भैरव र भद्रकाली सहित जात्रामा प्रत्यक्ष र अप्रत्यक्ष रूपमा सहभागी नगरभरिका सम्पूर्ण देवदेवीहरूलाई सगुन चढाउन नगरवासीहरू बिहानैदेखि लागेका हुन्छन् । उक्त दिन देवतालाई सगुन चढाउने कार्य सम्बन्धित देवताको मूलदेवगृहको बाहिर पाटी, पेटी, फलैंचा, छिंडी, दलान आदि स्थानमा हुन्छ अर्थात् उक्त दिन सर्वसाधारण नगरवासीहरूका तर्फबाट सगुन ग्रहण गर्न सम्बन्धित देवीदेवताहरू आ–आफ्नो देवगृहको दलान वा छिंडी वा बाहिर पेटीमा निस्किन्छन् । यो सगुन दिने कार्यको सांस्कृतिक मह□व के छ भने बिस्केटका क्रममा हुने विभिन्न स्थानीय जात्राहरू आफ्नो निश्चित् स्थान वा इलाकाभित्र मात्र हुने गर्छ । तर यो सगुन दिने कार्य वा सांस्कृतिक पर्व भने उक्त दिन नगरभरि नै चलेको हुन्छ ।[१६४] यसभन्दा पनि मह□वपूर्ण कुरा के हो भने आगामी बिस्केट जात्रासम्मको लागि समग्र देवीदेवताहरूलाई स्वस्थानमा फर्किनु पूर्व खुसीयालीपूर्वक बिदावारी गर्ने प्रक्रिया नै देवतालाई सगुन चढाउने (द्यः स्वगं बियेगु) हो ।

बिस्केट जात्राको समापन जात्राको अन्तिम नवौं दिनका दिन अर्थात् वैशाख ५ गते "द्यः थाहाँ बिज्याइगु" (देवता माथि सवार हुने) सांस्कृतिक कार्यसँगै सम्पन्न हुने गर्छ । यसमा जात्राका मुख्य देवता भैरवनाथलाई त्यस दिनको जात्रा पश्चात् विधिवत् रूपमा रथबाट ओराली लसकुस (स्वागत) गरेर टौमढी टोलको भैरवनाथमन्दिरको माथिल्लो तल्लाको मूलस्थानमा लगेर विराजमान गराइन्छ । यसपछि वर्षदिनसम्म अर्थात् आउँदो वर्षको जात्रासम्म

---

[१६३] यस दिन नयाँ बस्त्र राखी पूजा गर्नुको पछाडि किम्बदन्ती के छ भने भैरव र भद्रकाली आपसमा समागम गरिरहँदा (खः ल्वाकेगु= रथ जुधाउने जात्रामा) माथिबाट सभुंगा भैरवले हेरिरहेको भनेर रिसाएर गएकी भैरवीलाई मनाउन भैरवनाथले चोलो राखेर सगुन दिन पठाएको भावार्थ स्वरूप नै यसदिनको पूजामा वस्त्र समेत राख्ने गरेको हो । – रत्नराज राजोपाध्याय (वर्ष ८३) बाट मिति २०६५/५/२५ गते प्राप्त जानकारीको आधारमा ।

[१६४] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

देवता आफ्नो देवगृहको गुह्यस्थान वा स्वर्ग सवारी हुन्छन् भन्ने विश्वास गरिन्छ ।[१६५] यसैगरेर भद्रकालीलाई पनि लसकुस गर्दै इच्छुको आफ्नो देवगृहमा लगेर राखिन्छ ।[१६६] यसको दुईदिन पछि मूलनाइकेले त्यहाँ बोका सहित पंच उपचारले पूजा गर्दछ । त्यसपछि वर्षदिनसम्म हेर्न हुँदैन भनेर देवी राखेको कोठामा ढोका बन्द गरेर ताला लगाइन्छ । दिनदिनैको नित्यपूजा भने देवी राखेको कोठाको बाहिर ढोकामा गरिन्छ । यसरी प्रत्येक वर्ष बिस्केट जात्राको विधिविधान सम्पन्न गर्नका निम्ति भद्रकाली देवी (नकिंजु अजिमा) लाई देवगृहको गुह्यस्थानबाट १६ दिन बाहिर ल्याउने गरिन्छ ।[१६७] जात्राको समापन पश्चात् मंगलबारदेखि शनिबारभित्र मूलदेवताकहाँ विधिपूर्वक पूजा गरिन्छ, जसलाई "बिचाः पूजा" भनिन्छ ।[१६८]

जात्राको समापन पश्चात् देवता स्वस्थानमा फर्केको अर्थात् स्वर्ग गएको विश्वास गरी गुठी नाइकेले "छ्यामू कवा" भन्दै प्रत्येक घरमा एक–एक टुक्रा प्याज, लसुन बाँड्ने गर्छन् । त्यसपछि मात्र स्थानीयवासीले बिस्केट पर्वका अवसरमा बारेको गोलभेंडा, लसुन, प्याज, छ्यापी जस्ता अशुद्ध वस्तुहरू खान स्वतन्त्र हुन्छन् ।[१६९]

### ६.२.५ देवीदेवताका गुठी

नौ दिनको लामो समयसम्म चल्ने बिस्केट जात्राको विविध विधिविधानका अतिरिक्त जात्राका मुख्य देवदेवीहरू भैरवनाथ र भद्रकालीको मन्दिरको रेखदेख, स्याहार संभार, चाँजोपाँजो मिलाउने, वर्षदिनसम्म मन्दिरमा गर्नुपर्ने नित्यपूजा, पर्वपूजा, विशेष पूजाको सञ्चालन सुव्यवस्थित रूपमा गर्ने जस्ता कार्यका लागि परम्परादेखि दुवै देवताका आ–आफ्ना गुठीहरू गठन भएका छन्, जसलाई भैरवनाथ गुठी र भद्रकाली गुठी भनिन्छ ।

#### ६.२.५.१ भैरवनाथ गुठी

---

[१६५] भैरव गुठीका नाइके मोतीबहादुर सुवालबाट २०६७/७/१८ गते प्राप्त जानकारी ।

[१६६] यसरी लसकुस (स्वागत) गरी आफ्नो देवगृह भित्र्याउँदा आचाजु पुजारीले रिसाएर यतिका दिनसम्म कहाँ गएर आएको ?, जो पायो ऊ सँग सुतेर आएको, जे पायो त्यो खाएर आएको भनेर देवीलाई एकछिन बाटो छेकेर राख्ने रोचक विधान पनि छ । – भद्रकाली गुठीका नाइके इन्द्र लिवि (वर्ष ६०) र उनकी धर्मपत्नीबाट २०६७/७/२७ गते प्राप्त जानकारीको आधारमा ।

[१६७] भद्रकाली गुठीका मूलनाइके माइला जधारी (वर्ष ७१) २०६७/७/२७ गते प्राप्त जानकारी ।

[१६८] "विश्वयात्रा विचा पूजा विधि", राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ माइक्रोफिल्म रिल नं. इ १९२९/१५ यसको मूल पाठ परिशिष्ट नं. ङ मा दिइएको छ ।

[१६९] भैरव गुठीका नाइके मोतीबहादुर सुवालबाट २०६७/७/१८ गते प्राप्त जानकारी ।

भक्तपुरवासीका आराध्यदेव भैरवनाथको पूजा वर्षभरि सुचारुरूपले सञ्चालन भइरहोस् भनी श्री ३ आकाशभैरव गुठीको स्थापना गरिएको छ । यस गुठीका वर्तमान गुठी सदस्यहरू यसप्रकार रहेका छन् ।

(१) मूल नाइके – ज्ञान बहादुर छुकाङ
(२) नाइके – मोती बहादुर सुवाल
(३) नाइके – लक्ष्मीभक्त घेमोसु
(४) नाइके – नारायण प्रसाद घेमोसु
(५) नाइके – आश बहादुर छुकाङ
(६) नाइके – कृष्णगोपाल नागा[१७०]

जात्राको बेला रथको चार कुनामा चार जना र अगाडि, पछाडि एक– एक जना गरेर ६ जना नाइकेहरूको आवश्यकता पर्ने भएकोले यस गुठीमा ६ जना भैरव नाइकेहरूको व्यवस्था गरिएको हो ।[१७१]

बाह्रै महिना बिहान चार बजे महास्नान र १० बजे नित्यपूजा मूलनाइकेले गर्दछन् भने बेलुका ८ बजे आरती पूजा अन्य नाइकेले पालैपालो गर्छन् । एक महिनासम्म एउटा नाइकेको पालो पर्दछ । यस अतिरिक्त देवताको नित्य पूजाका लागि आचाजु (कर्माचार्य) पुजारीको पनि व्यवस्था गरिएको छ, जसले हरेक दिन बिहान ७ बजे मन्दिरमा आएर देवताको पूजा गर्दछन् । वर्तमान पुजारी भक्तपुर कोलाछें (वार्ड नं. १३) टोलका वर्ष ८६ का गणेश कर्माचार्य रहेका छन् । जसलाई पारिश्रमिक बापत प्रत्येक भैरव नाइकेले वर्षेनी दश, दश पाथी धान दिने गर्छन् ।[१७२] मन्दिरमा चढाइएका भेटी, प्रसाद, वस्त्र, गहना आदि सबै जुन पुजारीको पालो हो, उसैले पाउने व्यवस्था गरिएको छ । यहाँनेर एउटा विचारणीय कुरा के देखिन आउँछ भने काठमाडौं इन्द्रचोकको आकाश भैरव मन्दिरमा पूजाआजा गर्ने पुजारी बौद्धमार्गी बज्राचार्य (गुभाजु)हुने परम्परा छ ।[१७३] तर भक्तपुर टौमढीको आकाश भैरवमा भने शैवमार्गी कर्माचार्य (आचाजु) पुजारी हुने गर्छन् । यस विभेदको मुख्य कारण भक्तपुर

---

[१७०] भैरव गुठीका नाइके नारायणप्रसाद घेमोसु (वर्ष ५१) बाट मिति २०६७/७/१३ गते प्राप्त जानकारी ।

[१७१] (क) स्थानीय खलाँ निवासी कृष्णप्रसाद मठ्या दुवाल (वर्ष ३५) बाट मिति २०६७/३/१८ गते प्राप्त जानकारी ।
(ख) भैरव नाइके हुन पाउने परम्परा लाकोलाछैं टोलका चार थर (छुकाङ, सुवाल ,चवाल, घेमोसु) मा मात्र रहे पनि गतवर्षदेखि नागा थरका व्यक्ति पनि भैरवनाइके नियुक्त हुन आएका छन् ।

[१७२] मूलनाइके ज्ञानबहादुर छुकाङ र नाइके मोतीबहादुर सुवालबाट क्रमशः २०६७/४/२३ गते र २०६७/७/१७ गते प्राप्त जानकारी ।

[१७३] गोपालसिंह नेपाली, *दि नेवार्स,* बम्बईः युनाइटेड एशिया पब्लिकेसन्स, ई.सं. १९८८, पृ. २९९ ।

प्रारम्भदेखि नै हिन्दु धर्म परम्परामा विश्वास गर्ने कट्टरपन्थी नेवारहरूको बाहुल्यता भएको शहर हो भने काठमाडौँ हिन्दु र बौद्ध दुवै धर्मको मिश्रित प्रभाव रहेको नगर हो ।

कुनै नाइकेको मृत्यु भएमा सो पदमा अर्को नाइके नियुक्त गर्न गुठी संस्थान भक्तपुरले सूचना जारी गरेर नयाँ नाइके नियुक्त गर्दछ । यसरी नाइके नियुक्ति गर्दा परम्परा अनुसार रीतिस्थिति बुझेको, उमेर पुगेको स्थानीय लाकोलाछें टोल निवासी छुकाङ, चवाल, सुवाल, घेमोसु मध्येबाट गरिन्छ ।[१७४]

भैरवनाथ गुठीको नाममा २०२ + ७२ रोपनी जग्गाको आम्दानी बाँधिएको छ, जुन आम्दानीबाट नै वर्षदिन सम्मको मन्दिरको पूजापाठ, भोजभत्तेर, जात्रापर्व, रेखदेख आदि सम्पूर्ण कार्य हुने गर्दथ्यो । तर अहिले यस गुठीको नाममा रहेको जग्गा मासिएको अथवा रैकरमा परिणत भइसकेको छ । जसको फलस्वरूप पर्व–पर्वका अवसरमा गर्नु पर्ने पूजाआजा, भोगबलि आदिका लागि गुठी संस्थान भक्तपुरले खर्च उपलब्ध गराउँदछ । तर यसरी उपलब्ध गराउने खर्च बढ्दो बजारभाउको तुलनामा ज्यादै न्यून देखिन्छ । भैरव नाइके भएपछि सम्बन्धित गुठीको जग्गाको आयस्ता बुझ्न पाउने भएतापनि जबदेखि गुठी जग्गा रैकरमा परिणत गर्ने सरकारी प्रक्रिया लागु भयो तबदेखि मोहीले आयस्ता बाली बुझाउन ल्याउने परम्परा बन्द भयो र अहिले गुठी जग्गा रैकरमा परिणत गरिए बापत जम्मा गरेको दस्तुरको ५% ब्याजबाट मात्र पूजा कार्य सम्पन्न गर्नुपर्ने बाध्यताले गर्दा जात्रा पर्वहरू टिकाइ राख्न ज्यादै कठिन समस्या आइपरेको छ ।[१७५] देवकार्य नरोकियोस् भनेर नाइकेहरूले आफैले जसोतसो पूजाको प्रबन्ध मिलाउँदै आएका छन् । गुठीबाट प्राप्त हुने खर्च नाम मात्रको छ ।

यसका साथै भैरव नाइकेहरूको आफ्नो बेग्लै गुठी पनि छ, जसलाई "पलेस्वाँ गुठी" भनिन्छ । यसले पर्व विशेषमा एकै ठाउँमा जम्मा भएर सम्हेय्बजी खाने गर्छ । भैरवनाथ मन्दिर बाहिर टौमढीमा अहिले पनि हरेक दिन बेलुका भजन गर्ने तीनवटा गुठीहरू रहेका छन् – १) नौबाजा गुठी २) पुलाँ बाजा गुठी ३) कोखीङ बाजा गुठी ।[१७६]

---

[१७४] भैरवनाथ गुठीको रिक्त नाइके पदको पूर्तिका लागि दरखास्त आह्वानार्थ गुठी संस्थान भक्तपुरले प्रकाशित गरेको सार्वजनिक सूचनाको प्रतिलिपि परिशिष्ट नं झ मा दिइएको छ ।

[१७५] "कि हामीलाई सिधा देउ, कि बिदा देउ ।" भन्ने मुख्य भनाइ नाइके मोतीबहादुर सुवालको गुठीसंस्थान भक्तपुरका प्रमुख समक्ष रहेको छ अर्थात् कि भैरवनाथका वार्षिक ४६ वटा पर्व पूजा सञ्चालन गर्न पुग्ने खर्च देउ कि नाइके पदबाट हटाऊ :– नाइके मोतीबहादुर सुवालबाट प्राप्त जानकारी ।

[१७६] मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट प्राप्त जानकारी ।

### ६.२.५.२ भद्रकाली गुठी

आदिमातृशक्ति इष्टदेवी भद्रकालीको वर्षभरिको पूजाआजा, जात्रा, पर्व, मन्दिरको रेखदेख आदि सम्पूर्ण कार्य सुव्यवस्थित रूपमा सञ्चालन भइरहोस् भनेर परापूर्वकालदेखि भद्रकाली गुठीको स्थापना गरिएको छ। यस गुठीका वर्तमान सदस्यहरू यसप्रकार रहेका छन्।

(१) मूल नाइके – माइला जधारी
(२) नाइके – इन्द्र लिवि
(३) नाइके – हरि बहादुर जधारी
(४) नाइके – पूर्ण गोपाल जधारी
(५) नाइके – हरिकृष्ण लिवि

पहिले गंगादेवी टन्जुहरू पनि गुठीका सदस्य थिए, तर अहिले आएर तिनीहरू गुठीबाट हटिसकेका छन् । साथै पहिले गुठीमा ३ जना मात्र नाइके थिए । पूर्ण बहादुर जधारी, इन्द्र लिवि र गंगादेवी टन्जु ।[१७७]

(६) आचाजु (कर्माचार्य) पुजारी – खिछेंका बिकुलाल, रत्नभक्त, रामभक्त, कृष्णभक्त, पूर्ण आदि ।[१७८]

सौभाग्यको कुरा – भद्रकाली गुठीको जग्गा अहिले पनि बाँकी नै छ। यो निजी गुठी भएकोले मासिन नपाएको कुरा मूलनाइके माइला जधारी भन्नु हुन्छ। जग्गाको परिमाण २२ रोपनी रहेको छ । यो जग्गा भक्तपुर सैनिक ब्यारेक (कटुञ्जे) सँगै रहेको छ । जग्गाको आयस्ता (बाली) अहिले पनि बुझाउन ल्याउने गरेको छ । जसबाट मन्दिरको रेखदेख, पूजाआजा, जात्रापर्वहरू सञ्चालन हुँदै आएको छ ।[१७९] यसदेखि बाहेक बिस्केट जात्राका अवसरमा गुठी संस्थान भक्तपुरले पनि क्रमशः "द्यः लिवय पूजा" का लागि भैरव र भद्रकालीलाई एउटा–एउटा कालो बोका, लिंगो उभ्याउने दिन भद्रकाली पीठमा गंगापूजाका लागि एउटा रांगो र लिंगो उभ्याइसकेपछि एउटा बोका यस गुठीलाई दिने गर्दछ ।[१८०]

वर्षदिनमा जम्मा १६ दिन (बिस्केट) मात्र भद्रकाली आफ्नो देवगृहको गुह्यस्थानबाट बाहिर निस्केर जात्रामा सहभागी हुन्छिन् । अघिपछि मन्दिरको गुह्यस्थानमा नै आसिन

---

[१७७] भद्रकाली गुठीका मूल नाइके माइला जधारी (वर्ष ७१) बाट २०६७/७/२७ गते प्राप्त जानकारी ।

[१७८] भद्रकाली गुठीका नाइके इन्द्र लिवि (वर्ष ६०), जो वि.सं. २०४६ सालदेखि गुठी नाइके हुँदै आएका छन्, बाट मिति २०६७/७/२७ गते प्राप्त जानकारी ।

[१७९] हुनतः देखेको होइन, सुनेको मात्र पहिले यस गुठीको नाममा ६०, ६५ रोपनी भन्दा बढ्ता जग्गा थियो अरे ।– भद्रकाली नाइके इन्द्र लिवि र उनकी धर्मपत्नीबाट प्राप्त जानकारी ।

[१८०] गुठी संस्थान भक्तपुरको तथ्याङ्कबाट प्राप्त जानकारी ।

रहन्छिन् । आचाजु पुजारीले मात्र त्यहाँ भित्र गएर पूजा गर्ने गर्छन् । अरुले बन्द कोठाको दैलोमा नै पूजा गर्नुपर्दछ ।[१८१] पूजा सामग्रीको प्रबन्ध भद्रकाली नाइकेहरूले गरिदिनु पर्दछ । मन्दिरमा चढाइएका दक्षिणा, भेटी, प्रसाद, वस्त्र, गहना आदि सबै पुजारीको हुन्छ । यसदेखि बाहेक आचाजु पुजारीको भागमा केही नपर्ने भएकोले नै होला पर्व पूजाका अवसरमा एक जोर पूजाको रु. ५००/– रूपैंया दिने भए आउने नत्र नआउने भनेर आचाजु पुजारीले भद्रकाली नाइकेहरूलाई घुर्क्याउने गरेको कुरा पनि सुनियो ।[१८२] केही वर्ष पहिलेको बिस्केट जात्राको कुरा हो । भैरवनाथको रथ तानेर लिंगोस्थल (ल्योसींखेल) पुऱ्याइसकियो । लिंगो पनि उभ्याइसक्यो । तर भद्रकाली रथ लय्कोको बाटोमै छ । देवीलाई लय्कोको मन्दिरबाट झिकेर रथमा विराजमान गर्न आचाजु पुजारीको अत्तोपत्तो छैन । यसैले ८, १० जना मानिसहरूले गएर आचाजुलाई खोजेर ल्याएपछि मात्र देवीलाई रथमा सवार गराइ रथ जात्रास्थल तर्फ लगियो ।[१८३] यसरी गुठी नाइके र आचाजु पुजारी बीचको आपसी समझदारी र समन्वयको अभावले गर्दा यस्ता विडम्बनापूर्ण घटनाहरू पनि यदाकदा हुने गरेका छन् ।

भैरवनाथ गुठी र भद्रकाली गुठीबीच तुलनात्मक अध्ययन गर्दा भद्रकाली गुठीको देवकार्य, पर्वपूजा, जात्राहरू भैरवनाथ गुठीको जस्तो विस्तृत र जटिल रहेको पाइँदैन । बिस्केटका १६ दिनहरूमा (चैत्र २३ देखि वैशाख ७ सम्म) भद्रकाली नाइकेहरू विशेष रूपमा सक्रिय देखिन्छन् । जबकि भैरव नाइकेहरू बिस्केटको अतिरिक्त भैरवनाथका नित्यपूजा, विशेष पूजा, ४६ पर्वपूजाहरूमा समेत सक्रिय हुने गर्छन् । अर्थात् वर्षभरि नै सक्रिय हुन्छन् ।

**निष्कर्ष**

उल्लिखित तथ्यहरूका आधारमा समग्रमा भन्नुपर्दा बिस्केट जात्राका प्रमुख देवीदेवता भनेका भैरव र भद्रकाली नै हुन् । भैरव शिव र भद्रकाली शक्तिको प्रतिरूप भएको हुनाले यस जात्राको विधिविधान पनि शैव र शाक्त तन्त्रबाट अत्यधिक प्रभावित रहेको देखिन्छ । यसैकारण भैरव र भद्रकाली मात्र नभएर यस जात्रामा निस्कने प्रायः सबैजसो देवदेवीको पूजा उपासनामा पंचोपचार विधि संगसंगै पंचमकार विधि अपनाइएको पाइन्छ अर्थात बिस्केट जात्राका सबैजसो देवीदेवतालाई अबीर, अक्षता केशरी, नैवेद्य, फलफूल, भेटी, तुल कपडाका अलावा माछा, मासु, जाँड, रक्सी चढाउने, दोपाया, चौपाया पशुपंछीको भोगबलि

[१८१] भद्रकाली गुठीका मूलनाइके माइला जधारीबाट २०६७/७/२७ गते प्राप्त जानकारी ।
[१८२] नाइके इन्द्र लिविबाट २०६७/७/२७ गते प्राप्त जानकारी ।
[१८३] नाइके इन्द्र लिविकी धर्मपत्नीबाट २०६७/७/२७ गते प्राप्त जानकारी ।

दिने, वः, चतामरी सहित सम्हेय्बजी चढाउने, अण्डा फुटाल्ने, फुस्रो सिन्दुर, कालो मोहनी टीका, स्वगं(सगुन टीका) लगाउने जस्ता तान्त्रिक विधिविधानयुक्त पूजा पद्धतिलाई अवलम्वन गरेको पाइन्छ । आचाजु पुजारीले तान्त्रिक विधानबाट देवताको पूजा गर्दा पूजाको क्रममा आफ्नो आसनबाट खाली हातलाई हावामा हल्लाएर केही सांकेतिक हाउभाउ गर्ने गर्दछन् । यसलाई "न्यास" भन्ने गरिन्छ । यसो गर्नुको अर्थ पूजा भाग ग्रहण गर्न सम्बन्धित देवतालाई आह्वान गरेको भन्ने हो ।

बिस्केटमा हुने रथयात्रा, खटजात्राहरू मात्र नभएर मुख्य जात्रा विश्वध्वजोत्थानोत्सव सम्बन्धी विधिविधानहरू पनि ज्योतिषीय सिद्धान्त र तान्त्रिक पद्धतिबाट सम्पन्न हुने गर्दछन् । लिंगो वनमा गएर लिंगो ल्याउने देखि लिएर डोरी बाँट्ने, ध्वजा बनाउने, लिंगोलाई जीवन्यास दिने, लिंगो उभ्याउने, ढाल्ने आदि सबै विधिविधानहरू तान्त्रिक पद्धतिबाट सम्पन्न हुने गर्दछन् ।

वस्तुतः भक्तपुर नगर नै तन्त्रमा आधारित नगर भएको हुनाले यहाँको लोक जीवनमा तन्त्रको ठूलो मह□व रहेको पाइन्छ । त्यसमाथि भैरव र भद्रकाली (स्थानीय बोलीमा भैलःद्यः र नकिंजु अजिमा) तान्त्रिक दृष्टिले अत्यन्त शक्तिशाली देवताहरू हुन् । स्थानीय जनसमुदायमा यी देवता सम्बन्धी अनेक रोचक किम्बदन्तीहरू अहिले पनि प्रचलित छन् । यिनै देवताको सम्मानमा वर्षको एकपटक बिस्केट जात्रा सम्पन्न हुँदै आएको छ । त्यसबेला नगरवासीहरू यी देवीदेवताहरूको पूजा उपासना गर्नको निम्ति विशेष किसिमले तयारी गरेर सक्नेले कुखुरा, हाँस, भेडा, बोका, राँगा आदिको भोगबलि चढाएर पूजा गर्ने गर्छन् । नसक्नेले सम्हेय्बजी मात्र चढाएर भए पनि देवतालाई सन्तुष्ट पार्ने कोशिश गर्छन् ।

बिस्केट जात्राका विधिविधानबारे लेखिएका असंख्य हस्तलिखित ग्रन्थहरू अहिले पनि नेपाल राष्ट्रिय अभिलेखालय, काठमाडौँमा संग्रहित रहेका छन् ।

# अध्याय सात

# बिस्केट जात्राको सामाजिक पक्ष

बिस्केट जात्राको सामाजिक र सांस्कृतिक पक्ष एक अर्कोसँग अन्तरनिहित र अन्तरसम्बन्धित विषय हुन्, तर त्यसो भए पनि यस अध्ययनको मूल विषयवस्तु नै बिस्केट जात्राको सामाजिक र सांस्कृतिक पक्षको अध्ययन भएकोले यस विषयलाई एउटै अध्यायमा राखेर भन्दा दुई अलग–अलग अध्यायमा राखेर अध्ययन गर्दा विषयवस्तुलाई विस्तारपूर्वक र गहन रूपमा अध्ययन विश्लेषण गर्न सकिने भएकोले यहाँ सामाजिक पक्षलाई एउटा अलग अध्यायमा राखेर अध्ययन गरिएको छ ।

## ७.१ परिचय

समाजमा प्रचलित चाडपर्वहरूको ठूलो सामाजिक मह□व रहेको हुन्छ । किनभने समाजमा रहने अनेक थरीका मानिसहरूको सहयोग, सद्भाव, पारस्परिक मेलमिलाप, आपसी एकता, सहभागिता बिना चाडपर्व, जात्राहरू सम्पन्न गर्न संभव हुँदैन । स्थानीय मानिसहरूकै सक्रिय सहयोग र समर्पण भावले मात्र जात्रा उत्सवहरू सफलतापूर्वक सम्पन्न हुन सक्दछन् । जस्तो कि उपत्यकाका परम्परागत जात्राहरूलाई अन्यत्रका मानिसहरू आएर चलाइदिने होइन, यहींका स्थानीय नेवार बासिन्दाहरूको सक्रियता र जोश जाँगरले मात्र ती जात्राहरू सम्पन्न हुन सक्छन् । त्यस्तै पूर्वी नेपालका किरातीहरूको चण्डीनाच वा उभौली पर्व उपत्यकाका नेवारहरू गएर मनाउने पर्व होइन, त्यहींका आदिवासी किरातीहरूद्वारा आफ्नै सांस्कृतिक परिवेश र परम्परागत मूल्य मान्यताका आधारमा मनाउने पर्व हो । यसरी प्रत्येक स्थानका चाडपर्व, जात्राको स्थानीयस्तरमा ठूलो सामाजिक मह□व रहेको हुन्छ । सामाजिक सहयोग र सद्भावले गर्दा नै जात्राहरूको अस्तित्व जीवन्त रहेको हुन्छ र त्यसको मह□व पनि स्थानीयवासीले नै बुझेका हुन्छन् ।[१]

यसप्रकार एकातिर सामाजिक सहयोग र सद्भावले गर्दा नै चाडपर्व, जात्रा उत्सवहरूको अस्तित्व जीवन्त रही आएका छन् भने अर्कातिर प्रत्येक चाडपर्व, जात्रा

---

[१] कुनै पनि व्यक्ति अरुको धर्मसंस्कृति प्रति आकर्षित भएर त्यसमा सहभागिता जनाउनु वा त्यसबाट क्षणिक आनन्द लिनु अलग कुरा हो । त्यसलाई वर्षौंवर्षदेखि परम्पराको रूपमा अंगालेर बनेको रहन सहन अलग कुरा हुन् । यसो भनिए जस्तै स्थान विशेषका जात्रा आम मानिसले हेर्नुको अर्थ केवल मनोरन्जन लिनको लागि मात्र हो, तर त्यस जात्राभित्रका गुढ रहस्य, धार्मिक, आध्यात्मिक एवं सांस्कृतिक त□व र भावनात्मक मर्म सम्वद्ध स्थानीयवासीले मात्र बुझेका हुन्छन् । जस्तो– भक्तपुरको नवदुर्गा नाचको रहस्य र भावनात्मक त□व स्थानीय नेवार समुदायले बाहेक अरुले बुझ्न सक्दैनन् । त्यस्तै चण्डीनाचको मह□व किराती समुदायलाई मात्र थाहा हुन्छ ।

उत्सवले स्थानीय समाजका विविध पक्षलाई पनि प्रस्तुत गर्दै आइरहेको हुन्छ । जस्तो– धर्मकर्मप्रतिको विश्वास, सांस्कृतिक पक्ष, परम्परागत मूल्य मान्यता, स्वजनहरूप्रतिको व्यवहार, मनोवैज्ञानिक पक्ष, मनोरञ्जन, आर्थिकस्तर, जीवनशैली जस्ता कुराहरूको जानकारी, त्यस अवसरमा स्थानीयवासीद्वारा पहिरिने पहिरन, लगाइने आभूषण, खाइने विशिष्ट प्रकारका खाद्यवस्तु, प्रदर्शित भजनकीर्तन, नाचगान, देवदेवीका पूजापाठ, आफन्तजनहरूसँगको भेटघाट, रमाइलो गर्ने, आनन्द लिने तौरतरिका, जात्राको बेला गरिने विशेष क्रियाकलाप आदिद्वारा प्रस्तुत भइरहेका हुन्छन् ।[२] अनि यी क्रियाकलापहरूको मूलभूत उद्देश्य भनेको समाजको निम्ति स्वस्थ मनोरन्जन हो ।[३]

भक्तपुरको नेवार समाज परापूर्वकालदेखि विविध वर्ग र जातजातिका मानिसहरू मिलेर बनेको समाज हो । यो समाज परम्परागत मूल्य मान्यता, सनातन हिन्दुधर्म परम्परा, रीतिस्थितिमा अडेको समाज हो ।[४] यसैले यो समाज रुढिग्रस्त हुनुका साथै यसमा जातीय छुवाछुत, सामाजिक उचनीच, त्यो मत्यो (गर्न हुने, नहुने), चिपःनिपः (जुठो चोखो) जस्ता जटिल कुराहरू थुप्रै देख्न सकिन्छ ।

भक्तपुर कला र संस्कृतिले सम्पन्न ऐतिहासिक नगर हो । यहाँ पेशामा आधारित अनेक जातजातिका मानिसहरू रहने गर्छन्, तथापि यहाँका अधिकांश बासिन्दाको मुख्य पेशा परम्परागत कृषि रही आएको छ । यहाँको समाजमा प्राचीनकालदेखि चल्दै आएका चाडपर्व, जात्राहरू, सामाजिक संस्कार, गुठीगाना र त्यसअवसरमा गरिने भोजभत्तेर आदिले प्रत्यक्ष वा परोक्ष रूपमा यहाँको सुदृढ र मजवुत सामाजिक संगठन र संरचनालाई प्रस्तुत गरिरहेको पाइन्छ ।[५] वास्तवमा जन्मेदेखि मृत्युपर्यन्तका सामाजिक संस्कार, कुम्हालेको चक्र झैं वर्षेनी घुमिरहने ऋतुकाल अनुरूपका चाडपर्व, जात्रा उत्सव अनि वार्षिक रूपमा आयोजना हुने

---

[२] http.//en.wikipedia.org/wiki/Festival; retrieved in 2011 Feb.8

[३] वास्तवमा संसारका जुनै देशका बासिन्दाले पनि दिन रातको कामको थकाइपश्चात् थकान मेट्न समय समयमा यस्ता मनोरन्जन लिने गर्छन् । मनोरन्जन लिने तरिका भने आ–आफ्नै किसिमको हुन्छ, यसमा समय, काल, परिस्थितिले पनि भूमिका खेल्दछ । – टि.आर.वैद्य र अन्य, *सोसल हिष्ट्री अफ नेपाल,* न्यू दिल्ली : अनमोल पब्लिकेशन प्रा.लि., ई.सं. १९९३, पृ. १९६ ।

[४] http://en.wikipedia.org./wiki/Hindusism in Nepal;, retrieved in 2011 March 16

[५] संसारकै सबैभन्दा सानो नगर भएर पनि भक्तपुर प्राचीन र मध्यकालीन कला संस्कृतिले सम्पन्न एउटा यस्तो नगर हो, जहाँ पाइने सामाजिक विविधता, गौरवमय सांस्कृतिक परम्परा, आश्चर्यलाग्दा कला सम्पदा, पुरातात्विक स्मारकहरूले सारा संसारकै ध्यान आफूतिर आकर्षित गर्न सकिरहेको छ । यसैकारण यसलाई कसैले चाडपर्व र जात्रा उत्सवहरूको देश, कसैले खुल्ला आकाशमुनिको संग्रहालय अनि कसैले घरभन्दा मन्दिर र मानिस भन्दा देवता ज्यादा भएको शहर भन्ने उपमा दिएका छन् । –

(क) टिवर सल्केज, *वीण्डो अन नेपाल,* लण्डन : रवर्ट हेल लिमिटेड, ई.सं. १९५९, पृ. १३७ ।

(ख) विलियम कर्कपेट्रिक, *एन एकाउन्ट अफ दि किङ्डम अफ नेपाल,* न्यू दिल्ली : मंजुश्री पब्लिसिङ हाउस, ई.सं. १९६९, पृ. १८८ ।

गुठी पर्वहरूले यहाँको समाजमा सामाजिक एकता, पारस्परिक मेलमिलाप, आपसी सहयोग र आत्मीयपनको भाव जस्ता कुराको विकासमा टेवा पुऱ्याउँदै आएको छ ।

यहाँका अधिकांश बासिन्दा हिन्दुधर्म मान्दछन् ।[६] यसैले यहाँ मनाइने प्रायः जसो चाडपर्व, जात्रा, उत्सवहरू पनि हिन्दु धर्म संस्कारसँग सम्बन्धित छन् । तर यसको अर्थ यो होइन कि यहाँ बौद्ध धर्मावलम्बी नेवारहरू हुँदै नभएको चाहिं होइन । उनीहरूका पनि आफ्ना चाडपर्वहरू छन् । बुद्ध पूर्णिमा, सम्यकदान, पंचदान पर्व[७] उनीहरूका महान् चाड हुन् । तर पनि हिन्दु बाहुल्य समाज भएकोले यहाँ हिन्दु धर्मसंस्कृतिको ठूलो प्रभाव रहनु स्वाभाविक देखिन्छ । यो बिस्केट जात्रा पनि हिन्दु धर्म संस्कृतिमा आधारित जात्रा हो । किनकि यस जात्राका मुख्य देवता भैरवनाथ हुन् । भैरवनाथ महादेवको रौद्ररूप हो । हिन्दु धर्म परम्परामा ब्रम्हाजी सृष्टिकर्ता, विष्णु पालनकर्ता र महेश्वर अर्थात् महादेव संहारकर्ताका रूपमा मान्ने गरिन्छ । यसैअनुरूप महादेवको रौद्ररूप वा संहार रूप नै भैरवनाथ हो भन्ने कुरा पुराणहरूमा उल्लेख पाइन्छ ।[८] यसैले भैरवनाथको जात्रा भएकोले बिस्केट जात्राप्रति सबैको ठुलो सम्मान र सद्भाव रहेको पाइन्छ । साथै यस जात्राका प्रमुख देवता भैरवनाथलाई बौद्ध धर्मावलम्बीहरूले पनि तान्त्रिक देवताको रूपमा अजाजु द्यः भनेर मान्दै आएकोले यस जात्रा प्रति तिनको पनि सकारात्मक धारणा रहेको पाइन्छ ।[९] जात्राका अवसरमा आफ्ना छोरीचेलीहरूलाई नखःत्या भोज बोलाउने परम्परा तिनमा पनि रहेको पाइन्छ । यताबाट बिस्केट चाड तिनीहरूले पनि मान्ने गर्छन् भन्ने तथ्य थाहा हुन्छ ।

यसरी शताब्दीयौं शताब्दीदेखि कुनै बाधा व्यवधान बिना प्रत्येक वर्ष निर्वाध रूपमा सञ्चालन हुँदै आएको बिस्केट जात्राको पछाडि यहाँको समाजमा अनादिकालदेखि बसोबास गर्दै आएका अनेक थरीका मानिसहरूको प्रत्यक्ष वा अप्रत्यक्ष सहयोग, सद्भाव र सहभागिता रहेको थाहा हुन्छ । यसैकारण भक्तपुरका संरक्षक देवदेवीहरू भैरवनाथ र उनकी शक्ति भैरवी वा भद्रकालीको महान् पर्वको रूपमा वर्षको एकपटक विक्रम संवत्सरको अवसरमा मनाइने

---

[६] भक्तपुरमा ९९% बासिन्दा नेवार छन् र तिनमा ९२% हिन्दु धर्म मान्दछन् । – रवर्ट आइ.लेभी, *मेसोकज्म,* दिल्ली : मोतीलाल बनारसी दास पब्लिसर्स, ई.सं. १९९२, पृ. ७५ ।

[७] पंचदान जात्रामा जाँदा बौद्धहरू आफूखुसी पोशाकमा जान्छन् तर कतिपय वज्राचार्यहरू एक विशेष प्रकारको पोशाक लगाएर जान्छन् । भक्तपुरमा यस दिन दीपङ्कर मूर्ति पनि जात्रामा बौद्धहरू सँगसँगै लगिन्छ । यसैले यो भक्तपुरको पंचदान जात्रा ललितपुर र कान्तिपुरको हेरी एक बेग्लै किसिमको र खास विशेषतायुक्त मानिन्छ ।– मेरि सेफर्ड स्लसर, *नेपाल मण्डलाः अ कल्चरल स्टडी अफ दि काठमाडौं भ्याली,* प्रिन्सटन : प्रिन्सटन युनिभरसिटी प्रेस, ई.सं. १९८२, पृ. ३०२ ।

[८] http://www.ground report.com/world/Hindu Deity who drinks Liquer/2873937; retrieved in 2011.April 1.

[९] वस्तुतः भैरवनाथ नै त्यस्ता देवता हुन् । जसलाई काठमाडौं उपत्यकाका हिन्दु र बौद्ध दुवै नेवारहरूले समान रूपले मान्ने गर्छन् । – http://en.wikipedia/orgwiki/Bhairab; retrieved in 2011 Feb.11

बिस्केट जात्रालाई भक्तपुरवासीहरू महान् राष्ट्रिय चाड दशैं जतिकै मह□व दिएर भव्य रूपमा मान्ने गर्दछन् । वर्षको एकपटक मनाइने यस जात्रा प्रति स्थानीय बासिन्दाले सहयोग, सद्भाव र सहभागिता दर्साउनुको पछाडि सम्बन्धित देवदेवीप्रति उनीहरूमा रहेको अटुट विश्वास, भक्ति, धर्मकर्मप्रतिको आस्था, परम्परागत मूल्य मान्यता, रीतिस्थिति, सामाजिक दायित्व, गुठी व्यवस्था, सबै मिली रमाइलो गरेर आनन्द लिने, नयाँ पिँढीलाई आफ्नो कला संस्कृति, इतिहासबारे जानकारी गराउने आदि उद्देश्यहरू निहित रहेका देखिन्छन् ।

भक्तपुरको प्रसिद्ध जात्रा बिस्केटको सामाजिक पक्ष निक्कै उच्च कोटीको पाइन्छ । यहाँको समाजमा बसोबास गर्ने हरेक वर्ग र जातिका मानिसहरूको यसजात्रासँग ठूलो सम्बन्ध छ । वास्तवमा भक्तपुरका बासिन्दाहरूको आपसी एकता, पारस्परिक मेलमिलाप, सहयोग सद्भाव र सहभागिताबाट नै प्रत्येक वर्ष यो जात्रा सम्पन्न हुँदै आएको छ । कति पुस्ता बिते, कति युग फेरिए, तर पनि यस जात्राको अस्तित्व आजसम्म पनि जीवन्त रही आएको छ । मल्लकाल, शाहकाल, राणाकाल, पंचायतकाल, त्यसपछि वर्तमानकाल आदि सबै काल, समय, परिस्थितिमा यो जात्रा निरन्तर रूपमा चल्दै आइरहेको छ । यस्तो कुनै वर्ष छैन, जुन वर्ष यो जात्रा रोकिएको होस् ।[१०]

यहाँको समाजलाई नियाली हेर्दा हिन्दु धर्मको पूर्ण छाप परेको देखिन्छ ।[११] पूर्व मध्यकालका देवनामधारी लिच्छवी शासकहरू, त्यसपछि मल्ल नामधारी कर्णाटवंशी हिन्दु शासकहरूले राज्य चलाएको राजधानी शहर भएको हुनाले यहाँ हिन्दु धर्म संस्कृतिको प्राधान्यता रहेको बुझिन्छ । प्राचीन हिन्दु ग्रन्थ मनुस्मृति अनुसार ब्राम्हण, क्षेत्री, वैश्य, शुद्र गरी चार भागमा विभाजित यस समाजका हरेक जातिले हिन्दु धर्म अनुसार आ–आफ्नो काम, कर्तव्य र अधिकार उपभोग गर्दै आएका छन् ।[१२] त्यही अधिकार क्षेत्रभित्र बसेर परम्परादेखि चलि आएको चाडवाड, जात्रापर्व, रीतिरिवाजहरूलाई अंगाल्दै आएका छन् । यसै अनुरूप अनादिकालदेखि प्रचलनमा रही आएको यो बिस्केट जात्रा सम्पन्न गर्नमा पनि यहाँका ब्राम्हण वर्गदेखि शुद्र वर्गसम्मका मानिसहरूले परम्परादेखि आफूलाई प्राप्त दायित्व

---

[१०] छ पुस्तादेखि परम्परागत रूपमा भैरवनाथ गुठीको नाइकेको जिम्मेवारी सम्हाल्दै आएका वर्ष ७९ का मोतीबहादुर सुवालबाट मिति २०६७/७/१८ गते प्राप्त जानकारी ।

[११] वर्तमान समयसम्म पनि भक्तपुरमा कुल जनसंख्याको ८९.७७% हिस्सा हिन्दु धर्म मान्नेहरूको रहेको छ ।
— http://en.wikipedia.org./wiki/Hindusim in Nepal; retrieved in 2011 March 16

[१२] जयस्थिति मल्ल वर्ष ४३ यिन राजाले धेरै स्थिति बाँधिदिया । .... फेरि चार वर्ण छत्तीस जातका निर्णय गरी जात अनुसार कर्मकाण्ड चलाउन लाया । त्यहाँपछि यिन राजाले जात निर्णय, क्षेत्र निर्णय, गृह निर्णय जातमाला स्थिति बाँधी हिन्दु धर्म नेपालमा सच्याई आफ्नू जस नाम प्रख्यात गऱ्या । – देवीप्रसाद लम्साल (सं), *भाषा वंशावली, भाग–२,* काठमाडौं: नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं.२०२३, पृ. ३७ र ३९ ।

भित्र रहेर प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा सहयोग पुऱ्याउँदै आइरहेको छ । भक्तपुरमा बस्ने त्यस्तो कुनै जाति छैन होला जसले यस जात्राको सञ्चालनमा धेरै वा थोरै अथवा प्रत्यक्ष वा परोक्ष रूपमा सहयोग नपुऱ्याएको होस् । यसरी सम्पूर्ण भक्तपुर नगरवासीहरूको सहयोग र सहभागिताबाट यो जात्रा सञ्चालन हुँदै आएको कारणले गर्दा यस जात्राको सामाजिक पक्ष निक्कै मह□वपूर्ण रहेको देखिन्छ । यस जात्राको सामाजिक पक्षलाई निम्न अनुसार अध्ययन गरिएको छ ।

## ७.२ शासकवर्ग वा राज्यको भूमिका

बिस्केटजात्राको सामाजिकपक्षलाई नियाल्दा राजा वा राज्यसत्ताको भूमिकालाई नकार्न सकिंदैन । किनकि जात्राको परम्परालाई सुदृढ गर्न राजाहरूद्वारा त्यस्ता कार्य सम्पादनका निम्ति राखिने गुठीजग्गा अथवा त्यस सम्बन्धी गरिने व्यवस्था राजाको सामाजिक दायित्व भित्र पर्ने कुरा हुन् ।[१३] वास्तवमा यहाँका प्रायः सबैजसो चाडवाड, नाचगान आदिको उन्नति प्रगतिमा तात्कालीन शासक वर्गको ठूलो देन रहेको देखिन्छ ।[१४] त्यसमाथि भक्तपुरको प्रसिद्ध जात्रा बिस्केटको उत्थानका निम्ति तात्कालीन समयका राजाहरूले ठूलै भूमिका खेलेका थिए भन्ने कुरा ऐतिहासिक प्रमाणहरूले देखाउँदछ । अर्थात् प्रारम्भमा दुई दिन मात्र चल्ने जात्रा बिस्केटलाई विस्तारित रूप दिई आठ रात नौ दिनसम्म मनाउनु पर्ने प्रसिद्ध जात्राको रूपमा स्थापित गर्नुमा तात्कालीन समयमा भक्तपुर राज्यमा शासन गर्ने कर्णाटवंशी मल्ल राजाहरूको ठूलो योगदान रहेको पाइन्छ ।[१५] यसैकारण बिस्केट

[१३] प्रयागराज शर्मा, *कुल, भूमी र राज्यः नेपाल उपत्यकाको पूर्व मध्यकालीन सामाजिक अध्ययन,* काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५४, पृ. १४९ ।

[१४] वैद्य र अन्य, पा.टि.नं. ३, पृ.२०१ ।

[१५] यसमा विशेष गरेर विश्वमल्ल, जगज्योतिर्मल्ल, भूपतीन्द्र मल्ल आदि राजाहरूको उल्लेखनीय योगदान रहेको पाइन्छ । वंशावली अनुसार राजा विश्वमल्लले पशुपति क्षेत्रको श्लेषमान्तक जंगलबाट ल्याएको काठबाट ठूलठूला पांग्रा सहितका रथहरू बनाई लिंगो जात्रास्थलसम्म पुऱ्याउनु पर्ने, त्यस्तै राजा जगज्योतिर्मल्लले भैरव भद्रकालीको रथ जुधाउने जात्रा लगायत टोल–टोलमा मातृका लगायत गणेश, भैरव आदि देवीदेवताको खटजात्रा गर्नुपर्ने गरिदिएका थिए । अनि राजा भूपतीन्द्रमल्लले चैत्र मसान्तको चारदिन अघिबाट प्रारम्भ गरी मेष संक्रान्तिको पाँचौं दिनसम्म अर्थात् द्यःक्वहाँ बिज्याइगु (देवता तल ओर्लने) देखि द्यः थाहाँ बिज्याइगु (देवता स्वस्थान फर्कने) जात्रा भनेर आठ रात नौ दिनसम्म चलाउनु पर्ने गरिदिए । साथै जात्राको बेला रथ गुडाउन सजिलो होस् भनेर जात्रा मार्ग विशेष गरेर गाःहिटी देखि ल्योसिंखेलसम्म ढुंगाको पक्की बाटो बनाई त्यसको दुवै छेउमा रथको नाप मुताविक पांग्रा गुड्ने ढुंगाकै ढल बनाउन लगाए । –
(क) डि.आर. रेग्मी, *मेडियभल नेपाल,* दोस्रो भाग, कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ६५२ ।
(ख) लम्साल, पा.टि.नं. १२, पृ. ५४ ।
(ग) डेनियल राइट, *हिस्ट्री अफ नेपाल,* न्यू दिल्ली : कस्मो पब्लिकेसन्स, रिप्रिन्ट, ई.सं. १९८३, पृ. १९१ ।
(घ) लीलाभक्त मुनंकर्मी, *बिस्केट जात्राको संस्कृति,* भक्तपुर : भक्तपुर नगरपालिका, वि.सं. २०५३, पृ. ३८–३९ ।

जात्रासँग सम्बन्धित उनीहरूका थुप्रै अभिलेखहरू, हस्तलिखित ग्रन्थहरू, थ्यासफूहरू अहिले पनि प्राप्त छन् ।[१६]

यसरी विविध कालखण्डका अनेक राजा, महाराजाहरूबाट उत्थान भई उन्नति प्रगति हुँदै आएको हुनाले यस जात्रालाई आजसम्म पनि राज्यस्तरीय मान्यता र अनुमोदन प्राप्त छ भन्ने कुरा यताबाट पनि थाहा हुन आउँछ । पाटनको रातो मच्छेन्द्रनाथको जात्रा राजा नरेन्द्रदेवसँग, काठमाडौँको इन्द्रजात्रामा हुने कुमारी जात्रा जयप्रकाश मल्लसँग सम्बन्धित भएजस्तै भक्तपुरमा बिस्केट जात्राको क्रममा हुने भैरव भद्रकालीको रथजात्रा राजा जगज्योतिर्मल्लसँग सम्बन्धित छ ।[१७]

यसप्रकार बिस्केट जात्रामा स्थानीय समाजका ब्राम्हणदेखि शुद्रवर्गसम्मका मानिसहरूको मात्र सहयोग र साथ भएको नभएर स्वयम् शासकवर्गको भूमिका पनि यस जात्राको निम्ति कम मह□वपूर्ण रहेको थियो भन्न सकिँदैन । यसका साथै अर्को दृष्टिकोणबाट हेर्दा यस जात्रालाई राजा र प्रजा बीचको सुमधुर सम्बन्धको द्योतकको रूपमा पनि लिन सकिन्छ । वास्तवमा भक्तपुरमा राजा र प्रजाबीच मल्लराज्यकालभरि नै सुमधुर र सौहाद्रपूर्ण सम्बन्ध रहेको थियो भन्ने कुरा अनेक प्रसंगले पुष्टि गर्दछ । जस्तै – राजा जगतप्रकाश मल्ल (वि.सं. १७००–१७२९) ले म र चन्द्रशेखर (मन्त्री) बीच कुनै भेद छैन ।[१८] अनि जगतचन्द्रको नामबाट राजा र मन्त्रीले (जनताको छोराले) संयुक्त रूपमा राखेर गएका

---

[१६] यक्षमल्लको ने.सं. ५६१ को "विश्व यात्रा" उत्कीर्ण भएको भक्तपुर टौमढी चोकको अभिलेख, जितामित्र मल्ल र भूपतीन्द्र मल्लका "विस्क्यात" उत्कीर्ण भएको ने.सं. ८०८ र ने.सं. ८१८ का भक्तपुर दरबार परिसरका अभिलेखहरू अनि मल्लकालमा नै रचना गरिएका विश्वयात्रा सम्बन्धी हस्तलिखित ग्रन्थहरू, वर्ष कृति र ऐतिहासिक घटनावली नामका थ्यासफू अनि भक्तपुरका स्थानीयवासी ज्ञानकर वज्राचार्यसँग रहेको बिस्केट जात्रासँग सम्बन्धित एउटा अप्रकाशित थ्यासफूहरूले यस तथ्यको पुष्टि गर्दछ । –

(क) डि.आर.रेग्मी, *मिडियभल नेपाल,* भाग ३, कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ६६ ।

(ख) डि.आर. रेग्मी, *मिडियभल नेपाल,* भाग ४, कलकत्ता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. २१३,२२३ ।

(ग) धनवज्र वज्राचार्य, "वर्षकृतिः एक अप्रकाशित थ्यासफू", *कन्ट्रिब्युसन्स टु नेपलीज स्टडीज,* अंक १४, नं.१, (डिसेम्बर १९८६), पृ.७५–९० ।

(घ) चुन्दा वज्राचार्य, *मध्यकालया छुं घटनावली छगू अध्ययन,* येंः सफू धुकू, ने.सं. ११०७, पृ. १८–२४ ।

(ङ) "भक्तपुरको बिस्केट जात्रासँग सम्बन्धित एउटा अप्रकाशित थ्यासफू", यस थ्यासफूको मूल पाठ परिशिष्ट नं. च मा दिइएको छ ।

[१७] लम्साल, पा.टि.नं. १२, पृ. ५४ ।

[१८] हाल भक्तपुर चित्र संग्रहालयमा राजा जगतप्रकाश मल्लले ने.सं. ७८९ (वि.सं. १७२६) मा राखेको दश अवतारको वर्णन सम्बन्धी गीत परेको शिलालेखको पछिल्लो भाग रहेको छ । त्यसमा जगतचन्द्रको उल्लेख यसरी आएको छ ।

"जगतचंद दुहु एक हिजिव दुय परमपद दुहु पावे ....

आशास्ते श्री जगचन्द्र बैकुण्ठ पदपङ्कजे ..........."

(जगतचन्द्र दुइ प्राणी भएता पनि एकै हुनुहुन्छ । दुवैलाई परमपद मिलोस ...... ) – भोलानाथ पौडेल, *भक्तपुरको राजकुलो,* काठमाडौँ : आगम प्रकाशन, वि.सं. २०६५, पृ. ४१ ।

अनेकौं कीर्तिहरू आजपनि यत्रतत्र भेटिन्छन् ।[१९] त्यतिबेला धर्म र पुण्यको काम होस् वा विकास निर्माण सम्बन्धी काम वा राज्यमाथि आइपरेको संकट निवारण गर्नु पर्‍यो भने राजाहरूले स्थानीय जनताको सल्लाह, सुझाव र सहयोग लिने गर्दथे । यस्तो सुमधुर सम्बन्ध मल्लकालको अन्तिम समयसम्म पनि कायम रहेको थियो भन्ने कुरा निम्न प्रसङ्गले अझ स्पष्ट पार्दछ । जस्तो :– गोर्खाली फौजको आक्रमणले गर्दा शरणागत हुन आएका छिमेकी राज्य कान्तिपुर र ललितपुरका राजाहरूलाई शरण दिने कि नदिने भन्ने बारेमा स्थानीय जनताको राय मागिएको र अन्त्यमा जनताकै सल्लाह, सुझाव बमोजिम ती राजाहरूलाई शरण दिइएको तथ्य ऐतिहासिक प्रमाणहरूबाट थाहा हुन्छ ।[२०] यसरी राजाले जनताको भावनालाई कदर गर्ने अनि जनताले पनि राजाको हरेक कदममा कदम मिलाएर साथ दिँदै आएकोले भक्तपुरमा जनप्रिय शासन चलेको थियो । यही सुमधुर सम्बन्धको प्रतीक अर्थमा यस जात्रालाई लिने गरिन्छ । जात्राको बेला आज पनि राजाको प्रतीक खड्ग (तरवार) र जनप्रतिनिधि (मंत्री) को प्रतीक एक ब्राम्हण रथमा नराखी रथजात्रा औपचारिक रूपमा सञ्चालन नहुने परम्परा दृष्टिगत भएबाट यस तथ्यको पुष्टि हुन्छ ।[२१]

यसरी राजा र प्रजा दुवैको सहयोग र सक्रिय सहभागितामा यो जात्रा चल्दथ्यो र आजपनि दुवैको सहयोग र समन्वयमा यो जात्रा सम्पन्न भइरहेको छ अर्थात् एकातिर यसमा स्थानीय जनताको प्रत्यक्ष सहभागिता पाइन्छ भने अर्कोतिर राज्य प्रशासनको भूमिका पनि निक्कै मह□वपूर्ण रहेको पाइन्छ । विशेष गरेर राज्य संयन्त्रकै नियन्त्रण र निगरानीमा

---

[१९] *ऐजन*, पृ. ३८ ।

[२०] (क) टि.आर. वैद्य, जयप्रकाश मल्ल: *दि ब्रेभ मल्ल किङ्ग अफ कान्तिपुर*, न्यू दिल्ली : अनमोल पब्लिकेसन प्रा.लि., ई.सं. १९९६, पृ. २४ ।

(ख) तीर्थप्रसाद मिश्र, "भक्तपुर राज्यमा जनसहभागिता: एक ऐतिहासिक चर्चा", *खोपृङ* ,वर्ष ३, अंक ३, (वि.सं. २०५१), पृ. २४ ।

(ग) भक्तपुरको दतात्रय मन्दिरमा आइ बसेका काठमाडौँका राजा जयप्रकाश मल्ल तथा पाटनका राजा तेजनरसिंह मल्लले भक्तपुरका राजा रणजित मल्ल कहाँ शरण मागेको खबर पठाए । शरण दिने नदिने विषयमा पचपन्न झ्यालयुक्त राजप्रासादको मूलचोकमा राजा र उनका भारदारहरू बीच छलफल भयो ..... । समान स्वरूपका कला, संस्कृति, भाषा, धर्म भएका राजाहरूप्रति खतरापूर्ण शरण दिने विषयमा, त्यसमा पनि रगतको सम्बन्ध समेत भएको कुरामा सहिष्णुता जाग्नु अस्वाभाविक थिएन । यसैले दुवै राजाहरूलाई आफ्नो दरबारमा शरण दिने कुरामा मतैक्य भयो र शरण दिइयो । तीन राजाहरू एक ठाउँमा जम्मा मात्र के भएका थिए यतिकैमा राजा रणजित मल्लकहाँ दरबारको ढोका बाहिरबाट पठाइएको पत्र पुर्‍याइयो – "मित बा मैले दुइ मृगलाई लखेटेर ल्यायाका थियाँ, यिनीहरू यहाँ आइ पुग्याछन्, मलाई सुम्पी दिनु होस् ...... ।" प्रतापी, सुसंस्कृतिज्ञ र धर्मभीरु चरित्र भएका त्यस्ता महापुरुष राजाहरूलाई दुई मृग लखेटेर ल्याएको, राजाको दरबारमा बसेकालाई सुम्पिदिनुहोस् भन्ने जस्ता तुच्छबोली, अशोभनीय व्यवहार, हेलाँका शब्दहरूले लेखिएका पत्र देख्दा, पाउँदा स्वाभिमानी मानिसलाई मानसिक बेदनाका साथै शारीरिक कम्पन हुनु ऐतिहासिक सत्यता थियो, .... यसैले रणजीत मल्लले "शरण पर्‍याको मरण गर्न्या छैन" भनेर दरबार बाहिर हतियारले लेस पृथ्वीनारायण शाहका दूतलाई जवाफ दिएर पठाए । – ऐश्वर्यलाल प्रधानाङ्ग, "नेपालका अन्तिम मल्ल राजाहरूको अन्तीम घडी", *खोपृङ*, वर्ष २, अंक २, (वि.सं.२०५०), पृ. ९–११ ।

[२१] प्रत्यक्ष अध्ययन र स्थलगत अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

यो जात्रा सञ्चालन भइरहेको छ ।[२२] यस जात्रालाई शान्तिपूर्ण र व्यवस्थित ढंगबाट संचालन गर्नको निम्ति हरेक वर्ष जात्रा सुरु हुनुभन्दा १५, २० दिन अघिबाटै प्रमुख जिल्ला अधिकारीको अध्यक्षतामा एउटा समिति गठन गर्ने गरिन्छ । जुन समितिमा नगरका प्रवुद्ध वर्ग, गण्यमान्य व्यक्तिहरू, संस्कृतिविद्हरू, जात्रासँग सम्बन्धित पदाधिकारीहरू, पुजारीवर्ग, सुरक्षा अधिकारीहरू रहेका हुन्छन् । यसै समितिको रेखदेख र व्यवस्थापनमा जात्राको प्रारम्भदेखि अन्त्यसम्मका प्रमुख विधिविधानहरू सम्पन्न हुने गर्दछ ।[२३] यस अतिरिक्त जनसहयोग र सहभागिता हुँदाहुँदै पनि हरेक वर्ष जात्रा सञ्चालनको निम्ति आवश्यक पर्ने प्राय: सबै आर्थिक खर्चको व्यवस्थापन राज्य संयन्त्र अर्थात् गुठी संस्थान भक्तपुरले नै गर्दछ । जात्रामा सरकारी पदाधिकारीहरूको उपस्थितिले जात्राको शोभा बढाउने गर्दछ । मुख्य मह□वपूर्ण कुरा राज्य संप्रभुको प्रतीक वा राजा (राष्ट्राध्यक्ष) को उपस्थितिको प्रतीक राजकीय खड्ग (तरवार) जात्राका प्रमुख विधिविधानहरूमा आवश्यक पर्दछ । यसैले जात्रा प्रारम्भ हुनु भन्दा एकदिन अघि यो खड्ग राजधानी काठमाडौंबाट आएको सम्झेर नगरबाहिरको सल्लाघारी (पुष्करिणी पोखरीको दक्षिण पश्चिमी कुनाको डिल)सम्म लिन जाने र त्यसपछि त्यहाँबाट रातो कपडामा बेरिएको उक्त खड्गलाई विधि बमोजिम हस्तान्तरण गरेर लिएपछि  बाजागाजा, लावालस्कर सहित नगर भित्रयाउने गरिन्छ ।[२४] यसरी राजाको प्रतीक खड्ग रथमा सवार गर्नुपर्ने परम्पराले गर्दा यस जात्रामा राजाको ठूलो भूमिका रहेको थियो भन्ने थाहा हुन्छ ।

यस अतिरिक्त ज्योतिषीले जुराएको निश्चित् साइतमा रथजात्रा सुरु गर्नु पूर्व जात्राका प्रमुख देवदेवी भैरव र भद्रकालीको मन्दिरमा दरबारबाट आएको पूजाको रूपमा "द्य: लियगु पुजा" र "लायकू पूजा" नामक पूजा चढाउने कार्य हाल पनि गरिन्छ ।[२५] यी पूजालाई जात्रा सञ्चालनका निम्ति राजाको आदेश आएको प्रतीक अर्थमा लिइने गरिन्छ । त्यसपछि मात्र विधिवत् रूपमा जात्रा सुरु गरिन्छ । नौ दिनसम्म खड्गको सवारी चलाउने ब्राम्हणहरूले जात्राको सबै घटनाक्रम तलेजु मूलचोकमा राजदरबार पदाधिकारीहरूलाई सविस्तार बिन्ति चढाउने व्यवस्था रहेको छ ।[२६]

---

[२२] प्रमुख जिल्ला अधिकारीको कार्यालय, भक्तपुरका प्रशासन फाँटका खरिदार कर्मचारी हिरालाल डाँगी (वर्ष ४०) बाट मिति २०६६/५/१५ गते प्राप्त जानकारीको आधारमा ।

[२३] *ऐजन* ।

[२४] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

[२५] सत्यनारायण प्रजापति, "बिस्केट जात्रा", *नेपाली संस्कृति,* वर्ष ६, अंक १, (वि.सं. २०४६), पृ. ३२ ।

[२६] *ऐजन* ।

अर्को मह□वपूर्ण कुरा के देखिन्छ भने ध्वजा अभिलेखहरूको अध्ययन गर्दा खेरि एउटा ध्वजा जीर्ण भई अर्को नयाँ ध्वजा फेर्नु पऱ्यो भने त्यस्तो शुभकार्य गद्दीनसीन राजाहरूबाट हुने परम्परा रही आएको छ । यसमा विशेष गरेर मल्ल र शाहवंशीय राजाहरूको नाम उल्लेख पाइन्छ ।[२७] तर अपवादको रूपमा वर्तमान समयको विश्वध्वजामा उत्कीर्ण अभिलेखमा भने तात्कालीन सम्मानीय प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाको नाम उल्लेखित छ । शायद मुलुकमा गणतन्त्र स्थापना भएपछि फेरिएको ध्वजा भएकोले त्यसबेला राष्ट्राध्यक्षको कार्यभार पनि प्रधानमन्त्रीले नै सम्हालेको हुनाले प्रधानमन्त्रीको नाम ध्वजा अभिलेखमा उत्कीर्ण हुन पुग्यो ।[२८] जेहोस् बिस्केटको नयाँ ध्वजा फेर्ने कार्य राज्यसत्ताको सर्वोच्च व्यक्तिले मात्र गर्न सक्ने रहेछ भन्ने कुरा यसबाट पनि स्पष्ट हुन्छ । यसरी राजा र प्रजाको सहभागितामा सञ्चालन हुँदै आएको यसजात्रामा राजा वा राज्यसत्ताको अत्यन्त गाढा सम्बन्ध भएको कुरा प्रमाणित हुन्छ ।

संस्कृतिविद् स्व. सत्यनारायण प्रजापतिज्यूका अनुसार चैत्र मसान्तका दिन लिंगो उभ्याउनु तन्त्रयानको दृष्टिकोणले अत्यन्तै मह□वपूर्ण हुने भएकोले अघि–अघि चैत्र मसान्तको दिन (लिंगो उभ्याउने दिन) राणा प्रधानमन्त्री र मेष संक्रान्तिका दिन (लिंगो ढाल्ने दिन) श्री ५ स्वयम् बिस्केट जात्रा हेर्न भक्तपुर सवारी हुने गर्दथ्यो । यसरी सरकार प्रमुख र राज्य प्रमुख सवारी हुने भएपछि जात्राका विधिविधानहरू चाँडै सम्पन्न गर्न स्थानीय अधिकारीहरूले निर्देशन दिने गर्दथे ।[२९] फलस्वरूप निर्धारित समयभित्रै जात्राका सबै विधिविधानहरू सम्पन्न भइसक्थे । जात्रा सम्पन्न नभएसम्म जात्रास्थलबाट कसैलाई कतै जान दिइँदैनथ्यो । जात्रास्थल वरिपरि सिपाहीहरू घेरा दिएर बस्थे । कसैलाई शौच लाग्यो वा बाहिर जानु पऱ्यो भने आफुले लगाएको टोपी चाहिं त्यहीं राखेर जानुपर्थ्यो । तर यस्तो बन्देज जात्रासँग सम्बन्धित गुठीका गुठीयारहरूलाई थिएन । उनीहरू भित्र बाहिर गर्न स्वतन्त्र हुन्थे ।[३०]

---

[२७] मल्लकालमा विशेष गरेर जगत प्रकाश मल्ल, जितामित्र मल्ल अनि शाहकालमा रणबहादुर शाह, श्री ५ त्रिभुवन र श्री ५ वीरेन्द्रले पुरानो ध्वजालाई फेरेर नयाँ ध्वजा चढाएका देखिन्छन् । जितामित्र मल्लले आकाश भैरवलाई चढाए भनिएको एक जोडी ध्वजा हाल तलेजु स्थानको भण्डारमा र अन्य जीर्ण ध्वजाहरू भैरवनाथ मन्दिरको माथिल्लो तल्लामा राखिएका छन् । – भैरवनाथ गुठीका नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारी ।

[२८] प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाको नाम उद्धृत भएको वीर ध्वजा वा विश्वध्वजा अभिलेखको पूर्ण अंश परिशिष्ट नं.ज चित्र संख्या ४३,४४मा दिइएको छ ।

[२९] प्रजापति, पा.टि.नं. २५, पृ. ३५ ।

[३०] मानन्धर गुठीका नाइके वर्ष ७६ का पद्मबहादुर मानन्धरबाट मिति २०६७/४/४ गते प्राप्त जानकारी ।

बिस्केट जात्रा समयमा नै सम्पन्न नहोला, जात्रामा जनसहभागिता नजुट्ला भन्ने सोचेर स्थानीय प्रशासनले त्यसबेला जात्रा सुरु हुनु भन्दा ५, ७ दिन अघिबाटै भक्तपुरका स्थानीय बासिन्दाका घर–घरमा आएर जात्रामा सक्रिय रूपमा सहभागी हुनको निम्ति टिकट दिन ल्याउने चलन पनि प्रचलित थियो ।[३१] यदि जात्राको बेला कसैले कुनै किसिमको निष्कृयता देखायो भने वा जात्राप्रति बेवास्ता वा बेखवर भयो भने त्यसले जात्राका प्रमुख देवदेवीको अपमान गरेको ठानेर त्यसलाई धर्म र परम्पराको विरोधी, नास्तिक आदिको संज्ञा दिइन्थ्यो । यो भन्दा पनि मह□वपूर्ण कुरा के थियो भने त्यसबेलाको कठोर राज्य प्रशासनको आदेश विपरीत जाने हिम्मत कसैको पनि हुँदैनथ्यो । यसरी जनसहभागिता र सहयोग अनि राज्य संयन्त्रको उचित रेखदेखमा यो जात्रा सम्पन्न हुँदै आएको छ ।

यदि स्थानीय जनसहयोग र सहभागिताबाट पनि विश्वध्वज लिंगो उभ्याउन सकिएन भने (विशेष गरेर लिंगोको आकार ठूलो भएको अवस्थामा) त्यस परिस्थितिमा स्थानीय प्रशासनद्वारा सरकारी सेनाको सहयोगका लागि अनुरोध गरिन्थ्यो । तत्पश्चात भक्तपुर सैनिक ब्यारेकबाट सरकारी सेनाको टोली जात्रास्थल गएर लिंगो उभ्याउने कार्यमा स्थानीय जनतालाई साथ र सहयोग पुऱ्याउने गरेको इतिहास पनि पाइन्छ । यो सिलसिला पंचायतकालको पछिल्लो समयसम्म चलेको थियो तर वि.सं. २०४६ सालको राजनैतिक परिवर्तन पश्चात् भने यस जात्राको लागि नेपाली सेनाको सहयोग लिइएको देखिंदैन ।[३२]

यसै सन्दर्भमा अर्को कुरा यहाँनेर के उल्लेख गर्नु प्रासंगिक देखिन्छ भने बिस्केट जात्रा संचालनका लागि आवश्यक पर्ने सल्लाको रुख, अन्य काठपात, डोरी, नीलो जीन कपडा, ध्वजापताका, पूजासामग्री लगायत पशु चौपाया आदि सम्पूर्ण वस्तुहरूको चाँजोपाँजो सरकारी निकायबाट हुँदै आइरहेको छ । यस सम्बन्धी सम्पूर्ण कार्यको रेखदेख साविकमा छेभडेल अड्डा मार्फत हुने गर्दथ्यो । तर वि.सं. २०२१ सालमा गुठी संस्थान स्थापना भएपछि यस जात्रामा भएको सम्पूर्ण खर्चको सोधभर्ना श्री ५ को सरकारबाट दिने गरी गुठी संस्थानले आवश्यक खर्च गर्दै आएको छ । तर केही वर्ष अघिसम्म नेपाल सरकारबाट यसरी भएको खर्चको सोधभर्ना दिएको भएपनि मुलुकमा गणतन्त्र स्थापना भएपछि भने हाल पूर्ण रूपमा रोक्का गरिएको छ । तर पुर्खाको कीर्ति, संस्कृतिको धरोहर, धर्म र पुण्यको कुरा भएकोले यस जात्रालाई लोप हुन नदिई संरक्षण र सम्बर्द्धन गर्ने दायित्व बोकेको

---

[३१] *ऐजन* ।

[३२] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

आधिकारिक निकाय भनेको एक मात्र गुठी संस्थान हो । यसैकारण गुठी संस्थानले वार्षिक रूपमा विनियोजित गर्ने रकम नै हाल यस जात्रा सञ्चालनको मुख्य आधार स्रोत रहेको छ । यसै अनुरूप वि.सं. २०६५ सालको बिस्केट जात्राको लागि ८ लाख, २०६६ सालको लागि ८ लाख ५० हजार र २०६७ सालको बिस्केट जात्राको लागि १० लाख रूपैंया खर्च भएको जानकारी गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख अच्युतानन्द पोखरेलले गराउनु भएको छ ।[33]

यसप्रकार प्राचीनकालदेखि हालसम्म पनि भक्तपुरको बिस्केट जात्रा स्थानीय जनसहयोग र सहभागिताबाट चल्दै आएको जात्रा भएपनि त्यसमा राजा वा राज्यसत्ताको पनि उतिकै मह□वपूर्ण भूमिका रहेको तथ्य माथि उल्लेखित दृष्टान्तहरूबाट स्पष्ट हुन आउँछ । वास्तवमा राज्य प्रशासनकै नियन्त्रण, निगरानी र रेखदेखमा यो जात्रा चलि आएको छ ।

## ७.३ सामुहिक जिम्मेवारी र सहभागिता

बिस्केट जात्राको सम्बन्धमा सामुहिक जिम्मेवारीको बाँडफाँड र सहभागिता लिने काम एउटा मह□वपूर्ण सामाजिक पक्ष हो । समाजमा बस्ने हरेक व्यक्ति, चाहे त्यो राजा होस् वा प्रजा अथवा ब्राम्हण होस् वा शुद्र सबैले आ–आफ्नो मर्यादा र हैसियत अनुसार आफूलाई ठेकिएको (सुम्पिएको) काम परम्परागत रूपमा गर्दै आइरहेको पाइन्छ, जुन मह□वपूर्ण देखिन्छ । यस्तो सामुहिक जिम्मेवारी र सामाजिक सहभागिता बिना बिस्केट पर्वका अवसरमा हुने रथयात्रा, खटजात्रा, लिंगो ठड्याउने जात्रा, पूजापाठ, भजनकीर्तन, नाचगान, भोजभतेर जस्ता विविध क्रियाकलापहरू सम्पन्न गर्नु संभव पनि छैन । लोककल्याण, धर्म र पुण्यको प्राप्ति, मृत्युपश्चात् स्वर्ग पुग्ने जस्ता आध्यात्मिक सोच अनि सबैको मनोरन्जन, संस्कृतिको जगेर्ना, टोल, छिमेक, आफन्त र साथीभाइहरूबीचको सहबन्धन आदि कारणहरूले गर्दा यस समाजका हरेक वर्ग यस अवसरमा आ–आफ्नो क्षेत्रबाट गर्नुपर्ने परम्परागत जिम्मेवारी आजसम्म पनि निरन्तर रूपमा पुरा गर्न अग्रसर हुँदै आइरहेका छन् ।

बिस्केट जात्राका प्रमुख देवीदेवता भनेका विश्वनाथ भैरव, तिनको शक्ति भैरवी वा भद्रकाली, बाहन बेताल आदि हुन् । यसैकारण यो जात्रा पनि तीनै देवीदेवताको सम्मानमा तिनकै निवासस्थान वा देवगृह वरपर हुने भएकोले यो जात्रा मूल रूपमा भक्तपुरको टौमढी चोक, गाःहिटी, लय्को, खलाँ, भेलुखेल (ल्योसींखेल) त्यसपछि लाकोलाछें, बोलाछें आदि

[33] गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७/७/१८ गते प्राप्त जानकारीको आधारमा ।

स्थानहरूमा हुने गर्दछ । यस जात्रामा प्रत्यक्ष र सक्रिय सहभागिता अनि जिम्मेवारी पनि त्यसै स्थानका बासिन्दाहरूको अधिक रहेको देखिन आउँछ ।[३४] तर यहाँनेर एउटा कुरा के बिर्सनु हुँदैन भने मुख्य जात्रास्थल भेलुखेलमा हरेक वर्ष चैत्र मसान्तको दिन साँझपख विश्वध्वज लिंगो उभिने बितिकै त्यस खुसीयालीमा त्यसैरात नगरभरिका देवीदेवताहरू विशेषगरेर विभिन्न टोलका स्थान गणेशहरू, अष्टमातृका लगायत अन्य देवदेवीका खटजात्राहरू शुभारम्भ हुने गर्छन् । यी स्थानीय जात्राको सिलसिला त्यसपछिका दिनहरूमा पनि दिनदिनै जारी रहन्छ । अत: यो जात्रा केवल बिस्केट जात्रा हुने मूलस्थानका बासिन्दाहरूसँग मात्र सम्बन्धित छैन । समग्र भक्तपुर नगरभरिकै बासिन्दाहरूसँग यो जात्रा कुनै न कुनै रूपमा सम्बन्धित रहेको थाहा हुन आउँछ ।[३५]

तर त्यसो भएपनि बिस्केट जात्रासँग ठाडो सम्बन्ध र सम्पर्क रहने केही वर्ग र जातजातिहरू पनि छन्, जसको बिस्केट जात्रासँग परापूर्वकालदेखि आजसम्म पनि निरन्तर रूपमा प्रत्यक्ष सम्बन्ध रहँदै आएको छ । त्यस्ता जातजातिहरूमा विशेषगरेर भैल:नायो (भैरवनाथ गुठीका नाइके) हुन पाउने लयको, लाकोलाछें[३६] टोलका ५० घरका बहादुर पंचहरू – चवाल, सुवाल, छुकाङ, घेमोसु मुख्य छन् ।[३७]

---

[३४] बोलाछें टोल बाहेक माथि उल्लिखित सबै टोल इलाकाहरू भक्तपुर नगर पालिकाको वडा नं. ११ मा पर्दछ । सम्झिनुपर्ने कुरा के छ भने यो ११ वडा नगरको मध्यभागमा पर्ने वडा हो । त्यसको पनि केन्द्रविन्दु टौमढी टोल हो, जहाँ बिस्केट जात्राका प्रमुख देवता भैरवनाथको देवगृह अवस्थित छ । यसैकारण बिस्केटको रथ तान्ने जात्राको आदि र अन्त्य यहींबाट हुने गर्दछ । साथै लिंगो उभ्याउने र ढाल्ने जात्रा सम्पन्न गरिने स्थल ल्योसिंखेल पनि यसै वडामा पर्दछ । यस वडामा ब्राम्हण देखि शुद्रसम्मका जातिहरू बसोबास गर्दछन् । धौभडेल, हाडा, प्रधान, मानन्धर, प्रधानाङ्ग, धौवन्जार आदि मध्यम वर्ग, ज्यापू किसानहरू अनि त्यस्तै रंजितकार, साही, नापित, दर्शनधारी, पोडे जस्ता तल्लो वर्गका जातिहरूको यहाँ बसोबास पाइन्छ । – "भक्तपुर नगर वडा नं. ११ परिचय", *भक्तपुर*, वर्ष २०, अंक ६, (२०५९ वैशाख), पृ. १ ।

[३५] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[३६] बिस्केट पर्वका बेला विशेष गरेर स्याको त्याकोका दिन लाकोफेतु पूजाको क्रममा भैरवनाथलाई बलि चढाएको राँगाको मासुको चोक्ता बाँडिने स्थान भएकोले नेवारी भाषामा यस टोललाई लाकोलाछें भनिएको हो, जहाँ भैरवनाथको विशेष देवगृह अवस्थित छ । – भैरव नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारीको आधारमा ।

[३७] (क) हरेक वर्ष लयको, लाकोलाछें टोलका बासिन्दाले अपूर्व बहादुरीका साथ जनसहयोग जुटाएर बिस्केट जात्रा सम्पन्न गर्दै आएको हुनाले यहाँका स्थानीय बासिन्दालाई बहादुर पंच भन्ने गरिएको हो । – प्रजापति, पा.टि.नं. २५, पृ. ३३ ।
(ख) वास्तवमा बिस्केटको दौरानमा विशेष गरेर द्य: क्वहाँ बिज्याइगु जात्रा सम्पन्न भएपछि र लाकोलाछेंको चपाल ( विशेष देवगृह) मा भैरवनाथलाई विराजमान गराएपछि त्यहाँका बासिन्दाको सक्रियता स्वस्फूर्त रूपमा बढ्न थाल्छ। लमोथापन पूजा, महाबली पूजा, आदि पूजा पश्चात एक मुरी दश पाथी चामलको जाँड ठूलो घ्याम्पोमा राखी भात भोज ख्वाउने, स्याको त्याकोका दिन (चैत्र २९ गते) लाकोफेतु साइत पूजा भनेर भैरवनाथलाई बलि चढाएको राँगोको मासु स्थानीय टोलका भैरव नाइके हुन पाउने ५० घर परिवारका पुरुष व्यक्तिलाई ८, ८ टुक्राका दरले बाँड्ने, चैत्र मसान्तको दिन लिंगो उठेपछि महादीप बाली ५० घरका उही रकमीलाई पुन: चार मुरी चामलको भातभोज ख्वाउने आदि परम्पराबाट के कुरा स्पष्ट पार्दछ भने बिस्केटमा भैरवनाथ सम्बन्धी सम्पूर्ण गतिविधिमा प्रत्यक्षत: यहींका बासिन्दाको ज्यादा संलग्नता रहेको देखिन्छ ।

यस्तै रथ तान्ने भैलःहरू[३८] बोलाछें टोलका जेठा गणेश लिंगो गुठीसँग सम्बन्धित ५० घर कुम्हाले (प्रजापति) हरू,[३९] नायखीं बाजा बजाउने कुम्हाले टोलका १५ घर कसाई (खड्गी, शाही, नाय) हरू,[४०] मुवाली बाजा बजाउने कुस्ले (दर्शनधारी, कपाली, जुगी वा जोगी) हरू,[४१] जात्रास्थल सफासुग्घर गरी आवश्यक प्रबन्ध मिलाउने भेलुखेलका पोडे (द्यःला) हरू,[४२] भैरवनाथ मन्दिरका पुजारी भैलः आचाजु (कर्माचार्य) हरू,[४३] नौबाजा दाफाका

---

[३८] भैरवनाथलाई नेवारीमा भैलःद्यः भन्ने गरिन्छ अर्थात् भैलः शब्द भैरवको अपभ्रंश शब्द हो । भक्तपुरको नेवार सामाजिक संगठनमा खेती किसानी गर्ने एकथरी ज्यापूलाई पनि भैलः भन्ने गरिएको पाइन्छ । यी भैलः जातिहरूको मुख्य दायित्व वा जिम्मेवारी भनेको वर्षको एकपटक बिस्केटका अवसरमा भैरवनाथको रथलाई तानेर निर्दिष्ट स्थानमा पुऱ्याउनु हो । – मिलन रत्न शाक्य, *दि कल्ट अफ भैरव इन नेपाल,* न्यू दिल्ली : रूपाको, ई.सं. २००८, पृ. १५८ ।

[३९] (क) परम्परागत कामको आधारमा यी कुम्हालेहरू हाकुज्या (कालो माटोको काम गर्ने) र ह्याउँज्या (रातो माटोको काम गर्ने) विशेषणले युक्त छन् । – गोपाल सिंह नेपाली, *दि नेवार्स,* बम्बई : युनाइटेड एशिया पब्लिकेसन्स, रिप्रिन्ट, ई.सं. १९८८, पृ. १६७ ।

(ख) यस कुम्हाले टोल (तालाक्व टोल) मा पनि बिस्केटको बेला लिंगो उभ्याइन्छ । यस लिंगोलाई जेठा गणेश लिंगो भनिन्छ । यस लिंगो जात्राका प्रमुख हर्ताकर्ता भनेका स्थानीय कुम्हाले (प्रजापति) हरू नै हुन् । यस सम्बन्धी उनीहरूका गुठी पनि छन्, जसलाई जेठा गणेश लिंगो जात्रा गुठी भन्ने गरिन्छ । जेठा गणेश कुम्हाले टोलका प्रसिद्ध देवता हुन् । यी गणेशलाई कुम्हाले (प्रजापति) हरूले सीपका देवता अर्थात् विश्वकर्माको अतिरिक्त कुल देवताको रूपमा समेत ग्रहण गरेको पाइन्छ ।–जीत बहादुर मानन्धर, *श्री गणेशायनम,* काठमाडौं: श्रीमती तारादेवी मानन्धर, वि.सं.२०५१, पृ. १४ ।

(ग) भक्तपुर तालाक्व टोलका जेठा गणेशको सम्बन्धमा एउटा रोचक एवं रसिक कथन के छ भने वर्षको एकपटक बिस्केट जात्राको बखत त्यस भेगका रमणीहरू गणेशलाई आफ्ना प्रियतमको रूपमा ग्रहण गर्न लालायित भई पूजा सामानमा समावेश गरिने धौपतु (दहीका ससाना भाँडो) मा मोहनी गरी आ–आफ्ना घरमा तान्ने प्रयास गर्छन् । गणेश पनि वशीकरणले गर्दा लुखुर लुखुर आउँछन् भन्ने लोकधारणा अनुरूप त्यस भेगका घर आँगन सबै लिपपोत गरी रातभर घरमा ढोकासमेत खुल्ला राखी छाड्छन् । – *ऐजन.,* पृ. १५ ।

[४०] (क) दुनियाँको मुर्दा घाट लैजाँदा बाजा बजाउने अनि राँगो काट्ने र मासु बेच्ने कार्य कसाई जातिको प्रमुख परम्परागत पेशा हो । – लम्साल, पा.टि.नं. १२, पृ.४६ ।

(ख) बिस्केट जात्राका विविध विधि विधान सम्पन्न गर्दा यस जातिले नायखिं बाजा बजाउने गर्दछन् । जस्तो – भाजंखचा जात्रा, म्ये कपः जात्रा आदिमा कसाई जातिले अद्यापि यो बाजा बजाउँदै आएका छन् ।

[४१] बिस्केटको बेला विशेष गरेर राजकीय रूपमा मान्य खड्ग नगर भित्र्याउँदा, लाय्कू दरबारबाट जात्रास्थलमा यो खड्ग ल्याउँदा खड्ग अघि–अघि मुहाली बाजा बजाउने कुस्लेहरूको समूह रहेको हुन्छ । यसबाट यो बाजा पर्व वा जात्रा आउन लागेको संकेत स्वरूप बजाउने हो भन्ने बुझिन्छ । हेमिल्टनले पनि कुस्लेलाई बाजा बजाउने जातिको रूपमा वर्णन गरेका छन् । – एफ.बी. हेमिल्टन, *एन एकाउन्ट अफ दि किङ्डम अफ नेपाल,* न्यू दिल्ली : एशियन एजुकेशनल सर्भिसेज, रिप्रिन्ट, ई.सं. १९९०, पृ. ३७ ।

[४२] बिस्केट जात्रामा पोडे जातिले पनि मह□वपूर्ण भूमिका खेल्दै आएको पाइन्छ । विशेष गरेर चैत्र मसान्तका दिन भद्रकाली पीठमा गंगा पूजा सम्पन्न भएपछि म्ये कपः जात्रा गर्दै टौमढी टोल पुऱ्याएर फर्केर आएपछि लिंगो घरबाट जात्राका लागि लिंगो बाहिर ल्याएर राखिदिने, काँलासी (कैंची काठ) मिलाई दिने, लिंगो उभ्याउन सहयोग गर्ने आदि कार्य गर्दछन् ।

[४३] (क) शैव र शाक्त धर्मबाट प्रभावित मल्ल राजाहरूकै पालादेखि भक्तपुरमा तान्त्रिक विधिबाट पूजाआजा गरिनुपर्ने प्रख्यात देवीदेवताका निमित्त पूजारीको रूपमा आचाजु (कर्माचार्य) को व्यवस्था गरिएको पाइन्छ । यो आचाजु शब्द संस्कृतको आचार्य शब्दको अपभ्रंश हो, जसको अर्थ आध्यात्मिक गुरु भन्ने हुन्छ । – लेभी, पा.टि.नं.६, पृ. ३५६ ।

(ख) नेवारहरूको सामाजिक संस्कार वा धार्मिक कर्मकाण्ड गर्दा तीनथरीका पुरोहित वा पुजारीको आवश्यकता पर्दछ, जसमध्ये एकथरी आचाजु पनि हो । विशेष गरी तान्त्रिक विधिबाट पशु बलि दिएर गरिने पूजामा आचाजुको भूमिका मह□वपूर्ण हुन्छ । यस्ता पुजारी आचाजुहरू दीक्षाधारी हुन्छन्, जसले विद्यापीठ आगमबाट दीक्षा लिएका हुन्छन् । भक्तपुरमा आचाजुहरू दुईथरीका पाइन्छन् । एक पाँचथरे आचाजु र अर्को ज्यापू आचाजु । –*ऐजन,* पृ. ३५६ ।

(ग) भक्तपुरको भैरवनाथ मन्दिर, तलेजु मन्दिर आदिमा पाँचथरे आचाजु पुजारी हुने गर्छन्, तर नवदुर्गा देवगृह लगायत अष्टमातृकाका मन्दिरहरूमा ज्यापू आचाजु पुजारी हुने गर्छन् । भैरवनाथ मन्दिरका आचाजु गणेश कर्माचार्य (वडा नं. १३ कोलाछें निवासी) पाँचथरे आचाजु हुन् । तर भद्रकाली मन्दिरका आचाजु पुजारी खिछेंका ज्यापू आचाजुहरू हुन् । त्यस्तै नवदुर्गाका पुजारी आचाजु जुलाल कर्माचार्य (वडा नं. १७ ईनागाः निवासी) पनि ज्यापु आचाजु हुन् । अर्को कुरा अन्य नेवार शहरहरूमा कर्माचार्यलाई छ थरे नेवार वर्गमा गणना गरिन्छ । – *ऐजन,* पृ. ७२७ ।

पदाधिकारीहरू, कौँहा बाजा बजाउने सायमी (मानन्धर) हरू,[४४] वीरध्वजा (विश्वकेतु) बनाउने विभिन्न जातजातिहरू जस्तो– कुलु जातले छालाको काम गर्ने,[४५] नकर्मीले फलामको,[४६] तमोट (ताम्राकार) ले धातुको,[४७] सूचिकारले सिउने[४८] (सूचिकारहरूमा पनि अनेक भेद पाइन्छ । जस्तो – रातो धागोका लागि ह्याउँसुका सूचिकार, कालो धागोको लागि हाकुसुका सूचिकार, पहेंलोका लागि म्हःसुसुका सूचिकार, सेतो धागोका लागि तुइसुका सूचिकार), त्यस्तै पूँजात (चित्रकार) ले चित्र कोर्ने काम,[४९] तर यहाँनेर छिपा (रंजितकार) ले

---

[४४] (क) वंशावलीमा तेल पेली बेची खानु, बाबियाले खट बाँध्नु भनेर साल्मीको व्यवस्था गरिएको उल्लेख पाइन्छ । – लम्साल, पा.टि.नं.१२, पृ. ४७ ।
(ख) भक्तपुरमा पर्व विशेषका अवसरमा साल्मी (मानन्धर) जातिले काहाँ बाजा बजाउने गर्छन् । त्यसैगरी यहाँका मानन्धरहरूले श्रावण भाद्रतिर पर्ने गुँला पर्वका बेला गुँला बाजा पनि बजाउने गर्छन् । – जगदीश शम्शेर राणा, “भक्तपुर : नेपाल्स कैपिटल अफ म्युजिक एण्ड डान्स”, *कैलाश,* भोलुम १६, नं. १.२ (ई.सं. १९९०), पृ. ७ ।
(ग) यसबाट भक्तपुरका मानन्धरहरू बिस्केट जात्रासँग प्रत्यक्ष रूपमा दुई किसिमले सम्वद्ध छन् भन्ने कुरा थाहा हुन आउँछ । पहिलो– लिंगोजात्रा र रथजात्रामा डोरी बाँध्ने । दोस्रो – काहाँ बाजा बजाउने ।

[४५] (क) वंशावलीमा कुलु जातले छालाका कुपा बनाउनु, छालाका थैली बनाउनु औ बाजा पेटाराका गोलामा छाला लाई दिनु .... भन्ने उल्लेख छ । – लम्साल, पा.टि.नं. १२, पृ. ४५ ।
(ख) कुलु जातिको मुख्य परम्परागत पेशा भनेको बाद्ययन्त्रलाई छालाले मोड्नु भन्ने थाहा हुन्छ । कुन बाजामा कुन पशुको छाला प्रयोग गर्ने, त्यो कुरा तिनलाई राम्रोसँग थाहा हुन्छ । जस्तो – खिं, कोचाखिंमा गाईगोरुको छाला, अजिंगरको छालाले सारङ्गी, एकतारे, गोहीको छालाले खैंजडी, मृगको छालाले डबडब, डमरु आदि जुनसुकै शुभकार्य वा मठमन्दिरमा प्रयोग गर्न चोखो मानिन्छ । बाखाको छालाले बाजा बनाउनु सबैभन्दा राम्रो हुन्छ । यसरी उपत्यकाको बाद्यवादन संस्कृतिलाई जीवन्त बनाउनमा यस जातिको मह□वपूर्ण योगदान छ । – पद्म श्रेष्ठ, *नेवार,* काठमाडौं : स्यस्य समाज, ने.सं. ११२८, पृ. ९०–९१ ।
(ग) परम्परागत कामको प्रकृतिगत आधारमा कुलुलाई एकजना विद्वानले “नेवार सार्की” भनेर उल्लेख गरेका छन् । – नेपाली, पा.टि.नं.३९ (क), पृ. १७७ । छालाकै काम गर्ने जात भएतापनि कुलुले जुता भने सिलाउँदैन । यसैले उसलाई नेवार सार्की भन्न मिल्दैन ।
(घ) बिस्केट जात्रामा कुलु जातिको पनि मह□वपूर्ण योगदान रहँदै आएको छ । विशेष गरेर विश्वध्वज लिंगोमा फहराइने एक जोडी ध्वजाको निर्माण गर्दा छाला सम्बन्धी जम्मै काम कुलु जातिले गर्ने गर्दछन् । कुलुहरूका ३ घर सुकुलढोकामा छ ।

[४६] फलाम गालेर वा कुटेर कुटो, कोदालो, खन्ती, खुकुरी आदि बनाउने पेशामा संलग्न नेवार समाजभित्रका कर्मी (शिल्पी) लाई नकर्मी वा कौ भन्ने गरिन्छ, तर यी नकर्मीहरू खस समाजभित्रका विश्वकर्मा नश्ल भने होइनन् । विश्वध्वजा निर्माणमा फलाम सम्बन्धी काम यिनै स्थानीय नकर्मीहरूबाट हुँदै आएकोले बिस्केट जात्रामा यस जातिको पनि योगदान रहेको स्पष्ट हुन्छ । भक्तपुरमा नकर्मीहरूको मुख्य बसोबास दतात्रय क्षेत्र रहेको छ ।

[४७] तमोट अर्थात् ताम्राकारले तावा कांसादि धातुको भाँडा बनाउनु, सुनचाँदीको जलप सार्नु भन्ने उल्लेख वंशावलीमा गरिएको पाइन्छ । – लम्साल, पा.टि.नं. १२, पृ. ४८ । बिस्केट जात्रामा फहराइने एक जोडी ध्वजा (विश्वकेतु) मा धातु सम्बन्धी जति काम हुन्छ, ती सबै यिनै तमोटहरूले गर्दछन् । भक्तपुरमा तमोटहरू ज्यादा गरेर क्वाछें, टिबुक्छें टोलतिर भेटिन्छन् ।

[४८] (क) लुगा सिउनेलाई सूचिकार भन्ने गरिन्छ । नेवार समाजमा सूचिकारको काम यही जातले गर्छ भन्ने छैन, तर पनि नेवार साँस्कृतिक जीवनमा यस सम्बन्धी काम केही निश्चित् जातिले गरि आएका छन् । जस्तै– बिस्केटको विश्वध्वजा निर्माणमा सूचिकारका रूपमा स्थानीय वार्ड नं.११ खलाँका लोहला(किसान)हरू देखा पर्ने गर्छन् ।
(ख) विशाल विश्वध्वजा (एक हातको चौडाइ ३४, ३५ हातको लम्बाइ अनि १ इञ्चको मोटाइ भएको) सिलाएर तयार पार्ने कार्य एउटै व्यक्ति वा परिवारबाट गराउनु संभव देखिदैंन । यसर्थ यसको सिलाई सम्बन्धी कार्य धागोको रंगको आधारमा वर्गीकरण गरिएको हो । जस्तो – कालो धागोले सिउने, रातो धागोले सिउने, सेतो धागोले सिउने आदि वेग्लावेग्लै सूचिकारहरूको समूह यस बेला सक्रिय हुन्छन् ।

[४९] पौभा चित्र लेख्ने, देवी देवताका मुखुण्डो बनाउने कार्य पूं (चित्रकार) जातको परम्परागत पेशा हो । उपत्यकामा नेवार संस्कृतिमा आधारित जति पनि बिहार, चैत्य मठमन्दिरका देवीदेवताहरू छन् वा जात्रा पर्व हुँदा अन्तिममा देवदेवीको आँखा खोल्ने पवित्र लेखन चित्रकारबाटै हुनुपर्ने वा गरिने परम्परा पाइन्छ । बिस्केट जात्रामा पनि भैरवका रथलाई रंगरोगनले सजाउने, पांग्रामा भैरव, महादेव, नृत्यनाथको प्रतीक त्रिनेत्रको चित्र कोर्ने, अनि विश्वध्वजा निर्माण गर्दा अष्टमङ्गल सूचक चिन्हहरू (श्रीवत्स, कमल, कलश, चन्द्र सूर्य अंकित जोडी ध्वजा, चमर, माछा, छाता, दाहिना शंख) लगायत शिवशक्तिको प्रतीक षट्कोण, त्रिशूल र अन्य शुभ चिन्हहरूको चित्र कोर्ने काम यिनै चित्रकारहरूबाट हुने गर्दछ । भक्तपुरमा यो जाति विशेष गरेर टौमढी, दतात्रय, तचपाल टोलतिर भेटिन्छन् । – प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारी ।

पनि चित्र कोर्ने काम गर्दथ्यो भन्ने तथ्य वि.सं. १९६० सालतिर स्वर्गीय रत्नमान जोशीको नेतृत्वमा बनाएको ध्वजामा राम्रो चित्र लेखिदिए बापत गोलमढी टोल निवासी स्वर्गीय ललितमान रंजितकारलाई राणा सरकारबाट सुनको एक शिरबन्दी र एक जोर लुगा पुरस्कार स्वरूप प्रदान गरिएको थियो र त्यसपछिको ध्वजामा चित्र लेखिदिने चित्रकार भैरव चोकका स्वर्गीय विष्णु चित्रकारका पिता हुनुहुन्थ्यो ।[५०] यसै गरेर भैरव र भद्रकालीको रथ निर्माण सम्बन्धी काठको कार्य सिकर्मी (शिल्पकार) जातिले गर्दछन् । यसमा विशेष गरेर भक्तपुर नासमना मंगलाछें टोलका तुल्सीभक्त शिल्पकार र उनका सन्तानहरू यस कार्यमा संलग्न छन् ।[५१] जात्राको बेला रथलाई डोऱ्याउन हप्पा (निर्देशन) दिने माहाँहरू हाल भक्तपुर वंशगोपालका चगुठीहरू छन् ।[५२] त्यस्तै नकिंजु अजिमा (भद्रकाली) गुठीका गुठीयारहरू, यसमा विशेष गरेर लय्को लिवी चोकका लिविहरू, जथालीहरू, टन्जुहरू छन् । हाल टन्जुहरू गुठीबाट हटिसकेका छन् । तिनले बिस्केटका अवसरमा भद्रकालीको विधिपूर्वक रथयात्रा निकाल्ने, लिवी चोकको विशेष देवगृहमा देवीलाई विराजमान गराउने, चैत्र मसान्तका दिन पुनः देवीको रथयात्रा निकाली मुख्य जात्रास्थल लाने, पीठमा विराजमान गराउने, त्यसैदिन भद्रकालीको पीठ भेलुखेलमा राँगो बलि दिई गंगापूजा गर्ने, म्ये छुँय कप जात्रा सञ्चालन गर्ने, जात्रामा सहभागी पोडेहरूलाई भोज ख्वाउने, त्यसको भोलिपल्ट मेष संक्रान्तिका दिन बिहान सबेरैदेखि गुठीको तर्फबाट गर्नुपर्ने पूजाविधानहरू आचाजु (पुजारी) द्वारा सम्पन्न गराउने, साँझपख देवीलाई पुनः रथमा सवार गराई लिंगो जात्राको समापन पश्चात् रथलाई भैरवनाथको रथको पछि–पछि तानेर गाःहिटीमा ल्याई तीनपटकसम्म जुधाउने, तत्पश्चात देवीलाई यथास्थानमा फर्काउने कार्य भद्रकालीगुठीका तर्फबाट गुठीयारहरूले गर्दै आएका छन् ।[५३] साथै बिस्केटकैक्रममा वैशाख ४ गते हुने "द्यः सगं वियेगु" (देवतालाई सगुन चढाउने) सांस्कृतिक पर्वको लागि त्यसको अघिल्लो दिनको

---

[५०] प्रजापति, पा.टि.नं.२५, पृ. ४० ।

[५१] भैरवनाथ गुठीका नाइके मोती बहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारी ।

[५२] (क) बिस्केट जात्रामा भैरवनाथको रथमा बसेर रथ सञ्चालनका निम्ति निर्देशन दिने यी माहाँहरू चगुठी र मुगुठीहरू हुन् । भक्तपुरमा यी दुई थर मध्यम वर्गीय ज्यापू समाज भित्र पर्ने थर हुन् । यो माहाँ शब्द पुरानो नेवारी शब्द महाथको अपभ्रंश भइ आएको शब्द हो । महाथको अर्थ हुन्छ – सैन्य कमाण्डर, जुन मल्लकालमा निक्कै मह□वपूर्ण सैन्य पद मानिन्थ्यो । – ठाकुरलाल मानन्धर, *अ ब्रिफ नेवारी इंगलिस डिक्सनरी* (अप्रकाशित ग्रन्थ), काठमाडौँ : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय. ई.सं. १९७६, पृ. ४४४ ।
(ख) गोपालराज वंशावलीका अनेक पत्रहरूमा महाथको उल्लेख हुन आएको छ । – धनवज्र वज्राचार्य र के.पी.मल्ल, *दि गोपालराजवंशावली*, काठमाडौँः नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, पृ. ३७ (ख) ४ पत्र र ५७ (क) ५ पत्र ।
(ग) वर्तमान समयमा बिस्केट जात्राको बेला भैरवनाथको रथमा सवार भइ हप्पा दिने (होस्से भन्ने) माहाँहरू भक्तपुर तेखाचो टोलका चगुठीहरू हुन् ।

[५३] भद्रकाली गुठीका गुठीयार वा नाइकेहरू भक्तपुर नगरपालिका वडा नं. ११ को लय्को र लिविचोकका लिवि र जधारी (जटाधारी ?) हुन् । यी दुई थर पनि भक्तपुरको मध्यमवर्गीय ज्यापू समाजभित्र पर्ने थर हुन् ।

साँझपख देवीलाई विधिपूर्वक पूजा गरी देवगृहबाट रथमा राखी टौमढीको उत्तरपश्चिम कुना चण्डिका भुजिंकोखाको सत्तलमा विराजमान गराउने अनि भोलिपल्ट नगरवासीहरूको तर्फबाट चढाउन ल्याउने सगुन ग्रहण गरेपछि देवीलाई पुनः देवगृह ल्याउने र अन्त्यमा वैशाख ५ गते "द्यः थाहाँ बिज्याइगु" (देवता यथास्थानमा फर्किने) जात्रासँगै उक्त वर्षको बिस्केट जात्रा पूर्ण रूपले अन्त्य भएको मानिन्छ । यसैक्रममा देवी भद्रकालीलाई पनि मन्दिरको मूलस्थानमा विधिपूर्वक फर्काइन्छ । यसरी बिस्केटका अवसरमा जम्मा १६ दिन मात्र देवी भद्रकाली (नकिंजु अजिमा) बाहिर निस्किन्छिन् । बाँकी दिनहरूमा अर्थात् वर्षदिनसम्म देवी मन्दिरकै गुप्त स्थानमा रहन्छिन्, त्यहाँ पुजारी बाहेक अरु कोही पस्न पाउँदैनन् ।[५४]

यसरी बिस्केट जात्राको अवसरमा देवी भद्रकाली (नकिंजु अजिमा) को जात्रा, पूजा र अन्य विधिविधानहरूको सम्पूर्ण प्रबन्ध र व्यवस्था भद्रकाली गुठीका गुठीयारहरूले गर्दछन् । यसदेखि बाहेक अघिपछि गर्नुपर्ने नित्यपूजा र पर्व विशेषमा गर्ने पर्वपूजाहरूको चाँजोपाँजो मिलाउने कार्य पनि तिनै गुठीयारहरूले गर्दछन् । आचाजु पुजारीले आएर पूजा गर्ने मात्र हो ।[५५] भद्रकाली गुठीको आफ्नै निजी आयस्ताको रूपमा गुठी जग्गा अझै पनि छ । यसैकारण गुठी संस्थान भक्तपुरले यस गुठीलाई खर्च छुट्याउनु परेको छैन । त्यही जग्गाको आयस्ताले जात्रा र पर्वपूजाहरू चल्दै आएको कुरा भद्रकाली गुठीका मूलनाइके माइला जधारी भन्नु हुन्छ ।[५६]

रथजात्राको बेला जंगममठ भित्रबाट दही चिउरा छरेर पूजा गर्ने जंगमहरू,[५७] भैरवनाथ रथको बेतासीं (रथको अघिल्तिर बांगिएर माथि उठेको हिटीमंग जस्तो काठको शीर्ष भाग) मा रहने बेतालको मूर्तिलाई सिंगार्ने छ थरे धौभडेल जातिहरू,[५८] नवदुर्गाका गठु

---

[५४] वर्तमान भद्रकाली गुठीका मूलनाइके माइला जधारी (वर्ष ७१) बाट मिति २०६७/७/२७ गते प्राप्त जानकारी ।

[५५] भद्रकाली देवगृह (इच्छुटोल) मा देवीको नित्य र पर्व पूजा आचाजु (कर्माचार्य) हरूबाट हुँदै आएको छ । यी आचाजुहरू खिछें टोलका हुन्, तर यी आचाजु ज्यापू आचाजु हुन् ।

[५६] भद्रकाली गुठीका मूलनाइके माइला जधारीबाट प्राप्त जानकारी ।

[५७] जात्रा सुरु भए देखि अन्तिमसम्म जंगम मठभित्र वीर शैव सम्प्रदायका एक जना पुजारीले जात्रामा कुनै बिघ्नबाधा उत्पन्न नहोस् भनी साधना गरिरहेका हुन्छन् । जब सयौं, हजारौं जात्रालुले तानेर पनि भैरवको रथलाई हलचल गर्न सक्दैन, तब त्यसबेला त्यस जंगम पुजारीले तान्त्रिक विधिले तयार गरेको दही चिउरा रथतिर छरेर पूजा गरेपछि रथ तान्न सजिलो हुन्छ भन्ने विश्वास पाइन्छ । – भरत जंगम, "भक्तपुरको धार्मिक र सांस्कृतिक विकासमा जंगम जातिको भूमिका", *खोपृङ*, वर्ष ७, अंक ७, (वि.सं.२०५५), पृ. ८१ ।

[५८] (क) धौभडेलहरू छ थरे नेवार हुन् । छ थरेको अर्थ हुन्छ – छ = छ, थरी = भारदार अर्थात् छ थरी भारदार भन्ने अर्थ छथरेले दिन्छ । वास्तवमा मल्लकालीन राजदरबारको भारदारी सभाका भारदारहरूलाई नै छथरे भन्ने गरिएको हो । – नेपाली, पा.टि.नं. ३९ (क), पृ. १५५ ।

(वनमाली) हरू,[५९] रहेका छन् । गठुहरूको बारेमा अब यहाँनेर एउटा कुरा के कोट्याउनु पर्ने हुन्छ भने यथार्थमा भक्तपुरको प्रसिद्ध नवदुर्गा गण नाचमा परम्परागत रूपले सहभागी हुँदै आएका गठु वा गाठाहरूको यस जात्रासँग प्रत्यक्षतः कुनै सम्बन्ध छैन, तर पनि विश्वनाथ भैरवको लिंगो जात्रामा जुन आठवटा डोरीद्वारा लिंगो उभ्याइएको हुन्छ, ती डोरीलाई अष्टमातृकाको प्रतीक अर्थमा लिने गरिन्छ । यसैकारण जब ती डोरीहरू हावामा हल्लिएर लिंगोमा बेरिन्छन् तब त्यसलाई भैरव र अष्टमातृकाकाबीच समागम भएको प्रतीक अर्थमा मान्नेहरू पनि धेरै छन् । तन्त्रमन्त्रका एकजना जानिफकार कान्छा भारिजुका अनुसार धेरै समय पहिले दोलखामा पनि नवदुर्गा लैजाने प्रचलन थियो । कुनै एक साल दोलखामा नवदुर्गा रहेकै बेला बिस्केट जात्रा पर्न गएछ । त्यो साल लिंगो उभिएन । तलेजुमा खोजीनीति हुँदा एउटा यस्तो चित्र फेला पऱ्यो जसमा अष्टमातृकाले ८ वटा डोरीद्वारा लिंगो उठाइरहेका थिए । तुरुन्तै तन्त्रद्वारा अष्टमातृकालाई भक्तपुरमा तान्यो र लिंगो उठाइयो ।[६०] यस्तो किसिमको जनविश्वास रहेकै कारणले होला अहिले पनि लिंगो उठिसकेपछि नवदुर्गाका गठुहरू घाजिलँ नामक परम्परागत पहिरनमा सजिएर खोलैखोलाको बाटोबाट लिंगोस्थल आएर देवता फिर्ता लिन आउने चलन छ ।[६१] त्यसबेला त्यहाँ लिंगोको नाममा जपतप, होम गर्ने परम्परा अझै पनि छ । वास्तवमा ज्योतिषशास्त्र र तान्त्रिक विधिविधान अनुरूप नै यो जात्रा चल्ने गरेको छ । यसैले नवदुर्गा गणनाचसँग सम्बद्ध गठु (वनमाली) हरू पनि यस जात्रामा सहभागी छन् ।

---

(ख) क्षेत्री शब्दको अपभ्रंशबाट नै छ थरे शब्द उत्पति भएको भन्ने भनाइ पनि छ र क्षेत्री हिन्दु वर्ण व्यवस्थाका ब्राम्हण पछिको उच्च जाति मानिन्छ । – डोरबहादुर विष्ट, *पिपुल अफ नेपाल*, रिप्रिन्ट, काठमाडौँ : रत्न पुस्तक भण्डार, रिप्रिन्ट, ई.सं. १९८८, पृ. २० ।

(ग) भक्तपुरमा धौभडेलहरू विशेष गरेर टौमढी, गा:हिटी टोलतिर ज्यादा भेटिन्छन् । बिस्केट जात्राका प्रमुख देवता भैरवनाथसँग यस जातिको पनि प्रत्यक्ष सम्बन्ध रहेको देखिन्छ । जस्तो – पहिलो दिन "द्यः क्वहाँ बिज्याइगु" जात्राका बेला भैरवनाथको रथको अघिल्तिर रहेको बेतासीं (बांगिएर माथि उठेको काठ) मा भैरवका बाहन बेताललाई मानन्धर जातिले बेतको डोरीले कसेर बाँधी आसिन गराएपछि त्यस बेताल देवतालाई सिंगार पटार गरी विधिपूर्वक पूजापाठ गर्ने काम धौभडेल जातिबाट परम्परागत रूपमा हुँदै आएको छ । यस अतिरिक्त भैरवनाथ मन्दिरमा बत्ती बाल्न तेलको प्रबन्ध पनि धौभडेल गुठीबाट हुँदै आएको छ । मल्लकालमा दहीको रेखदेख गर्ने अधिकारीलाई धरी भंदिल भन्ने गरिएको र धौभडेल त्यसैको अपभ्रंश भएको बुझिन्छ ।– चुन्दा वज्राचार्य (सं), *जितामित्रकालीन धर:पौ*, काठमाडौँ : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं. २०५३, पृ. १६ ।

[५९] (क) गाथा (गठु) हरू भक्तपुरको प्रसिद्ध नवदुर्गा नाचका प्रस्तुतकर्ता हुन् । यिनको मुख्य परम्परागत पेशा वनबाट फूल टिपी बेची खानु हो । – लम्साल, पा.टि.नं. १२, पृ. ४६ ।

(ख) एक जना विद्वानले यिनलाई बगैंचे र फूल आपूर्तिकर्ताको संज्ञा दिएका छन् ।– नेपाली, पा.टि.नं. ३९ (क), पृ. १६९ ।

(ग) यसैकारण यिनीहरू आफ्नो थर वनमाला (माली) लेख्छन् । भक्तपुरमा गाथाहरू माथिल्लोटोल (थने) को गछें, इनाचो, चोरचा, खंचा, क्वाठण्डौं आदि ठाउँहरूमा ज्यादा भेटिन्छन् । – पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरको नवदुर्गा गण*, भक्तपुर : बबिता श्रेष्ठ, वि.सं. २०६०, पृ. ३७ ।

[६०] स्थानीय टौमढी टोल निवासी कान्छा भारिजु (राजभण्डारी) वर्ष ८२ बाट प्राप्त जानकारी ।

[६१] नवदुर्गा देवगृहका आचाजु पुजारी जुलाल कर्माचार्य (वर्ष ६५) बाट मिति २०६७/६/१४ गते प्राप्त जानकारी ।

यस्तै गरेर मुस्याप्वा बाल्ने च्यामखल नाइकेहरू,[६२] लिंगो र रथमा बेत र डोरी बाँध्ने गोलमढी टोल र दतात्रय सकुलानेका मानन्धरहरू,[६३] सर्वसाधारण जात्रालुहरूलाई पानी पिउने माटोको भाँडोको आवश्यक प्रबन्ध मिलाउने प्रजापतिहरू,[६४] अनि सरकारी पदाधिकारीहरू यसमा विशेष गरेर प्रमुख जिल्ला अधिकारी, गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख आदिको यस जात्रासँग प्रत्यक्ष सम्पर्क र सम्बन्ध रहेको हुन्छ । प्रमुख जिल्ला अधिकारीको दायित्व भनेको जात्राको बेला शान्ति सुरक्षा कायम गरी जात्रालाई व्यवस्थित र शान्तिपूर्ण ढंगबाट सम्पन्न गराउनको निम्ति सबैको सहयोग र सद्भाव जुटाउने हो । यसमा एक्लो उनी मात्र नभएर उनको मातहतको सम्पूर्ण जिल्ला प्रशासनकै सामुहिक दायित्व र जिम्मेवारी रहेको हुन्छ । यस अन्तर्गत प्रहरी प्रशासन पनि आउँछ । विगत केही दशकदेखि जात्राको बेला विशेष गरेर “द्यः क्वहाँ बिज्याइगु” र “द्यः थाहाँ बिज्याइगु” जात्रा अर्थात् पहिलो र अन्तिम दिनमा हुने भैरवनाथको रथयात्राको बेला हुँदै आएको ढुंगा हानाहानको हिसांत्मक स्थितिलाई नियन्त्रण गर्न उनी र उनको मातहतको निकायको सामुहिक जिम्मेवारी र दायित्व अझ बढ्न गएको छ । गुठी संस्थान प्रमुखको जिम्मेवारी भनेको जात्राका अवसरमा जात्रासँग सम्बन्धित विधिविधानहरू सम्पन्न गर्दा आवश्यक पर्ने चीजवीज जस्तो– जात्रा गरिने देवदेवीको पूजाका लागि आवश्यक पर्ने पूजा सरदाम, बलिकालागि पशु चौपायाहरूको व्यवस्था, नगद, दक्षिणा, भेटी, लत्ताकपडा, नैवेद्य, धुप बत्ती,

---

[६२] (क) नेवारहरूको जातीय संरचनामा च्याम्हखलः पोडेहरू भन्दा तल र हालाहुलु भन्दा माथि पर्दछन् । – नेपाली, पा.टि.नं. ३९ (क), पृ. १५० ।
(ख) हेमिल्टनकाअनुसार च्याम्हखलःको मुख्य परम्परागत पेशा भनेको छालाको जुत्ता सिउने र छालाको सामग्री तयार गर्ने हो । – हेमिल्टन, पा.टि.नं. ४१, पृ. ३७ ।
(ग) तर त्यसो भएपनि यी च्याम्हखलहरू आफूलाई खस समाजका कामी, दमाइ, सार्की भन्दा माथिको ठान्ने गर्छन् । – नेपाली, पा.टि.नं.३९ (क), पृ. १७७ ।
(घ) यसैले तिनले पकाएको च्याम्हखलले खाँदैनन् । बिस्केट जात्रामा च्यामाखल नाइकेले मुस्यांप्वा बत्ती बाल्ने गर्दछ । च्याम्हाखलहरू क्रमशः पोडे जातिमा समाहित हुन गएकोले भक्तपुरमा च्याम्हाखलः थर लेख्ने एउटै घर परिवारमात्र अस्तित्वमा रहेको बुझिन्छ ।

[६३] (क) परापूर्वकालदेखि तेल पेल्ने काममा दक्ष अर्थात् एक मुरी तोरीको २३ पाथीसम्म तेल निकाल्न सक्ने खुबी भएकै कारणले गर्दा मल्ल राजाहरूले बिस्केट जात्रामा यस जातिलाई भैरवको रथ निर्माण र लिंगो जात्रामा बेत र धागोको डोरी बाँध्ने सम्बन्धी कामको जिम्मेवारी सुम्पेको हो । जस्तो – भैरवको रथ निर्माणको क्रममा काठका अवयवहरूलाई बेतको डोरीले मजबुत ढंगले बाँध्ने, रथको अगाडि पछाडि डोरी बाँध्ने, लिंगो वनमा गएर लिंगो ल्याउने, लिंगोमा मोटो डोरीले बाँधेर लिंगो उभ्याउने आदि कार्यमा यस जातिको मह□वपूर्ण योगदान रहेको छ । – भक्तपुर मानन्धर गुठीका अध्यक्ष पद्म बहादुर मानन्धर (वर्ष ७६) बाट मिति २०६७/४/४ गते प्राप्त जानकारी ।
(ख) जात्राका डोरीहरू सधैंभरि भण्डारमा राखी छोड्दा चिसोले मक्किने संभावना भएकोले वर्षको एकपटक गुलाँ पर्वको बेला तिनै मानन्धरहरूले तलेजुको भण्डारबाट बाहिर ल्याएर लायकू दरबारको अगाडि पट्टिको खुल्ला चोकमा सुकाउने गर्छन् ।

[६४] माटाका भाँडावर्तन बनाएर बेच्नु कुम्हाले जातिको मुख्य परम्परागत पेशा हो । कुम्हालेहरू प्रजापति थर राख्ने गर्छन् । तालाक्व टोलको जेठा गणेश लिंगो जात्रासँग त यी प्रजापतिहरू प्रत्यक्ष रूपमै सम्बद्ध छन् । त्यसदेखि बाहेक अर्को कुरा बिस्केट जात्राका मुख्य दिनहरूमा माटाका भाँडाहरूमा पानी भरेर सर्वसाधारण जात्रालुहरूलाई पानी पिलाउने जस्ता विशुद्ध सेवाभावका काम पनि यस जातिबाट हुँदै आइरहेको छ ।

लगायतका वस्तुहरूको व्यवस्था मिलाई दिने अनि कुनै कुरा नपुग भएमा तत्काल आपूर्तिको प्रबन्ध गरिदिने दायित्व उनको हो । पहिले यो दायित्व छेभडेल अड्डाका प्रमुखको हुन्थ्यो । गुठी संस्थान स्थापना भएपछि यसजात्राको सबै रेखदेख गुठी संस्थानद्वारा हुँदै आएको छ ।[६५] वास्तवमा देवदेवीका नित्य र नैमितिक पूजापाठ, चाडपर्वका बेला तिनको जात्रा गर्ने सारा प्रबन्ध गुठी संस्थानको सामुहिक जिम्मेवारी भित्र पर्ने कुरा हो । किनभने पुर्खाले राखेको कला संस्कृतिको अस्तित्वलाई जीवन्त राख्ने प्रमुख अभिभारा बोकेको आधिकारिक निकाय गुठी संस्थान नै हो ।

अनि जात्राका प्रमुख विधिविधानहरूमा अनिवार्य रूपमा नभई नहुने राजा वा राज्यको संप्रभुशक्तिको प्रतीक राजकीय खड्ग समात्ने, मन्त्रीको प्रतीकको रूपमा तलेजुका पुजारी ब्राम्हणहरू,[६६] जात्राको साइत जुराउने तलेजुका मूलपुजारी जोशी आदिको पनि यसमा प्रमुख भूमिका रहन्छ ।[६७] तलेजु र त्यहाँका पुजारी वर्गको यसजात्रामा परम्परादेखि रहेको भूमिकाबारे अध्ययन गर्दा भक्तपुरको सांस्कृतिक गतिविधिको मूलथलो भनेको यथार्थमा तलेजु मन्दिर हो । तलेजु मल्ल राजाहरूका ईष्टदेवी वा कुलदेवता हुन् ।[६८] यसर्थ केवल बिस्केट मात्र नभएर भक्तपुरमा अन्य जति पनि चाडपर्व जात्रा उत्सवहरू हुने गर्छ, ती सबै तलेजुमा पनि तान्त्रिक विधिपूर्वक सम्पन्न गरी मनाइन्छ । जस्तो – गाईजात्रा, कृष्ण जन्माष्टमी, बडादशैं, तिहार, माघेसंक्रान्ति, शिवरात्री, फागुपूर्णिमा, विश्वजात्रा (बिस्केट) आदि पूजा विधानहरू तलेजुमा पनि गरिन्छ ।[६९] बिस्केट जात्राका अवसरमा तलेजुमा यस सम्बन्धी गरिने पूजाविधानहरूमा संकल्प वाक्यहरू उच्चारण गर्दा “विश्वजात्रा महापावने”

---

[६५] गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७/७/१४ गते प्राप्त जानकारी ।

[६६] भक्तपुर तलेजु मन्दिरका पुजारीका रूपमा रहेका दुई जना राजोपाध्याय ब्राम्हणहरू यस जात्रामा परम्परागत पोशाक (हाजिलँ र गुजिलँ अनि पगरी) मा सजिएर एक जनाले हातमा शाही खड्ग लिइ मल्ल राजाको रूपमा र अर्कोले मंत्रीको रूपमा रथयात्राको बेला रथमा सवार भइ मह□वपूर्ण भूमिका निर्वाह गर्ने गर्छन् ।

[६७] (क) तलेजुका मूल पुजारी दीक्षाधारी जोशी हुने गर्छन् । यिनै जोशीले ज्योतिषीय पद्धति अनुरूप नक्षत्रादि गतिलाई अध्ययन गरेर उचित ठहऱ्याएको शुभ साइतमा बिस्केट जात्रा प्रारम्भ हुने गर्छ । वर्तमान भक्तपुर तलेजुका मूल पुजारी नरेन्द्रप्रसाद जोशी रहेका छन् ।
(ख) जोशी भन्नाले नक्षत्र, तारा, ग्रह आदि आकाशीय प्रकाशपिण्डहरूको साथै तिनीहरूबाट मनुष्य आदि सम्पूर्ण प्राणी समेत यस भूमण्डलमाथि पर्ने प्रभावबारे अध्ययन अन्वेषण तथा अनुसन्धान गर्ने व्यक्ति भन्ने बुझिन्छ । यसबाट जोशी जातिको परम्परागत पेशा भनेको ज्योतिष सम्बन्धी काम भन्ने हुन्छ ।

[६८] (क) यसैकारण कान्तिपुरबाट समेत विशेष पर्वका दिन पूजाभाग भक्तपुर पठाइन्थ्यो । विशेष पर्वका दिन पूजाभाग पठाइ पूजा गरिने भक्तपुरका प्रख्यात देवताहरूमा तलेजु लगायत दुमाजु, बंकुली, मानेश्वरी, भैरव आदि पर्दछन् । – वज्राचार्य, पा.टि.नं. १६(ग), पृ. ७६ ।
(ख) यसबाट कान्तिपुर राजनैतिक दृष्टिले एक स्वतन्त्र राज्य भएर गए पनि सांस्कृतिक दृष्टिले उसको भक्तपुरसँग नजिकको सम्बन्ध थियो भन्ने थाहा हुन्छ ।

[६९] पुरुषोत्तमलोचन श्रेष्ठ, “ऐतिहासिक एवं सांस्कृतिक सन्दर्भमा भक्तपुर तलेजुमा गरिने दशैं पूजा विधानः एक चर्चा”, *रोलम्बा* ,अंक ११, नं. ३ (जुलाई – सेप्टेम्बर १९९१), पृ. १ ।

भनेर गरिन्छ ।[७०] वास्तवमा बिस्केट जात्रा सञ्चालनार्थ नभइ नहुने राजकीय प्रतीकको रूपमा मान्य खड्ग तलेजुका ब्राम्हणहरूले तलेजुमा गर्नुपर्ने पूजाविधानहरू सम्पन्न गरेर विधिपूर्वक जात्रास्थल ल्याइपुऱ्याएपछि नै बिस्केट जात्रा प्रारम्भ हुने गर्दछ । जस्तो– चैत्र मसान्तका दिन अपरान्ह तलेजु मूलचोक सँगैको दुमाजुदेवीकहाँ विश्वध्वजा पूजा सम्पन्न गरेपछि र अर्को दिन अर्थात् मेष संक्रान्तिका दिन इन्द्रायणीको खटजात्रा स्वर्णद्वार सामुन्ने आइपुगेपछि इन्द्रायणीको फूलप्रसाद लिइ दुमाजुदेवीकहाँ पुगेर राजोपाध्याय गुरु पुरोहितहरूले "राजखड्ग"लाई देवीसामु गुह्य तवरले पूजा गरिसकेपछि आफ्नो हातमा लिएर मूलचोकमा आउँछन् । त्यहाँ घटदान, जोगी चक्र (घासापालु) पूजा चलाई दर्शनधारीहरूलाई भोजन प्रदान गरेपछि तलेजुका गुरु पुरोहितहरूको समूह राजकीय खड्गका साथ जात्रास्थलतिर प्रस्थान गर्छन् । त्यसपछि मात्र विश्वध्वज जात्रा विसर्जन कार्य प्रारम्भ गरिन्छ ।[७१] यसबाट बिस्केट जात्रामा तलेजुसँग सम्बद्ध पुजारी वर्ग ब्राम्हण, जोशी र कर्माचार्यहरूको पनि ठूलो भूमिका रहेको पाइन्छ । वास्तवमा तलेजुमा जस्तै बिस्केट जात्राका प्रमुख पूजाविधानहरूमा पनि ब्राम्हण, जोशी, कर्माचार्य तीनै थरीका पुजारीहरूको भूमिका आवश्यक मानिन्छ । तलेजुका मूलपुजारी जोशीले खगोल नक्षत्रादि गतिको आधारमा जुराएको निश्चित् शुभ साइतमा नै यो जात्रा प्रारम्भ हुने गर्छ । त्यसपछि जात्रामा राजाको प्रतीक, मन्त्रीको प्रतीकको रूपमा तलेजुका पुजारी राजोपाध्याय ब्राम्हणहरू परम्परागत हाजिलँ, गुजिलँ नामक पहिरनमा सजिएर राजकीय प्रतीकको रूपमा मान्य खड्ग लिई भैरवनाथको रथमा सवार नभएसम्म रथजात्रा प्रारम्भ हुँदैन ।[७२] रथजात्रा पश्चात् देवतालाई देवगृहमा विराजमान गराएपछि गरिने तान्त्रिक विधिपूर्वक बलि दिई पूजा गर्ने कार्य आचाजु पुजारी ( कर्माचार्य) ले गर्दछन् । यसरी ब्राम्हण, जोशी, कर्माचार्य, हिन्दु नेवार समाजका यी तीनै थरीका पुजारी वर्गको यसजात्रामा मह□वपूर्ण भूमिका रहेको पाइन्छ । नेवार हिन्दुहरूले आफ्ना धार्मिक संस्कार कार्यहरू गर्दा यी उपर्युक्त त्रिवर्ग ब्राम्हण, जोशी, कर्माचार्यलाई क्रमैसँग ब्रम्हा, शिव एवं विष्णुको रूपमा मानेर तिनीहरूद्वारा धार्मिक कार्य सम्पन्न गराउने गरिआएका छन् । यसैले याज्ञिक कार्य होस् वा श्राद्धकार्य होस् सबै मह□वपूर्ण कार्यहरू गर्दा उपर्युक्त तीनै वर्गको उपस्थिति अनिवार्य मानिन्छ । नेपाल सम्वत् ८८३ को "शान्ति स्वस्ति सफूल" नामको हस्तलिखित ग्रन्थमा "जोसि दुज (द्विज) आचातन याय धुनो काज ।" भन्ने

[७०] विनोदराज शर्मा, "भक्तपुरको बिस्केट जात्राः जात्रा एक नाम अनेक", *खोपृङ,* वर्ष १४, अंक १३, (वि.सं. २०६२), पृ. ४४ ।

[७१] पुरुषोत्तमलोचन श्रेष्ठ, "दुमाजु देवी–भक्तपुर", *प्राचीन नेपाल,* संख्या १५६, (असार २०६१), पृ.१७–१८ ।

[७२] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

वाक्य उल्लेख गरिएको छ जसको अर्थ हुन्छ जोशी, ब्राम्हण र आचाजुले तिनीहरूका आफ्ना कार्य सम्पन्न गरेका छन् । यस तथ्यबाट उल्लिखित कुराको पुष्टिमा टेवा मिल्छ । तिनीहरूमध्ये कुनै एकले मात्र सबै कार्य गर्ने गरेमा सामाजिक र धार्मिक कार्यमा एकाधिकार प्रथाको अभ्युदय भइ मनपरी हुने डर उत्पन्न हुन जान्छ । यसैले ब्राम्हण, जोशी एवं कर्माचार्य तीनैको धार्मिक कार्यहरूमा सँगै उपस्थिति अनिवार्य मानेको देखिन्छ । धार्मिक कार्यमा तिनीहरूका अलग अलग भूमिका निर्धारित गरिएका छन् । जस्तो– जोशीले याज्ञिक वेदीको लागि भूमि निर्धारण गरी याज्ञिक वेदी निर्माण गर्ने, रेखाहरू बनाउने आदि कार्यहरू गर्नुको साथै नक्षत्रादि गतिको आधारमा याज्ञिक कार्यको लागि उचित समय तोक्ने कार्य गर्दछ । कर्माचार्यले आवश्यक सामग्री ठीक–ठीक स्थानमा मिलाएर राख्ने कार्य गर्दछ । ब्राम्हणले कर्माचार्य, जोशीको सहयोग लिई याज्ञिक कार्य गर्दछन् ।[७३] तर कतिपय यस्ता सामाजिक, धार्मिक कार्यहरू पनि छन्, जसको सम्पादन कुनै एक थरीले मात्र गर्ने हुन्छ । जस्तो – सत्य नारायण व्रतको पूजापाठ गराउँदा ब्राम्हण एक्लैले गर्दछ, त्यसमा जोशी, कर्माचार्य सम्मिलित हुन आवश्यक छैन ।[७४] यसैगरेर कतिपय सामाजिक, धार्मिक कार्यहरूको सम्पादन कर्माचार्य एक्लैले मात्र पनि गर्दै आएका छन् । जस्तो– नयाँ घर निर्माण गरी बस्न जानु भन्दा पहिले मध्यरातमा त्यस घरभित्र कालो रंगको कागेभेडा बलि दिई यज्ञ गर्ने कार्य कर्माचार्यले गर्दछ ।[७५] त्यस्तै देवदेवीका पीठहरूमा तान्त्रिक पीठपूजा गर्ने कार्य पनि कर्माचार्यले गर्दछ । कतिपय सामाजिक, धार्मिक कार्यहरू कर्माचार्यहरूले जस्तै जोशीहरूले पनि गर्दै आएका छन् । जस्तो – ने.सं. ८५२ को "नामकरणविधि" नामक हस्तलिखित ठ्यासफू ग्रन्थ अनुसार नवजात शिशुको १० या ११ औं दिनमा सम्पन्न गरिने नामकरण संस्कारको कार्य ब्राम्हणद्वारा नगराई जोशीले गर्ने परम्परा रहेको कुरा थाहा हुन्छ ।[७६]

यसबाट भक्तपुरको बिस्केट जात्राका प्रमुख विधिविधानहरूमा ब्राम्हण, जोशी, कर्माचार्य गरी नेवार समाजका तीनै थरीका पुरोहित (पुजारी) हरूको प्रमुख भूमिका रहेको थाहा हुन्छ । तर यहाँनेर ध्यान दिनुपर्ने कुरा के छ भने जोशी र कर्माचार्यले यद्यपि जनैपनि धारण गर्दछन्, ब्राम्हण पुरोहितहरूले गर्ने जस्तै पुजारी कार्य अथवा जजमानी कार्य पनि

---

[७३] हरिराम जोशी, *त्रिदेव स्वरूप ब्राम्हण, कर्माचार्य, जोशी,* ललितपुर : जोशी रिसर्च इन्स्टिच्युट, वि.सं. २०६१, पृ. ५–६ ।

[७४] *ऐजन* ।

[७५] *ऐजन,* पृ. १९ ।

[७६] *ऐजन,* पृ. २४–२५ ।

गर्दछन्, तर तिनको बिहेबारी भने श्रेष्ठ नेवारहरूसँग हुने गर्छ ।[७७] यसबाट तिनीहरू ब्राम्हणको कार्य अधिकार पाएका वैश्यवर्ग रहेको थाहा हुन आउँछ । साथै तिनबाट वैदिक मन्त्रोच्चारण सहितको धार्मिक अनुष्ठान भने हुने गर्दैन ।

प्रत्यक्ष वा अप्रत्यक्ष रूपबाट बिस्केट जात्रासँग कस–कसको सम्बन्ध छ भन्ने बारेमा अध्ययन विश्लेषण गर्दा माथि उल्लेख भए जस्तै सम्पूर्ण भक्तपुर निवासी महिला पुरुषहरूको यसमा सम्बन्ध छ भन्नुमा अत्युक्ति नहोला । जसको बिस्केटजात्रासँग परम्परादेखि ठाडो र प्रत्यक्ष सम्बन्ध र सम्पर्क रहेको हुन्छ, त्यसका परिवारले बिस्केटपर्वभरि विशेष गरिकन "द्यः क्वहाँ बिज्याइगु" देखि "बिचा पूजा" सम्पन्न नभएसम्म चोखो नीतो भई बस्नुपर्ने हुनाले केही अशुद्ध चीजवीजहरू जस्तो– लसुन, प्याज, छ्यापी आदि बार्नु पर्ने हुन्छ । छ्वास्सम्वास्स (छुन हुने, नहुने) त्यो मत्यो (गर्न हुने, नहुने) जस्ता काम कुरा हुन् गएमा जात्राका प्रमुख देवता रुष्ट भई अनिष्ट निम्तिने धार्मिक विश्वास रहेकोले जात्राका बेला जात्रासँग सम्बन्धित व्यक्ति, घर परिवारले केही परम्परागत नीतिनियमको कठोर परिधिभित्र रहनु पर्ने हुन्छ । जसअनुसार नयाँ घर निर्माण गर्दै गरेको भए जात्राअवधिभरि त्यो निर्माण कार्य रोक्नु पर्ने, जात्रासँग सम्बन्धित कार्यहरू बाहेक अन्य कार्यहरू नगर्ने, नगराउने, स्थानीय इलाकाका घर– घरमा चर्खा बुन्ने जुन काम हुने गर्छ, त्यो रोक्नु पर्ने जस्ता परम्परा त्यस क्षेत्रका बासिन्दामा पाइन्छ । खलाँ निवासी वर्ष ३५ का कृष्णप्रसाद मठ्यादुवालका अनुसार बिस्केट जात्राका प्रमुख देवता भैरवनाथलाई जात्रा गरेर मूलदेवगृह टौमढीबाट विशेष देवगृह लाकुलाछेंमा विराजमान गर्न ल्याएदेखि जात्रा पूर्ण रूपमा सम्पन्न नभएसम्म त्यस भेगका बासिन्दाले खाली खुट्टा हिंड्नु पर्ने, आफ्नो घरको झ्यालबाट बाहिर हेर्न नहुने, केटाकेटीले बाहेक अरुले नयाँ लुगा लगाउन नहुने, नयाँ भाँडावर्तन प्रयोगमा ल्याउन नहुने जस्ता परम्परा रहेको छ ।[७८] यस्तै परम्परा तालाक्वः (कुम्हाले टोल) को जेठागणेश लिंगोगुठीसँग सम्बन्धित परिवार र स्थानीयवासीहरूमा पनि अद्यावधि रहेको कुरा कुम्हाले टोलका स्थानीयवासी वर्ष ४५ का कृष्णराम प्रजापति व्यक्त गर्छन् ।[७९] यसबाट भैरवनाथ लिंगो गुठी र जेठागणेश लिंगो गुठीका पर्व पूजा, व्यवहार र क्रियाकलाप उस्तै–उस्तै रहेको थाहा हुन आउँछ । जात्रा राम्ररी सञ्चालन हुन सकोस्, देवीदेवता प्रकोप भई

[७७] नेपाली, पा.टि.नं. ३९ (क), पृ. १४७ ।

[७८] भक्तपुर वडा नं. ११ खलाँ टोलका स्थानीयवासी कृष्णप्रसाद मठ्यादुवाल (वर्ष ३५) बाट मिति २०६७/७/१५ गते प्राप्त जानकारी ।

[७९] भक्तपुर वडा नं. १२ कुम्हाले टोलका स्थानीयवासी कृष्णराम प्रजापति (वर्ष ४५) बाट मिति २०६७/७/१६ गते प्राप्त जानकारी ।

जात्रामा कुनै प्रकारको अनर्थ र अनिष्ट नहोस् भन्नाकालागि जात्रासँग सम्बन्धित गुठी परिवारका सदस्यहरू र जात्रास्थलका स्थानीयवासीहरूले यी उल्लेखित परम्परागत नीति नियमको पालना गर्दै आइरहेका छन् । यसरी जुन अभिप्रायले यो जात्रा चल्दै आएको हो त्यो पूरा गर्न परम्परागत मूल्य, मान्यतामाथि विश्वास गर्नुपर्ने हुन्छ । तर त्यसो भएपनि आज आएर विविध कारणले गर्दा माथि उल्लेखित परम्परा मासिने क्रम जारी छ । संभवतः यसैकारणले गर्दा होला हरेक वर्ष जात्राको बेला उपद्रो र ढुंगामुढा भइ धनजनको क्षति भइरहेको छ, जात्रा ठीक ढंगबाट चल्न सकेको छैन भन्ने भनाई बुढापाकाहरूको रहेको छ ।

जे होस् यस जात्रालाई सुव्यवस्थित रूपमा सञ्चालन गर्न यहाँको समाजका सबै वर्ग, तह, तप्का, र पेशाकर्मी जातिका मानिसहरू, जसले जात्रा सञ्चालन गर्नकालागि परम्परागत रूपमा आ–आफ्नो स्थानबाट पूरा गर्नुपर्ने जुन सामाजिक दायित्व वा जिम्मेवारी हो, त्यो पूरा गर्दै आइरहेका छन् । केहीले अहिले आएर छोडेका पनि छन् । यस स्थितिमा बोलकबोल ठेक्काद्वारा त्यस्तो सामाजिक दायित्व वा जिम्मेवारीको विकल्प खोजिएको छ । अर्थात् ठेक्काद्वारा पनि यस्ता सामाजिक कार्य गराउन थालिएको छ ।[८०]

सामुहिक जिम्मेवारी वा कामको बाँडफाँड र सहभागिता लिने काम पेशाको आधारमा निर्धारण गरिएको परम्परागत जातजाति, वर्ग, समुहबाट हुने गर्दछ ।[८१] अनि सामुहिक जिम्मेवारीको बाँडफाँड र सहभागिता लिने काम जात्रा गुठीको माध्यमबाट सम्पन्न हुने गर्छ । यसले गर्दा जात्राको अवसरमा गरिने स्थानीय स्तरको देवदेवीका खटजात्रा होस् वा व्यापक मान्यता पाएका देवदेवीका बृहत् रथजात्रा र त्यससँग सम्बन्धित पूजाआजा, भजनकीर्तन, नाचगान आदि आयोजना गर्ने प्रचलन होस्, त्यो एउटा सामान्य क्रिया बन्न जान्छ ।[८२]

जात्राकोबेला त्यससम्बन्धी कामको बाँडफाँड गर्दा भित्री काम सबै स्वास्नीमानिसको जिम्मामा र बाहिरको काम सबै लोग्नेमानिसको जिम्मामा लगाइएको हुन्छ । प्राकृतिक न्याय र शक्ति सन्तुलनका दृष्टिले यो बाँडफाँड उपयुक्त देखिन्छ । वास्तवमा नेवार समाजमा स्त्री पुरुष दुवै जीवनरूपी गाडीका दुई पांग्रा मानिन्छन् । यसै आधारमा जीवनका हरेक क्षेत्र वा

---

[८०] गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेल (वर्ष ५२) बाट २०६७७१४ गते प्राप्त जानकारी ।

[८१] (क) यद्यपि नेपालमा ब्राम्हण, क्षेत्री, बैश्य, शुद्रको अवधारणा प्राचीनकालदेखि नै प्रचलित रहेको थियो । – धनवज्र वज्राचार्य, *लिच्छवीकालका अभिलेख,* काठमाडौँः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३०, पृ. २९ ।
(ख) तथापि त्यसलाई व्यवस्थित रूपमा नेपाली समाजमा लागु गरेर पेशाको आधारमा जात निर्धारण गरेर जात अनुसारकै आफ्नो पेशा गर्नुपर्ने सामाजिक स्थिति बाँध्ने कार्यको श्रेय पूर्वमध्यकालीन राजा जयस्थिति मल्ललाई प्राप्त छ । – लम्साल, पा.टि.नं.१२, पृ.३८–५२ ।

[८२] शर्मा, पा.टि.नं. १३, पृ. १४९ ।

कार्यमा स्त्री पुरुष दुवै बीच कामको बाँडफाँड गरिएको हुन्छ र काममा सहभागी पनि बन्छन् । यसअनुसार घर भित्रका काम जति महिलाको र घर बाहिरका काम जति पुरुषको भागमा पर्दछ वा पुरुषले गर्दछ, चाहे त्यो खेतीपाती सम्बन्धी काम होस् वा घरव्यवहार सम्बन्धी काम होस्, सबै काममा स्त्री पुरुष दुबै बराबरीको हिस्सेदारी बन्छन् ।[८३] यसैगरेर भक्तपुरमा मनाइने बिस्केट जात्राका बेला पनि जात्रा सम्पन्न गर्नको लागि परम्परागत रूपले सामाजिक जिम्मेवारी र दायित्व पाएका अनेक जातजातिका मानिसहरूमा आ–आफ्नो कामको प्रकृति अनुरूप माथि उल्लेख गरिए जस्तै शारीरिक परिश्रम लाग्ने भारी कामहरू लोग्ने मानिसहरूबाट र सानातिना र घर भित्रका कामहरू स्वास्नी मानिसहरूबाट हुने गर्दछ । जस्तै– जात्रामा देवीदेवतालाई बलि चढाउने, मासु काट्ने, बाजा बजाउने, नाचगान गर्ने, भजनकीर्तन गर्ने, देवदेवीका खट बोक्ने, रथ तान्ने, लिंगो उभ्याउने जस्ता परिश्रम लाग्ने यावत् काम कुरा पुरुष वर्गले गर्दछन् । यसमा महिलाको सहभागिता हुँदैन । किनकि महिलाले यी काम गर्दा पाप सम्झिने गरिन्छ । यथार्थमा शारीरिक परिश्रमका काम महिलाबाट नहुने भएकोले नै समाजमा यस्तो धारणा बनेको हो । यसैले यस्ता काममा अहिले पनि पुरुषहरू नै अग्रसर हुन्छन् । जात्राको बेला महिलाले गर्ने प्रमुख काम भनेको घरचोक सफा सुग्घर पार्ने, पूजा सर्दाम तयार गर्ने, पूजा गर्ने, मन्दिर जाने, जाँडरक्सी बनाउने, मासु र भोजनका परिकार पकाउने आदि घरभित्रका समस्त कामको चाँजोपाँजो मिलाउने हो ।[८४]

बिस्केटको बेला भक्तपुरमा चल्ने प्रायः सबैजसो जात्राहरू स्थानीय नेवार समुदायकै जिम्मामा छन् । पूजाआजा, नाचगान र चाडपर्व चलाउँदा स्थानीय समुदायभित्र नै कामको बाँडफाँड गरिएको हुन्छ । नायो (नाइके) र नकीं (नइकेनी) को छनौट निश्चित् घराना र उमेरले निश्चय गर्दछ । यस्तो पूजाआजा, भोजमा नकींको निर्णय सर्वोपरी हुन्छ भने जात्रा सञ्चालन, भजनकीर्तन, नाचगान, बाह्य पूजा आदिमा नायोको बोलवाला चलेको हुन्छ । यी नायो र नकीं अर्थात् नाइके र नइकेनीको अनुरोध, आह्वान र आदेशमा समुदायको गुठी

---

[८३] यसमा ध्यान दिनुपर्ने कुरा के छ भने शारीरिक परिश्रम लाग्ने भारी काम जति पुरुषले र परिश्रम नलाग्ने फुटकर र चानचुन काम जति महिलाले गर्दछन् । यसैकारण कृष्णबहादुर थापा भन्नुहुन्छ – पुरुषले गर्ने काम देखिने र महिलाले गर्ने काम नदेखिने खालको हुन्छ, तर त्यसो भएपनि काममा महिलाको सहभागिता पुरुषको भन्दा कम हुँदैन । – कृष्णबहादुर थापा, *मैन अस्पेक्ट अफ सोसल, इकोनोमिक एण्ड एडमिनिस्ट्रेटिभ हिस्ट्री अफ मोडर्न नेपाल,* काठमाडौँ : अम्बिका थापा, ई.सं. १९८८, पृ. ६१–६३ ।

[८४] विशेष गरेर यतिबेला पुरुषहरू भन्दा महिलाहरू बढ्ता गम्भीर देखिने हुन्छन् । उनीहरू देवीदेवताको पूजाआजामा सरिक हुन उत्सुक हुन्छन् । गरगहनाले सज्जिएर, राम्रा राम्रा लुगा लगाएर मठ मन्दिर चाहार्ने कार्यमा बिहानैदेखि सक्रिय देखिन्छन् । – जगदीश्वरमान अमात्य, *पिक्चर्सक्यू नेपाल,* काठमाडौँ : रत्न पुस्तक भण्डार, ई.सं. १९६१, पृ. ७४ ।

सञ्चालन भएको हुन्छ ।[८५] यस जात्रा अथवा चाडका अवसरमा प्रत्येक घरले देवस्थलमा पूजाभाग पठाउने, प्रसादको रूपमा सम्हेय्बजी जोरजाम गर्ने, भोज वा नखःत्या भोजको आयोजना गर्ने जस्ता कुराहरू चाडको एउटा आवश्यकीय अंग बनेको हुन्छ ।[८६] यसरी यस वार्षिक जात्राको आयोजनालाई गुठी जिम्मेवारीको अनेकन् जालो बनाएर सम्पन्न गर्दै आएको पाइन्छ । कुनै बेला यो जात्रा सम्पन्न गर्नको लागि परापूर्वकालदेखि राखिएको गुठी जग्गाको आयस्ता एउटा भरपर्दो स्रोत थियो । तर नेपाल उपत्यकामा मल्लवंश समाप्त भएपछि सरकारले यस्ता सम्पूर्ण गुठी जग्गालाई एउटै राजगुठीका मातहत राखी जात्रा सम्पन्न गर्ने अभिभारा राज्यस्वयंले लिएको देखिन्छ । जात्राको सांस्कृतिक जिम्मेदारी पूरा गराउन विभिन्न सामाजिक समूहलाई ठेकिएको खर्च यस्ता राजगुठीका तर्फबाट भर्दै आएको छ । तर यसरी भर्ने गरिएको रकम वा खर्च वास्तविक खर्च भन्दा ज्यादै न्यून हुन्छ, यसले जात्राको रौनकता र भव्यतालाई असर पुऱ्याउँदछ ।

## ७.४ गुठी व्यवस्था

ऐतिहासिक तथा सांस्कृतिक विशेषताहरूले युक्त भक्तपुरको प्रसिद्ध जात्रा बिस्केट वर्तमान समयसम्म पनि सजीव ढंगले चल्दै आउनुको पछाडि प्रमुख र सक्रिय भूमिका परम्परागत गुठी व्यवस्थाको रहेको पाइन्छ । यो गुठी व्यवस्था यहाँका नेवारहरूको आफ्नो मौलिक व्यवस्था हो । यस्तो व्यवस्था संभवतः संसारको अरु कुनै पनि समाजमा छैन होला ।[८७] कति पुस्ता बिते, कति युग फेरिए, कति परम्पराहरू बदलिए तर भक्तपुरको यो जात्रा अझै पनि पहिले जस्तो हो, त्यस्तै किसिमले चल्दै आइरहेको छ । निश्चय पनि प्रत्येक वर्ष बसन्त ऋतुको चरमोत्कर्षका अवसरमा उही दिन उही स्थानहरूमा भक्तपुरको यो जात्रा

---

[८५] नायो र नकीं कुनै व्यक्ति विशेषको पद नभइ परिवार र समाजले संस्थागत रूपमा मानि आएको सम्मानित पद हो । नायो जस्तै नकीं पनि थरी–थरीका हुन्छन् । प्रत्येक घरमा प्रायः घरका नकीं छेखाँ नकीं हुन्छिन् । उनी त्यस घरका नायो (मूली) की सजातीय धर्मपत्नी हुन्छिन् । दाजुभाइको समाजमा नकीं जःनकीं भनिन्छ । तिनी त्यस खलकका कर्मले जेठो नाइके (मूली) को सजातीय धर्मपत्नी हुन्छे । ईष्टदेवताको पूजाआजामा नाइकेकी सजातीय धर्मपत्नीलाई आगंःनकीं भनिन्छ । देवगृह (मन्दिर) को रेखदेखमा भूमिका निभाउनेलाई द्यःछेंनकीं भनिन्छ । गुठी नाइके (नायो) की धर्मपत्नीलाई गुठी नकीं भनिन्छ । नाइकेको श्रीमती नभएको अवस्थामा उनी भन्दा मुनिको व्यक्ति (नुकु) की धर्मपत्नीले नकींको भूमिका निभाउनु पर्ने हुन्छ । – ध्रुवनारायण कायस्थ, "संस्कृतिमा नकिंमाजु (अजि) को भूमिका", *खोपृङ* ,वर्ष ११, अंक १०, (वि.सं.२०५९), पृ. २४ ।

[८६] बाजा गुठी, भजन गुठी, खट बोक्ने, रथ बनाउने, लिंगो ल्याउने, पूजापाठ गर्ने, पुजारी वर्ग जस्ता विभिन्न थरी समूहलाई आ–आफ्नो सामुहिक जिम्मेवारी र दायित्व वा सहभागिता जात्रा गुठी वा तव गुठीका तर्फबाट अलग अलग रूपमा बाँडिएको हुन्छ । –शर्मा, पा.टि.नं.१३, पृ. १४९ ।

[८७] (क) जगदीशचन्द्र रेग्मी, *नेवारी संस्कृतिको रूपरेखा,* काठमाडौँ : अफिस अफ नेपाल एन्टिक्वेरी, वि.सं. २०३५, पृ. १४–१५ ।
(ख) नेवारहरूको पारिवारिक र सामाजिक जीवन गुठी व्यवस्थामा आधारित हुन्छ । यसैकारण गुठी व्यवस्थाको अध्ययन बिना नेवार सामाजिक जीवन पूर्ण रूपमा जान्न सकिंदैन । – नेपाली, पा.टि.नं. ३९ (क), पृ. १९१ ।

अटुट रूपमा सञ्चालन हुँदै आइरहेको छ । यसरी यो जात्रा परापूर्वकालदेखि आजसम्म पनि निर्वाध रूपमा सञ्चालन हुँदै आउनुको पछाडि सक्रिय र अहम् भूमिका खेल्ने एउटा मह□वपूर्ण सामाजिक इकाइ वा संस्था गुठी नै हो । वास्तवमा गुठी व्यवस्थाकै सक्रिय भूमिकाले गर्दा यो जात्रा वर्षेनी व्यवस्थित रूपमा चल्दै आइरहेको छ भन्नुमा अत्युक्ति नहोला । किनकि गुठीले नै जात्राका विधिविधान सम्पन्न गर्ने, गराउनेदेखि लिएर जनसहभागिता जुटाउने, जात्रा सम्बन्धी कार्य सम्पादन गर्नको निम्ति जनशक्ति उपयोग गर्ने, आर्थिक स्रोतको व्यवस्था गर्ने आदि कार्यहरूको समुचित व्यवस्था मिलाउने गर्दछ ।

गुठी धेरै प्रकारका हुन्छन् । विशेष गरेर जुन कार्य वा उद्देश्यका लागि गुठी स्थापना गरिएको हो, त्यसै कार्य क्षेत्रसँग मात्र त्यो गुठी सम्बन्धित हुने गर्छ । जस्तो – धार्मिक गुठी सम्बन्धित देवदेवीका पूजापाठ र तिनका जात्रासँग सम्बन्धित हुन्छन् ।[८८] भजन गुठी भजनसँग मात्र सम्बन्धित हुन्छन् । भजन गुठी पनि अनेक प्रकारका हुन्छन् । ती भजन गुठीहरू नगरका टोल–टोलमा रहेका देवदेवीका नाममा स्थापना गरिएका हुन्छन् । यसमा दाफा भजन, धल्चा भजन, नौबाजा भजन आदि उल्लेखनीय छन् । त्यस्तै धिमे बाजा समूह, बाँसुरी बाजा समूह, नासः गुठी, जात्रा गुठी, पर्व विशेषमा पूजा चढाउने पर्व गुठीहरू पनि अस्तित्वमा छन् ।[८९] यी गुठीहरू पनि यस जात्राका बेला सक्रिय रूपमा देखा पर्छन् । यसदेखि बाहेक यहाँको समाजमा हरेक वर्ग, जाति, समूहका मानिसहरूको आफ्ना अलग गुठीको व्यवस्था परापूर्वकालदेखि भइ आएको छ । पेशाका आधारमा निर्धारित गरिएका विविध जातजातिहरूले आफ्नो जातीय पहिचान र परम्पराको संरक्षणका लागि गुठी गठन गरेका हुन्छन् । यी सामाजिक गुठीहरूले पनि बिस्केट जात्रामा आ–आफ्नो क्षेत्रबाट ठूलो मद्दत पुऱ्याई आएका छन् । जस्तो – मानन्धर गुठीको भूमिकालाई एकछिन नियालेर हेरौं । बिस्केट जात्रामा भक्तपुरको माथिल्लो टोलका दुईवटा मानन्धर गुठी सक्रिय रूपमा देखा पर्छन् । लिंगो वनबाट लिंगो ल्याउनेदेखि जात्रामा लिंगो उभ्याउनका लागि आवश्यक

---

[८८] (क) यहाँका प्रत्येक जसो चाडपर्व, जात्राहरू कुनै न कुनै देवी देवताको मठ मन्दिरसँग सम्बन्धित हुन्छन् । – एन्नी वरगती, *गड्स,मैन एण्ड टेरिटोरी,* न्यू दिल्ली : मनोहर पब्लिसर्स, ई.सं. १९९५, पृ. ७ ।
(ख) अनि हरेक देवदेवीका मन्दिरहरू र त्यससँग सम्बन्धित पूजापाठ, जात्राहरू आ–आफ्ना गुठीद्वारा सञ्चालित हुने गर्छन् । – स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

[८९] (क) राणा, पा.टि.नं. ४४ (ख), पृ. ६–७ ।
(ख) भद्रकाली भजन, भैरवनाथ कोखिंचा भजन, चुपींघाट धल्चा भजन, भगवतीरास भजन, भैरवेश्वर महादेव धल्चा भजन मुख्य छन् । यसदेखि बाहेक अन्य भजन गुठीहरूमा अजाजु द्यः धल्चा भजन, भैरवनाथ पुलाँ दाफा, नौ बाजा, क्वाछेंय धिमाय् बाजा, दोगन बाँसुरी बाजा, बेला बाँसुरी बाजा र लय्को भजन आदि छन् । यी भजन गुठीहरूले बाह्रै मास भजन चलाउँदै आएका छन् । – भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७६) बाट मिति २०६७/४/२३ प्राप्त जानकारी ।

डोरीहरू बाँध्ने काम गोलमढी टोलका मानन्धरहरूले गर्दछन् भने भैरव भद्रकालीका रथमा रथका अवयवहरूलाई बेतले बाँध्ने, रथ तान्नका लागि रथको दुवैतिर डोरी बान्ने काम दतात्रय सकुलानेका मानन्धर गुठीले गर्दै आएको छ ।[९०] त्यस्तै भेलुखेलका पोडेहरूको द्यःला गुठीले लिंगो घरबाट लिंगो बाहिर ल्याएर जात्राका लागि मिलाएर राखिदिने, कलाँसी (कैंची काठ)हरू ठीक पारिदिने,[९१] कुम्हाले टोलका कसाई गुठीका गुठीयारहरूले देवदेवीका मन्दिरमा बलि चढाउने, मासुको भाग लगाउने, जात्राको बेला नायखीं बाजा बजाउने कार्य गर्दछन् । यस्तै प्रकारले अन्य जातजातिसँग सम्बन्धित विविध गुठीहरूले पनि आफूलाई परम्परादेखि सुम्पिएको कामको दायित्व पूरा गर्दै आइरहेका छन् ।[९२] तर बिस्केट जात्राको बेला सर्वाधिक मह□वपूर्ण भूमिका खेल्ने प्रमुख गुठी भनेको जात्रा सञ्चालन गुठी अथवा यस जात्रासँग सम्बन्धित प्रमुख देवदेवीका नाममा स्थापित श्री ३ आकाश भैरव गुठी र श्री भद्रकाली गुठी नै हुन् । यसमा पनि मह□वपूर्ण भूमिका श्री ३ आकाश भैरव गुठीको रहेको छ । यसका गुठीयारहरूलाई भैलःनायो (भैरव नाइके) भन्ने गरिन्छ । यसै गुठीले बिस्केटका सुरुदेखि अन्तिम दिनसम्मका रथयात्रा सञ्चालन गर्ने, विश्वध्वजा सहितको लिंगो उभ्याउने र ढाल्ने जात्रा लगायत बिस्केट पर्वसँग सम्बन्धित विविध विधिविधानहरू सम्पन्न गर्ने गर्दछन् । यो गुठी भक्तपुर लाकोलाछें टोलका स्थानीय बासिन्दा घेमो, चव, सुव, छुकाङ आदिबाट सञ्चालित छ ।[९३] यस गुठीको नाममा पहिले २७२ रोपनी जग्गा रहेको थियो । तर हाल ती जग्गा रैतानीमा परिणत भई मासिइ सकेकोले यस जात्राको सम्पूर्ण खर्चको व्यवस्थापन गुठी संस्थान भक्तपुरले गर्दै आएको छ ।[९४] भैरव गुठीका सदस्यहरूमध्ये कसैको पद कुनै कारणवश रिक्त हुन गएमा गुठी संस्थान भक्तपुरले लाकोलाछें टोलका उल्लिखित ५० घर (चव, सुव, घेमो, छुकाङ) का बासिन्दाहरूमध्येबाट रीतपूर्वक दरखास्त आह्वान गरेर निश्चित प्रक्रिया पूरा गरेका उम्मेदवारलाई गुठी सदस्य वा भैलःनायोको रूपमा नियुक्त गर्दछ ।[९५] यस्तै गरेर भद्रकाली गुठी लयको टोलका जधारी, लिवीहरूबाट सञ्चालित छ ।

[९०] मानन्धर गुठीका नाइके पद्म बहादुर मानन्धर (वर्ष ७६) बाट २०६७।४।४ गते प्राप्त जानकारी ।

[९१] द्यःला गुठीका नाइके धनबहादुर द्यःला (वर्ष ७३) बाट मिति २०६७/२/३ गते प्राप्त जानकारी ।

[९२] जात्रा सम्पन्न गर्दा विभिन्न जात र पेशाका वर्गबाट विविध सेवा प्राप्त गर्नु आवश्यक मात्र होइन अनिवार्य गरिएको हुन्छ । यसैअनुरूप सम्बद्ध सबै वर्ग र समुदायका मानिसहरूले अद्यापि सेवा पुऱ्याउँदै आइरहेका छन् । – शर्मा, पा.टि.नं.१३, पृ. १५० ।

[९३] लाकोलाछें निवासी भैरव नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट २०६७७१८ गते प्राप्त जानकारी ।

[९४] गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेलबाट २०६७। ७। १४ गते प्राप्त जानकारी ।

[९५] वि.सं. २०६५ साल भैरवनाथ गुठीका एक जना नाइकेको पद रिक्त हुँदा त्यसको पदपूर्तिको निम्ति गुठी संस्थान भक्तपुरले दरखास्त आह्वानार्थ जारी गरेको सार्वजनिक सूचनाको प्रतिलिपि परिशिष्ट नं. झ मा दिइएको छ ।

यस गुठीले बिस्केटका अवसरमा नकिंजु अजिमा (भद्रकाली) को रथजात्रा चलाउने, पूजापाठ गर्ने, पीठमा राँगो बलि दिई गंगा पूजा गर्ने, म्ये कपः जात्रा चलाउने, जात्रामा सहभागी कसाई, पोडेहरूलाई भोज ख्वाउने जस्ता कार्यहरू सञ्चालन गर्दछ अर्थात् नकिंजु अजिमा (भद्रकाली) सँग सम्बन्धित समस्त विधिविधानहरू यस गुठीद्वारा सम्पन्न हुने गर्दछन् ।[९६] यस गुठीको अद्यावधि आफ्नै जग्गा छ, जसको आयस्ताले देवीको नित्य पूजा, पर्व पूजा, वार्षिक जात्रा चल्दै आएको छ । यसैले गुठी संस्थानले बिस्केट जात्राका अवसरमा नकिंजु अजिमा (भद्रकाली) को पूजाका लागि परम्परागत रूपमा दिँदै आएको एउटा बोका र एउटा राँगो बाहेक अन्य खर्चको व्यवस्था गर्नु पर्दैन ।[९७] यसरी बिस्केट जात्रा पर्वका अवसरमा जात्रा सञ्चालन सम्बन्धी सम्पूर्ण कार्य गर्ने भएकोले गुठीको भूमिका मह□वपूर्ण मानिन्छ ।

यसरी गुठी व्यवस्था नेवार सामाजिक जीवनको एउटा अभिन्न अंग रहेको छ । यसले समाजमा आइपर्ने कठिन भन्दा कठिन समस्या निराकरण गर्नेदेखि लिएर चाडपर्वका बेला गरिने धार्मिक पूजापाठ, जात्राहरू जस्ता महान् कार्य सम्पन्न गर्नमा समेत सक्रिय भूमिका खेल्ने रहेछ भन्ने तथ्य माथि उल्लेखित दृष्टान्तबाट थाहा हुन आउँछ ।

गुठी व्यवस्थाको अवधारणा पृष्ठभूमि, यसको स्वरूप र संरचनागत प्रकृति हेर्दा यसलाई यहाँका नेवारहरूको आफ्नो मौलिक व्यवस्था मान्न सकिन्छ । हुन पनि यहाँको नेवार समाजलाई आपसमा संगठित र बलियो बनाई राख्नमा यसले ठूलो सघाउ पुऱ्याउँदै आएको छ । गुठीको प्राचीन रूप गोष्ठी भएको तथ्य लिच्छवीकालीन अभिलेखहरूबाट जान्न सकिन्छ ।[९८] अहिले यहाँको समाजमा चलेका अनेक गुठीहरू लिच्छवीकालीन गोष्ठीकै निरन्तरता हो भन्ने कुरामा कसैको दुईमत हुन सक्तैन । गुठी प्रथाको अवधारणा समाजमा कसरी आयो भन्ने सम्बन्धमा आवश्यक काम कुरा मिलेर गर्ने भावनाको विकास गर्नु नै यसको मूलउद्देश्य रहेको देखिन्छ ।[९९] किनकि प्राचीन समयमा आजको जस्तो विविध किसिमका यान्त्रिक उपकरणहरूको विकास भइसकेको थिएन । जे कुरा पनि मानवीय शक्तिद्वारा नै सम्पन्न गर्नुपर्ने हुन्थ्यो । घर भित्रका व्यवहारिक काम कुरा त एउटै परिवारका सदस्यहरू आपसमा मिलेर सम्पन्न गर्न सक्थे । तर जब समाजमा व्यापक रूपको धार्मिक, सामाजिक, लोककल्याण, जनहित सम्बन्धी काम कुरा गर्नुपर्ने हुन्थ्यो, त्यतिबेला अनेक

[९६] भद्रकाली गुठीका मूलनाइके माइला जधारी (वर्ष ७१) बाट २०६७।७।२७ गते प्राप्त जानकारी ।

[९७] गुठी संस्थान भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेलबाट २०६७।७।१४ गते प्राप्त जानकारी ।

[९८] वज्राचार्य, पा.टि.नं. ८१ (क), पृ. २८४ ।

[९९] *ऐजन* ।

समस्या उत्पन्न हुने गर्दथ्यो । अतः समाजमा रहने अनेक थरीका मानिसहरू बीच सौहार्दपूर्ण सम्बन्धको बिस्तार गरी सबै मिलेर सबैको हित हुने धार्मिक, सामाजिक, स्वास्थ्य, शिक्षा, लोककल्याण सम्बन्धी कार्य सम्पादन गर्नको निमित्त नै गुठी प्रथाको प्रचलन सुरु भएको देखिन्छ । मल्लकालमा आएर गुठी व्यवस्था अझ फराकिलो हुन गयो । अनेक नयाँ नयाँ गुठीहरू थपिए । मल्ल राजाहरू मात्र होइनन् प्रजाहरूले पनि धर्म र पुण्य कमाउन, आफ्नो कीर्ति राख्न आफुले खाई नखाई जम्मा गरेको धनले जग्गा किनेर जग्गाको आम्दानीबाट धार्मिक, सामाजिक र लोकहितका कार्यहरू पुस्ता दरपुस्ता(अनन्तकाल) सम्म चलिरहोस् भन्ने पवित्र उद्देश्य र निस्वार्थ भावले गुठी राखेर गए ।[१००] त्यसरी राखिएको गुठी स्रोतकै आधारमा आजपनि स्थानीय रूपमा प्रसिद्ध देवदेवीका नित्य र पर्वपूजाहरू अनि वार्षिक जात्राहरू सञ्चालन हुँदै आइरहेका छन् । जस्तो उदाहरणको रूपमा माथि उल्लेख गरिएको बिस्केट जात्रा सम्बन्धी गुठीहरूलाई लिन सकिन्छ । यसरी राखिएका गुठीहरू पनि मुख्य रूपले दुईप्रकारका देखिन्छन् । जस्तै–

(१) आफ्नै परिवारको अधीनमा रहेको गुठी

(२) अरु निश्चित् व्यक्ति वा गुठीयारहरूलाई सुम्पेको गुठी[१०१]

अर्थात् पहिलो गुठीलाई पारिवारिक गुठी र दोस्रो गुठीलाई सार्वजनिक गुठी मान्न सकिन्छ । भक्तपुरको नेवार समाजमा यी दुवै प्रकारका गुठीहरू अद्यावधि जिवित रहेको देख्न सकिन्छ ।

स्थानीय रूपमा सम्मानित देवदेवीका पर्व विशेषमा गर्ने पर्व पूजा र जात्रा सम्बन्धी गुठी आज पनि एउटै कुल वा परिवार भित्रका सदस्यहरूले मात्र चलाउँदै आएको पाइन्छ । यसको दृष्टान्तको रूपमा बिस्केट पर्वको दौरानमा स्थानीय थालाछें टोलमा सम्पन्न हुने महालक्ष्मी जात्रा संचालनार्थ राखिएको कक्षपतिहरूको गुठी, त्यस्तै स्थानीय तेखाचो टोलमा अवस्थित वाराही (अजिमा) को जात्रा र पूजा चलाउन राखिएको जोन्छे परिवारको गुठी अनि तालाक्व टोलमा जेठा गणेशको लिंगोजात्रा र पूजा चलाउने स्थानीय ५० घर प्रजापतिहरूको गुठीलाई प्रस्तुत गर्न सकिन्छ ।[१०२]

माथि उल्लिखित दोस्रो प्रकारको गुठी बृहत् स्वरूपको हुन्छ । यसले राज्यस्तरीय मान्यता र प्रसिद्धि पाएको हुन्छ । यसको गुठी संचालन गर्न विभिन्न समयका राजा,

---

[१००] लीलाभक्त मुनंकर्मी, "भक्तपुरको गुठी व्यवस्थाः एक चर्चा", *भक्तपुर,* वर्ष १५, अंक १, (वि.सं. २०५३ मार्ग), पृ. ५१ ।

[१०१] वज्राचार्य, पा.टि.नं. ८१ (क), पृ. २८५ ।

[१०२] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

महाराजा र अन्य दाता महानुभावहरूले जग्गा राखेर गएका हुन्छन् ।[१०३] भक्तपुरको प्रसिद्ध जात्रा बिस्केटसँग सम्बन्धित श्री ३ आकाश भैरव गुठीलाई यसको उदाहरणको रूपमा प्रस्तुत गर्न सकिन्छ । यस्तो गुठी गुठीदान गर्ने दानपतिका सन्तानका अधीनमा नरही निश्चित् व्यक्ति वा व्यवस्था अन्तर्गत रहने हुनाले यस्तो गुठीको ठूलो सामाजिक मह□व र प्रतिष्ठा रहेको हुन्छ ।

भक्तपुरको समाजमा गुठीको प्रचलन अद्यावधि रहेपनि परापूर्वकालमा जस्तो यसको व्यापक चलन अहिले देखिंदैन । विशेष गरेर लोककल्याण, जनहित वा सार्वजनिक सेवा सम्बन्धी गुठीहरू लोप भएर गइसके ।[१०४] तर देवदेवीका पूजाआजा, जात्रा पर्वहरू संचालन गर्ने गुठीहरू अझै पनि क्रियाशील छन् भन्ने कुराको पुष्टि बिस्केट पर्वका अवसरमा हुने विविध देवदेवीका पूजापाठ, त्यस सम्बन्धी विधिविधान, भजनकीर्तन, नाचगान, रथजात्रा, खटजात्रा, लिंगो जात्रा आदिबाट थाहा हुन आउँछ ।[१०५]

यसरी उल्लिखित तथ्यहरूको आधारमा बिस्केट जात्रालाई सामाजिकता प्रदान गर्ने मूल आधारत□व भनेको गुठी व्यवस्था नै हो भन्ने कुरा थाहा हुन आउँछ ।

## ७.५ भोज परम्परा

जुनसुकै जातिका नेवारले पनि आफ्नो कुल, परम्परा, रीतिरिवाज अनुसार सामाजिक संस्कार गर्दा हैसियत अनुसार आफ्ना नाता, कुटुम्ब, ईष्टमित्र, छरछिमेक, आफन्तजन आदिलाई आमन्त्रित गरेर भोज ख्वाउने चलन छ । यस्ता संस्कारभित्र पास्नी, ब्रतबन्ध, बेलविवाह, सूर्यदर्शन, शुभविवाह, बुढापास्नी, मृत्युसंस्कार, वार्षिकश्राद्ध आदि पर्दछन् । उल्लिखित जुनै संस्कार कर्म गर्दा पनि त्यसको समापनका अवसरमा भोज खाने ख्वाउने चलन हरेक नेवारमा पाइन्छ । यसदेखि बाहेक प्रत्येक ठूला चाडपर्व मनाउँदा पनि उनीहरू भोज खाने गर्छन् । यसैले भोज परम्परालाई मनोरन्जनकै एक पक्षको रूपमा लिन सकिन्छ ।

[१०३] (क) मुनंकर्मी, पा.टि.नं. १००, पृ. ५१ ।
(ख) कुनै गोष्ठी व्यक्तिगत पनि हुन्थे । यस्ता गोष्ठीहरूसँग अरुको सम्बन्ध रहँदैनथ्यो । - वज्राचार्य, पा.टि.नं. ८१(क), पृ. २८८ ।

[१०४] *ऐजन* (ख), पृ. १८५ ।

[१०५] (क) मुनंकर्मी, पा.टि.नं. १००, पृ. ५३ ।
(ख) गुठी परम्परा कायम भइरहेको कारणबाट नै परापूर्वकालमा स्थापित कतिपय देवदेवीका मन्दिर, तिनका पूजापाठ, पर्वजात्राहरू अहिलेसम्म पनि जोगिइरहेका छन् । मध्यकालीक संस्कृतिको जगेर्ना गर्नमा यस्ता गुठीहरूको मह□वपूर्ण भूमिका रहेको छ ।–नयनाथ पौडेल, *राजा यक्षमल्ल र उनको समय,* (अप्रकाशित विद्यावारिधि शोध प्रबन्ध), काठमाडौं : मानविकी तथा सामाजिक शास्त्र संकाय, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०६६, पृ. ३२१ ।

किनकि त्यसअवसरमा साथीभाइ, नातागोता बीच भेटघाट हुने, एक आपसमा खुसी साटासाट गर्ने, रमाइलो गर्ने, सबैसँग बसेर खुसीयालीपूर्वक भोजमा तयार गरिएका मीठा–मीठा परिकारहरूको रसास्वादन गर्ने जस्ता सुखद् क्षण प्राप्त हुन्छ ।

अन्यत्रका नेवारहरूले आफ्नो स्थान विशेषको जात्राका बेला ठूलो चाड मनाए झैं भक्तपुरमा पनि हरेक वर्ष मनाइने बिस्केट जात्रालाई स्थानीय नेवारहरू एउटा ठूलो चाडको रूपमा लिने गर्छन् । यसैले बिस्केट जात्राका प्रमुख दिनहरू अर्थात् चैत्र मसान्त र वैशाख संक्रान्तिका दिन, जुन दिन यहाँ विश्वध्वज लिंगो उभ्याउने जात्रा हुन्छ, स्थानीयवासीहरू भात खाँदैनन् । यसदिन घरघरमा भोज आयोजना गरिएको हुन्छ । आफ्नो भेकको प्रसिद्ध जात्रा भएकोले भक्तपुरका स्थानीयवासीहरूले वरपर रहेका आफ्ना नाताकुटुम्ब, साथीभाइ, ईष्टमित्रहरूलाई बिस्केटको जात्रा हेर्नका निम्ति २, ४ दिन अघिबाटै निमन्त्रणा दिने गर्छन् र जात्राका बेला साथीभाइ, इष्टमित्र जम्मा भएर भोज खाने ख्वाउने गरेर रमाइलो गर्छन् । यसैगरेर परिवारका कोही व्यक्ति काम विशेषको सिलसिलामा वा नोकरीको क्रममा घरदेखि टाढा गइराखेका छन् भने पनि बिस्केटको अवसरमा घर फर्कने गर्छन् अनि मूलघरबाट छुट्टिएर बसेकाहरू (छोरा बुहारी, दाजुभाइ) हरू पनि बिस्केटका अवसरमा सँगै बसेर चाड मनाउन मूलघरमा आउने गर्छन् । यसरी चाड मान्ने भनेकै भोज खाने र भोजलाई परिवारका सदस्यहरू, आफन्तजन, ईष्टमित्र जमघट हुने राम्रो अवसरका रूपमा लिइन्छ । हुनपनि चाडको उल्लासमय वातावरणमा आयोजना हुने भोज परम्परामा सहभागी हुन आउने पारिवारिक सदस्य ईष्टमित्र आफन्तजन बीच आपसी सम्बन्ध सुमधुर र घनिष्ट बन्न गइ सामाजिक दृष्टिले उनीहरू एक अर्काको नजिक हुन आउँछ । यसरी भोज परम्परालाई बिस्केट चाडको एउटा मह□वपूर्ण सामाजिक पक्षका रूपमा लिन सकिन्छ ।

बिस्केट चाडका अवसरमा यहाँका नेवारहरूका घर–घरमा भोज आयोजना हुनु सामान्य कुरा हो । नेवार भोज धेरै प्रकारका हुन्छन् । जस्तो– सामान्य भोज, सम्हेय्बजी, सिकःभ्वय, नखःत्या भ्वय आदि आदि ।[१०६] तर यी सबै भोजमा चोखोको निम्ति चिउराको प्रयोग गरिन्छ ।[१०७] चिउरालाई हाल "बजी" भनिए पनि पूर्वमध्यकालमा "फलके" भनिन्थ्यो ।[१०८]

---

[१०६] तर संस्कृतिविद् चुन्दा वज्राचार्यज्यूले भने मल्लकालमा प्रचलित भोजलाई ठाउँ र सन्दर्भ विशेषका आधारमा विविध नाम दिनु भएको छ । जस्तो – भो भ्वय, क्वथा भ्वय, मिसा भ्वय, भिं भ्वय, ख्य भ्वय, लसता भ्वय आदि । – चुन्दा वज्राचार्य, *मल्लकालया छुं संस्कृति,* येंः काशीनाथ तमोट, ने.सं. ११०५, पृ. ५२ ।

[१०७] नेवारहरूको सामाजिक रीतिस्थितिमा जुठो चोखोको खूबै ख्याल गरिन्छ । यहाँनेर सम्झिनु पर्ने कुरा के छ भने चिउराजुठो जुठो मानिंदैन, भातजुठो जुठो मानिन्छ । अतः पर्व विशेषका दिनमा चिउराकै प्रयोग ज्यादा गरिन्छ । अर्थात् त्यस अवसरमा विविध परिकारका साथमा चिउरा खाने गरिन्छ ।

चिउराकासाथमा मासुका अनेक परिकार, तरकारी, अचार, मिठाइ, दही, जाँड, रक्सीको चलन पाइन्छ । भोजमा राँगोको मासुको अनेक परिकार बनाइन्छ । भोजको किसिम हेरी खुताघासा (छ परिकार), च्याताघासा (आठ परिकार) प्रमुख मानिन्छ ।[१०९] भोजका अवसरमा गरिने खानपानका आफ्नै नियम छ ।[११०] जसअनुसार भ्वयसुकु (भोज खान ओछ्याउने लामो सुकुल) र लपते (सालको पातको लपेस) ठिक पारिसकेपछि र भोज खाने व्यक्तिहरू लहरै सुकुलमाथि बसिसकेपछि सर्वप्रथम चिउरा, पातको दुनामा अचार, रक्सी राख्नको निम्ति सलीचा (माटाको प्याला) हरेकको सामु राख्दै लगिन्छ । अनि पकाएको मासु आएपछि भोज सुरु हुन्छ । बीच–बीचमा अनेक परिकार आउँदै गर्छ । अन्त्यमा लप्सीको अमिलो (सुप), दही र सिसाफूसा (भिजाएको केराउ र फलफूलका टुक्रा) राखेपछि भोज खाने कार्य सम्पन्न हुन्छ ।[१११]

यसबाट यहाँको समाजमा प्रचलित भोजको परम्परा प्राचीनकालदेखि चल्दै आएको हो भन्ने देखिन्छ ।

बिस्केट पर्वका बेला खाइने भोजका विभिन्न प्रकारहरू मध्ये सम्हेय्बजी पनि एक हो । यद्यपि सम्हेय्बजीलाई भोज भनेर भनिंदैन । तर त्यसो भएपनि चाड पर्वका मुख्य दिनहरूमा बिहान भात खाइदैन । भात चोखो मानिंदैन । भातको ठाउँमा सम्हेय्बजी खाने गरिन्छ ।[११२] यसैले नेवार समाजमा चाड मनाउँदा वा संस्कार कर्म गर्दा देवदेवीका पूजापछि बिहान सम्हेय्बजी खाने परम्परागत चलन छ । विशेष गरेर आफुले मानी आएको देवदेवीलाई बलि चढाएर पूजा सम्पन्न गरेपछि त्यसको प्रसादको रूपमा देवस्थलमा नै वा घरमा आएर

---

[१०८] (क) गोपालराज वंशावलीमा चिउराको निम्ति "फलके" शब्दको प्रयोग ठाउँठाउँमा गरिएको छ । – वज्राचार्य र मल्ल, पा.टि.नं. ५२ (ख), पृ. ५८ (ख) पत्र ।
(ख) जयस्थिति मल्लका पालामा लेखिएको अभिलेखमा पनि "फलके" को उल्लेख परेको छ ।– रेग्मी, पा.टि.नं. १५ (क), पृ. ४ ।

[१०९] (क) पर लडवीन, *फुड रिच्युअल एण्ड सोसाइटी एमङ्ग दि नेवार्स,* स्वीडेनः अपसला रिसर्च रिपोर्ट इन कल्चरल एन्थ्रोपोलोजी, ई.सं. १९८५, पृ. २२ ।
(ख) मल्ल संस्कृतिभित्र खुता घासा, च्याता घासाका अतिरिक्त झिनिता घासा (१२ परिकार) र ८४ घासा (८४ ब्यन्जन) भन्ने पाइन्थ्यो । तथापि खानपानका सम्बन्धमा एकरूपता पाइँदैन । जस्तो कि च्याताघासा राखेर ब्राम्हणलाई ख्वाउने भोज र माग्नेलाई ख्वाउने भोजमा निकै अन्तर देखिन्छ । – वज्राचार्य, पा.टि.नं.१०६, पृ. ५५ ।

[११०] (क) नेपाली, पा.टि.नं. ३९ (क), पृ. ३८९ ।
(ख) भोजमा राखिने परिकारहरू ठाउँ, परिवेश, जाति, वर्ग आदि अनुसार फरक पाइन्छ । – वज्राचार्य, पा.टि.नं. १०६, पृ. ५६ ।

[१११] (क) प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।
(ख) भोजमा खाएका परिकारहरू पचाउनका लागि नै भोजको अन्तिमतिर रक्सी, अमिलो, दही, फलफूल आदि राखिने गरेको हो भन्ने देखिन्छ । – वज्राचार्य, पा.टि.नं. १०६, पृ. ५६ ।

[११२] भोजमा चोखोको निम्ति चिउराको प्रयोग आम रूपमा गरिन्छ । यसैले चाडपर्व, जात्रा उत्सव तथा संस्कार पर्व मनाउँदा भात खानु हुँदैन भन्ने मान्यता पाइन्छ । त्यस्तो बेला बिहान सम्हेयबजी र बेलुका भोज खाने चलन पाइन्छ । – गोपालभक्त धौबन्जार, *मध्यकालीन नेपाल उपत्यकाको सामाजिक जीवन* (अप्रकाशित विद्यावारिधि शोध प्रबन्ध), काठमाडौं : मानविकी तथा सामाजिक शास्त्र संकाय, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०६२, पृ. २७७ ।

परिवारका सबै सदस्यहरू जम्मा भएर सम्हेय्बजी खाने गरिन्छ । सम्हेय्बजीमा सियाबजी (विशेष चिउरा), बजी(चिउरा), भुटेको कालो भटमास, अदुवा टुक्रा, छोयला (पोलेर साँधेको राँगोको मासुको एक परिकार), सुकेको माछा, रक्सी मुख्य रूपमा हुने गर्छ ।[११३] यसदेखि बाहेक आफ्नो ईच्छाअनुसार उसिनेर साँधेको आलु, बोडी तारेको, लसुन, अण्डा, चतामरी, मुंग वा मासको बारा, आदि परिकार पनि हुने गर्छन् । सम्हेय्बजी देवतालाई चढाउने एकप्रकारको नैवेद्य विशेष भएकोले यसलाई पवित्र भोज मानिन्छ । यसैले यो मध्यान्ह अघि अथवा बिहानको खानाको रूपमा ग्रहण गरिन्छ । जसरी एउटा ठूलो भोज प्रायः गरेर बेलुकी पख हुने गर्छ, त्यसरी नै यो सम्हेय बजी पनि त्यसभन्दा अघि खाइने खानाको रूपमा लिने गरिन्छ । ऐतिहासिक स्रोतसामग्रीमा देवलदेवीले सम्हेय् भोज खुवाएको उल्लेख पाइन्छ ।[११४] बिस्केट चाडका अवसरमा आयोजना गरिने अर्को प्रकारको भोज नखःत्या भोज हो । यो भोज भोछीं अर्थात् परिवार स्तरमा आयोजना गर्ने गरिन्छ । विशेष गरेर यस भोजमा बिहेबारी गरेर दिइसकेका आफ्ना छोरीबेटी नातिनातिना दिदीबहिनी, भान्जा भान्जी, ज्वाइँ आदि आमन्त्रण गरिन्छ ।[११५] यो भोज मूल चाडको समापनतिर अर्थात् चाडको अन्तिमतिर आयोजना गरिन्छ । किनभने मुल चाडको बेला हरेकले आ–आफ्नै घरमा चाड मानिरहेको हुन्छ । अर्को कुरा, अघिल्ला अध्यायहरूमा नै उल्लेख गरि सकिएको छ कि बिस्केटका अवसरमा भक्तपुरका विभिन्न टोल, इलाकाहरूमा स्थानीय स्तरका विविध देवीदेवताका खटजात्राहरू हुने गर्छन् । यी स्थानीय देवदेवीका जात्राका अवसरमा त्यस स्थानमा स्थानीयवासी नेवारहरूले अन्यत्रका आफ्ना नातेदारहरूलाई आफ्नो क्षेत्रको जात्रा हेर्न निमन्त्रणा दिने गर्छन् । त्यसअवसरमा पनि स्थानीयवासीले अन्यत्र दिइराखेका आफ्ना छोरी ज्वाइँ, भान्जाभान्जी, नातिनातिनालाई बोलाएर भोज ख्वाउने गर्छन् ।[११६] यस आमन्त्रित भोजलाई पनि "नखःत्या भोज" नै भन्ने गरिन्छ ।

त्यस्तै अर्को प्रकारको भोजलाई "सीकः भ्वय" या "सीउकायगु भ्वय" भनिन्छ । यो भोज परिवारिक वा फुकी (तेह्र दिने दाजुभाइ) स्तरमा आयोजना गरिन्छ । विशेष गरेर यो भोज देवतालाई चढाएको बलि पूजासित सम्बन्धित हुन्छ । यसैले यो भोज बिस्केट जस्तो चाडका बेला मात्र नभएर अघि पछि जस्तो गुठी पर्व, कुलदेवताको पूजा वा देवालीका अवसरमा पनि आयोजना गर्ने गरिन्छ । परिवार वा कुलका थकाली (नाइके) लगायत पुरुषका आठ जेठा सदस्यहरूलाई सम्मिलित गराएर देवतालाई बलि चढाएको पशुको

[११३] मानन्धर, पा.टि.नं. ५२ (क), पृ. ५६६ ।

[११४] वज्राचार्य र मल्ल, पा.टि.नं. ५२ (ख), पृ. ५१ (ख) पत्र ।

[११५] शर्मा, पा.टि.नं. १३, पृ. १५१ ।

[११६] प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

टाउकोको आठ निश्चित् भागहरू जस्तो– दाहिने आँखा, देब्रे आँखा, कान, नाक, बंगारा जेष्ठता क्रमअनुसार आदरपूर्वक लःल्हायेगु (सम्मानका साथ हातमा दिने परम्परा) गरेर भोज खाने चलन यस भोजमा पाइन्छ । यस भोजमा मान सम्मानको कुरालाई हेरिने भएकोले यो बडो औपचारिक भोज हो ।[११७]

यसरी उल्लिखित भोजहरूका आ–आफ्नै नाम भएता पनि नेवारहरूका प्रायः सबै प्रकारका परम्परागत भोजलाई सजिलो गरेर एउटै शब्दमा भन्नुपर्दा लप्टे भ्वयः (सालको पातको थाली भोज) वा भ्होःभ्वयः (लहरै बसेर खाने भोज) को संज्ञा दिइन्छ । यस्ता भोज बिस्केट जस्तो चाडपर्वका अतिरिक्त गुठी, देवाली वा पारिवारिक बिहा, ब्रतबन्ध जस्ता अवसरमा पनि आयोजना गर्ने गरिन्छ । भोज खान बस्दा परम्परागत नीतिनियमहरू ख्याल गरिन्छ । जस्तो– एकै पंक्तिमा एकैसाथ बसेर खाने, एकै साथ खाना समाप्त गर्ने चलन यसमा पाइन्छ । त्यसैगरेर परिकार बाँड्ने क्रम, बाँड्ने शैली, शिष्टता (विशेष गरेर रक्सी दिने तरिकामा) र भोज आयोजनाका अन्य तरिका आ–आफ्ना कुल, परम्परा अनुसार निर्धारित गरिएका हुन्छन् ।

यसरी बिस्केटका अवसरमा भक्तपुरवासीहरूका घरघरमा आयोजना हुने भोज परम्पराले भक्तपुर भेकको यो प्रसिद्ध जात्रा बिस्केट केवल देवदेवीका धार्मिक क्रियाकलापसँग मात्र सम्बन्धित छैन । उहिलेका किम्बदन्ती र आख्यानहरूमा मात्र सीमित छैन । यसमा मनोरन्जनका अनेक पक्षहरू पनि छन् । जस्तो– साथीभाइ, इष्टमित्र जम्मा हुने, शुभकामना आदानप्रदान गर्ने, खुसी साटासाट गर्ने, मीठा–मीठा परिकारहरू बनाएर खाने, रमाइलो गर्ने आदि । भोजका अवसरमा हुने सुखद जमघटले समाजमा रहने विविध मानिसहरूलाई एक अर्कोसँग नजिक ल्याएर आपसी सम्बन्धलाई मित्रवत र घनिष्ट बनाउन मद्धत गर्दछ । यस दृष्टिले यसको सामाजिक पक्ष निक्कै मह□वपूर्ण देखिन्छ ।

## ७.६ जात्रा

बिस्केट जात्राको सामाजिक पक्षभित्र पर्न आउने मनोरन्जनका विभिन्न माध्यमहरू मध्ये एउटा सशक्त माध्यम जात्रा पनि हो । यस सांस्कृतिक पर्वको नाम नै बिस्केट जात्रा भएकोले यस पर्वको अवसरमा भक्तपुरमा सुरुदेखि अन्तिम दिनसम्म विभिन्न किसिमका जात्राहरू हुने गर्छन् । जस्तो– लिंगो उभ्याउने र ढाल्ने जात्रा, भैरव र भद्रकालीको रथ

[११७] शर्मा, पा.टि.नं. १३, पृ. १५१ ।

तान्ने जात्रा, रथ जुधाउने जात्रा, स्थानीय स्तरका देवदेवीका खटजात्राहरू अनि त्यससँग सम्बन्धित अन्य उपजात्रा र सांस्कृतिक क्रियाकलापहरू जुन छन्, ती सबै यहाँका प्रमुख देवीदेवताका परम्परागत विधिविधानभित्र केन्द्रित रहेर गरिने उपक्रम वा रीतिस्थिति भएतापनि त्यसभित्र मानिसका शदियौंदेखिको भाव, आस्था, विश्वास तथा त्यसबेला उसले गर्ने क्रियाकलापहरू जस्तो हाँस्ने, गाउने, नाच्ने जस्ता कुराहरूले मानिस सदैव मनभित्र उकुसमुकुसलाई गुम्साएर मात्र बाँच्तैन, कहिलेकाँही उन्मुक्त वातावरणमा रमाइलो पनि गर्ने गर्छन् भन्ने कुरा स्पष्ट हुन्छ ।

वास्तवमा आदिमकालदेखि नै मानिसको स्वभाव मनोरन्जनतर्फ उन्मुख भएको पाइन्छ । मनोरन्जनका साधनको अभावमा मानिसले सांस्कृतिक क्रियाकलापमा सहभागिता जनाएको देखिन्छ । यसमा कला, शीप, बिचार, भाव प्रस्तुत गर्दै सांस्कृतिक स्वरूप निर्माण गरेको देखिन्छ । उन्मुक्त ढंगले हाँस्ने, नाच्ने, गाउने जस्ता क्रियाकलाप गर्दै मनोरन्जनको स्वरूप निर्माण गरेको र त्यही स्वरूप एउटा सांस्कृतिक पहिचानको रूपमा स्थापित गरेको पाइन्छ । यसले मानिसका निराशा, कुण्ठा, दुर्भाग्य आदिलाई हटाएर उज्वल जीवनयापन गर्ने मार्ग देखाएको छ । यो मानसिक विकृतिलाई हटाउन जात्रा एउटा मह□वपूर्ण माध्यम पनि हो ।

प्राचीनकालदेखि नै यो ठाउँ आर्थिक रूपमा सम्पन्न र समृद्ध थियो । यहाँका बासिन्दालाई खान, लाउनको कुनै चिन्ता थिएन । थोरै परिश्रमले पनि आरामपूर्वक बाँचेका थिए । यसैले उनीहरूले यहाँको कला संस्कृतिको विकासतर्फ आफ्नो ध्यान केन्द्रित गरे । त्यसैको फलस्वरूप यहाँ अनेक किसिमका चाडपर्व, जात्रा, उत्सव र ती सँगसँगै आउने नाचगान, बाजागाजा, गुठीगाना, भोजभतेर आदि कुराहरूको विकास हुन थाले । प्रकारान्तरले मनोरन्जनका ती सबै माध्यमहरू देवीदेवता र धर्मकर्मसित जोडिन पुगेपछि यसले अझ व्यापक र विस्तृत रूप लिन थाल्यो । यसैले उपत्यकाको कुनै त्यस्तो नेवार बस्ती छैन होला जहाँ कुनै न कुनै स्थानीय देवीदेवताको नाममा जात्रा चलेको नहोस् । यसप्रकार धर्म पनि मिल्ने, मनोरन्जन पनि हुने र समाजमा आपसी एकता र सामाजिक सद्भाव पनि कायम रहने हुनाले यहाँको समाजमा परापूर्वकालदेखि आजसम्म पनि विभिन्न किसिमका जात्राहरू सञ्चालन हुँदै आएका देखिन्छन् ।

परापूर्वकालदेखि प्रत्येक वर्ष विक्रम संवत्सरको[११८] अवसरमा पर्ने गरी मनाइदै आएको भक्तपुरको प्रसिद्ध बिस्केट जात्राको परम्परा पनि प्रारम्भदेखि हालसम्म समाजकै मनोरन्जनका लागि प्रचलनमा आएको हो भन्ने देखिन आउँछ ।

राजकुमारीको नाकको प्वालबाट निस्केर आतङ्क र त्रासको वातावरण सृजना गर्ने एक जोडी नागनागिनीलाई एक साहसिक परदेशी युवकले मारेको घटनाको सम्झना स्वरूप नै यो जात्रा मनाउने प्रचलन सुरु भएको हो भन्ने लोक आख्यान अझै पनि यहाँको समाजमा प्रचलित रहेको पाइन्छ । हरेक वर्ष यसरी मारिएका नागनागिनीलाई एक लामो काठको लिंगोमा झुण्ड्याएर सार्वजनिक प्रदर्शन गरिने उत्सव नै कालान्तरमा आएर बिस्केट जात्रा नामले प्रख्यात भएको हो ।[११९] यसर्थ प्रारम्भिक दिनहरूमा यो जात्रा देवीदेवतासँग सम्बन्धित थिएन । जनसमुदायको मनोरन्जनका लागि नै यस जात्राको परम्परा सुरु भएको मान्न सकिन्छ । उल्लेखित नागनागिनी सम्बन्धी किम्बदन्ती रचेर रोचक ढंगले तात्कालीन समाजमा यस जात्राको परम्परा प्रस्तुत गरियो । हुन पनि "गोयुद्ध", "मल्ल युद्ध" जस्ता लिच्छवीकालीन अभिलेखहरूमा उल्लेखित उत्सवहरू[१२०] जस्तै यो उत्सव वा जात्रा पनि स्थानीय जनसमुदायलाई मनोरन्जन दिनकै लागि प्रचलनमा आएको देखिन्छ । अर्को कुरा नरेन्द्रदेवको अनन्त लिङ्गेश्वर अभिलेखमा गोयुद्धसँगै पताका (ध्वजा) शब्दको पनि उल्लेख हुन आएबाट त्यसबेला यस्ता मेला वा जात्राका अवसरमा ध्वजा विशेष पनि फहराउने गर्दथ्यो भन्ने देखिन्छ । भक्तपुरको बिस्केट जात्रा पनि ध्वजा फहराएरै सम्पन्न गरिने जात्रा भएकोले त्यो ध्वजा कुनै नागनागिनीको प्रतीक चिन्ह होइन, ध्वजा नै हो, जसलाई वीरध्वजा वा विश्वध्वजा भन्ने गरिन्छ । ध्वजामा उत्कीर्ण अभिलेखहरूमा पनि नागनागिनीको कुनै संकेत

---

[११८] केही मध्यकालीन स्रोतसामग्रीहरू (वर्षकृति थ्यासफू र ऐतिहासिक घटनावली) मा यो जात्रा चान्द्रमान तिथि अनुसार सञ्चालन हुने कुरा लेखिएको पाइन्छ । तर त्यसो भएपनि मनुको वचन भनी गौतमीतन्त्र नामक हस्तलिखित ग्रन्थमा चैत्र मसान्तका दिन ध्वजा फहराएर मेष संक्रान्तिका दिन सो ध्वजा ढालेर जात्रा सम्पन्न गर्नाले सर्वत्र सुख शान्ति र खुसीयाली फैलिने अनि शत्रु क्षय हुनेछ भनी यस जात्राको उपादेयताबारे स्पष्ट शब्दमा उल्लेख भएकोले यो जात्रा प्राचीनकालदेखि हालसम्म पनि सौर्यमान अनुसार नै चल्दै आएको पाइन्छ । – नेपाल वर्षक्रिया, राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म संख्या बी ४३७/१५, पत्र १ ।

[११९] लोकआख्यान नागनागिनी सम्बन्धी भएपनि, नागनागिनीकै अपभ्रंशबाट बिस्केट नामकरण भएको भनाइहरू पाइए पनि प्रामाणिक स्रोत सामग्री अध्ययन गर्दा अर्थात् नागनागिनीको प्रतीक मानिएको ती जोडी ध्वजामा त्यससम्बन्धी कुनै संकेत सम्म पनि पाइँदैन । – स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

[१२०] लिच्छवीकालमा विशुद्ध मनोरन्जनका लागि उत्सवको रूपमा पहलवान मानिसहरू जुधाउने, साँढे जुधाउने आदि चलन प्रचलित थियो । जसलाई गोयुद्ध, मल्ल युद्ध भन्ने गरिन्थ्यो । राजा नरेन्द्रदेवको अनन्त लिंगेश्वर अभिलेखबाट साँढे जुधाउँदा पताका (झण्डा विशेष) पनि रहन्थ्यो भन्ने थाहा हुन्छ । त्यस्तै शिवदेव, अंशुबर्माको लेले अभिलेखमा उल्लेख भएको मल्लयुद्ध गोष्ठीले कुस्ती प्रतियोगिताको प्रबन्ध गर्दथ्यो भन्ने थाहा हुन आउँछ । – वज्राचार्य, पा.टि.नं. ८१ (क), पृ. २८३ र ४३७ ।

पाइँदैन ।[१२१] यसरी विशुद्ध रूपमा मनोरन्जन प्राप्त गर्ने उद्देश्यले नै यो जात्रा प्रचलनमा आएको बुझिन्छ । तर स्मरणीय कुरा के छ भने यहाँको समाज धर्मभिरु चरित्रको समाज हो । यसैले समाजले गर्ने हरेक काम कुरालाई धर्मकर्मसँग जोडेर हेर्ने अथवा धार्मिक आवरणका कथाहरूसँग गाँसेर हेर्ने प्राचीन परम्परा रहेको देखिन्छ । त्यसैको फलस्वरूप पछिल्लो मल्लकालमा आएर यसजात्रालाई अझ बढी भव्यता र सजधजका साथ मनाउन यसमा तान्त्रिक विधिविधानले युक्त शैव र शाक्त परम्परा अनुरूप भैरव र भद्रकालीको रथजात्रा र साथमा स्थान गणेश, मातृकागण लगायतका देवीदेवताको खटयात्रा पनि गर्नुपर्ने परम्परा थपिए ।[१२२] यसले गर्दा यो जात्रा धार्मिक, सांस्कृतिक जात्रामा रूपान्तरण हुन गयो । बिस्केट जात्राको सांस्कृतिक उत्थानमा विशेष गरेर मल्ल राजाहरू विश्वमल्ल जगज्योतिर्मल्ल, जितामित्रमल्ल, भूपतीन्द्रमल्लका योगदानहरू निक्कै उल्लेखनीय छन् । जसले दुईदिने लिंगो जात्रामा सीमित रहेको बिस्केटलाई अझ व्यापक र विस्तृत रूप प्रदान गर्न रथजात्रा, खटजात्रा र त्यसैसँग सम्बन्धित अनेक विधिविधानहरू थपेर आठ रात नौ दिनसम्म धुमधामले मनाउनु पर्ने गरिदिए ।[१२३] फलस्वरूप यसजात्राको मनोरन्जनात्मक पक्षमा पनि विविधता थपिन पुग्यो । पहिले लिंगो जात्राबाट मात्र आनन्द लिने स्थानीयवासीहरू अब दुई परस्पर विरोधी समुहमा विभक्त भएर रथ तान्ने जात्रा, स्थानीय देवदेवीका खटजात्रा, भजन कीर्तन, नाचगान, भोजभत्तेर आदि सांस्कृतिक गतिविधिको माध्यमबाट अझ बढ्ता रमाइलो गरेर आनन्द लिन पाए । यसप्रकार बिस्केट जात्राको मनोरन्जन पक्ष निक्कै मह□वपूर्ण रहेको छ ।

बिस्केट पर्वका अवसरमा यहाँ विविध प्रकारका जात्राहरू मनाइने गरिन्छ । जसलाई निम्न अनुसार उल्लेख गर्न सकिन्छ । जस्तो –

**विश्वध्वज जात्रा :** ध्वजा फहराएर जात्रा गर्ने चलन वैदिक कालदेखि प्रचलित थियो । हिन्दु धार्मिक परम्परामा ध्वजा फहराउनुलाई शुभ संकेतको प्रतीक अर्थमा लिइन्छ । वैदिक ग्रन्थहरूमा इन्द्रध्वज उत्सवको उल्लेख पाइन्छ । मेघ, बादल, वर्षाका देवता इन्द्रलाई खुसी

---

[१२१] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

[१२२] (क) लम्साल, पा.टि.नं. १२, पृ. ५४ ।
(ख) सूर्यविक्रम ज्ञवाली, *नेपाल उपत्यकाको मध्यकालीन इतिहास,* काठमाडौं : रोयल नेपाल एकेडेमी, वि.सं. २०१९, पृ. १०५ ।

[१२३] मुनंकर्मी, पा.टि.नं.१५ (घ), पृ.३८–३९ ।

पार्न त्यतिबेला यो जात्रा मनाइन्थ्यो ।[१२४] वर्तमानमा इन्द्रजात्राको अवसरमा काठमाडौँ हनुमानढोका दरबारनेर उभ्याउने इन्द्रध्वज पनि त्यसैको प्रतिरूप मानिन्छ ।

भक्तपुरमा हरेक वर्ष विक्रम संवत् अनुसार वर्षको अन्तिम दिनको साँझपख दुईवटा विशाल ध्वजा सहितको बडेमाको काठको लिंगो उभ्याइन्छ र भोलिपल्ट अर्थात् नयाँ वर्षको पहिलो दिन त्यही समयमा ढालिन्छ । यसलाई विश्वध्वज जात्रा वा विश्वयात्रा भन्ने गरिन्छ किनकि यो भगवान विश्वेश्वर वा विश्वनाथ भैरवको सम्मान स्वरूप गरिएको जात्रा हो ।[१२५] यो जात्रा मनाउनाले सर्वत्र उत्साह, उमङ्ग र खुसीयाली छाउने, शत्रु क्षय हुने धार्मिक विश्वास स्थानीय बासिन्दाको रहेको छ ।[१२६] अर्कोतिर मनोरन्जनात्मक दृष्टिले हेर्दा बडेमाको काठको लिंगोलाई मोटो–मोटो डोरीद्वारा तानेर उभ्याउने कार्य निक्कै साहसिक, जोखिमयुक्त र चुनौतिपूर्ण कार्य हो । यसकालागि जनसहयोग, सहभागिता र आपसी समझदारीको जरुरत पर्दछ । यसैले कुनै यन्त्रको सहायता बिना विशुद्ध मानवीय शक्ति र बुद्धिको भरमा डोरी तानेर, बल लगाएर निक्कै होशियारीपूर्वक निक्कै बेरको तानातान पछि जब त्यो लिंगो हावामा उठेर गइ सीधा आकाशतिर फर्केर उभिन्छ तब सारा जात्रालु खुसीले झुम्मिन्छन्, तालीको गडगडाहटले वातावरण गुन्जायमान हुन्छ मानौं उनीहरूले कुनै युद्धमा विजयश्री प्राप्त गरे वा कुनै प्रतिस्पर्धापूर्ण खेलमा जीत हात पारे अथवा सर्वोच्च शिखरको टाकुरामा पुगेजतिको गौरवको अनुभव यतिबेला उनीहरूले गर्छन् । यसरी भक्तपुरवासीहरू बिस्केट पर्वका अवसरमा लिंगो जात्रा गरेर धर्म र पुण्यका साथै मनोरन्जन लिने गर्दछन् ।

**भैरव, भद्रकालीको रथयात्रा :** बिस्केट जात्राको दौरानमा भक्तपुरमा हरेक वर्ष शिव र शक्तिको प्रतीक स्वरूप भैरव र भद्रकालीको रथयात्रा हुने गर्दछ । भारतको पुरीमा पनि हरेक वर्ष असारमा जगन्नाथ (श्रीकृष्ण), बलराम र शुभद्राका रथयात्रा हुने गर्छन् । त्यसैगरेर हरेकृष्ण आन्दोलनको क्रममा भक्ति बेदान्त स्वामी प्रभुपादाको नेतृत्वमा ई.सं. १९६८ देखि विश्वका १०० भन्दा बढी शहरहरूमा वर्षैपिच्छे रथयात्रा हुँदै आएका छन् । अनि बंगलादेशको धर्मराइमा हुने रथयात्रा पनि एउटा मह□वपूर्ण जात्रा हो ।[१२७] तर भक्तपुरको यो रथयात्रा पूर्णरूपले नेपाली परम्परा, मौलिक शैली र तान्त्रिक विधिमा आधारित रहेको

---

[१२४] ज्वालाप्रसाद चतुर्वेदी (अनुवादक), *भविष्य पुराण,* हरिद्वारः रणधीर प्रकाशन, ई.सं. १९९५, पृ. ५४३ ।

[१२५] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग* (अप्रकाशित विद्यावारिधि शोधग्रन्थ), त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं. २०५०, पृ. ९५ ।

[१२६] नेपाल वर्षक्रिया, राष्ट्रिय अभिलेखालय, हस्तलिखितग्रन्थ, माइक्रोफिल्म संख्या बी ४३७/१५, पत्र १ ।

[१२७] http.//en./Wikipedia.org./wiki/Rathyatra; retrieved in 2011 Jan. 30.

पाइन्छ । यसमा कुनै प्रकारको यन्त्र जोडिँदैन ।[१२८] पूर्ण रूपमा तान्त्रिक विधिविधानले सुसम्पन्न हुने यस रथयात्राबाट समग्र राज्यमा सुख, शान्ति र समृद्धि फैलिने धार्मिक विश्वास स्थानीय बासिन्दामा पाइन्छ । नौ दिनसम्म चल्ने बिस्केट जात्राको शुभारम्भका साथै समापन पनि यही रथयात्राबाट हुन्छ ।[१२९] यस जात्रालाई मनोरन्जनात्मक दृष्टिकोणले हेर्दा मध्यकालीन समाजमा आजको जस्तो भौतिक सुख सुविधाहरूको प्रबन्ध थिएन, मनोरन्जनका आधुनिक साधनहरू वा माध्यमहरू थिएनन् । चाडपर्व, जात्राउत्सव नै त्यतिखेरका मानिसहरूको मनोरन्जनका मुख्य साधन थिए, जसमा खाने, पिउने, रमाइलो गरेर आनन्द लिने प्रयास गरिन्थ्यो ।[१३०] अतः धर्मको साथमा मनोरन्जन पनि लिने उद्देश्यले राजधानी भक्तपुर नगरलाई क्षेत्रगत आधारमा दुई समुहमा विभाजित गरेर नगरको मध्य वा केन्द्रविन्दु मानिने टौमढी चोकबाट यो जात्रा विधिसम्मत ढंगले प्रारम्भ गरिन्छ । तल्लो टोलकाले अगाडिबाट र माथिल्लो टोलकाले पछाडिबाट देवता सवार रथलाई तानेर आ–आफ्नो क्षेत्रतिर लाने जात्रा भएकोले यसलाई एउटा स्वस्थ प्रतिस्पर्धापूर्ण खेलको रूपमा पनि लिन सकिन्छ । खेलमा दुई पक्षमध्ये एउटाको हार र अर्कोको जीत त निश्चित् रूपमा हुन्छ नै । यसर्थ खेलरूपी यस जात्राको दौरानमा कुन पक्षको जीत होला अर्थात् रथ कतातिर जाला ? भन्ने उत्सुकता वा कौतुहलता आम दर्शकमा छाएको हुन्छ । रथ तान्नेहरू पनि रथलाई आ–आफ्नो क्षेत्रतिर लैजान ठूलो उत्साह उमङ्गका साथ लागि परेका हुन्छन् । यसरी यसमा धार्मिक मान्यता जे जस्तो भएपनि यस जात्राले स्थानीय जनसमुदायलाई मनोरन्जनको भरपुर आनन्द चाहिं अवश्य प्रदान गर्दछ ।

**स्थानीय खटजात्राहरू :** बिस्केटको बेला भक्तपुरको टोल–टोलमा स्थानीय स्तरमा अनेक देवीदेवताका खटजात्रा सम्पन्न गरिन्छन् ।[१३१] यी स्थानीय जात्राको माध्यमबाट पनि मानिसहरूले रमाइलो गर्ने गर्छन् । जस्तो कि जात्राको दिन बिहान सबेरै जात्रा गर्ने देवताको मन्दिरमा होम गरी बलि दिई पूजा गरिन्छ । त्यसपछि दिउँसो वा साँझपख भ्याइँ भ्याइँ बाजा बजाई उत्सव गरेर देवतालाई मन्दिरबाट बाहिर ल्याई सजाइएको खटमा राखी

---

[१२८] तीन तल्ले धातुको छाना भएको भैरवनाथको रथको निर्माण गुह्यतन्त्रको प्रतीक श्रीयन्त्रको आधारमा गरिएको हुन्छ। – मेरी एम.एण्डरसन, *दि फेष्टिबल्स अफ नेपाल,* लण्डनः जर्ज एलेन एण्डवीन, ई.सं. १९७१, पृ. ४४ ।

[१२९] भैरव–भद्रकालीको रथजात्राको परम्पराले बिस्केटलाई धार्मिक भावनासित सम्बन्धित गराउनुका साथै जात्राको रौनकता पनि बढाएको देखिन्छ ।

[१३०] बलराम कायस्थ, "प्राचीन तथा मध्यकालीन नेपालका चाडपर्वहरू", *दृष्टिकोण,* वर्ष २, अंक २, (आश्विन २०६०), पृ. ४४ ।

[१३१] रथको तुलनामा खट सानो र पांग्रा बिनाको हुन्छ । खटजात्रामा देवदेवीको प्रतिमालाई खटमा आरोहण गराइ मानिसहरूले बोकेर निर्दिष्ट स्थानमा पुऱ्याइन्छ र फेरि फर्काएर यथास्थानमा ल्याइन्छ अर्थात् यो खटयात्रा सीमित टोल इलाकाभित्र मात्र केन्द्रित रहन्छ । यसबाट जात्रा गरिने देवदेवी पनि स्थानीय क्षेत्रमा मात्र मान्य भन्ने देखिन्छ ।

तान्त्रिक विधिले पूजा गरिन्छ । तत्पश्चात सम्बन्धित गुठीयारहरूले खट बोकेर अघि बढाइन्छ । त्यस अघिल्तिर बाजागाजा, भजनकीर्तन सहितको लावालस्कर हुन्छन् । जात्रामार्गमा पनि ठाउँ–ठाउँमा बलि दिएर वा सम्हेय् मात्र चढाएर स्थानीय बासिन्दाहरूले विधिपूर्वक पूजा गर्छन् ।[१३२] यसरी देवतालाई बलि चढाएको दोपाया, चौपाया वा सम्हेय्लाई प्रसादको रूपमा ग्रहण गरी घर–घरमा सम्हेय्बजी खाने, भोज खाने, मदिरा पिउने, रमाइलो गर्ने जस्ता कार्य गरेर आनन्द लिने गरिन्छ । साथै राम्रो लुगा लगाउने, गरगहनाले सज्जिने, जात्रामा सहभागी हुने आदि गतिविधि पनि यस अवसरमा देखिन्छ ।

यसप्रकार उल्लिखित तीन थरीका जात्राहरू बिस्केटका अवसरमा भक्तपुरमा हुने मुख्य जात्राहरू हुन् । यी जात्राका माध्यमबाट पनि स्थानीयवासीले भरपूर आनन्द लिने गर्छन् । यस दृष्टिले यसको सामाजिक पक्ष निक्कै मह□वपूर्ण रहेको देखिन्छ ।

## ७.७ देवकार्य वा पूजापद्धति

बिस्केट जात्राको सामाजिकता भित्र पर्ने माथि उल्लेखित विभिन्न पक्षहरू (जस्तो राज्यको भूमिका, जनसहभागिता, गुठी, गुठीयार, भोज परम्परा, जात्रा) का अतिरिक्त देवदेवी र तिनका पूजापद्धति पनि अर्को एउटा मह□वपूर्ण पक्ष वा क्रियाको रूपमा रहेको छ ।

वास्तवमा भन्ने हो भने यहाँका प्रत्येक चाडपर्व वा जात्राको सर्वाधिक मह□वपूर्ण र सर्वप्रथम गरिने कार्य भनेको देवकार्य नै हो ।[१३३] यसैले चाड वा जात्रा सुरु हुनु अगावै घर–घरमा सरसफाई, लिपपोत, नुहाइ धुवाइ जस्ता कार्य गरेर आफ्नो चोटा कोठा घरचोकलाई शुद्ध र पवित्र बनाउने कार्य गरिन्छ । यसपछि आफ्नो कुल, वंश, पुर्खाले मान्दै आएको पुज्य देवदेवीको पूजा उपासनाका लागि नभइ नहुने सरजामहरू जोरजाम गर्न थालिन्छ । जात्रा सुरु हुनुभन्दा १५, २० दिन अघिबाटै पशु दोपाया, चौपायाहरूको प्रबन्ध गर्ने, रक्सी पार्ने, जाँड बनाउने, चिउरा कुट्ने जस्ता कार्यहरू घर–घरमा हुन थाल्छन् ।

यहाँको समाजमा जात्रा (यात्रा) को अवसरमा देवदेवीको पूजा आराधना गर्ने प्रचलन वर्तमान समयमा आएर विकास भएको नभएर परापूर्वकालदेखि चल्दै आएको मानिन्छ । अभिलेखीय प्रमाण अनुसार प्रसिद्ध लिच्छवी राजा मानदेव प्रथमले पूर्व र पश्चिमको विजय यात्रा सम्पन्न गरेर आएपश्चात् आफ्नी आमा राज्यवतीका साथ चाँगुनारायणमा आएर

---

[१३२] बलदेव जुजु र सुरेन्द्रमान श्रेष्ठ, *नेपाःया तान्त्रिक द्यः व तान्त्रिक पूजाविधि,* येंः लेखकद्वय स्वयं, ने.सं. ११०५, पृ. ३१ ।

[१३३] तर मोहनी (बडादशैं) जस्तो महान् चाड अनि बिहे ब्रतबन्ध जस्तो संस्कारकर्म गर्दा त्यस अघि पितृ कार्य पनि गरिन्छ ।

पूजापाठ, दानधर्म आदि पुण्यकार्य गरेको थाहा हुन आउँछ ।[१३४] यसैगरेर अन्य लिच्छवीकालीन अभिलेखहरूबाट पनि त्यसबेलाको समाजमा धार्मिक उत्सव वा यात्राका अवसरमा सम्बन्धित देवीदेवताको पूजाआजा गर्ने चलन रहेको तथ्य स्पष्ट हुन आउँछ ।[१३५] तर त्यतिबेला यो पूजापद्धति विशुद्ध रूपले वैदिक परम्परामा आधारित हुने गर्थ्यो ।[१३६]

पूर्वमध्यकालमा आएर यहाँको धर्ममा तन्त्रले ज्यादा मह□व पायो । हुनतः तान्त्रिक परम्पराको सुरुवात लिच्छवीकालमै भइसकेको देखिन्छ । किनकि शिवलाई भैरवको रूपमा मान्ने पाशुपत कापालिक वा मुण्डश्रृंखलिक सम्प्रदायको उद्भव अंशुवर्माकै पालामा भइसकेको कुरा संवत् ३२ को सांगा अभिलेखबाट थाहा हुन्छ ।[१३७] कापालिकहरूले भैरवको पूजा–उपासना गर्दा मान्छेको खप्पर, मान्छेकै रगत र सुराले गर्दथे ।[१३८] तर पनि मध्यकालको जस्तो तान्त्रिक पूजापद्धतिको व्यापकता प्राचीनकालमा थिएन ।[१३९] जे होस् पूर्व मध्यकालमा आएर पहिले नै स्थापित भइसकेका शैव, वैष्णव, बौद्ध, शाक्त सम्प्रदायका देवीदेवताका अतिरिक्त तन्त्रको प्रभाव परेपछि अनेक हात, शिर भएका, थरी–थरीका आयुध लिएका, विविध भाव र मुद्राका देवदेवीहरू स्थापित भए । विशेष गरेर यतिबेला समाजमा शैव र शाक्त धर्मले प्रभुत्व स्थापित गर्‍यो ।

यसरी लिच्छवीकालमा वैदिक धर्म, दर्शन, साहित्यको प्रधानताले गर्दा त्यसबेलाका चाडपर्व वा जात्रा उत्सवहरू पनि वैदिक देवताका नाममा मनाइने गरिन्थ्यो ।[१४०] यसमा पूजापद्धति पनि त्यही किसिमको हुन्थ्यो । तर पूर्वमध्यकालतिर आइपुग्दा तन्त्रमन्त्र प्रधान विचारधारा प्रादुर्भाव हुन पुग्यो । त्यसबेला निर्मित अनेक तान्त्रिक साहित्य र त्यसैबाट उद्भव भएका अनेक स्वरूपका देवदेवीका मूर्तिहरू, चाडपर्वहरू, पूजाविधानहरू प्रचलनमा

[१३४] वज्राचार्य, पा.टि.नं. ८१ (क), पृ. १०–१३ ।

[१३५] त्यसबेलाका जात्राहरू विविध देवता र तिनका पूजापद्धतिसँग सम्बन्धित रहेको कुरा निम्न तथ्यले देखाउँदछ । जस्तो– नरेन्द्रदेवको अनन्तलिङ्गेश्वर अभिलेखमा बराहयात्रा, शिवदेव र अंशुवर्माको खोपासी अभिलेखमा कैलाश यात्रा, शिवदेव द्वितीयको मुलखु बलम्बु अभिलेखमा पशुपतिनाथमा छाता चढाउने यात्राहरू क्रमशः भगवान विष्णु र शिवजीसँग सम्बन्धित यात्रा हुन् । – *ऐजन,* पृ. ४८५–८६, २७४–७५ र ५१०–१२ ।

[१३६] "नियत समय ननघाइ स्नान गराउनु, सुगन्धित बस्तु चढाउनु, फूल चढाउनु, बत्ती बाल्नु, वर्षबर्धन गर्नु, वर्षाकालमा बाजा बजाउनु, जप गर्नु आदि निमित्त पूजा गराउनु" । – *ऐजन,* पृ. ४८३ ।

[१३७] *ऐजन,* पृ. ३३६– ३७ ।

[१३८] यदुवंशी, *शैवमत,* पटना : राष्ट्र भाषा परिषद्, ई.सं. १९९५, पृ. ९५ र १५७ ।

[१३९] वीणा पौडेल, *काठमाडौँ उपत्यकाका प्रमुख उमा महेश्वर र भैरव मूर्तिहरू,* काठमाडौँ : साझा प्रकाशन, वि.सं. २०६०, पृ. ९९ ।

[१४०] द्वारोद्याटनयात्रा, कैलाशयात्रा, बराहयात्रा आदि त्यसबेलाका प्रसिद्ध जात्रा थिए । – वज्राचार्य, पा.टि.नं. ८१ (क), पृ. २७४ र ४८६ ।

आए ।[१४१] अतः मल्लकालीन यहाँको जनजीवनमा तान्त्रिक प्रवाहको लोकप्रियता निक्कै बढ्न गएको परिप्रेक्ष्यमा यहाँका चाडपर्व, जात्रा उत्सवहरू पनि तिनै तान्त्रिक देवीदेवताको नाममा सञ्चालन हुँदैआएका तथ्य ती जात्राका बेला सम्पन्न गरिने पूजाविधानहरूबाट थाहा लाग्दछ ।[१४२]

उपर्युक्त ऐतिहासिक पृष्ठभूमिलाई दृष्टिगत गर्दा पूजाका प्रचलित र सर्वमान्य विधि वैदिक र तान्त्रिक गरी दुई प्रकारको रहेको पाइन्छ । तर त्यसो भएपनि यहाँका अधिकांश चाडपर्व, जात्राका पूजापद्धति तान्त्रिक विधिमा ढलेको थाहा हुन्छ । यसो हुनुको मुख्य कारण भक्तपुर नगर स्थापनाकालदेखि नै तान्त्रिक पद्धतिमा आधारित नगर भएकोले हो । यहाँका अधिकांश देवीदेवता पनि तान्त्रिक प्रवाह कै छन् । मानेश्वरी, तलेजु, दुमाजु, अष्टमातृका, नवदुर्गा, भैरवनाथ, सिद्धिलक्ष्मी, गणेश, भीमसेन आदि शक्तिशाली देवता मानिन्छन् । तर यसको मतलव यहाँ सात्विक पूजा ग्रहण गर्ने देवताहरू छँदै नभएका चाहिं होइन । जस्तो – वाकुपति नारायण (सूर्यमढी टोल), तील माधव नारायण (टौमढी टोल), यक्षेश्वर महादेव (लायकु दरबार परिसर), दतात्रय मन्दिर (दतात्रय चोक) आदि प्रसिद्ध वैदिक देवताहरू पनि यहाँ पुज्य छन् । तर त्यसो भएपनि तन्त्र शक्तिको प्रधानताले गर्दा यहाँका नेवारहरूको आम पूजापद्धति तान्त्रिक विधिमा ढलेको पाइन्छ ।

बिस्केट जात्राका मूलदेवता विश्वनाथ भैरव हुन् । शिवपुराण अनुसार उनी साक्षात् शिवजीको दोस्रो रूप मानिन्छ । तन्त्रशास्त्रका मूल आधार भएकोले उनी सर्वाधिक शक्तिशाली देवता मानिन्छन् ।[१४३] यसैकारण यस जात्रामा विशेष रूपले विश्वनाथ भैरव वा आकाश भैरव, उनकी शक्ति भैरवी वा भद्रकाली (नकिंजु अजिमा), उनको बाहन वीर बेताल, मातृका गणहरू जस्तो– वाराही अजिमा, इन्द्रायणी, महाकाली, महालक्ष्मी, ब्रम्हायणी, महेश्वरी, लायकू दरबार भित्रकी दुमाजुदेवी, छुमा गणेश लगायत विविध स्थानका गणेशहरू, विविध नामका भैरवहरू आदिका पूजा विधानहरू हुने गर्छन् । यसरी यस जात्राको प्रमुख देवता भनेका तान्त्रिक दृष्टिले शक्तिशाली मानिएका देवीदेवताहरू हुन् । यसैले यस जात्राको दौरानमा प्रमुख देवदेवीका अतिरिक्त विभिन्न स्थानका स्थानीय गणेशहरू, भैरवहरू, भगवतीहरूको पूजा उपासना गरी तिनलाई सन्तुष्ट र प्रसन्न पार्ने प्रयास गरिन्छ । तान्त्रिक

---

[१४१] (क) लैनसिंह वाङ्गदेल, *प्राचीन नेपाली मूर्तिकलाको इतिहास,* काठमाडौँ : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३९, पृ. ३९ ।
(ख) मनवज्र वज्राचार्य, *हाम्रा चाडपर्वहरूको विवेचना,* काठमाडौँ : रत्न पुस्तक भण्डार, वि.सं. २०२५, पृ. २ ।

[१४२] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

[१४३] सि.एम. श्रीवास्तव, *भैरव तन्त्र सिद्धी,* दिल्ली : मनोज पब्लिकेशन्स, ई.सं. २००९, पृ. ५ ।

देवता भएकाले तिनको पूजापद्धति पनि तान्त्रिक विधिअनुरूपको हुन्छ अर्थात् पंचमकार (मास, मत्स्य, मदिरा, मुद्रा, मैथुन) विधिबाट पूजा गर्ने गरिन्छ ।

बिस्केट जात्राको बेला यहाँका नेवारहरूको पूजामा मद्य र पशुबलिको प्रयोग आमरूपमा देख्न सकिन्छ । शाक्त तन्त्रको प्रभावले गर्दा गणेशजीको पूजामा समेत माछा, मासु, जाँड, रक्सी, फुल आदि चढाउने गरिन्छ । उनलाई "हिफोद्यः" को रूपमा दोपाया, चौपाया पशुबलि दिएर रगत पिलाइन्छ ।[१४४] वास्तवमा भन्ने हो भने यतिबेला मास र मदिरा बिना यहाँ कुनै पनि पूजा कार्य सम्पन्न हुन सक्तैन । स्याबजी (विशेष चिउरा), कालो भटमास, अदुवा, छ्वेयला (पोलेको मासु) रक्सीको संयोजन भएको सम्हेय् बजी नैवेद्यको रूपमा देवतालाई चढाउने र पछि त्यसलाई प्रसादको रूपमा खाने आम प्रचलन पाइन्छ । सम्हेय्बजी भनेको एउटा चढाउने खाद्यवस्तु मात्र नभएर तान्त्रिक अर्थमा पंचत□वको प्रतीकका साथै जीवबलिको प्रतीक पनि हो । जीवलाई बलि दिएर गर्नुपर्ने पूजामा जीवको सट्टामा सम्हेय् चढाएर देवतालाई सन्तुष्ट गर्न सकिने यहाँको आफ्नै प्रकारको तान्त्रिक पद्धति रहेको पाइन्छ ।[१४५]

धार्मिक समाज भएकाले परापूर्वकालदेखि भक्तपुरवासी नेवारहरूको स्थानीय देवदेवीहरूप्रति ठूलो विश्वास, भक्ति र श्रद्धा रहेको पाइन्छ । यसैकारण व्यक्तिदेखि समुदायसम्म वा घरचोकदेखि बस्ती इलाकासम्मका बासिन्दालाई एक सूत्रमा आबद्ध गर्नमा तिनमा रहेको धार्मिक विश्वासले ठूलो भूमिका खेलेको हुन्छ । स्थानीयवासीलाई एकै सुत्रमा आबद्ध गर्नमा सक्षम भूमिका खेल्ने साना वा ठूला देवीदेवताको एउटा जालो नै यस जात्राका माध्यमबाट कार्यरत रहेको देख्न पाइन्छ । यो क्रम घरको देवखण्डदेखि नै सुरु हुन्छ । घरको बुइगलको एक सुनिश्चित् स्थानमा एउटा यस्तो पूजाकोठा बनाइएको हुन्छ, जहाँ आफ्ना ईष्टदेव वा कुलदेवता लगायत सधैं धुपबती गर्नुपर्ने देवदेवीहरू राखिएका हुन्छन् । घरको पूजाकोठामा मात्र होइन, घरको चोक वा रछ्यानको एक कुनामा पनि देवता हुन्छ भन्ने विश्वास यहाँका बासिन्दामा पाइन्छ, जुन देवतालाई लुकुमाद्यः भनिन्छ । आफ्ना चोकननी वा आसपासमा तीन आँखीप्वालले बनेको खुल्ला भित्तालाई नासःद्यः (नृत्यनाथ) मान्ने गरिन्छ । घरदेखि बाहिरको पहिलो दोबाटोलाई छ्वासः भनिन्छ र यो छ्वासः अजिमाको बासस्थान मानिन्छ । ढल निकासको मङ्ःलाई नागदेवताको बासस्थान मानिन्छ । टोलको एउटा मोडमा

---

[१४४] सुरेन्द्रमान श्रेष्ठ, *नेवाः संस्कृतिया इतिहास,* येँ: इन्द्र जवाहर सहयोग गुठी, ने.सं. ११२९, पृ. १८६ ।

[१४५] जुजु र श्रेष्ठ, पा.टि.नं. १३२, पृ. १३ ।

ट्वाः गणेश भनेर गणेशको सानो देवल हुन्छ । टोलको मध्यभागमा, डबली वा चोकमा प्रायः एउटा मन्दिर बनेको हुन्छ । अझ पर दूरीमा अरु व्यापक मान्यता पाएका झन ठूला धार्मिक देवस्थल अवस्थित रहेका हुन्छन् । विभिन्न तहका यी शक्तिशाली देवताहरूसँग प्रत्येक परिवारले दैनिक र नैमितिक रूपमा एउटा अविच्छिन्न सम्बन्ध स्थापित गरिराखेका हुन्छन् ।[१४६] देवदेवीसँग सम्बन्ध स्थापित गर्ने मुख्य माध्यम भनेको पूजापद्धति नै हो ।

पूजापद्धति दुई प्रकारको हुन्छ– नित्यपूजा र पर्वपूजा । दैनिक रूपमा गरिने पूजाविधिलाई नित्य पूजा भनिन्छ । यो पूजा सामान्य पूजा हो । यसका पूजा सामग्री पनि सरल रूपको हुन्छ । जस्तो – जल, अबीर, अक्षता, केसरी, जौः, तील, नैवेद्यः, दक्षिणा, फूलपाती, धूपबत्ती आदि । तर यसको विपरीत वार्षिक रूपमा पर्व विशेषमा गरिने पूजा पर्व पूजा हो । यो पूजा विशेष किसिमको हुन्छ । यो पूजा प्रायः गरेर तान्त्रिक पद्धतिबाट गरिने भएकोले यसमा मास, मत्स्य, मदिरा, फुल आदि वस्तु चढाएर पशुबलि दिएर सम्पन्न गरिन्छ ।[१४७]

पूजापद्धतिका जतिवटा विधि भएपनि त्यसको मूल उद्देश्य देवीदेवतालाई सन्तुष्ट पार्ने हो । यस जात्राको अवसरमा गरिने पूजा अर्चनाको मूल उद्देश्य पनि निर्दिष्ट देवतालाई सन्तुष्ट गरी त्यसबाट आफू, आफ्नो परिवार अनि समस्त मानव समुदायको कल्याण, सुख शान्ति र मनोकांक्षा प्राप्त गर्ने हो ।

यसरी देवदेवीलाई मान्ने आम परम्पराले समग्र नेवार समुदायलाई एउटै भावनात्मक सूत्रमा आबद्ध गरेको छ । आफ्नो अलग साझा पहिचानलाई ठोस रूपमा प्रस्तुत गर्न सकिएको छ । यहाँ प्रचलित यो प्रसिद्ध जात्रा बिस्केट त्यही एकात्मकताको ठोस अभिव्यक्ति हो । यस जात्राको माध्यमबाट सिंगै नगर वा बस्ती, परिवार वा कुलबीच आपसमा कसरी सम्बन्ध स्थापित हुन सक्दछ र तिनका बीच कस्तो अन्तरक्रिया हुन्छ भन्ने कुरा जान्न सकिन्छ । बिस्केट जात्राको सामाजिकताको शायद सबभन्दा बढी मह□वपूर्ण पक्ष यही हो ।

## ७.८ जात्रामा प्रत्यक्ष सरोकार राख्ने केही खास वर्ग वा जातिहरू

बिस्केट भक्तपुरवासीले परापूर्वकालदेखि मान्दै आएको एउटा प्रमुख चाड हो । यस चाडका अवसरमा यहाँ विविध जात्राहरू हुने गर्छन् । यस्ता जात्राहरू सम्पन्न गर्न योग्य,

---

[१४६] शर्मा, पा.टि.नं. १३, पृ. १४९–५० ।

[१४७] पूजा सम्पन्न भएपछि पुजारीले सर्वप्रथम आफ्नै निधारमा र त्यसपछि पूजामा सहभागी सबैलाई मोहनी (कालो टीका), फुस्रो सिन्दूरको टीका, स्वगं (लावा, अबीर, अक्षता दही राखेर मुछेको सगुन) लगाइ दिन्छन् । यस्तो पूजामा “मताकी” भनेर शिव र शक्तिको प्रतीक कलश र सुकुन्दाको प्रयोग हुन्छ । जस्तो – कलश स्थापना गरेको टपरीको धान शिव र त्यस भित्रको चामल शक्ति अनि त्यस्तै सुकुन्दाको बत्ती शिव र त्यसको तेललाई शक्तिको प्रतीक अर्थमा लिने गरिन्छ ।

अनुभवी र दक्ष जनशक्तिको आवश्यकता पर्दछ। वास्तवमा जात्रा सम्पन्न गर्नको निम्ति विविध जात र पेशाका वर्गबाट तिनका पेशासँग सम्बन्धित सेवा प्राप्त गर्नु आवश्यक मात्र नभएर अनिवार्य नै हुन्छ। यसको शैली जजमानी सेवासँग तुलनीय छ। अतः यस जात्रामा परम्परागत पेशाका आधारमा निर्धारण गरिएका विविध जात वा वर्गबाट तीसँग सम्बन्धित कामको सेवा अद्यापि प्राप्त हुँदै आइरहेको छ। अर्थात् पेशागत विशिष्टता र जातीय समूहको वर्गीकरणलाई उपयोग गरी तिनको बेग्लाबेग्लै भूमिका निर्धारित गरिएको हुन्छ। जस्तै –

### ७.८.१ पोडे

पोडे जाति नेवार सामाजिक संरचनामा सबभन्दा तल्लो जाति मानिन्छ। शुद्र वर्ग भएकोले यसको पानी चल्दैन। वंशावलीमा सुनका गहना नलाउनु, बिना काम घाम अस्त भएपछि शहर नपस्नु, पीठ देवताका द्यःपाला बनेर देवताका गहना समाली, नैवेद्य मागी खानु, माछा मारी, भंगेरा समाती बेची खानु, बडो जात नछुनु, गाई नखानु, सुंगुर खानु, मुर्दाका पोसाक टिपी लिनु यी कार्यहरू पोडे जातिले गर्छन् भनी उल्लेख गरिएको छ।[१४८]

पोडे जातिलाई द्यःला भनेर सम्बोधन गरिन्छ। बिस्केट जात्रामा प्रत्यक्ष सम्बन्ध रहेका द्यःलाहरू भक्तपुर नगरपालिका वडा नं. ११ भेलुखेल (ल्योसींखेल) का स्थानीय बासिन्दा हुन्। तथ्याङ्कगत आधारमा यस वडामा द्यःलाहरू मात्र १९% रहेका छन्। यस वडामा बाहेक अन्य वडाहरूमा द्यःलाहरू छैनन्।[१४९] वास्तवमा बिस्केट जात्रा (विश्वध्वज जात्रा) द्यःलाहरूकै टोल इलाका भेलुखेल (ल्योसींखेल) मा हुने भएकोले यसजात्रामा तिनको अहम् भूमिका हुनु अस्वाभाविक पनि लाग्दैन।

चैत्र मसान्तका दिन लिंगो उभ्याउनु अघि भद्रकाली पीठमा गंगापूजा नामको पूजा हुन्छ। भद्रकाली गुठीका नाइकेहरूले भद्रकाली पीठमा राँगो बलि दिई पूजा सम्पन्न गरेपछि तिनले द्यःलाहरूलाई सम्हेय्बजी, जाँड, रक्सी ख्वाएर बलि दिएको राँगोको टाउको अर्पण गरेर दिइन्छ।[१५०] यसरी द्यःलाहरूले राँगोको टाउको ग्रहण गरेर लिएपछि नायखीं बाजा बजाई मुस्वांप्वा बत्ती बाली "म्ये छँय जात्रा" सुरु गर्छन्। यो जात्रा भद्रकाली पीठ (भेलुखेल) देखि टौमढी चण्डिका भुजिंकोखासम्म गरिन्छ। यही जात्रामा आएका द्यःलाहरूले भेलुखेलमा गएर लिंगो घरबाट जात्राका लागि लिंगो बाहिर ल्याएर राखिदिने, कैंची काठ मिलाइ दिने,

---

[१४८] लम्साल, पा.टि.नं. १२, पृ. ४५।

[१४९] "भक्तपुर नगर वडा नं.११ परिचय", *भक्तपुर* पा.टि.नं. ३४, पृ. ४।

[१५०] भद्रकाली गुठीका नाइके माइला जधारी (वर्ष ७१) बाट २०६७७२ गते प्राप्त जानकारी।

लिंगोको डोरी बाँध्न सकेपछि यी ग्यःलाहरूले लिंगो उभ्याउन भयो भनेपछि मात्र लिंगो उभ्याउने जात्रा सुरु हुन्छ ।[१५१] यसबाट भक्तपुरका ग्यःला (पोडे) जातिको पनि बिस्केट जात्रामा मह□वपूर्ण भूमिका रहेको थाहा हुन्छ । साथै भोलिपल्ट लिंगो ढालेपछि जब रथ यात्रा प्रारम्भ हुन्छ तब त्यसमा पनि यस जातिको सक्रिय भूमिका रहन्छ विशेष गरेर देवता सवार रथलाई अन्यत्र लान नदिन र आफै कहाँ राख्न पछाडिबाट तानेर राख्ने प्रयास गर्दछन् ।

### ७.८.२ कुस्ले

विभिन्न शुभअवसरमा बाजा फुकी बजाउने, दुनियाँको चोक बढारी खाने, कापालिक भेषमा डमरु बजाई मागी खाने जातिको रूपमा यस जातिको वर्णन वंशावलीमा गरिएको छ ।[१५२]

कुस्लेलाई प्रचलित बोलीमा “जुगी” भन्ने गरिन्छ । “जुगी” जोगी शब्दको अपभ्रंशबाट बनेको शब्द हो । वास्तवमा नाथ सम्प्रदायका अनुयायी कुस्ले (कपाली) किन र कसरी अछूत हुन गए भन्ने कुराको ऐतिहासिक विश्लेषण हुनु जरुरी छ ।

भक्तपुरमा कुस्ले जातिले विभिन्न सांस्कृतिक पर्वहरूमा मुहाली बाजा बजाउने, मृत्यु संस्कारको बेला ङानुमा, न्हेनुमा लिन आउने गर्छन् । यस जातिले बजाउने परम्परागत बाजा भनेको मुहाली बाजा हो । यसमा मुहाली, तमोचा, ढोलक, सनाई, झ्याली तथा देशी मुहाली अर्थात् गुजराती बाजा पर्दछन् ।[१५३] कुस्लेहरू पोडेहरू जस्तो नगर बाहिर निश्चित् बस्ती इलाकामा नभएर नगर भित्रै छरिएर रहेका छन् । विशेष गरेर टौमढी टोल, सुकुलढोकातिर यिनीहरू ज्यादा भेटिन्छन् । यसबाट कुस्ले पानी चल्ने अछुत जाति हो भन्ने थाहा हुन्छ । बिस्केट जात्रामा यस जातिको पनि प्रत्यक्ष भूमिका रहेको पाइन्छ । विशेष गरेर बिस्केट जात्राका प्रमुख विधिविधानहरूमा नभई नहुने राजकीय रूपमा मान्य खड्ग, जसलाई मल्ल राजाको प्रतीक पनि मान्ने गरिन्छ, त्यसलाई जात्राको प्रमुख दिनहरूमा लायकू दरबारस्थित तलेजु मूलचोकबाट जात्रास्थलमा औपचारिक रूपमा विधिसम्मत ढंगले यो तरवार लैजाँदा त्यस अघि–अघि मुहाली बाजा बजाउने कुस्लेहरूको टोली पनि रहेका हुन्छन् । यसबाट कुस्लेहरूको यो बाजा पर्व वा जात्रा आउन लागेको संकेत स्वरूप बजाउने बाजा हो भन्ने बुझिन्छ ।

---

[१५१] भेलुखेलका स्थानीय बासिन्दा धनबहादुर ग्यःला (वर्ष ७३) बाट २०६७/२/३ गते प्राप्त जानकारी ।

[१५२] लम्साल, पा.टि.नं. १२, पृ. ४६ ।

[१५३] कुस्ले समाजका अष्टलाल कपाली (वर्ष ६२) बाट मिति २०६४/१२/२७ गते प्राप्त जानकारी ।

### ७.८.३ कसाई

पोडे, कुस्ले जस्तै कसाई पनि नेवार समाजको तल्लो वर्गका जाति हुन् । पोडेले नगरको फोहर उठाउने, कुस्लेले मृत्यु संस्कारका बेला दान लिन आउने अनि कसाईले मासुको आपूर्तिका लागि राँगा काट्ने गर्दछन् । भक्तपुरमा पोडेहरू नगर बाहिर, कुस्लेहरू नगर भित्रै अनि कसाईहरू नगरको सीमा क्षेत्रहरूमा परम्परागत रूपमा बसोवास गर्दै आएका छन् । महाकाली पीठ निकट भोलाछें, इताछैं, नःपुखु नजिक तेपुच्वे लगायत देगमना, ताहामला, चासुख्य, क्वाछेंमा कसाईहरूको बस्ती बाक्लै देखिन्छ । यिनलाई प्रचलित बोलीमा "नाय" भन्ने गरिन्छ । जगदीशचन्द्र रेग्मीले कसाई जातिलाई महिषपालवंशी शासक वर्गकै शाखा सन्तान हुन सक्दछ भन्ने अनुमान गर्नु भएको छ[१५४] र कसाईहरूले पनि आफूलाई क्षेत्री भएको दावा गर्दछन् तर अनेक कारणले गर्दा समाजमा यिनले तल्लो स्थान लिनु परेको देखिन्छ ।

दुनियाँको मुर्दा घाट लैजाँदा बाजा बजाउने अनि राँगो काट्ने र मासु बेच्ने कार्य कसाई जातिको प्रमुख परम्परागत पेशा हो भनेर वंशावलीमा उल्लेख छ ।[१५५] देवपूजा वा जात्रामा द्यःखिं, मृत्यु संस्कारमा सिखिं र देशवासीमा सूचना प्रवाह गर्दा नायखिं चोयकेगु बाजा बजाउने जातिका रूपमा यो कसाई जाति परिचित छन् ।[१५६] बिस्केट जात्राका विविध विधिविधान सम्पन्न गर्दा यस जातिले नायखिं बाजा बजाउने गर्दछन् । जस्तो – भाजंखचा जात्रा, मेय् छँय (कपः) जात्रा आदिमा यस जातिले अद्यापि यो बाजा बजाउँदै आएका छन् ।

### ७.८.४ प्रजापति (कुम्हाले)

वंशावलीमा कुम्हालको व्यवस्थाबारे यस्तो उल्लेख छ । "माटाका भाँडा पार्नु सर्कारलाई दस्तुर दि बेच्नु ।"[१५७] भक्तपुरको वडा नं. १२ स्थित तालाक्व टोल कुम्हालेहरूको बाहुल्यता भएको टोल हो । परम्परागत कामको आधारमा यी कुम्हालेहरू हाकुज्या प्रजापति (कालो माटोको काम गर्ने) र ह्याउँज्या प्रजापति (रातो माटोका काम गर्ने) विशेषणले युक्त छन् ।[१५८] भक्तपुरमा तालाक्वः टोलका प्रजापतिलाई हाकुज्याः प्रजापति र थनेः (माथिल्लो)

---

[१५४] रेग्मी, पा.टि.नं. ८७ (क), पृ. १० ।

[१५५] लम्साल, पा.टि.नं. १२, पृ. ४६ ।

[१५६] भक्तपुरमा नायखीं बाजा बजाउने कसाईहरूका ९ वटा समूह छन् । जस्तो –जेला, लामुगा ,क्वाठण्डौ, क्वाछेँ, व्यासी, चासुख्य, ताहामला, देगमना, इताछैं ।–गेट मैथ्यू वेग्नर, *दि नायखीं बाजा अफ भक्तपुरः स्टडीज इन नेपाल ड्रमीङ्ग, दोश्रो भाग,* वेसवडेन : फ्रान्ज स्टेनर भर्लाग, ई.सं. १९८८, पृ.६४–६७ ।

[१५७] लम्साल, पा.टि.नं. १२, पृ. ४८ ।

[१५८] नेपाली, पा.टि.नं. ३९ (क), पृ. १६७ ।

टोलका प्रजापतिलाई ह्याउँज्या प्रजापति भन्ने गरिन्छ ।[१५९] तालाक्व टोल (कुम्हाले टोल) मा पनि बिस्केटका अवसरमा लिंगो उभ्याइन्छ । यस लिंगोलाई जेठा गणेश लिंगो भनिन्छ । यो लिंगो हरेक वर्ष चैत्र मसान्तका दिन उभ्याएर वैशाख ५ गते बिहान ढालिन्छ । यस लिंगो जात्राका प्रमुख हर्ताकर्ता भनेका स्थानीय कुम्हाले (प्रजापति) हरू नै हुन् । यस सम्बन्धी उनीहरूका गुठी पनि छन्, जसलाई जेठा गणेश लिंगो जात्रा गुठी भन्ने गरिन्छ । यो जात्रा संचालनका लागि मल्लकालमा हाकुदेव प्रजापति (सत्यनारायण प्रजापति) भन्ने एक जना कुम्हालेले जग्गा गुठी राखी दिएको र त्यसैको आयस्ताबाट वर्षैपिच्छे यो जात्रा चल्दै आएको छ ।[१६०] जेठा गणेश कुम्हाले टोलका प्रसिद्ध देवता हुन् । यी गणेशलाई कुम्हाले (प्रजापति) हरूले सीपका देवता अर्थात् विश्वकर्माको अतिरिक्त कुल देवताका रूपमा समेत ग्रहण गरेको पाइन्छ ।[१६१]

यसबाट बिस्केट जात्रामा विशेष गरेर तालाक्व टोलको लिंगो जात्रासँग स्थानीय प्रजापतिहरू प्रत्यक्ष रूपमै सम्बद्ध छन् भन्ने कुरा स्पष्ट हुन आउँछ । यसदेखि बाहेक जात्राका मुख्य दिनहरूमा माटाका भाँडाहरूमा पानी भरेर सर्वसाधारण जात्रालुहरूलाई पानी पिलाउने जस्ता विशुद्ध सेवाभावका काम पनि यस जातिबाट हुँदै आइरहेको छ । कुम्हालेहरूको यस सेवा कार्य लिच्छवीकालीन पानीय गोष्ठीसँग मिल्दोजुल्दो देखिन्छ । किनकि प्राचीनकालमा ठूलठूला जात्रा, मेला आदि प्रशस्त जनता भेला हुने अवसरमा जनतालाई पानी ख्वाउने पानीय गोष्ठी सक्रिय भइ देखापर्ने गर्थे ।[१६२] बिस्केट जात्रामा देखिने कुम्हालेहरूको यस कार्यबाट पानी ख्वाउने गोष्ठी केही अंशमा अझै कायम रहेको देखिन्छ ।

यसप्रकार भक्तपुरको बिस्केट जात्रासँग यहाँका प्रजापति (कुम्हाले) हरू दुई किसिमले संलग्न छन् भन्ने कुरा थाहा हुन आउँछ । पहिलो – जेठा गणेश लिंगो जात्रा, दोस्रो– तिर्खा प्यासले सताएका सर्वसाधारण जात्रालुहरूलाई पानी ख्वाएर शीतलता दिने ।

### ७.८.५ मानन्धर (सायमी)

भक्तपुरको बिस्केट जात्रामा मानन्धर जातिको पनि मह□वपूर्ण भूमिका रहेको पाइन्छ । विशेष गरेर यस जात्रामा मानन्धरहरू प्रत्यक्ष रूपमा दुई किसिमले संलग्न हुँदै

---

[१५९] प्रजापति समाजका केन्द्रीय प्रतिनिधि केदारप्रसाद प्रजापति (वर्ष ७५) बाट मिति २०६६/१२/१९ गते प्राप्त जानकारी ।

[१६०] प्रजापति गुठीका सदस्य दुर्गाप्रसाद प्रजापति (वर्ष ७४) बाट मिति २०६४/१/२ गते प्राप्त जानकारी ।

[१६१] मानन्धर, पा.टि.नं. ३९ (ख), पृ. १४ ।

[१६२] वज्राचार्य, पा.टि.नं. ८१ (क), पृ. २८६ ।

आएका छन्– लिंगोजात्रा र रथजात्रामा डोरी बाँध्ने सम्बन्धी कार्य, अर्को काहाँ बाजा बजाउने ।

मानन्धर जातिलाई नेपाल उपत्यकाका आदिवासी जाति मान्न सकिन्छ । अंशुवर्माको साँगा अभिलेखमा तेल पेल्ने कोलको कर माफी गरेको उल्लेख पाइन्छ ।[१६३] जयस्थिति मल्लको सुधारमा मानन्धरलाई तेल पेल्ने एवं पाटी पौवा निर्माण गर्ने काम सुम्पेको देखिन्छ ।[१६४] वंशावलीमा तेल पेली बेची खानु, बाबियाले खट बाँध्नु भनेर यस जातिको उल्लेख गरिएको पाइन्छ ।[१६५] त्यस्तै भूपतीन्द्र मल्लको समयमा राजभरिया र रणजीत मल्लको विवाहमा ध्वजा बोक्ने कार्यमा यी मानन्धरहरू खटिएको देखिन्छ ।[१६६]

परापूर्वकालदेखि तेल पेल्ने काममा दक्ष अर्थात् एक मुरी तोरीको २३ पाथी सम्म तेल निकाल्न सक्ने खूबी भएकै कारणले गर्दा मल्ल राजाहरूले बिस्केट जात्रामा मानन्धर जातिलाई भैरवनाथको रथ निर्माणमा बेतको डोरी र लिंगो जात्रामा धागोको मोटो डोरी बाँध्ने सम्बन्धी कामको जिम्मेवारी सुम्पेको हो । विशेष गरेर फलामका किल्ला काँटीको प्रयोग बिना काठै काठबाट बनाइने पेगोडा शैलीको भैरवनाथको रथका ठूलठूला अंग प्रत्यङ्गहरूलाई बेतको डोरीद्वारा मजबुत ढंगले कसेर सिंगो रथ तयार गर्नुमा यस जातिको ठूलै शीप रहेको देखिन्छ ।[१६७]

भक्तपुरको बिस्केट जात्रामा खास गरेर थःने (माथिल्लो टोल) का मानन्धरहरूका दुई वटा गुठी (समूह) सक्रिय रूपमा लागेको पाइन्छ । जस्तो कि लिंगो जात्रा सम्बन्धी कार्यमा गोलमढी टोलका मानन्धरहरू अनि भैरवनाथको रथ निर्माण सम्बन्धी काममा दतात्रय सकुलानेका मानन्धरहरू प्रत्यक्ष रूपमा संलग्न हुने गर्छन् । गोलमढी टोलका मानन्धरहरूले लिंगो वनमा गएर लिंगो ल्याउनेदेखि लिएर जात्राको दिन लिंगो उभ्याउने कार्यमा समेत

---

[१६३] *ऐजन,* पृ. ३३६–३७ ।

[१६४] चन्द्रविक्रम बुढाथोकी (सं.), *जयस्थिति मल्लको सुधार,* काठमाडौँ : साझा प्रकाशन, वि.सं. २०३९, पृ. १८ ।

[१६५] लम्साल, पा.टि.नं. १२, पृ. ४७ ।

[१६६] चुन्दा वज्राचार्य (सं.), *"अप्रकाशित धरःपौ–भूपतीन्द्र मल्लको गोदेश भ्रमण", "अप्रकाशित धरःपौ, न्यातपोल देवलको निर्माण" र "रणजित मल्लको विवाहको धरःपौ",* काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय कीर्तिपुर, वि.सं. २०४२–४३ ।

[१६७] यसरी डोरी बाँट्ने र बाँध्ने काम मानन्धर जातिलाई नै किन सुम्पिएको भन्दा त्यस सम्बन्धी कामको ज्ञान सीप प्रविधिमा दक्ष भएको हुनाले नै हो । किनभने मानन्धरको परम्परागत पेशा भनेको तोरी जस्ता तेलजन्य वस्तुलाई पेलेर तेल उत्पादन गर्नु हो । यसरी तोरी पेलेर तेल निकाल्ने सालमा ठूलठूला काठलाई छेंगुखिपः = नः (मजबुत डोरी) ले बाँधेर बढी भन्दा बढी तेल निकाल्ने खुबी भएकोले नै मानन्धर जातिलाई यस कार्यको जिम्मेवारी दिइएको हो । – भक्तपुर मानन्धर (माचः) गुठीका मूलनाइके पद्मबहादुर मानन्धर (वर्ष ७६) बाट मिति २०६७/४/४ गते प्राप्त जानकारी ।

सहयोग पुऱ्याउने गर्दछन् । त्यस्तै दतात्रयका मानन्धरहरूले भैरवको रथ पूर्ण रूपले तयार गरिसकेपछि जात्राको दिन रथका अगाडि–पछाडि चार–चारवटा धागोका मोटा–मोटा डोरी ल्याएर बाँध्ने गर्दछन् । मानन्धर जातिले रथमा डोरी बाँधेर रथ तान्न भयो भनेपछि मात्र रथ तान्ने जात्रा प्रारम्भ हुन्छ । यसबाट जात्रामा यस जातिको मह□वपूर्ण भूमिका रहेको स्पष्ट हुन्छ । भक्तपुरका मानन्धर भित्रपनि माद्यः, पतासी जस्ता अनेक भेद पाइन्छन् । भैरवको रथ सम्बन्धी काम माद्यः मानन्धरहरूले गर्दछन् ।[१६८]

### ७.८.६ चित्रकार (पुँ)

पौभाचित्र लेख्ने, देवीदेवताका मुकुण्डो बनाउने कार्य चित्रकार (पुं) जातको परम्परागत पेशा हो । नेपालमा चित्रकलाको विकाससँगै चित्रकार जातिको उदय भएको अनुमान हुन्छ र चित्रकलाको विकास वास्तुकलाको विकास भन्दा अघि देखि भएको हुनाले चित्रकार जाति यहाँका प्राचीन जाति मान्न सकिन्छ ।[१६९] हुनपनि उपत्यकामा नेवार संस्कृतिमा आधारित जति पनि विहार, चैत्य, मठमन्दिरका देवीदेवताहरू छन् वा जात्रा पर्व हुँदा अन्तिममा देवदेवीका आँखा खोल्ने पवित्र लेखन चित्रकार जातिबाटै हुँदै आएकोले यो कुरा सत्य मान्न सकिन्छ ।

चित्रकारहरू उपत्यकाभरि नै फैलिएर रहेका छन्, तर पनि अन्यत्रको तुलनामा भक्तपुरमा यिनको संख्या ज्यादा भेटिन्छ ।[१७०] भक्तपुरमा पनि विशेष गरेर टौमढी, तचपाल, गछें, थालाछें आदि टोलहरूमा यिनको उपस्थिति बाक्लै देखिन्छ । हाल यिनका ३ वटा गुठी यहाँ सक्रिय छन् – भैलःगुठी नासमना, तधं गुठी थालाछें, देसला गुठी टौमढी ।

हरेक वर्ष हुने बिस्केट जात्रामा चित्रकार जातिको पनि प्रत्यक्ष सम्बन्ध रही आएको छ । विशेष गरेर सिकर्मी र मानन्धरहरूद्वारा काठ र बेतको डोरीले कसेर चारवटा विशाल पांग्रामाथि भैरवको रथ ठड्याएपछि त्यसलाई रंगरोगनले सजाउने काम यही चित्रकार जातिबाट हुँदै आएको छ । यसक्रममा रथका चारवटा पांग्रामा भैरव, महादेव र नृत्यनाथको प्रतीक स्वरूप त्रिनेत्रको चित्र कोरेर त्यसमा आँखा खोलेर जीवन्तता दिने काम गरिन्छ । यसदेखि बाहेक विशाल लिंगोमा फहराउने दुई वटा विश्वध्वजाको निर्माणसँग पनि यस जातिको प्रत्यक्ष संलग्नता रहेको पाइन्छ । नवदुर्गाको मुकुण्डो बनाएर त्यसमा जीवन्तता

---

[१६८] *ऐजन* ।

[१६९] विष्णु चित्रकार, "चित्रकार पुंतयेगु बारे छुं खं न्यने कने", *लुमन्ती पौ,* (२०६३ फागुण), पृ. ४१ ।

[१७०] नेपाली, पा.टि.नं. ३९ (क), पृ. १७० ।

दिने कार्यमा निरन्तर लागिरहेका दक्ष कलाकार पूर्ण चित्रकार (भक्तपुर तचपाल निवासी) ले नै वर्तमान वीरध्वजाको निर्माण चार महिना लगाएर गरेका हुन् । यसक्रममा त्यस ध्वजालाई पुनर्जीवन दिन परम्पराकै शैली र आकृतिमा ल्याउन उनले निक्कै संयम र मेहनत गर्नुपरेको थियो । विशेष गरेर षटकोण र अष्टमंगल वरिपरि विभिन्न बुट्टाले सजाई युगौंयुगको कलाकारितालाई जीवन्तता दिने काम गरेका छन् ।[१७१]

### ७.८.७ ज्यापू समुदाय

भक्तपुरको बिस्केट जात्रामा सबैभन्दा ज्यादा योगदान यहाँका स्थानीय ज्यापू समुदायको रहेको पाइन्छ । जात्राको बेला रथ तान्ने, रथमा बसेर हप्पाः दिने (होस्से भनेर रथ तान्न निर्देशन दिने), लिंगो उभ्याउने, ढाल्ने, देवदेवीका खट बोक्ने, जात्रामा विभिन्न थरीका बाजा बजाउने, भजन गाउने, नाच नाच्ने, जात्रामा देवदेवीका पूजाको प्रबन्ध मिलाउने, पूजा गर्ने जस्ता सुरु भएदेखि अन्त्य नभएसम्मका विविध क्रियाकलापहरूमा यिनै ज्यापू समुदायका मानिसहरू सक्रिय रूपमा लागेका हुन्छन् । यसबाट के कुरा स्पष्ट हुन आउँछ भने यिनको प्रत्यक्ष सहयोग र संलग्नता बिना यो जात्रा सम्पन्न गर्न सकिने कुरा असंभव जस्तै देखिन्छ ।

ज्यापूहरू भक्तपुरका प्राचीन बासिन्दा हुन् । यिनको परम्परागत पेशा खेती किसानी गर्नु हो । अहिले पनि यहाँ बहुसंख्यक जनता ज्यापू नै छन् । भक्तपुर नगरका सबै वडाहरूमा यिनीहरूको उपस्थिति बाक्लै रूपमा भेट्टिन्छ । यस परिप्रेक्ष्यमा यिनको सहयोग र सहभागिताबाट नै बिस्केट जात्रा निर्वाध रूपमा सम्पन्न हुँदै आइरहेको देखिन्छ ।

बिस्केट जात्राका विविध देवदेवीसँग सम्बद्ध अनेक गुठीहरू यहाँ अझै पनि क्रियाशील छन् । ती गुठीका नाइकेहरू परम्परागत चलन अनुसार सम्बद्ध टोल इलाकाका ज्यापूहरू नै हुने गर्छन् । जस्तो– उदाहरणको लागि भैरवनाथ गुठीलाई लिन सकिन्छ । यस गुठीका मूलनाइके र नाइके हुन पाउने पुर्ख्यौली अधिकार केवल लाकोलाछें टोल इलाकाका ५० घर छुकाङ, चवाल, सुवाल, घेमोसुकु थरका ज्यापू समुदायभित्र मात्र केन्द्रित रहेको छ ।[१७२] त्यस्तै भद्रकाली गुठीमा पनि लय्को र लिविचोकका जधारी र लिविहरू परम्परादेखि नाइके हुँदै आइरहेका छन् ।[१७३] यसदेखि बाहेक यसजात्रामा परापूर्वकालदेखि ज्यापूहरूका अनेकानेक भूमिका निर्धारित हुँदै आएका छन् । जस्तो– कोही रथयात्राको बेला डोरी समातेर रथ तान्ने,

[१७१] सम्बद्ध व्यक्ति पूर्ण चित्रकारबाट मिति २०६७/१२/२८ गते प्राप्त जानकारी ।

[१७२] भैरवनाथ गुठीका नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट २०६७ । ७ १८ गते प्राप्त जानकारी ।

[१७३] भद्रकाली गुठीका मूलनाइके माइला जधारी (वर्ष ७१) बाट २०६७ । ७ २७ गते प्राप्त जानकारी ।

कोही रथमा बसेर रथ तान्न निर्देशन दिने, कोही भजन गाउने, कोही बाजा बजाउने, कोही चिराग बत्ती बाल्ने आदि आदि ।[१७४]

यद्यपि नेवार समाजको सामाजिक मर्यादाक्रममा ज्यापू समुदाय माथिल्लो स्थानमा देखिँदैन । तर त्यसो भए पनि समाजप्रति यिनको योगदान मह□वपूर्ण रहेको तथ्य बिस्केट जात्राका अवसरमा यिनले जनाउने सक्रिय सहभागिताबाट स्पष्ट हुन आउँछ ।

**७.८.८ जंगम**

भक्तपुरको बिस्केट जात्रासँग वीर शैव सम्प्रदायका आचार्य जंगमहरूको पनि विशेष सम्बन्ध रहँदै आएको पाइन्छ । नौ दिनसम्म चल्ने भैरवनाथको रथयात्रामा कुनै प्रकारको विघ्नबाधा उत्पन्न नहोस् भन्नाका लागि जात्रा सुरु भएदेखि अन्त्य नभएसम्म टौमढी टोल स्थित जंगम मठभित्र तान्त्रिक विधि बमोजिम विशेष व्यवस्था गरिएको हुन्छ ।

यद्यपि भक्तपुरको नेवार सामाजिक संरचना भित्र यी जंगमहरूको उल्लेख कतै भएको पाइँदैन । तर त्यसो भए पनि नेपाल उपत्यका विशेष गरेर भक्तपुरमा शैव धर्मको उत्थान र विकासमा जंगम जातिको ठूलो भूमिका रहँदै आएको पाइन्छ । अहिले पनि भक्तपुरका प्रमुख शिवालयहरू जस्तो– दरबार इलाकाको यक्षेश्वर महादेव मन्दिर, नासमना टोलको नृत्यनाथ मन्दिर, गुण्डुको अनन्तलिङ्गेश्वर, सिपाडोलको डोलेश्वर आदि मन्दिरहरूका मुख्य आचार्य (पुजारी) यिनै जंगमहरू रहेका छन् ।[१७५]

बिस्केट पर्वमा सम्पूर्ण रथयात्राको सञ्चालन जंगम मठभित्रबाट गोप्य रूपमा तान्त्रिक विधिबाट हुने गर्छ ।[१७६] मकर संक्रान्तिका दिन जंगम मठमा वीर शैव सम्प्रदायका प्रमुख देवता वीरभद्र, विश्वेश्वर देवताहरूलाई घिउले छोपेर राख्ने चलन छ । त्यही घिउले शिवरात्रीमा रोटी पकाइन्छ । यसरी रोटी पकाउँदाको बेलाको गोल र वीरभद्रको जलले दही चिउरा मुछिन्छ[१७७] र बिस्केट जात्रा सुरु भएपछि सोही दही चिउरा र गोलको मिश्रण लिएर एकजना जंगम आचार्य जंगम मठको प्रथम चोकको मूल दलानमा कसैले नछुने गरी अटुट रूपमा बसेका हुन्छन् । जब बाहिर रथयात्रामा बिघ्नबाधा आइ रथ रोकिन्छ अर्थात् सयौं, हजारौं जनताले पनि रथलाई चलाउन नसक्ने अवस्था सृजना हुन्छ, तब त्यो मठभित्र

---

[१७४] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारी ।

[१७५] जंगम, पा.टि.नं. ५७, पृ. ७९–८० ।

[१७६] *ऐजन,* पृ. ८१ ।

[१७७] श्रेष्ठ, पा.टि.नं. १२५, पृ. ९७ ।

राखिएको दही चिउरा लगेर रथको अगाडि–पछाडि छरिदिने काम हुन्छ र त्यसपछि रथ पुनः चल्न थाल्छ ।[१७८] यसरी दही चिउरा छर्दा बढ्ता खान पाउने आशले पांग्रा वरपर आएर बस्ने भूतप्रेत (जो जात्राको बेला रथले किचिएर, थिचिएर मरेका हुन्छन्) ले पांग्रा समात्न छाडी छरेका दही चिउरा खाने हुनाले रथ तान्न सजिलो हुन्छ भन्ने धारणा प्रचलित रहेको पाइन्छ ।[१७९]

यति मात्र होइन भैरव–भद्रकालीका विशाल रथहरूलाई आपसमा जुधाउने कार्य पनि त्यसै जंगम मठ अगाडि गाःहिटीमा हुने गर्छ, जुन कार्य जात्राको मह□वपूर्ण पक्ष हो । यसप्रकार भक्तपुरको बिस्केट जात्रासँग टौमढी टोलको जंगम मठ र त्यहाँका जंगमहरूको प्रत्यक्षः संलग्नता रहेको थाहा हुन्छ ।

### ७.८.९ ब्राम्हण, जोशी र कर्माचार्य

ब्राम्हण, जोशी र कर्माचार्य भक्तपुरका हिन्दु नेवार समाजका पुरोहित वर्ग हुन् । धार्मिक अनुष्ठान र सामाजिक कर्मकाण्ड गर्दा यी तीनै थरीको उपस्थिति आवश्यक र अनिवार्य मानिन्छ । विशेष गरेर हिन्दु नेवारहरूको याज्ञिक कार्य, श्राद्ध कार्य जस्ता मह□वपूर्ण कार्य गर्दा उपर्युक्त तीनै वर्गको उपस्थिति अनिवार्य मानिन्छ । तिनीहरूमध्ये कुनै एकले मात्र सबै कार्य गर्ने गरेमा धार्मिक, सामाजिक क्षेत्रमा एकाधिकारवाद प्रथा उत्पन्न हुन गई मनपरितन्त्रको बोलवाला कायम हुने डर हुन्छ ।[१८०] अतः उपर्युक्त तीनै थरीलाई अलग अलग भूमिका दिइएको हो । जस्तो– जोशीले याज्ञिक वेदीको निम्ति उपयुक्त भूमि निर्धारण गर्ने, बेदी निर्माण गर्ने, रेखाहरू बनाउने, नक्षत्रादि गतिको आधारमा याज्ञिक कार्यका लागि उपयुक्त समय तोक्ने, कर्माचार्यले याज्ञिक वेदी तथा रेखाहरू माथि राख्नु पर्ने आवश्यक सामानहरू ठीक–ठीक स्थानमा मिलाएर राख्ने अनि ब्राम्हणले ती दुवैको सहयोग लिएर याज्ञिक कार्य सम्पन्न गर्ने गर्दछन् ।[१८१] यसैकारण मल्ल राजाहरूका कुल देवता तलेजु भवानीको मन्दिरमा पूजाउपासना गर्दा ब्राम्हण, कर्माचार्य र जोशी तीनै थरीको उपस्थिति आवश्यक मानिंदै आएको छ । यस अतिरिक्त यिनका अलग–अलग कार्यहरू पनि छन् । जस्तो – सत्यनारायणको पूजा जस्ता वैदिक कार्यहरू ब्राम्हण एक्लैले गर्दछ । त्यसमा जोशी, कर्माचार्यको आवश्यकता पर्दैन । त्यस्तै कुनै शुभ कार्य गर्दा विशेष मुहुर्त (साइत) निकाल्ने

---

[१७८] जंगम, पा.टि.नं. ५७, पृ. ८१ ।

[१७९] श्रेष्ठ, पा.टि.नं. १२५, पृ. ९७ ।

[१८०] जोशी, पा.टि.नं. ७३, पृ. ५ ।

[१८१] लेभी, पा.टि.नं. ६, पृ. ३५६ ।

कार्य जोशी एक्लैले गर्दछ । त्यसमा अन्य दुईको उपस्थिति आवश्यक छैन । अनि तान्त्रिक विधिले पशु बलि दिएर सम्पन्न गर्ने पूजा कार्य कर्माचार्य एक्लैले गर्दछ । त्यसमा अन्य दुईको उपस्थिति आवश्यक छैन ।[१८२]

बिस्केट जात्रामा पनि ब्राम्हण, जोशी र कर्माचार्यहरूको ठूलो भूमिका रहेको थाहा हुन्छ । भक्तपुरको समाजमा मनाइने जति पनि प्रमुख जात्रा, चाडपर्वहरू छन् ती सबै तलेजुमा पनि तान्त्रिक विधिपूर्वक सम्पन्न गरी मनाइन्छ । किनकि तलेजु नेवार संस्कृतिको केन्द्र हो । अतः बिस्केट पर्वका अवसरमा तलेजुमा पनि विश्वयात्रा सम्बन्धी अनुष्ठान र पूजाविधानहरू सम्पन्न गर्ने गरिन्छ ।[१८३] जसमा उपर्युक्त तीनैथरीका पुजारीहरूको मह□वपूर्ण भूमिका रहेको हुन्छ ।

यस अतिरिक्त बिस्केट जात्राका प्रमुख विधिविधानहरूमा पनि ब्राम्हण, जोशी, कर्माचार्य तीनैथरीको भूमिका आवश्यक मानिन्छ । जस्तो– जोशीले खगोल नक्षत्रादि गतिको आधारमा जुराएको निश्चित् शुभ साइतमा नै यो जात्रा प्रारम्भ गर्ने गरिन्छ । त्यसपछि जात्रामा तलेजुका पुजारी राजोपाध्याय ब्राम्हणहरू राजाको प्रतीक, मन्त्रीको प्रतीकको रूपमा परम्परागत हाजिलँ, गुजिलँ नामक पहिरनमा सजिएर राजकीय प्रतीक रूपमा मान्य खड्ग लिइ भैरवनाथको रथमा सवार नभएसम्म रथजात्रा प्रारम्भ हुँदैन । रथजात्रापश्चात् देवतालाई देवगृहमा विराजमान गराएपछि तान्त्रिक विधिपूर्वक बलि दिई पूजा गर्ने कार्य कर्माचार्यले गर्दछ ।[१८४] यसरी यस जात्रामा उल्लिखित तीनैथरीका पुजारीहरूको मह□वपूर्ण भूमिका रहेको पाइन्छ ।

**निष्कर्ष**

बिस्केट जात्राको समस्टीगत चरित्रको अभिव्यक्ति जात्राका समयमा कायम यहाँका नेवारहरूका विभिन्न गुठीबाट मिल्दछ । यिनकै आपसी जालो र सूत्रबन्धनबाट यस्ता ठूलठूला जात्रा सम्पन्न हुन्छन् । गुठीको मुख्य आधार वा आयस्रोत भनेको गुठी भूमि हो । यस्ता जात्रालाई सम्पन्न गर्दा विभिन्न जात र पेशाका वर्गबाट विविध सेवा प्राप्त गर्नु आवश्यक मात्र होइन अनिवार्य गरिएको हुन्छ । यसको शैली जजमानी सेवासँग तुलनीय छ । जातको आफ्नो पेशा वैशिष्ट्य र जातीय समूहको मेरुदण्डीय वर्गीकरणलाई उपयोग गरी

[१८२] जोशी, पा.टि.नं. ७३, पृ. ६–२५ ।

[१८३] श्रेष्ठ, पा.टि.नं. ६९, पृ. १ ।

[१८४] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

तिनको बेग्लाबेग्लै भूमिका निर्धारित गरिएको हुन्छ । जस्तो– पुजारी कार्यका लागि कर्माचार्य, पुरोहित्याइँ वा याज्ञिक कार्यका लागि राजोपाध्याय ब्राम्हण, धार्मिक अनुष्ठानका लागि ज्योतिषीय विधान बमोजिम निश्चित् साइत जुराउने कार्यका लागि जोशी, देवदेवीको रथजात्रा वा लिंगो जात्रामा डोरी बाँध्ने सम्बन्धी कार्यका लागि मानन्धर, रथको रंग विधान वा देवदेवीका ख्वापाः (मुकुण्डो) बनाउने कार्यका लागि चित्रकार, विभिन्न नृत्य समुह, बाद्यः समूह र खट बोक्ने कार्यका लागि अधिकांश खेती किसानी गर्ने ज्यापू समुदाय, पशुबध र मासु काट्ने कामका लागि कसाई, देवस्थलको सरसफाइ वा बाद्यवादनको निम्ति कुस्ले, फूलपातीका लागि वनमाली, भोजस्थलको सरसफाइको लागि पोडे जस्ता अनेक कार्य विभाजन र सेवा प्रदान सम्बन्धी कार्य सुनिश्चित् गर्न परम्परागत सामाजिक व्यवस्थाका अतिरिक्त राज्यको पनि प्रमुख अग्रसरता रहेको पाइन्छ ।

यसरी यसजात्राको सामाजिक पक्षभित्र प्राचीनकालदेखि बसोबास गर्दै आएका विविध पेशा गर्ने जातजातिहरूको अति नै मह□वपूर्ण भूमिका रहेको पाइन्छ । तिनीहरूको सहयोग बिना यो जात्रा सम्पन्न गर्न खोज्नु संभव छैन । यद्यपि आजको युग भनेको भौतिकवादी युग हो । यसयुगमा हरेक काम कुराहरूलाई पैसासँग तुलना गर्न खोजिन्छ । एकातिर मानिसमा धर्मकर्मप्रतिको आस्था कम हुँदै गएको छ भने अर्कोतिर व्यक्तिवादी धारणाले गर्दा मै खाउँ मै लाउँ को भावना सबैमा छ । तथापि भक्तपुरको प्राचीन नगरीय सीमाभित्र बसोवास गर्ने विविध वर्ग र जातजातिका बासिन्दामा अझै पनि थुप्रै पुराना कुराहरू देख्न पाइन्छ । आफ्ना पुर्खाले चलाइ आएका जात्रा पर्वहरूलाई मास्न दिनुहुन्न भन्ने प्रवल भावना उनीहरूमा रहेको पाइन्छ । यसर्थ गुठीद्वारा सञ्चालित जात्रा र यससँग सम्बन्धित पूजाहरू गुठीको आयस्ता नाम मात्रको भएपनि, कतैबाट कुनै स्रोत नजुटे पनि त्यसमा लाग्दै आएका पुजारी वर्ग, गुठी नाइकेहरू निराश नभईकन स्वयम्सेवककै रूपमा भएपनि पुर्खाले आर्जेको कला र संस्कृति, आफ्नो अमूल्य सम्पति सम्झेर जसोतसो जात्रा चलाउने बीडो थाम्दै आइरहेका छन् । आफ्नो व्यक्तिगत स्वार्थभन्दा पनि आफ्नो कुल पुर्खाको संस्कृति र संस्कार एवं धार्मिक परम्पराको जीवन्तताको लागि उनीहरूको यो प्रयास सह्रानीय मान्नु पर्दछ । यस दृष्टिकोणबाट यस जात्राको सामाजिक पक्ष निक्कै मह□वपूर्ण पाइन्छ ।

# अध्याय आठ

# बिस्केट जात्राको सांस्कृतिक पक्ष

## ८.१ परिचय

कुनै पनि समाजमा प्रचलित चाडपर्व, जात्रा उत्सवलाई त्यस समाजले अविच्छिन्न रूपमा मान्दै आउनुको सबभन्दा मह□वपूर्ण कारण त्यसको सांस्कृतिक पक्ष हो । सांस्कृतिक पक्षले नै चाडपर्व, जात्रा उत्सवको अस्तित्वलाई सजीव र विशिष्ट तुल्याएको हुन्छ, किनकि हरेक जात्रा उत्सवका आाफ्नै मौलिक परम्परा र विशेषताहरू रहेका हुन्छन् । एउटै नामको जात्रा पनि स्थानपिच्छे फरक–फरक ढंगले मनाइनुमा पनि त्यही सांस्कृतिक कार्य वा परिवेशको भिन्नता मुख्य कारण रहेको देखिन्छ । यस सन्दर्भमा घण्टाकर्ण, गाईजात्रा, इन्द्रजात्रा आदि जात्राहरूलाई उदाहरणको रूपमा प्रस्तुत गर्न सकिन्छ । यद्यपि काठमाडौँ उपत्यका र उपत्यका वरपरका प्राचीन बस्तीहरूमा बसोबास गर्ने अधिकांश बासिन्दा नेवारहरू हुन्, तिनीहरू भाषागत, जातिगत, ऐतिहासिकता आदि दृष्टिकोणले एकआपसमा आबद्ध छन् तर सांस्कृतिक परिवेश भने अलग–अलग पाइन्छ । यसैकारण एउटै उद्देश्यले चलेका जात्राहरू पनि सबैतिर समान ढंगले मनाएको पाइँदैन । जस्तो : भक्तपुरको प्रमुख जात्राको रूपमा रहेको बिस्केट जात्रा भक्तपुरमा मात्र मनाइने नभएर उपत्यका र उपत्यका वरपरका अन्य नेवार बस्तीहरूमा पनि मनाइने गरिन्छ तर जात्रा मनाउने परम्परा वा सांस्कृतिक कार्य भने स्थान पिच्छे फरक रहेको पाइन्छ । त्यस्तै फरक घण्टाकर्ण, गाईजात्रा, इन्द्रजात्रा आदिमा पनि देख्न सकिन्छ । यसरी सांस्कृतिक पक्षले सम्बन्धित चाडपर्व वा जात्रा उत्सवलाई जीवन्त बनाएको हुन्छ । त्यसैमा जात्राहरूको आफ्नो स्थान विशेषको मौलिकपन, परम्परागत विशेषताहरू निहित रहेका हुन्छन् ।

यस सन्दर्भमा भक्तपुरमा हरेक वर्ष मनाइने बिस्केट जात्रा पनि विविध सांस्कृतिक विशेषता र मौलिक परम्पराले युक्त पर्व विशेषको रूपमा रहेको छ । यसलाई दशैं जतिकै मह□व दिएर मान्ने परम्परा स्थानीय बासिन्दामा अद्यावधि पाइन्छ ।

बिस्केटभित्र मूलरूपमा दुईवटा जात्रा समाहित छन् अर्थात् बिस्केट जात्राका दुईवटा रूप छन् : पहिलो–चैत्र मसान्तका दिन विश्वकेतु (विश्वध्वजा) सहितको लिंगो उभ्याएर त्यसको भोलिपल्ट लिंगो ढाल्ने (ध्वजा विसर्जन गर्ने) जात्रा र अर्को–भैरव भद्रकालीको मन्दिर

आकारको रथ तान्ने जात्रा । यी दुईको समष्टिगत रूप नै बिस्केट जात्रा हो ।[1] यसमा लिंगो उभ्याउने जात्रा प्राचीन जात्रा हो भने रथ तान्ने जात्रा पछिल्लो मल्लकालमा आएर थपिएको जात्रा हो । यसका अतिरिक्त बिस्केटकैक्रममा भक्तपुरमा अनेक देवीदेवताका स्थानीय खट जात्राहरू पनि सम्पन्न हुने गर्छन, जुन जात्राहरू चैत्र मसान्तदेखि वैशाख ५ गतेसम्म नगरका टोल–टोलमा दिनहुँ जसो हुने गर्दछन् ।[2]

यसरी हरेक वर्ष चैत्र मसान्तका दिन विश्वध्वजा सहितको लिंगो उभ्याएर मेष संक्रान्तिका दिन जात्रा मनाउनुको पछाडि अनेक कारणहरू बिद्यमान रहेको थाहा हुन आउँदछ ।

पहिलो कारण- विश्वब्रम्हाण्डको केन्द्रविन्दु सूर्यले वर्षभरि बाह्र राशिको यात्रा निर्विघ्नतापूर्वक सम्पन्न गरेर पुनः मेष राशिमा योग गर्न पुग्ने भएकोले यसदिनलाई मेष संक्रान्ति भनिएको हो । साथै यसैदिन सूर्य पृथ्वीको विषुवत् रेखामाथि पुग्ने हुनाले यसलाई विषुवत् संक्रान्ति पनि भनिन्छ । खगोलशास्त्र मुताविक यो दिन दिन र रात बराबर हुने गर्दछ । देवता मान्ने, व्रत बस्ने, दान गर्ने, स्नान गर्ने जस्ता सत्कर्मसम्बन्धी कार्यका लागि यो दिनलाई उत्तम र पवित्र दिन मानिन्छ । यसैले सो दिन जात्रा उत्सव मनाउनाले आरोग्य, सुस्वास्थ्य, समृद्धि, सुभिक्ष प्राप्त हुने कुरा मनुको बचन भनेर गौतमीतन्त्र नामक प्राचीनग्रन्थमा उल्लेख छ । यसैहुनाले यस्तो जात्राको प्रचलन यहाँ मात्र नभएर संसारका अन्य भूभागमा पनि विशेष गरेर बंगलादेश, पूर्वी भारत, पश्चिम नेपाल (यहाँ यसवेला विशु पर्व मनाउने गरिन्छ) लगायत अन्य स्थानहरूमा पनि रहेको देखिन्छ ।[3] यद्यपि हरेक संक्रान्ति पवित्र र पुण्य पर्व मानिन्छ । संक्रान्तिका दिन सूर्य एक राशिबाट अर्को राशिमा सर्ने गर्दछ । उक्त दिन स्नान दानादि धर्मकर्म गर्ने हिन्दु सनातन परम्परा रहेको छ । त्यसमाथि विषुवत् संक्रान्ति धार्मिक दृष्टिकोणले अझ वैशिष्ट्य देखिन्छ । खगोलशास्त्र र ज्योतिष विज्ञानअनुसार सो दिन सूर्य पृथ्वीको भूमध्यरेखामा आएर बस्ने हुनाले निकै उत्तम मानिन्छ ।[4] सूर्यको गतिको ज्ञान दिन अनि विश्व शान्तिको कामनाको प्रतीक स्वरूप यस दिन विश्वध्वज लिंगो

---

[1] (क) जानकारीको लागि हेर्नुहोस-गोपालसिंह नेपाली, *दि नेवार्स,* बम्बई : युनाइटेड एशिया पब्लिकेसन्स, ई.सं. १९६५, पृ. ३४४ ।
(ख) नील गुत्सो र वर्नहार्ड कोल्वर, *भक्तपुर,* वेसवडेन : फ्रान्ज स्टेनर कमीशनाज भर्लाज, ई.सं. १९७५, पृ. ४६ ।

[2] मेष संक्रान्तिका दिनमा भैरव भद्रकालीको जात्रा चलाई रथ जुधाउने, टोलटोलमा गणेश एवं मातृकाका मूर्तिहरू खटमा राखी जात्रा गर्ने चलनको सुरुवात राजा जगज्योतिर्मल्लले गरेको बुझिन्छ । -डेनियल राइट, *हिस्ट्री अफ नेपाल,* न्यू दिल्ली : कस्मो पब्लिकेसन्स, ई.सं. १९८३, पृ. १९१ ।

[3] संस्कृतिविद् काशीनाथ तमोटबाट मिति २०६६।७।२१ गते प्राप्त जानकारीको आधारमा ।

[4] हिन्दु सनातन धर्ममा प्रत्येक संक्रान्ति, औंसी र पूर्णिमालाई सधैं पुण्य पर्वका रूपमा मानिएको छ । खास गरी औंशी पितृहरू पुजिने विशेष पर्व हो भने संक्रान्ति स्नान, दान, व्रत र देवता पुज्ने पर्व हो । -भारतमणि शर्मा रिसाल, *हाम्रो गौरव हाम्रो संस्कृति,* काठमाण्डौं : सरला रिसाल, वि.सं. २०६५, पृ. १२ ।

उभ्याउने गरिएको हो ।[५] जात्राकोबेला विश्वध्वज लिंगोलाई पूर्वतिर तानेर उभ्याउने र पश्चिमतिर ढाल्ने जुन परम्परा छ ,त्यसबाट पनि यो जात्रा सूर्यकै गति अनुरूप संचालन हुने कुरा स्पष्ट हुन्छ ।

दोस्रो कारण - संसारका विभिन्न देशहरूमा संवत् फेरिंदा चाड मनाउने परम्परा रहेको पाइन्छ । अर्थात् नयाँ वर्षको आगमनमा उत्सव मनाउने चलन धेरै देशहरूमा पाइन्छ । नेपालमा पनि हिमाली भेकमा शेर्पा, गुरुङ, तामाङहरूले आफ्नो नयाँवर्षको अवसरमा ल्होसार पर्व मनाउने गर्दछन् । काठमाडौं उपत्यकाका स्थानीयवासी नेवारहरूले पनि कार्तिक शुक्ल प्रतिपदाका दिन नेपाल संवत्को नयाँ वर्ष भएकाले म्हः पूजा गरेर चाड मनाउने गर्दछन् । यसै परिप्रेक्ष्यमा भक्तपुरका स्थानीय बासिन्दाले विक्रम संवत्अनुसार वर्षको अन्तिम दिन लिंगो उभ्याएर त्यसको भोलिपल्ट नयाँ वर्षको पहिलो दिन लिंगो ढालेर जात्रा मनाउने  गर्छन् । यद्यपि विक्रम संवत् भारतको उज्जैन राज्यका राजा विक्रमादित्यले आजभन्दा २००० वर्षभन्दा पहिले आफ्नो नामबाट स्थापना गरेकाले यस संवत्लाई विक्रम संवत् भनिएको हो, तर वास्तवमा सूर्य सिद्धान्त र पूर्वीय ज्योतिष विज्ञानमा आधारित यो कालगणना पद्धति हो । अनन्तकालदेखि चल्दै आएको प्रक्रियालाई नै यसमा अवलम्बन गरिएको छ ।[६]

यहाँनेर ध्यान दिनुपर्ने कुरा के छ भने मल्लकालमा विक्रम संवत्को प्रचलन अत्यधिक रूपमा भक्तपुरमा भएको देखिएको छ । भक्तपुरका राजा धर्ममल्लको पालामा विक्रम संवत्को प्रयोग सर्वाधिक रूपमा भएको देखिन्छ । त्यसपछि जितामित्र मल्ल लगायत अन्य मल्ल राजाहरूले पनि यस संवत्लाई विशेष रूपले आफ्ना शिलालेख, ताम्रपत्रहरूमा प्रयोग गरे ।[७] यसैकारण विक्रम संवत्को संवत्सर वैशाखको प्रारम्भिक दिनमा हुने र सोही अवसरमा भक्तपुरमा स्थानीय देवदेवीलाई पूजाआजा गरी जनताको सुख, समृद्धि, उन्नति, प्रगति, नयाँ जोश, नयाँ उमङ्गको कामनाकासाथ ठूलो हर्ष र उल्लासमय वातावरणमा बाजागाजासहित विभिन्न किसिमका जात्राहरू मनाइने भएकोले विक्रम संवत्को नयाँ वर्षको खुसीयालीमा यो जात्रा मनाउने गरिएको हो भन्ने देखिन्छ ।

[५] विनोदराज शर्मा, "योसिंद्यः - केही जानकारी", *पासुका* , वर्ष १, अंक ९ (२०५४ जेठ), पृ. १ ।

[६] रिसाल, पा.टि.नं. ४, पृ. ६ ।

[७] सुजित मास्के, "बिस्केट र विक्रम संवत् : एक विवेचना", *खोपृङ*, वर्ष ५, अंक ५ (२०५३), पृ. ४७-४८ ।

तेस्रो कारण- आर्य तथा वैदिक संस्कृति र तान्त्रिक विधिअनुसार यौन समागमको अनुकूल समय अर्थात् बसन्त ऋतुको चरम उत्कर्ष यही अवसरमा पर्ने भएकोले यौन प्रतिकात्मक अर्थमा पनि यस जात्राको सांस्कृतिक मह□व रहेको छ । यसैले यौन समागमको प्रतीक जात्राको रूपमा बिस्केट जात्रालाई लिन सकिन्छ । बिस्केटको क्रममा सम्पन्न हुने लिंगो उभ्याउने जात्रा, भैरव-भद्रकालीको रथ जुधाउने जात्रा, विभिन्न स्थानका देवदेवीको खट जुधाउने जात्राहरूले यस तथ्यको पुष्टि गर्दछ ।

मेष संक्रान्तिको यो जात्रा प्रतीकात्मक अर्थमा भैरव र भैरवी (भद्रकाली) बीचको यौन समागम हो । दुवै बीचको यो रति क्रियात्मक जात्रा नै विश्वध्वज जात्रा हो । बसन्त ऋतुको चरम उत्कर्षमा यो जात्रा गर्नुको तात्पर्य पनि यही हो ।[८] यसबाट विश्वमा शान्ति छाउने, समस्त जीव र जगतको कल्याण हुने, कहिं पनि दुर्भिक्ष, अनिष्ट, अनिकाल नआउने जनविश्वास रहेको पाइन्छ ।

यसरी मेष संक्रान्तिलाई आधार मानेर यो जात्रा मान्दै आउनुका पछाडि उल्लिखित कारण भएको स्पष्ट हुन्छ । तर यो जात्रा विक्रम संवत्अनुसार मनाइँदै आए पनि यस जात्राका प्रमुख देवता भैरवनाथका सम्पूर्ण पर्वपूजाहरू भने चान्द्रमान तिथिअनुसार नै हुने गर्छ ।[९]

वर्तमानमा यो जात्रा चैत्र २७ गते अर्थात् चैत्र मसान्तको चार दिन अघिबाट प्रारम्भ भइ वैशाख ५ गतेसम्म लम्बिएको छ । त्यस नौ दिनभित्र भैरव-भद्रकालीको रथजात्रा, विश्वध्वज जात्रा, स्थानीय देवदेवीको खटजात्रा, स्नानदान, पूजापाठ, भजनकीर्तन, नाचगान, भोजभतेर आदि विविध सांस्कृतिक कार्यहरू सम्पन्न गरेर उत्सव मनाइन्छ । तथापि बिस्केट जात्राको मूल वा प्राचीन रूप भनेको माथि उल्लेख गरे जस्तै लिंगो जात्रा नै हो, जसलाई विश्वयात्रा, विश्वध्वज जात्रा, योसीं थनिगु जात्रा, शत्रुहन्ता जात्रा आदि भन्ने गरिन्छ । बिस्केटको खास विशेषता पनि यही नै हो । तर भैरव गुठीका मूलनाइकेको भनाइ अलि बेग्लै छ । उनकाअनुसार बिस्केटको सबैभन्दा प्राचीन जात्रा नकिंजु अजिमा (भद्रकाली) को जात्रा हो ।[१०]

---

[८] संस्कृतिविद् तेजेश्वरबाबु ग्वंगबाट मिति २०६६।१२।४ गते प्राप्त जानकारीको आधारमा ।

[९] भैरवनाथ गुठीका मूलनाइके वर्ष ७७ का ज्ञानबहादुर छुकाङबाट मिति २०६७।४।२३ गते प्राप्त जानकारीको आधारमा ।

[१०] सुनिदै आएको कुरा हो भन्दै मूलनाइके ज्ञानबहादुर छुकाङ भैरवनाथको जात्रा र लिंगो उभ्याउने जात्राको चलन सुरु हुनुभन्दा धेरै अघिदेखि यहाँ नकिंजु अजिमा (भद्रकाली) को जात्रा हुने गर्थ्यो भन्ने कुरा व्यक्त गर्नुहुन्छ । उनको यस भनाइले प्राचीनकालको यहाँको समाज मातृसत्तात्मक थियो भन्ने भनाइलाई पुष्टि मिल्दछ । परापूर्वकालदेखि यहाँ मानेश्वरी, दुमाजु, तलेजु, अष्टमातृका, नवदुर्गा, कुमारी आदि मातृशक्ति देवीहरू निकै प्रसिद्ध रही आएका छन्। यहाँको लौकिक जीवनमा आजसम्म पनि यी देवीहरूको विशिष्ट स्थान रहेको छ ।

चैत्र मसान्तको दिन भैरव-भद्रकालीको रथलाई अनेक पाठपूजा र विधिविधानपूर्वक देवता आरोहण गराएपछि टौमढी टोलको गाःहिटीबाट तानेर मूल जात्रास्थल चुपींघाट नेरको ल्योसींखेल नामक चउरमा पुऱ्याइन्छ । यसपछि त्यही दिन साँझपख विशाल ध्वजासहितको लिंगो विधिपूर्वक उभ्याइन्छ । त्यस खुसीयालीमा अनेक पाठपूजा, नाचगान गरिन्छ । भोलिपल्ट मेष संक्रान्तिका दिन साँझपख विधिपूर्वक लिंगो ढाल्ने समारोह हुन्छ । त्यसपछि भैरव र भद्रकालीको रथलाई ल्योसींखेलबाट तानेर गाःहिटी ल्याइ पुऱ्याइन्छ, जहाँ त्यसै रात दुवै रथलाई आपसमा जुधाइन्छ, त्यसक्रियालाई भैरव–भद्रकाली बीचको समागम वा रतिक्रिया मान्ने गरिन्छ ।[११] नेवारीमा यसलाई “खःल्वाकेगु जात्रा” भनिन्छ ।

बिस्केटकै क्रममा वैशाख २ गते नगरबाहिर थिमी, बोडे, नगदेशमा क्रमशः बालकुमारी जात्रा, महालक्ष्मी जात्रा, सिद्धिगणेशको जात्रा हुन्छ । त्यस्तै वैशाख ४ गते भक्तपुर नगरका सबै देवीदेवताहरू आफ्नो मूलदेवगृहबाट बाहिर आएर आम नगरवासीहरूको तर्फबाट पूजा लिने कार्य हुन्छ, जसलाई “द्यः सगंः बियेगु” भनिन्छ । अन्त्यमा वैशाख ५ गते सुरुको दिनमा जस्तै टौमढी चोकमा भैरव-भद्रकालीको रथयात्रा पश्चात् मुख्य देवतालाई निर्धारित स्थानमा फर्काएपछि त्यस वर्षको बिस्केट जात्रा सम्पन्न भएको मानिन्छ । यसलाई स्थानीय जनजिब्रोमा “द्यः थाँहा बिज्याकिगु” (देवता स्वस्थानमा फर्कने) भनिन्छ । यसप्रकार बिस्केट जात्राको सांस्कृतिक गतिविधि नौ दिनसम्म जारी रहन्छ ।

भक्तपुरको बिस्केट जात्राको समग्र सांस्कृतिक पक्षलाई निम्नअनुसार विश्लेषण गर्नु उपयुक्त हुनेछ ।

## ८.२ द्यः क्वँहा बिज्याकिगु (जात्राको शुभारम्भ)

नेवारहरूको प्रायः सबैजसो जात्रा उत्सवहरू चान्द्रमान तिथि अनुसार मानिँदै आएको परिप्रेक्षमा यो बिस्केट जात्रा एउटा भने सौर्यमान पात्रोअनुसार मान्ने परम्परा रहेको छ, जुन बिस्केट जात्राको एउटा मह□वपूर्ण विशेषता हो ।[१२] यसअनुरूप चैत्र मसान्तको चार दिन अघि अर्थात् चैत्र २७ गतेको दिन[१३] देखि यो जात्रा प्रारम्भ हुन्छ । त्यस दिनको जात्रालाई

[११] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१२] हरिराम जोशी, “बिस्केट जात्रा”, *खोपृङ,* वर्ष ३, अंक ३, (वि.सं. २०५१), पृ. १९ ।

[१३] यो जात्रा चैत्र महिना ३० दिनको छ भने २७ गतेबाट तथा चैत्र महिना ३१ दिनको छ भने २८ गतेबाट प्रारम्भ हुने गर्छ अर्थात् चैत्र मसान्तको चार दिन अघिबाट जात्रा प्रारम्भ हुने हुनाले यो जात्रा कुनै वर्ष २७ गतेदेखि त कुनै वर्ष २८ गतेबाट पनि प्रारम्भ भएको पाइन्छ । जस्तो : २०६४ सालको चैत्र महिना ३० दिनको भएकाले २७ गते जात्रा प्रारम्भ भयो भने २०६५ सालको चैत्र महिना ३१ दिनको भएकाले २८ गतेबाट जात्रा प्रारम्भ भएको थियो ।

भैरव-भद्रकालीको रथयात्रा भनिन्छ । यस दिनको मूल सांस्कृतिक कार्य "द्यः क्वहाँ बिज्याकिगु" हो । यस दिन भक्तपुरका संरक्षक र नगरवासीका आराध्यदेव मानिएका श्री भैरवनाथलाई टौमढी टोलस्थित आफ्नो मूलदेवगृहबाट विधिपूर्वक पूजाआजा सम्पन्न गरेपछि टौमढीको खुल्ला चोकमा सिंगारेर राखिएको तीनतल्ले पेगोडा शैलीको मन्दिर आकारको चारपांग्रे विशाल काठको रथमा सवार गराइन्छ । यसै कार्यलाई "द्यःक्वाहाँ बिज्याकिगु" भनिन्छ ।[१४] यो कार्य विशेष मह□वपूर्ण छ, किनकि वर्ष दिनभरिमा यसै दिन एकपटक मात्र श्री भैरवनाथ तल ओर्लने अर्थात् बाहिर निस्कने र बाँकी समय गुप्त रूपमै बस्ने जनविश्वास छ ।

यसरी देवता रथमा विराजमान भएपछि हर्ष उल्लासका साथ रथजात्रा प्रारम्भ हुन्छ तर त्यसभन्दा पूर्व ज्योतिष साइतअनुसार जात्रा सञ्चालन गर्नका निमित्त आवश्यक पर्ने राजकीय खड्ग ल्याउन गुरूपुरोहित र भैलःनायोहरू (भैरवगुठीका नाइकेहरू) को एउटा टोली "हाजिलँ र गुजिलँ" नामक परम्परागत भेषभुषामा[१५] सज्जिएर लायकू दरबारतिर लाग्छन् । यो खड्ग जात्राका प्रमुख विधिविधानहरूमा आवश्यक मानिन्छ किनकि यसले राज्यको संप्रभुशक्ति अर्थात् राजप्रतिनिधिको भूमिका खेल्दछ ।[१६] अतः दरबार परिसरको तलेजु मूलचोकबाट खड्ग ल्याउँदा त्यसलाई ससम्मान झल्लरी छाता ओढाएर, कुस्लेहरूको परम्परागत मुवाली बाजा[१७] बजाएर ल्याइन्छ ।

यसरी दरबारबाट राजकीय खड्ग जात्रास्थल टौमढीचोक आइपुगेपछि भैलः नायो (भैरव नाइके) हरूको अर्को समूह, जो टौमढीको भैरवनाथ मन्दिरभित्र हुन्छन्, त्यहाँ आचाजु (कर्माचार्य) पुजारीले "द्यः क्वाहाँ बिज्याकिगु" पूजा गरेपछि त्यससमूहले भैरवनाथको प्रतिमा

---

[१४] देवता आफ्नो देवगृहको मूलस्थानबाट जात्राको क्रममा तल ओर्लने वा बाहिर निस्कने क्रियालाई "द्यः क्वहाँ बिज्याकिगु" भनिन्छ ।

[१५] यस अवसरमा राजप्रतिनिधि, पुरोहित, भैरवनाइके आदिले सेतो रंगको एकप्रकारको परम्परागत पोशाक पहिरिएका हुन्छन् । जसलाई "हाजिलँ गुजिलँ" भनिन्छ । यो पोशाक एकप्रकारको भोटो, सुरुवाल र जामा हो । साथमा शिरमा लगाउने रातो र सेतो पगरी पनि हुन्छ । यसमा मूलनाइकेले सेतो र अन्यले रातो पगरी लगाउँछन् ।

[१६] यो खड्ग सार्वभौम राज्यको प्रतीकको रूपमा लिइन्छ । मल्लकालमा मल्लराजाहरू आफैं जात्रामा सहभागी हुन्थे, तर उपत्यकामा मल्लवंशको पतन अथवा गोर्खाली शासनको प्रारम्भ पश्चात् यो स्थिति कायम रहेन । यसर्थ राजाको प्रतीक वा राज्यको प्रतिनिधिको रूपमा यो खड्ग पठाइएको मानिन्छ । पाटनको मच्छेन्द्रनाथको जात्रा, काठमाडौंको नानीचाको जात्रा (कुमारीको जात्रा), पचली भैरवको जात्रामा राज्यको सार्वभौम सर्वोच्च व्यक्तिको रूपमा राजा आफै सवारी हुने परम्परा रहेको छ भने भौगोलिक दूरीको कारणले गर्दा भक्तपुरको बिस्केट जात्रा, बनेपाको चण्डेश्वरी जात्रा, दोलखाको भीमसेन जात्राहरूमा भने राजाको प्रतीकको रूपमा तरबार (खड्ग) मात्र पठाइने चलन छ । यसर्थ यो तरबार वा खड्ग नआइपुगेसम्म भक्तपुरमा बिस्केट जात्रा (भैरव-भद्रकालीको रथयात्रा) प्रारम्भ गरिंदैन ।- तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट मिति २०६४।१२।१५ गते प्राप्त जानकारीको आधारमा ।

[१७] भक्तपुरका कपाली जातिले बजाउने परम्परागत बाजाको नाम "मुहाली बाजा" हो । मुहाली बाजामा पाँच किसिमका बाजा समेटिएको हुन्छ, जसमध्ये मुहाली, तमोचा, ढोलक, सनाइ, झ्याली तथा देशी मुहाली अर्थात् गुजराती बाजा पर्दछन् ।-वर्ष ६२ का अष्टलाल कपालीबाट मिति २०६४।१२।२७ गते प्राप्त जानकारीको आधारमा ।

बाहिर ल्याउने गोप्य अभियान अघि बढाउँछन् । यसक्रममा सर्वप्रथम एकजना भैलः नायो मन्दिरबाट बाहिर निस्केर मानिसको भीड पन्छाउँदै रथतिर बढ्छ । त्यसको पछि–पछि फलामको सिक्रीसहितको दुईवटा ठूला घण्टा बोकेको मानिस घण्टा बजाउँदै जान्छ । त्यसको पनि पछि मौनव्रत धारण गरेको व्यक्तिले रातो कपडाले छोपेर तामाको पाताले मोडेको ठूलो डल्लो वस्तु, जसलाई नेवारीमा जाकीग्वः[१८] भनिन्छ, लिएर अघि बढ्छ र अन्त्यमा भैरवनाथको प्रतिमालाई तोरणसहित मन्दिरको मूलद्वारबाट बाहिर ल्याई रथमा आरोहण गराइन्छ । तत्पश्चात् राजकीय खड्गसहित गुरु पुरोहित ब्राम्हण, जोशी, कर्माचार्य, भैलःनायोहरू, सिकर्मीहरू लगायत अन्य पदाधिकारीहरू आ-आफ्नो पदीय मर्यादा अनुरूप रथमाथि निर्दिष्ट स्थानमा सवार हुन्छन् ।[१९]

यसपछि रथजात्रा प्रारम्भ हुन्छ । विशाल काठको पांग्रा सहितको मन्दिर आकारको रथलाई न्यातः पौ (पाँच तल्ले) मन्दिर सामु खुल्लाचोकमा पश्चिमतिरको डबलीसँगै दक्षिण मोहडा पारेर सिंगारेर राखिएको हुन्छ । रथको अग्रभागको बेतासिं (हिटीमङ्ग) को शीर्ष भागमा भैरवनाथका बाहन बेताल विराजमान हुन्छ । टौमढी चोक यतिवेला समग्र नगरको केन्द्रबिन्दु बनेको हुन्छ । हुन पनि यो खुल्ला चोक नगरको मध्यभागमा पर्दछ । यसदेखि उत्तरपूर्वी क्षेत्र थःने (माथिल्लो टोल) र दक्षिणपश्चिमी क्षेत्र क्वःने (तल्लो टोल) पर्दछ । रथमा देवता सवार भएपछि तल्लो टोलकाले अगाडिबाट र माथिल्लो टोलकाले पछाडिबाट वलँः (डोरी) तानेर रथलाई आ-आफ्नो क्षेत्रतिर लाने प्रयास गर्दछन् । रथको अगाडि पछाडि

---

[१८] (क) काशीका विश्वनाथ भैरवलाई भक्तपुरमा प्रतिस्थापन गरेपछि विश्वनाथको अनुकम्पाले नेपालमा सहकाल आयो। स्थानीयवासीहरू कृषिमा आत्मनिर्भर भए । प्रशस्त मात्रामा अन्न मात्र उत्पादन भएन, अन्नको दाना नै ठूलो फल्न थाल्यो । यो देखेर अत्यन्त प्रसन्न भएका एकजना ज्यापूले आफ्नो खेतमा फलेको दुई दाना चामल भैरवनाथलाई चढाउन ल्याई नेपालमा सधै यस्तै चामल फलिरहोस् भन्ने कामना गरे । त्यसरी चढाएको चामल बिग्रेर नजाओस् भनेर त्यसलाई तामाको पाताले मोडेर भैरवनाथको आसनको दायाँ बायाँ खोपामा प्रतिस्थापन गरी अन्नका देवता भनी नित्यपूजा गरिँदै आएको छ । सहकालको प्रतीक यो चामलको गेडा पनि वर्षको एकपटक जात्राको बेला सार्वजनिक प्रदर्शन गरिने चलन छ । -भैरवनाथ मन्दिरका पुजारी वर्ष ८६ को गणेश कर्माचार्यसँग मिति २०६५।३।१५ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।
(ख) यस्ता जाकिग्व चारवटा रहेका छन् । एउटा इन्द्रचोकको आकाश भैरवकहाँ, अर्को चाँगु नारायणकहाँ रहेका छन् । भक्तपुरको भैरवनाथकहाँ दुईवटा हुनुमा एउटा भैरव नाथको र अर्को बेताल देवताको हो । -मूल भैरव नाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७४।२३ गते प्राप्त जानकारीको आधारमा ।

[१९] भैरवनाथको रथमा सवार हुने पदाधिकारीहरू निम्नअनुसार रहेका हुन्छन् । मूलनाइके समेत भैरव नाइकेहरू ६ जना, रथ डोऱ्याउन हप्पा (निर्देशन)दिने माहाँहरू अगाडि पछाडि २ जना, भैरवनाथ मन्दिरका पुजारी आचाजु १ जना, साइत हेर्ने ज्योतिषी १ जना, रथ निर्माण गर्ने सिल्पकार ४ जना, प्रत्येक मूर्तिमा आँखा खोली जीवन्यास दिने शिलाकार १ जना, राजप्रतिनिधि १ जना, काजी (प्रधानमन्त्री) को प्रतिनिधि १ जना, भैरवनाथको नौबाजाको पदाधिकारी १ जना गरी जम्मा १८ जना रहेका हुन्छन् । यी पदाधिकारी तनमनले शुद्ध भई जुत्ता नलाई रथमा बस्ने गर्दछन् । यस बाहेक अन्य व्यक्तिले रथमा कुल्चेको खण्डमा पंच महापाप लाग्छ भन्ने जनविश्वास छ । -सत्य नारायण प्रजापति, "बिस्केट जात्रा", *नेपाली संस्कृति* ,वर्ष ६, अंक १ (वि.सं.२०४६), पृ. ३० ।

दुवैतिर चार–चारवटा मोटो डोरी राखिएको हुन्छ ।[२०] यो वँल चियेगु (डोरी बाँध्ने) र पुतंचियेगु (रथका अवयवहरूलाई वेतको डोरीले बाँध्ने) कार्य दत्तात्रय सकुलानेका मानन्धर (महाद्यः) जातिले गर्दछन् ।[२१] यस रोमाञ्चकारी जात्रामा कुन पक्ष विजयी होला अर्थात् रथ कतातिर जाला भन्ने कौतुहलता सबै दर्शकमा छाएको हुन्छ । यसभन्दा पनि मह□वपूर्ण कुरा के हो भने देवता सवार रथलाई तानेर आफूकहाँ ल्याउन सकेमा आगामी वर्ष शुभ रहने बलियो जनविश्वास भएको कारणले गर्दा दुवैपक्षका स्थानीयवासीहरू उत्साह,उमंगकासाथ जात्रामा सहभागी भएका हुन्छन् । प्रतिस्पर्धापूर्ण यस जात्रामा जीत जुन पक्षको भएपनि अन्त्यमा सबै मिलेर सो रथलाई स्थानीय गाःहिटी टोलमा पुऱ्याइ उक्त दिनको जात्रा विसर्जन गरिन्छ । यसलाई "द्यः थाते लाकेगु" भनिन्छ ।[२२] यसपछि भैरवनाथको प्रतिमालाई रथबाट ओरालेर लाकोलाछैंको चपाल(विशेषदेवगृह)मा विराजमान गराउन लगिन्छ । त्यहाँ उनको सम्मानमा लमोथापन पूजा (प्रत्यारोहण पूजा) कासाथै महाबलि पूजा समेत हुन्छ । यसपछि पञ्च बहादुरहरूलाई एक मुरी दश पाथी चामलको जाँड ठूलो घ्याम्पोमा राखी भात भोज खुवाउने काम हुन्छ ।[२३]

यसैगरेर सोही दिन अर्कोतिर देवी भद्रकालीलाई पनि इच्छु टोलस्थित मूलदेवगृह बाट विधिपूर्वक पूजा गरी विमान खटमा राखेर जात्रा गर्दै दक्षिण घट्खा टोलको चौबाटोमा राखिएको दुई तल्ले रथमा सवार गराएपछि त्यस सानो रथलाई पनि स्थानीय जनसमुदायले तानेर गाःहिटी तल पुऱ्याइन्छ, जहाँ देवी भद्रकालीको विशेष देवगृह"लय्को देवल" अवस्थित छ । जात्रा अवधिभर विशेष गरेर चैत्रमसान्तसम्म देवी सोही देवलमा रहन्छिन् ।

यसप्रकार पहिलो दिनको जात्रा "द्यःथाते लाकेगु" सांस्कृतिक कार्यसँगै सम्पन्न हुन्छ । यहाँनेर सम्झिनुपर्ने मुख्य कुरा के छ भने जात्रा अवधिभरि नै आकर्षणको केन्द्र रहने भैरव-

---

[२०] पहिले–पहिले रथको दुवैतिर ६, ६ वटा डोरी हालिएको हुन्थ्यो भने आजभोलि ४, ४ वटा मात्र डोरी बाँधिएको हुन्छ । -भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङबाट मिति २०६७।४।२३ गते प्राप्त जानकारी ।

[२१] मानन्धर गुठीका मूलनाइके दत्तात्रय सकुलानेका वर्ष ७६ का पद्मबहादुर मानन्धर (महाद्यः) बाट मिति २०६७।४।४ गते प्राप्त जानकारीको आधारमा ।

[२२] पहिलो दिनको जात्राको अन्त्य भैरवनाथको रथलाई टौमढी टोलबाट गाःहिटी टोलको निश्चित् स्थानमा पुऱ्याएपछि हुन्छ । रथलाई निश्चित् स्थानमा राख्ने कार्यलाई "द्यः थाते लाकेगु" भनिन्छ । यसरी "द्यः थाते लाकेगु" गर्दा भैरवको रथमा रहेको बेतःद्यः (वेताल) लाई त्यहाँ पश्चिम फर्केको एउटा घरको आँखी झ्याल ठीक सम्मुख पारेर राखिन्छ । त्यो घर रत्नभक्त सिख्वा नामक ज्यापूको हो । यसरी थाते लाकेगु कार्य हुनासाथ त्यो आँखी झ्याल भएको कोठाभित्रबाट एकजनाले विधिविधान बमोजिम पूजा गरी एउटा कुखुराको भाले बलि दिने परम्परा छ । यस सम्बन्धमा यदि यसरी पूजा नगरेको खण्डमा त्यसघरको कुनै न कुनै व्यक्तिको तत्काल मृत्यु हुन्छ भन्ने जनविश्वास रहेको छ । यसरी पूजा सकेपछि भैरवको प्रतिमालाई रथबाट झिकेर लाकोलाछैं चपालमा राख्न लगिन्छ । -स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।

[२३] प्रजापति, पा.टि.न. १९, पृ. ३६ ।

भद्रकालीका रथहरूको निर्माण गुह्य तन्त्रको प्रतीक श्रीयन्त्रको आधारमा गरिएको हुन्छ ।[२४] यसैले यस जात्रामा कुनै प्रकारको यन्त्रको सहायता लिइँदैन । तन्त्र, मन्त्र, जन्त्रको आधारमा नै सम्पूर्ण जात्रा सम्पन्न गर्नुपर्ने हुन्छ ।[२५] यताबाट नेपाली शीप र शैलीमा तयार पारिएको यो रथ र यसको जात्रा स्थानीय जनशक्ति र साधनकै भरमा सम्पन्न हुँदैआएको तथ्य स्पष्ट हुन्छ ।

## ८.३ स्याकोत्याको (बिस्केटको तेश्रो दिन)

स्याकोत्याकोको शाब्दिक अर्थ जति बलि दिन सक्यो त्यति फाइदा भन्ने हुन्छ । यो स्याकोत्याको बडादशैंको महानवमीलाई पनि भन्ने गरिन्छ ।[२६] बिस्केट जात्राको तेस्रो दिन अर्थात् चैत्र २९ गतेलाई भक्तपुरका स्थानीयबासिन्दाले "स्याकोत्याको"को रूपमा मान्ने गर्छन ।[२७]

"द्यः क्वहाँ बिज्याकिगु"को भोलिपल्ट अर्थात् चैत्र २८ गते रथहरू कतै तानिंदैन । जात्राका प्रमुख देवीदेवताहरूलाई आ-आफ्नो मूलदेवगृहबाट ल्याएर विशेषदेवगृहहरू क्रमशःलाकुलाछैंको चपाल र लिवीचोकको लय्को देवलमा बिराजमान गराइएको हुन्छ । यी देवगृहहरू बिस्केटको अवसरमा मात्र भैरव र भद्रकाली राज हुने विशेष देवगृह हुन् ।

यसरी जात्राको पहिलो दिन भैरवनाथलाई रथजात्रा गरी विशेष देवगृह लाकोलाछैं ल्याएपछि त्यसको भोलिपल्ट बिहानै त्यहाँ भैलः नायो (भैरव नाइके) हरूको तर्फबाट विशेष पूजा हुन्छ, त्यसपछि "कला वायेगु"[२८] गर्न लगिन्छ । अनि जल छर्केपछि मात्र सर्वसाधारणले देवताको दर्शन, पूजन गर्न पाउँछन् । यसदिन भैलः नायोहरूका अतिरिक्त कर्माचार्य आचाजुले पनि त्यहाँ आएर नित्य पूजा गर्छन् । मानिसहरू आ-आफ्नो भाकल पूरा गर्न सम्बन्धित देवताकहाँ गएर केही सानो तिनो बलि चढाएर पूजा गर्छन् । जात्राको दोस्रो दिन रथ कतै तानिंदैन । जात्राको दोस्रो प्रमुख देवता भद्रकालीको पनि लय्को देवलमा त्यसदिन नित्य पूजा मात्र गरिन्छ । तर त्यसैदिन राती भैरव गुठीका नाइकेहरू मिलेर भैरवनाथलाई

---

[२४] मेरि एम. एण्डरसन, *दि फेष्टिबल्स अफ नेपाल,* लण्डन : जर्ज एलेन एण्ड अनवीन, ई.सं. १९७१, पृ. ४४ ।

[२५] संस्कृतिविद् तेजेश्वरबाबु ग्वंगबाट मिति २०६६।१२।४ गते प्राप्त जानकारीको आधारमा ।

[२६] ज्ञानेन्द्रबहादुर श्रेष्ठ, *काठमाडौं उपत्यकाका केही मह□वपूर्ण चाडपर्वहरू–एक अध्ययन,* स्नातकोत्तर तहको शोधप्रबन्ध, इतिहास केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालय, ई.सं. १९७८, पृ.३८ ।

[२७] बडादशैको महानवमीमा खमे नामको एउटा भीमकाय रांगोलाई नवदुर्गा देवगृहदेखि ब्रम्हायणी पीठमा दौडाएर जात्रा गरी (खः मे ल्वाकीगु जात्रा) पुऱ्याएपछि त्यस रांगोलाई बलि चढाईन्छ । त्यसको मासुका टुक्रा प्रसादका रूपमा बाडिन्छ । त्यसैगरी बिस्केट पर्वको तेस्रो दिनमा पनि लाकोलाछैं टोलस्थित भैरवनाथको देवगृहमा "लाकोफेतु" नाम गरेको एउटा त्यस्तै भीमकाय रांगोलाई बलि दिई त्यसको मासुलाई ८, ८ टुक्रा पारी बाड्ने चलन छ । यसप्रकार देवदेवीलाई बलि चढाउने ती दुवै सांस्कृतिक दिनलाई जनजीवनमा स्याकोत्याको भन्ने चलन छ । बिस्केटको स्याकोत्याकोमा भक्तपुर देशभरका जनताद्वारा देवदेवीलाई बलि चढाउने सांस्कृतिक कर्म निक्कै छन् । -पुरुषोत्तमलोचन श्रेष्ठ, "दुमाजुदेवी -भक्तपुर", *प्राचीन नेपाल,* संख्या १५६ (असार २०६१), पृ. २१ ।

[२८] नेवार सामाजिक संस्कारभित्र कुनैपनि भोज वा पूजा कार्य सम्पन्न गरिसकेपछि "कला वायेगु" भनेर एउटा भोजभाग छ्वास्सः अजिमाको नाममा गल्लीको मोड वा घरदेखि बाहिरको पहिलो दोबाटोमा राख्न लगिन्छ । यसपछि मात्र त्यो शुभकार्य पूर्ण रूपमा सम्पन्न भएको मानिन्छ ।

लाकुलाछेँको चपाल सतलको भऱ्याङ मुनि लुकाउन लाने चलन भने विष्मयकारी देखिन्छ । जुन चलन आजसम्म पनि रहेको छ । यस सम्बन्धमा लोकोक्ति के रहेको छ भने धेरै पहिले चपालमा भैरवनाथलाई बलि चढाएको राँगाको मासु हरेक साल हराउने गर्थ्यो । कुनै एक साल भैरव स्वयं मासु हराउनुको कारण थाहा पाउन भऱ्याङ मुनि चियो गरी बसे । त्यसैबेला तालाक्वेका जेठा गणेशको लिंगो सदा झैं मानिसको रूपमा मासु चोर्न आयो । भैरवले सो लिंगोलाई मासु चोर्दै गरेको भेट्टाएपछि तिनको दुवै हात काटिदिए । सोही घटनालाई सम्झाउन बिस्केटको एक दिन चपालमा भैरवको प्रतिमालाई भऱ्याङमुनि राख्ने गरिन्छ । साथै यही घटनाले गर्दा तालाक्वे टोलमा ठड्याउने जेठा गणेशको लिंगोको हात नभएको र त्यसैले त्यस लिंगोलाई “ल्हाः मरु ल्योसिंद्यः” भन्ने गरिएको हो ।[२९]

माथि नै उल्लेख गरिसकिएको छ कि जात्राको तेस्रो दिन (चैत्र २९ गते) लाई स्याको त्याको भन्ने गरिन्छ । उक्त दिन नकिंजु अजिमा (भद्रकाली) कहाँ नित्य पूजा मात्र गरिन्छ । तर लाकोलाछेँ चपालमा भने भैलः नायो (भैरव नाइके) हरूको तर्फबाट “लाकोफेतु साइत” भन्ने पूजा हुन्छ । यसअनुसार भैरवनाथलाई नायो(नाइके)हरूको तर्फबाट एउटा रांगो बलि दिइन्छ, जुन रांगो गुठी अड्डाबाट प्राप्त हुन्छ । देवताको प्रसादको रूपमा त्यस रांगाको मासु लाकोलाछेँ टोलका भैलःनायो हुन पाउने ५० घर परिवारका पुरुष व्यक्तिलाई ८, ८ टुक्राका दरले बाँड्ने गरिन्छ ।[३०] साथै एकमुरी दशपाथी चामलको “कःथ्वँ” नामको बाक्लो जाँड, जुन माटोको घ्याम्पोमा बनाइएको हुन्छ, प्रसादको रूपमा पिलाइन्छ ।

यसबाट स्याको त्याको बिस्केटको तेस्रो दिनमा पर्ने एउटा मह□वपूर्ण सांस्कृतिक पर्व हो भन्ने कुरा थाहा हुन आउँछ, जुन पर्वमा लाकोलाछेँ चपालमा भैरवनाथको सम्मानमा लाकोफेतु साइत भन्ने बलि पूजा सम्पन्न गरिन्छ ।

## ८.४ ल्योसीं थनिगु जात्रा (लिंगो उभ्याउने जात्रा)

बिस्केटको मुख्य मह□वपूर्ण जात्रा लिङ्गो उभ्याउने जात्रा हो, जसलाई स्थानीयवासीहरू “ल्योसीं थनिगु जात्रा” भन्ने गर्छन् भने शास्त्र लगायत पंचाङ्गहरूमा विश्वध्वजोत्थानोत्सव भनिएको पाइन्छ । बिस्केटको प्राचीन रूप पनि यही हो । यो जात्रा

---

[२९] जेठा गणेश लिंगो गुठीका नाइके वर्ष ७६ का कृष्णप्रसाद प्रजापतिबाट मिति २०६४।१२।१४ मा प्राप्त जानकारी तथा भैरवनाथ गुठीका मूलनाइके वर्ष ७७ का ज्ञानबहादुर छुकाङबाट मिति २०६७४।२३ गते प्राप्त जानकारीको आधारमा ।

[३०] लाकोफेतु साइत पूजाको प्रसाद स्वरूप बाँडिने राँगाको मासु लाकोलाछेँ टोलका भैलः नायो हुन पाउने ५० घरका घेमो, चवः, सुवः (घेमोसु, चवाल, सुवाल) र छुकाङ परिवारमा मात्र बाँडिन्छ । यसरी बाँड्दा पुरुषलाई भए ८ टुक्रा र महिलालाई भए ४ टुक्राका दरले बाँडिन्छ । यदि बाहिरको मानिस मासु थाप्न आयो भने त्यसको हात आफैं पछाडि तानिन्छ भन्ने जनविश्वास पाइन्छ । -वंशगोपाल वाराही गुठीका वर्ष ७० का गणेशबहादुर धोंजु तथा लाकोलाछेँका वर्ष ४५ का कृष्णप्रसाद किवानायबाट मिति २०६५।१२।२९ गते प्राप्त जानकारीको आधारमा ।

हरेक वर्षको अन्तिम दिन (चैत्र मसान्तका दिन) सुरु हुन्छ । यसैले सो दिन बिहानदेखि नै भक्तपुर नगर(देश)भरि नै जात्राको माहोल छाएको हुन्छ । टोल–टोलमा स्थानीय देवीदेवताको पूजाआजा गर्न महिलाहरूको लामै लाइन लागेको हुन्छ । सोही दिन बिहान स्थानीय तालाक्वे टोलमा पनि "ल्हाः मरु ल्योसींद्यः" जसलाई जेठा गणेश लिङ्गो पनि भनिन्छ, उठाउने कार्य गरिन्छ ।[३१] यताबाट उक्त दिन भक्तपुरमा २ वटा लिंगो उठाउने परम्परा रहेको थाहा हुन आउँछ ।

चैत्रमसान्तकै दिनलाई "कोलुक्यात" पनि भन्ने गरिन्थ्यो । जसरी बिस्केट चाडको तेस्रो दिनलाई स्याकोत्याको भन्ने चलन छ, त्यसरी नै चैत्रमसान्तलाई "वर्ष कृति थ्यासफू" अनुसार कोलुक्यात भन्ने चलन पहिले व्यापक थियो । तर बदलिंदो परिस्थिति र समय चक्रले गर्दा कोलुक्यात बिर्सिएर बोलीचाली र व्यवहारमा हराइ सकेको छ । कोलुक्यात चैत्र मसान्तका दिन भक्तपुर राजदरबारभित्र हुने दुमाजुदेवीको राजकीय फलाभिषेक यात्रा हो ।[३२] यताबाट बिस्केटकोक्रममा लायकु दरबार परिसरमा गरिने दुमाजुदेवीको खटजात्रालाई नै कोलुक्यात जात्रा भनिएको थाहा हुन्छ । तर आज व्यवहारमा कोलुक्यात भन्ने चलन हराइसकेको छ तर पनि ऐतिहासिक सामग्रीहरूमा चैत्र मसान्तको बिस्केट जात्रालाई कोलुक्यात भनेर सम्बोधन गरिएको पाइन्छ ।[३३]

---

[३१] भक्तपुरको भोलाछेँ टोलको महालक्ष्मी पीठनेर पनि चार, पाँच दशक अघिसम्म लिंगो उठाउने जात्रा प्रचलित थियो, तर हाल सो जात्रा मासिसकेको छ । -लीलाभक्त मुनंकर्मीबाट मिति २०६४।११।३ गते प्राप्त जानकारीको आधारमा । लिंगो ठड्याउने जात्रा भक्तपुरका अतिरिक्त सांगा, चौकोट, खडपु, ठिमी, बालकुमारी, बोडे महालक्ष्मी, काठमाडौँको टोखा, सुनाकोठी, पाटन र काठमाडौँ हनुमानढोका आदि स्थानहरूमा भव्यताका साथ गर्ने गरिएपनि भक्तपुरको ल्योसिंखेलमा ठड्याइने लिंगो जात्राको ऐतिहासिक तथा सांस्कृतिक मह□व भएको तथ्य लिंगो जात्रा विषयक गौतमी तन्त्रमा पनि उल्लेख छ ।

जस्तो - चैत्रच विश्वयात्रायां ध्वजस्योत्थानकं चरेत्
सर्व दुःखानिन श्यन्ति सर्वशत्रु क्षयायच ॥
ध्वजा भंज्जनं पश्चात् कियते संक्रमे दिने ॥

अर्थात् जसले चैत्र महिनामा विश्वको पत्ताका फर्फराउँछ मेष संक्रान्तिका दिन सो उत्सव समाप्त गर्छ, त्यसको सबै दुःख हट्छ, शत्रुको नाश हुन्छ । -*'वर्षक्रिया'* नेपाल राष्ट्रिय अभिलेखालय, हस्तलिखितग्रन्थ माइक्रो फिल्म नं. ४३७/१५ पत्र संख्या -१ ।

[३२] श्रेष्ठ, पा.टि.नं. २७, पृ. १९ ।

[३३] राष्ट्रिय अभिलेखालयमा संग्रहित "ऐतिहासिक घटनावली" नामको हस्तलिखित ग्रन्थ -लगत नं. २२५५ चौथो) को पत्र ३२२ क देखि पत्र ३२३ ख अनुसार कोलुक्यात जात्रा र बिस्केट जात्रा एउटै हो भन्ने देखिन्छ ।

जस्तो - "श्री ३ भैरव आदित्यवार कुन्हु
कुरु क्यात पात्रि पूजा जु १"
(उल्लिखित ग्रन्थको पत्र संख्या ३२२ क-ख)
"श्री ३ दुमाजु आत्यित्यवार
कुलुक्यात रात्री मजात्राथें
पंचोपचार पूजा जु १"
(उल्लिखित ग्रन्थको पत्र संख्या ३२३ क)
"थ्वते विसक्यातया जुरो"
(उल्लिखित ग्रन्थको पत्र संख्या ३२३ ख)

यसबाट कोलुक्यातलाई नै बिस्केट भन्ने गरिन्थ्यो भन्ने कुरा स्पष्ट हुन्छ ।

चैत्र मसान्तको दिन बिहानैदेखि बोलाछैं टोलको तालादंफो माथि रहेको गोरखनाथ मन्दिरमा कापालिक सम्प्रदायका मानिसहरू सुंगुर बलिसहित पूजा गर्न आउने परम्परा छ । गोरखनाथ कापालिक(नाथ) सम्प्रदायका प्रमुख गुरु मानिन्छन् । तर कापालिकहरूको यो पूजाविधि निक्कै विष्मयकारी लाग्दछ । किनकि यसबेला पूजा गोरखनाथको गरे पनि बलि चाहिं गोरखनाथ (पाद पीठ) को पछिल्तिर रहेको भैरवनाथलाई चढाउने गरिन्छ । यसरी बलि दिंदा गोरखनाथलाई रगत नलागोस् भनेर रातो कपडाले छोप्ने पनि गरिन्छ । बलि दिने चलन पनि अनौठो देखिन्छ । किनकि नेवार साँस्कृतिक जीवनमा कुनैपनि देवदेवीलाई पशुचौपायाको बलि चढाउँदा घाँटी रेटेर चढाउने परम्परा पाइन्छ तर यहाँ सुंगुरलाई बलि चढाउँदा गर्धन माथिबाट रेट्ने गरिन्छ ।[३४] तर हाल यसरी पूजा गर्न आउने यो परम्परा टुटिसकेको छ । ५, ७ वर्ष देखि कुस्ले, खड्गीहरूले सुंगुर बलि दिएर पूजा गर्न छाडेको पाइएको छ ।[३५] यसमा विविध कारण जिम्मेवार रहेको पाइन्छ । त्यसमा पनि कापालिकहरूले आफूलाई तल्लो जातिको भनेर चिनाउन नचाहनु नै यो परम्परा लोप हुनुको मुख्य कारण रहेको देखिन्छ ।

यस दिनको प्रमुख सांस्कृतिक कार्य भनेको विश्वध्वजोत्थान (लिंगो उठाइ विश्वकेतु फहराउने) जात्रा नै हो । बिस्केट जात्राको खास विशेषता पनि यही नै हो । अतः साँझपख हुने यो जात्रा प्रारम्भ गर्नु पूर्व जात्रास्थलमा भैरव–भद्रकालीको रथलाई जनसमुदायले तानेर पुऱ्याइन्छ । किनकि जनश्रुतिअनुसार जात्रा हेर्न प्रमुख देवता भैरव र भद्रकाली जात्रास्थल ल्योसींखेल नपुगेसम्म लिंगो उभ्याउने जात्रा सुरु गर्नु हुँदैन भन्ने परम्परा छ ।

चैत्र मसान्तकै दिन बिहान सबेरै लाकोलाछेँको चपालमा विराजमान भैरवनाथलाई क्रमशः भैलः नायोहरूको पूजा र सरकारी पूजा गरिन्छ । सो पूजा सकेपछि मात्र सर्वसाधारण जनताको पूजा लिने काम हुन्छ । उक्त दिन मानिसहरू बिहान सबेरै उठी भैरव, भद्रकाली, गणेश, कुमारी, वाराही, इन्द्रायणी आदि देवीदेवताको दर्शन गर्ने गर्छन् । त्यसअवसरमा आफ्नो इच्छा र गच्छेअनुसार लाकोलाछेँ चपालमा भैरवलाई कुखुरा, हाँस वा बोका बलि दिएर पूजा गर्ने चलन छ । यस किसिमको पूजा त्यहाँ त्यसदिन दिनभरि जसो नै

---

[३४] तलेजु पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट प्राप्त जानकारीको आधारमा ।

[३५] यसको प्रमुख कारण सुंगुर सुलभ तरिकाले उपलब्ध नहुनु, सम्बन्धित कापालिक सम्प्रदायका मानिसहरू बसाइँ सरेर भक्तपुरबाट अन्यत्र जानु, भक्तपुरमै रहेकाहरू पनि कोही आर्थिक विपन्नताले, कोही आर्थिक रूपमा सम्पन्न भएपछि सुंगुर खोज्ने झंझटले गर्दा यो परम्परा छाडेको देखिन्छ । -स्थानीय तालादंफो मन्दिरका द्यःपाला वर्ष ४५ का राजकुमार कपालीबाट मिति २०६५।१२।३१ गते प्राप्त जानकारीको आधारमा । मुख्य मह□वपूर्ण कुरा आफूलाई कुस्ले (तल्लो) जातिको भनेर चिनाउन नचाहनु नै यो परम्परा मासिनाको कारण हो ।

हुन्छ । अपरान्ह ४ बजेतिर कुस्लेहरूको सांस्कृतिक मुवाली बाजासहित लायकू दरबारबाट राजकीय प्रतीकको रूपमा रहेको शाही तरवार (राज खड्ग) लिएर तलेजुको मुख्य पुजारी, गुरु पुरोहित, भैलः नायोहरूको टोली रथ राखिएको ठाउँ गाःहिटी आइ पुग्छन् । यसको केही समयपछि लाकोलाछेँ चपालबाट भैरवनाथलाई बाजागाजासहित ल्याएर रथमा आरोहण गराइन्छ । पहिलो दिनमा जस्तै राजकीय खड्गसहित सबै पदाधिकारी रथमा सवार भएपछि रथलाई तानेर जात्रास्थल ल्योसींखेल पुऱ्याइन्छ । त्यसपछि भद्रकालीलाई पनि रथमा राखेर जात्रास्थल पुऱ्याइन्छ ।[३६]

भैरव–भद्रकालीको रथ जनसहभागिताद्वारा प्रमुख जात्रास्थल पुऱ्याएपछि मात्रै त्यहाँ विधिपूर्वक लिंगो ठड्याउने कार्य प्रारम्भ गरिन्छ । पचपन्न हाते नांग्लो फेद भएको खोटो सल्ला लिंगोका लागि प्रयोग गरिने परम्परा छ । यसको टुप्पातिर हरियो रुखको हाँगा राखेर टाउको र हात बनाइन्छ । लिंगोको टाउको र हातमा आकाश भैरवको प्रतीकको रूपमा नीलो कपडाले बेरिन्छ र बाँया कोखामा दुई ध्वजा गासिन्छन् । लिंगोलाई जीवन्यास दिएपछि त्यो पूर्णतान्त्रिक जीवत्व प्राप्त लिंगो देवता वा विश्वनाथ भैरव मानिन्छ ।[३७] यसपछि त्यसको दाँयापट्टि  चारवटा र बाँया चारवटा डोरी राखेर लिंगो उभ्याइन्छ । यो डोरी बाँट्ने कार्य गोलमढी टोलका मानन्धर गुठीले गरिआएको छ ।[३८] किनकि मानन्धर जाति यस सम्बन्धी काममा निपुण र पोख्त मानिन्छन् तर २०५४ सालदेखि मानन्धर जातिबाट उक्त कार्य नभएपछि लाकुलाछेँ टोलका बासिन्दाहरूबाट सो डोरी बाँध्ने कार्य भईरहेको छ ।[३९] लिंगोका आठ वटा कलात्मक डोरीलाई प्रतिकात्मक रूपमा अष्टमातृकाको रूप दिएको पाइन्छ । जनविश्वास के छ भने ती आठवटा डोरीमा अष्टमातृका देवीको अदृश्य शक्ति रहेको हुन्छ र ती अदृश्य शक्तिको भरले जब आठैवटा डोरी तनक्क तन्काइन्छ तब लिंगो उभिन्छ । त्यस्तै कसै–कसैका भनाइमा बिस्केटको लिंगो नै काशी विश्वनाथ वा आकाश भैरवको प्रतीक हो

[३६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[३७] भैरवनाथको रूपवर्ण प्रायः गरी नीलो हुन्छ । यसैले भैरवको पूजा गर्दा नीलो बस्त्र चढाउने परम्परा अद्यापि पाइन्छ । यस जात्रामा पनि लिंगोको टुप्पोतिर दाँया बाँया आठ, आठ हातका लामो रुखको हाँगो राखेर टाउकोदेखि दुवै हातमा नीलो ३२ हातको कपडाले मोडी बाँध्ने कार्य विधिपुर्वक सम्पन्न भएपछि मात्र लिंगो उभ्याउने जात्रा सुरु हुन्छ । यस तथ्यबाट लिंगो भैरवनाथको प्रतीक हो भन्ने बुझिन्छ । -तीर्थलाल नघःभनी, "भक्तपुरको लिंगो जात्रा", *अभिलेख,* वर्ष १६, अंक १६, (वि.सं. २०५५), पृ. ४१ ।

[३८] बिस्केट जात्रामा लिंगो उभ्याउनमा प्रयोग गरिने डोरीहरू बाँट्न र बाँध्न त्यस्तै भैरव र भद्रकालीको रथमा रथका अवयवहरूलाई पुथः(बेत) ले बाँध्ने कार्य भक्तपुरका मानन्धर जातिले गर्दछन् । यसमा पनि विशेष गरेर लिंगोको डोरी सम्बन्धी काम गोलमढी टोलका मानन्धर जातिले गर्दछन् भने भैरवनाथको रथमा चाहिँ दत्तात्रय सकुलाने टोलका मानन्धरहरूले गर्छन् । मानन्धर भित्र पनि माद्यः, पतासी जस्ता अनेक भेद पाइन्छ । भैरवको रथसम्बन्धी काम माद्यः मानन्धरहरूले गर्छन् । -वर्ष ७६ का पद्मबहादुर मानन्धरबाट मिति २०६७ श्रावण ४ गते प्राप्त जानकारीको आधारमा ।

[३९] गुठी संस्थान भक्तपुरका कार्यालय प्रमुख अच्युतानन्द पोखरेलबाट मिति २०६७७१४ गते प्राप्त जानकारी ।

र जब ती आठ वटा डोरीहरू हावामा हल्लिएर लिंगोमा बेरिन्छ तब भैरवनाथ र अष्टमातृका बीच समागम भएको विश्वास गरिन्छ ।[४०] लिंगो उभ्याउने इनार जस्तो खाल्डोलाई “ल्योसिंगाः” भनिन्छ । यसको मुख पश्चिमतिर फर्केको हुन्छ । यसै मुखमा लिंगोको फेद पारिन्छ । प्रतिकात्मक रूपमा ल्योसिंगाःलाई भद्रकालीको योनी र लिंगोलाई भैरवनाथको लिंगको रूपमा पनि लिइने गरिन्छ । जब जात्रामा सहभागी स्थानीय मानिसहरूको सहयोगले लिंगो उभ्याइन्छ, तब जात्रास्थलमा उपस्थित अपार जनसमुदाय खुसीले झुमिन्छन्, किनकि यसलाई भैरव र भद्रकाली बीच समागम वा रतिक्रिया भएको प्रतीकअर्थमा हेरिन्छ । संस्कृतिविद् तेजेश्वरबाबु ग्वंगज्यूकाअनुसार धरती भद्रकाली र आकाश भैरवनाथ हुन् र यो लिंगो उभ्याउने जात्रा दुबै बीचको यौन समागम हो अर्थात् ल्योसिंगा माथि लिंगो उभ्याउने जुन क्रिया छ, त्यो दुवै देवीदेवता बीचको सहवास वा मैथुन क्रिया हो ।[४१] यसरी उहाँले यस जात्रालाई यौन दृष्टिकोणबाट हेर्नु भएको छ । साथै लिंगो जुन दिशातिर ढल्कन पुग्छ, त्यस दिशातर्फ चाँडै वर्षा हुने जनविश्वास पनि पाइन्छ ।

लिंगो उभ्याइसक्नासाथ गुरुजुको पल्टनका सिंपाहीहरूले ३ चोटी तोप पड्काउने चलन थियो तर हाल यो चलन टुटिसकेको छ ।

लिंगो उभ्याउने परम्परा भक्तपुरबाहेक काभ्रेपलाञ्चोकको सांगा र श्रीखण्डपुरमा अनि काठमाडौँको टोखामा पनि रहेको छ तर विश्वध्वज पताका (विश्वकेतु) फहराउने प्रचलन भक्तपुरमा मात्र पाइन्छ । सांगामा लिंगो उभ्याउनुको साथै गणेशको रथयात्रा र नासिका भगवतीको पूजा आराधना गर्ने गरिन्छ भने श्री खण्डपुरमा श्वेतभैरव एवम् धनलक्ष्मी भगवतीको रथयात्रा हुने गर्दछ । धुलिखेल र चौकोटमा पनि त्यहाँका बासिन्दाले बिस्केटलाई विशेष चाडको रूपमा मान्दछन् । चौकोटमा गणेशको रथयात्रा हुने गर्दछ । बनेपामा पनि करीव सय वर्ष अघिसम्म लिंगो उभ्याउने परम्परा थियो । बनेपा दछु टोलका

---

[४०] लिंगो तान्ने आठवटा डोरी अष्टमातृकाकै प्रतीक हो भन्ने कुरा लिंगो उठीसकेपछि नवदुर्गाका गठु (वनमाली) हरू परम्परागत पोसाक घाजिलँ (यो पोसाक काँधदेखि खुट्टासम्म पुगेर कम्मर भागदेखि तल मुजामुजा परेको एकप्रकारको भोटो र जामा हो) लगाइ देवता फिर्ता लिन आउने अनि त्यो बेला लिंगोको नाममा जप तप, होम गर्ने परम्परा रहेबाट पनि उक्त विश्वास यथार्थ हो कि भन्ने अनुमान गर्न सकिन्छ । -स्थानीय बयोवृद्ध कान्छा भारिजुलाई उहाँका हजुर बुबाले भन्नु भएअनुसार एक साल दोलखामा नवदुर्गा लगेको बेला बिस्केट जात्रा पर्न गएको रहेछ । त्यो साल लिंगो उभिएन । तलेजुमा खोजीनीति भयो । एउटा चित्र भेट्टियो । त्यसमा अष्टमातृकाले आठ वटा डोरीले तानेर लिंगो उठाइरहेको रहेछ । तुरुन्तै तन्त्रद्वारा अष्टमातृकालाई भक्तपुरमा तान्यो र लिंगो उठायो । -वर्ष ८२ का कान्छा भारिजुबाट प्राप्त जानकारी ।

[४१] तेजेश्वरबाबु ग्वंगसँग मिति २०६६।१२।४ गते भएको छलफलबाट प्राप्त भएको जानकारीको आधारमा ।

बासिन्दाले अद्यावधि बिस्केटलाई विशेष चाडको रूपमा मान्ने गर्छन्,[४२] तर काठमाडौँको टोखामा बिस्केट जात्रा मनाउँदा अन्यत्र जस्तै चैत्र मसान्तको दिन छुट्टै लिंगो उभ्याउने चलन छैन । पासा चह्रे (पिशाच चतुर्दशी) का दिन उठाइएको लिंगोलाई नै बिस्केट जात्राको निमित्त पनि प्रयोग गरिन्छ । विशेष गरेर टोखाको तपलाछीं टोलका ल्योसींगुठीको सहभागिताबाट लिंगो उभ्याएर वैशाख ५ गते मात्र विधिपूर्वक लिंगो ढालेर जात्रा विसर्जन गरिन्छ । त्यहाँ चैत्र मसान्तदेखि वैशाख ५ गतेसम्म विभिन्न देवदेवीको खटजात्रा गरी बिस्केट मनाउने चलन छ ।[४३] त्यस्तै थिमी, बोडे, नगदेशमा पनि बिस्केट जात्रा मनाइन्छ । बिस्केटकोक्रममा वैशाख २ गते थिमीमा बालकुमारी जात्रा, बोडेमा जिब्रो छेड्ने जात्रा र नगदेशमा सिद्धीगणेशको जात्रा बडो धुमधामले मनाइन्छ । थिमी, बोडे, नगदेशका बासिन्दाहरूमा बिस्केट जात्रा मनाउने आफ्नै परम्परा रहेको छ । भक्तपुरको बिस्केट जात्रासँग तिनीहरूको कुनै सम्बन्ध रहेको पाइँदैन ।[४४] यसप्रकार बिस्केटको मह□वपूर्ण पक्ष भनेको लिंगो उभ्याएर विशेष प्रकारका एक जोडी ध्वजा (विश्वकेतु) फहराउनु हो । सो सांस्कृतिक कार्य भक्तपुर लगायत अन्य स्थानहरूमा देखिए पनि ती सबै भक्तपुरकै बिस्केट जात्राको प्रतिरूप हो भन्ने तथ्य थाहा लाग्दछ ।[४५]

लिंगो उभ्याउने कार्य सम्पन्न हुनासाथ रथमा सवार भैरवनाथलाई च्यासींदेवलको सामुन्ने रथको माझ ढोका पारी तल ओरालिन्छ र देवलभित्र राखिन्छ । भद्रकालीलाई पनि आफ्नो पीठमा लगेर राखिन्छ । त्यहाँ सर्वप्रथम भैरवनाथको "था पूजा" हुन्छ । त्यसपछि महादीप बाली ५० घरका रकमीलाई ४ मुरी ४ पाथी चामलको भात खुवाइन्छ । सोही रात त्यहाँ कालरात्री पूजा गरिन्छ । तान्त्रिक विधि विधानअनुसार गरिने यस पूजामा भेडा बोकाको बलि चढाइन्छ । देवतालाई बलि चढाएको बोका वा भेडाको आन्द्रा फुकी माला जस्तो पारेर देवताको वरिपरि लगाइने गरिन्छ । यसअघि भैरवनाथलाई च्यासिंमण्डपमा आसिन गराएपछि त्यहाँ नियमअनुसार सरकारी पूजा पनि हुन्छ । त्यसपछि राजकीय खड्गसहित तलेजुका पुजारी, गुरु पुरोहितहरू कुस्लेहरूको सांस्कृतिक बाजासहित लायकू

---

[४२] केदारनाथ प्रधान, "भक्तपुरको बिस्केट जात्रा र यसको प्राग ऐतिहासिक मह□व", *प्राचीन नेपाल,* संख्या १०९ (पुस माघ २०४५), पृ. १६ ।

[४३] गोपाल धौबन्जार, *बिस्केटजात्रा अष्ट प्रदेश उत्सव,* ललितपुर : जोशी रिसर्च इन्स्टिच्यूट, वि.सं. २०६५, पृ. ९१-९२ ।

[४४] यस सम्बन्धी विस्तृत जानकारीको लागि हेर्नुहोस अध्याय नौं को बिस्केट जात्राको तुलनात्मक अध्ययन ।

[४५] बिस्केट जात्रा मनाउने ती स्थानहरू इतिहासको कुनै कालखण्डमा कि त भक्तपुरको प्रभाव क्षेत्र रहेको हुनुपर्छ कि त भक्तपुरका स्थानीय बासिन्दाहरू बसाई सरेर ती स्थानहरूमा गएर बसोबास गरेको हुनुपर्छ, जसले बिस्केट जात्रा मनाउने भक्तपुरको सांस्कृतिक परम्परा पनि सँगै लिएर गयो ।

दरबारतिर फर्कन्छन् । लिंगो उभ्याएपछि स्थानीय मानिसहरू आउँदो वर्ष आफ्नो लागि शुभ होस भनेर श्रद्धापूर्वक लिंगोको पूजा गर्छन् ।[४६] यसै पूजाको सिलसिलामा लिंगोलाई बोका बलि दिने काम पनि हुन्छ । श्रद्धालु भक्तजनहरू नववर्षका दिन वीरध्वजालाई शिरले छोएर ढोग्दछन् । यसअवसरमा त्यहाँ विविध साँस्कृतिक क्रियाकलाप र धार्मिक गतिविधिहरू पनि हुने गर्छन् । स्थानीयवासी विशेष गरेर तन्नेरी युवाहरू डोरीमाथि चढ्दै गइ लिंगोको टुप्पोसम्म पुगेर फूलप्रसाद लिएर आउने गर्छन् ।[४७]

लिंगो उभ्याउनु अघि भद्रकालीपीठमा गंगापूजा गरिन्छ । गंगापूजामा भद्रकाली नाइकेले मन्त्रोच्चारण गरी कसाईहरूलाई रांगो संकल्प गर्दछ । कसाईद्वारा काटिएको रांगोको टाउकोमा बत्ती बाली पोडे नाइकेले कसाईको शैलीमा त्यस टाउकोलाई कुममा बोकी नायखीं बाजा बजाउँदै, तिंप्वा बाल्दै, छाता काची (पंखा) ले हम्कँदै जात्रा गरेर टौमढी चण्डिका भुजिङकोखामा ल्याइन्छ । यसलाई "म्ये छुँय(कपः)जात्रा" भनिन्छ । गुठी पालेको घर अगाडि जम्मा भएका सबै पोडेहरूलाई फूलप्रसादका साथै सम्हेय्बजी खुवाइन्छ । त्यसपछि पोडेहरूले लिंगो राखेको घरबाट लिंगो निकालेर लिंगो उठाउने ठाउँमा तेर्स्याएर राखिदिने, कालासीं (कैंची काठ) बनाएर मिलाउने, लिंगोमा डोरी बाँध्ने आदि कार्य गर्दछन् । यी पोडेहरूले लिंगो उभ्याउन भयो भने पछि मात्र लिंगो उभ्याउने जात्रा सुरु हुने गर्दछ ।[४८] तर विविध कारणले गर्दा अहिले आएर यो म्ये छुँय (कप) जात्राको परम्परा टुटिसकेको छ । तैपनि आफ्नो परम्परालाई मास्न दिनुहुँदैन भनेर गंगापूजाका गुठीयारहरूले त्यसदिन भद्रकाली पीठमा रांगो बलि दिई एउटा कसाईको सहयोग लिई त्यसलाई रांगोको टाउको बोकाएर टौमढी भुजिंकोखामा रहेको भैरवलाई चढाउन ल्याउने गरिएको छ । यसपछि मात्र लिंगो उभ्याउने जात्रा सुरु गरिन्छ ।[४९]

---

[४६] श्रेष्ठ, पा.टि.नं. २६, पृ. १५ ।

[४७] जीम गडम्यान, *गाइड टु इन्जोइङ नेपलिज फेष्टिवल्स,* काठमाडौँ : काली प्रेस, ई.सं. १९८१, पृ. ४५ ।

[४८] भक्तपुर भेलुखेल निवासी वर्ष ७३ का धनबहादुर ह्यलासँग मिति २०६७।२।३ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[४९] (क) भक्तपुरको स्थानीय नेवार सांस्कृतिक परम्परामा एउटा मान्यता के पाइन्छ भने एउटा शुभकार्य प्रारम्भ गर्नु पूर्व अर्को शुभकार्य सम्पन्न गर्नु आवश्यक हुन्छ । त्यसो भनिए झैं मेय् छुँय (कपः) जात्रा सम्पन्न नगरिकन लिंगो उठाउने कार्य सुरु गरिँदैन भन्ने मान्यता अद्यावधि पाइन्छ । -भैरव नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) सँग मिति २०६७।७।१८ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।
(ख) तर यो म्ये छुँय (कपः) जात्रा बिस्केटको क्रममा गरिने भए पनि यसको भैरव गुठीसँग कुनै सम्बन्ध छैन । यो नकिंजु अजिमाको गंगा पूजासँग सम्बन्धित भएकोले यसको सम्पूर्ण कार्य नकिंजु अजिमा (भद्रकाली) गुठीले हेर्ने गर्दछ । -भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङबाट मिति २०६७।४।२३ गते प्राप्त जानकारीको आधारमा ।

चैत्र मसान्तको बिहान श्री भैरवनाथ र भद्रकालीका लागि सरकारी पूजा आउँदा दुईवटा निख्खर कालो बोकासमेत लिएर आउँछ । कुन बोका कुन देवतालाई बलि दिने हो निर्णय गर्न गा:हिटी दोबाटोमा दुईवटै बोका छाडिन्छन् । जुन बोका लाकुलाछैंतिर जान्छ त्यो बोका भैरवनाथलाई र जुन बोका लय्कोतिर जान्छ त्यो बोका भद्रकालीलाई बलि चढाइन्छ तर आजभोलि त्यसरी ल्याइने बोका अत्यन्तै सानो हुने हुँदा मानिसले घिसार्दै लानुपर्ने भइरहेको छ ।[५०] साथै उक्त दिन गा:हिटीबाट भैरव–भद्रकालीको रथलाई जात्रा गर्दै मुख्य जात्रास्थल योसिंखेलतिर तानेर लाँदा भैरवको रथ अगाडि र भद्रकालीको रथ पछाडि पारेर लाने चलन छ । यसैकारण लय्को देवल बाहिर बाटोमा रहेको भद्रकाली रथले गा:हिटीबाट आएको भैरव रथलाई बाटो छाड्ने गर्दछ ।

चैत्र मसान्तकै दिन बेलुका लिंगो उभिएपछि गुठी अड्डामा राखी छाडेको मुर्दा हाल्ने खट "भाजं खट" लाई सिंगारेर चारजना मानिसले बोकेर मुर्दाजात्रामा बजाउने नाय्खीं बाजा[५१] बजाएर लिंगोस्थल चुपींघाट पुऱ्याएर विधिविधान बमोजिम पूजाआजा गर्ने परम्परा छ । यसरी जात्रा गर्दा त्यस मुर्दा खटलाई सेतो कपडाले छोपेर, जुत्ता, टोपी नलाई मसानमा मुर्दा लगे भैंm गरी जात्रा गरी लाने गरिन्छ । यो जात्रा टौमढीको पश्चिम बहताल अथवा भुजिंकोखा भन्ने स्थानबाट प्रारम्भ हुन्छ । यो मुर्दा खटजात्रा सञ्चालनको निमित्त एउटा अलग्गै गुठीको व्यवस्था छ र सो गुठी ३७.५ रोपनी जग्गाको आम्दानीले चल्दछ ।[५२] राजकुमारीको नाकबाट निस्कने एकजोडी नागद्वारा हरेक रात एक परदेशी युवकको मृत्यु हुने र त्यसपछि त्यसको लास जलाउन घाट लाने जुन वर्णन किम्बदन्तीमा पाइन्छ,त्यसलाई आधार बनाएर, त्यसैको भाव दर्शाउन यो जात्रा गरिएको भन्ने बुझिन्छ । यो जात्राको प्रचलन पछिल्लो मल्लकालमा आएर भएको बुझिन्छ । यसकोलागि राजा जगतप्रकाश

[५०] प्रजापति, पा.टि.नं. १९, पृ. ३४ ।

[५१] नायखीँ बाजा यहाँका कसाई जातिले बजाउने परम्परागत बाजा हो । यसमा 'खीङ' बाजाका साथमा 'काँय' बाजा पनि हुन्छ । जात्रा वा उत्सवको अवस्था अनुसार यो बाजा बजाइन्छ । जस्तैः सुखद अवसरमा शुभ बाजाको रूपमा र शवयात्राका बेला सीबाजाको रूपमा यो बजाइन्छ । त्यस्तै मल्लकालमा सार्वजनिक सूचना प्रवाह गर्दा पनि यो बाजा बजाइने गरिन्थ्यो, जसलाई "नायखीं च्वेकेगु" भनिन्छ । -तुलाछैं टोलका नेपाल भाषाका सह–प्राध्यापक रामकृष्ण श्रेष्ठ (वर्ष ५९) बाट प्राप्त जानकारी ।

[५२] (क) भद्रकाली गुठीका नाइके इन्द्र लिवी (वर्ष ६०) बाट मिति २०६७।७।२७ गते प्राप्त जानकारी ।

(ख) लीलाभक्त मुनंकमीं, *बिस्केट जात्राको संस्कृति,* भक्तपुर : भक्तपुर नगरपालिका, वि.सं. २०५३, पृ. १८ ।

(ग) यो जात्रा किम्बदन्तीमा उल्लेखित भक्तपुरका राजकुमारीको नाकबाट हरेक रात निस्कने एकजोडी नागबाट मारिने युवकहरूको शवलाई घाटसम्म लैजानको निमित्त गरिएको हो भन्ने लोकवाद रहे पनि हाल यसको प्रचलन नाम मात्रको रहेको छ ।

(घ) यो जात्रा लिंगो उभ्याएपछि बहताल टौमढीबाट सुरु गरी लिंगोस्थल पुऱ्याइ सम्पन्न गरिन्छ । -भैरवगुठीका मूलनाइके ज्ञानबहादुर छुकाङबाट मिति २०६७।४।२३ गते प्राप्त जानकारीको आधारमा ।

मल्लले ३७/५ रोपनी जग्गाको गुठी राखेर गएका थिए । तर पनि हाल यो जात्रा मुस्किलले चलिरहेको छ ।

विश्वध्वजोत्थानोत्सव अर्थात् विश्वध्वज लिंगो उभिने बित्तिकै त्यसखुसीयालीमा त्यसैसाँझ भक्तपुर नगरभरि टोल–टोलमा रहेका गणेश, निर्दिष्ट स्थानमा रहेका अष्टमातृकाहरूको धुमधामले खटजात्रा गर्ने परम्परा अद्यावधि रहेको पाइन्छ । विशेष गरेर लिंगोस्थल भेलुखेलमा विश्वनाथ भैरवको लिंगो उभ्याउने वित्तिकै टोल–टोलमा रहेका गणेश, अष्टमातृका आदि देवदेवीहरूलाई आ-आफ्नो देवगृहको गुप्त स्थानबाट बाहिर ल्याई सिंगारिएको खटमा राखी विधिपूर्वक पूजापाठ गरी बाजागाजाका साथ जात्रा गर्दै सम्बन्धित देवीदेवताका पीठहरूमा लाने परम्परा अद्यावधि पाइन्छ । यस्ता जात्राहरूमा इन्द्रायणीको त्वारेवा जात्रा, वाराही अजिमाको तिंप्वा जात्रा, इनागा गणेशको खटजात्रा आदि प्रसिद्ध रहेका छन् ।[५३]

यसैगरेर चैत्रमसान्तकै दिन लिंगो उभिनु अघि र लिंगो उभिए पछि भक्तपुर लायकू दरबार परिसरभित्र तलेजु मूलचोकको उत्तर पश्चिम कुनामा विराजमान भएकी दुमाजुदेवी कहाँ भव्य मेला र जात्रा लाग्ने गर्दछ । विशेष गरेर चैत्र मसान्त र वैशाख संक्रान्तिका दिन दुमाजुदेवी कहाँ तान्त्रिक विधि अनुरूप पूजापाठ गर्ने, महादीप बाल्ने, दोपाया, चौपाया पशु बलि दिने, जात्रा गर्ने जस्ता बिस्केट जात्रासम्बन्धी सांस्कृतिक कार्यहरू गरिन्छन्, जसलाई ऐतिहासिक सामग्रीहरूमा कोलुक्यात वा कुलुक्यात, कुरुक्यात भनिएको पाइन्छ ।[५४] यस अनुसार सर्वप्रथम चैत्र मसान्तको दिन अपरान्ह दुमाजुदेवी कहाँ विश्वध्वज पूजा गरेपछि राजकीय प्रतीक रूपमा मान्य खड्ग विधिपूर्वक लिंगो उभ्याउने स्थल (ल्योसींखेल) पुऱ्याएपछि लिंगो खडा गरी जात्रा मनाइन्छ ।

चैत्र मसान्तमा लिंगो उभ्याउने जात्रा सम्पन्न भएपछि लायकु दरबारभित्रको दुमाजुदेवीको पीठमा फलाभिषेक सहित विशेष तान्त्रिक पूजा विधान र जात्रा हुन्छ । पुरै रात महादीप बालिन्छ । सोही महादीपलाई तान्त्रिक विधिपूर्वक महाभैरव (मसान भैरव) को रूपमा पूजाकर्म चलाई छाग बलिसहित “गो तसि” नामक होम पनि गरिन्छ ।[५५] भैरव रूपी

[५३] पहिले–पहिले जात्रास्थल ल्योसींखेलमा लिंगो उभिएको थाहा पाउने सजिलो माध्यम यी स्थानीय खटजात्राहरू नै थिए अर्थात् स्थानीय खटजात्राहरू हुन थालेपछि ल्योसींखेलमा लिंगो उभ्याउने कार्य सम्पन्न भइसकेछ भन्ने जानकारी सारा नगरवासीले थाहा पाउने गर्दथे ।

[५४] ‘ऐतिहासिक घटनावली’ हस्तलिखितग्रन्थ, पा.टि.नं. ३३, पृ. ३२२(क)–३२३(ख) ।

[५५] श्रेष्ठ, पा.टि.नं. २७, पृ. १७ ।

महादीपमा बोका बलि दिई पूजा गरिन्छ । अनि गुठीयारहरूले दुमाजुदेवीको प्रतिमालाई विमान खटमा बसाली दुमाजु पीठदेखि मूलचोकसम्म जात्रा गरी लाने र पुनः जात्रा गरी फर्काएर यथास्थानमा पु-याइन्छ ।

वैशाख संक्रान्तिको मिर्मिरे बिहान महादीप पूजा विसर्जन गरी हंस बलिसहित दुमाजुदेवीको प्रत्यारम्भ पूजा गरी खाइबसि (बकाइनो) नामक फलले फलाभिषेक विधान गरिन्छ । यस दिन बिहानै दुमाजु चोकको पोखरीमा मेला लाग्ने गर्दछ । विशेष गरेर रुन्चे लागेका बालबालिकालाई त्यसको निवारणका लागि त्यहाँ नुहाउन ल्याउने गरिन्छ । त्यस अवसरमा खाइबसि (बकाइनु) फल प्रसादको रूपमा वितरण गरिन्छ ।[५६]

त्यस दिन अपरान्ह दुमाजुदेवीलाई विमान खटमा राखी जात्रा गरी लक्ष्मीविलास चोकमा ल्याएर राखिन्छ । राजकीय खड्गसहित सरकारी पूजाभाग लिएर आएको समूहले दुमाजुदेवी लगायत भैरव, भद्रकाली, इन्द्रायणीका निमित्त पनि पूजा भाग ल्याएको हुन्छ । अनि स्वर्णद्वार सामुन्ने इन्द्रायणीलाई पूजा गरिसकेपछि सो समूह दरबारभित्र खड्गसहित प्रवेश गरी दुमाजुदेवी कहाँ पुग्छन् । त्यहाँ राजोपाध्याय पुरोहितले सो खड्गलाई दुमाजुदेवी सामु गुह्य तवरले पूजा गरिसकेपछि आफ्नो हातमा लिएर मूलचोकमा आउँछन् । त्यहाँ घटदान, जोगीचक्र (घासापालु) पूजा चलाई दर्शनधारी (कापालिक) हरूलाई भोजन प्रदान गरिन्छ ।[५७] यसपछि सो खड्ग लिई गुरु पुरोहित, राजोपाध्याय ब्राम्हण, भैलनायोहरूको टोली कुस्लेको बाजासहित लिंगोजात्रा विसर्जनका लागि मुख्य जात्रास्थल ल्योसिंखेल प्रस्थान गर्छन् । त्यहाँ त्यस टोलीले लिंगोलाई विधिवत पूजा गरेपछि सो लिंगो ढाल्ने जात्राविधान सम्पन्न गरिन्छ । स्थानीयवासीहरू लिंगो नढालेसम्म नयाँवर्ष सुरु भएको मान्दैनन् र जब लिंगो ढाल्ने कार्य सम्पन्न हुन्छ, त्यसपछि मात्रै पुरानो वर्ष समाप्त भएर नयाँवर्ष सुरुवात भएको खुसीयाली मनाउँछन् । साथै लिंगो ढालेपछि जुन व्यक्तिले सबभन्दा पहिले लिंगोको टुप्पोमा रहेको फूल प्राप्त गर्न सक्छ, त्यसले असल सन्तान प्राप्त गर्छ भन्ने कुरामा स्थानीयवासी हरू विश्वास गर्दछन् ।[५८]

लिंगो ढाल्ने जात्रा सम्पन्न भएपछि यतातिर दरबारभित्र दुमाजुदेवीको जात्रा प्रारम्भ हुन्छ । यस सिलसिलामा देवीलाई खटमा राखेर दरबारको मूल प्रवेशद्वार स्वर्णद्वारबाट बाहिर

[५६] लीलाभक्त मुर्नकर्मी, *हाम्रा सांस्कृतिक पर्व र जात्राहरू*, काठमाडौँ : दयारत्न शाक्य, द्वितीय संस्करण, वि.सं. २०४३, पृ. १०८ ।

[५७] यो भोजन प्राप्त गर्न विगतमा दर्शनधारी (कुस्ले) हरूका साना केटाकेटीदेखि वृद्धवृद्धाहरूसम्म यसदिन तलेजु मूलचोक बाहिर हुलबाँधेर बसेका हुन्थे । तर अहिले त्यस्तो देखिँदैन । -तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट मिति २०६४।१२।१५ गते प्राप्त जानकारी ।

[५८] श्रेष्ठ, पा.टि.नं., पृ. १५-१६ ।

ल्याई बसन्तपुर दरबारको पश्चिमपट्टिको खुल्लाद्वारसम्म लगी पुनः फर्काइ तुलाछें हुँदै स्थानीयबासिन्दाका पूजा ग्रहण गर्दै भोलाछें टोलका मुगुठीयारहरूको आगमघरमा पुऱ्याई विधिवत पूजा गरी देवीलाई फर्काइन्छ। फर्काएर ल्याउने क्रममा सुकुलढोका त्रिपुर विद्यापीठ आगममा पनि सम्बद्ध कर्माचार्यहरूले था:पूजा गर्छन् । त्यसपछि देवीलाई त्यहाँबाट दरबारभित्र तिनको मूल स्थानमा पुऱ्याइ जात्रा सम्पन्न गरिन्छ। ध्यान दिन योग्य कुरा के छ भने यो जात्रा भक्तपुरमा मात्र नभएर हनुमानढोका दरबार काठमाडौंमा पनि हुने र त्यसबेला त्यहाँ मानन्धरहरूद्वारा लिंगो गाड्ने र ढाल्ने काम पनि यस जात्रामा हुने हुनाले दुमाजुको यो जात्रा बिस्केट जात्राकै एउटा रूप हो भन्ने देखिएको छ । बिस्केट जात्रा र यो जात्रा वैशाख संक्रान्तिकै दिन सम्पन्न गरिने हुनाले पनि यस कुराको पुष्टि हुन्छ ।[५९] यस सम्बन्धी विस्तृत व्याख्या सम्बन्धित अध्यायमा गरिएको छ ।

यसरी केही वर्ष अघिसम्म बडो धुमधामले गरिने यो दुमाजुजात्रा हालका दिनमा आएर केवल औपचारिकता पूरा गर्न तलेजु मूलचोक भित्र मात्र सीमित गरिएको छ ।[६०] यसको पछाडि मुख्यकारण सम्बद्ध गुठीयारहरूले सुरक्षाको जिम्मा लिने आँट गर्न नसक्नु हो ।

बिस्केट यथार्थमा नौ दिनसम्म मनाइने सांस्कृतिक पर्व हो, तर त्यसो भए तापनि बिस्केटको मुख्य चाड भनेको चैत्र मसान्त र वैशाख संक्रान्ति नै हो । किनकि विश्वनाथ भैरवको ध्वजा, जसलाई वीरध्वजा, विश्वध्वजा, विश्वकेतु, हलिंपता आदि नामले सम्बोधन गरिन्छ, को ध्वजोत्थानोत्सव वा लिंगो जात्रा यही दुई दिनभित्र सम्पन्न हुने गर्छ। यसैले चैत्र मसान्तका दिन अर्थात् लिंगो उभ्याउने दिन भक्तपुरवासीहरूमा भात खानुहुँदैन भन्ने परम्परा छ । त्यो दिन चिउरा भोज खाइन्छ ।[६१] नेवार सामाजिक संस्कारमा भातलाई भन्दा चिउरालाई शुद्ध र चोखो मान्ने परम्परा रहेको छ ।[६२]

---

[५९] गौतमवज्र वज्राचार्य, *हनुमानढोका राजदरबार,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३३, पृ. १५५ ।

[६०] किनकि दुमाजुदेवी मल्ल राजाहरूका ईष्टदेवी हुन् । मल्लराजाहरूले यिनलाई चढाएका गरगहनाहरू प्रशस्त छन् । जात्राका बेला देवीलाई ती गरगहनाले सज्जाएर बाहिर ल्याउँदा सुरक्षा गर्न नसकिने भन्दै सम्बद्ध गुठीयारहरूले जात्रालाई स्थानीय दरबार परिसर भित्रै सीमित गरेका हुन ।–भक्तपुर ईपाछेँका विनोदराज शर्मा (वर्ष ५५) बाट मिति २०६८।७।२५ गते प्राप्त जानकारी ।

[६१] बलराम कायस्थ, *भक्तपुर शहरमा मनाइने केही ऐतिहासिक चाडपर्वहरू,* (अप्रकाशित स्नातकोत्तर तहको शोध प्रबन्ध), इतिहास केन्द्रीय विभाग, त्रि.वि., वि.सं.२०५०, पृ. ३५ ।

[६२] जात्रा वा चाडपर्व मनाउँदा भात खानुहुँदैन भन्ने मान्यता पाइन्छ। त्यस्तो बेला यहाँ बिहान सम्हेय्बजी र बेलुका भोज खाने गरिन्छ। भोजमा चोखोको निम्ति चिउराको प्रयोग गरिन्छ। चिउरालाई हाल बजी भनिए पनि प्राचीन समयमा "फलके" भनिन्थ्यो । -धनवज्र वज्राचार्य र के पी मल्ल (सं), *दि गोपाल राजवंशावली,* काठमाडौं : नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, पृ. ५८ (ख) पत्र ।

चैत्र मसान्तको दिन बेलुका ल्योसींखेलमा लिंगो ठड्िने बित्तिकै भक्तपुर शहरमा स्थापना गरिएका विविध देवीदेवतालाई खटमा राखी जात्रा गर्ने परम्परा अद्यावधि रहेको पाइन्छ । त्यस्ता जात्राहरूमा खौमा टोलको इन्द्रायणीको त्वादिवा जात्रा र वंशगोपालको वाराही अजिमाको तिंप्वा जात्रा प्रसिद्ध छन्, जुन जात्राहरू मूल देवगृहबाट प्रारम्भ गरी सम्बन्धित पीठमा लगेर सम्पन्न गरिन्छन् ।

अष्टमातृकाहरूमध्ये इन्द्रायणी पनि एक हुन् । भक्तपुरमा इन्द्रायणीको देवगृह लायकू दरबार देखि पश्चिमतिर खौमा टोलको मध्य भागमा अवस्थित छ । यिनको पीठ चाहिं मूल देवगृहबाट लगभग १०० पाइला उत्तर दिशातिर ओरालो मुनि रहेको छ । यो खटजात्रा पनि त्यसै क्षेत्रभित्र सीमित छ । यस जात्राको मुख्य आकर्षण भनेको श्रद्धालु भक्तजनहरूले त्वादिवा (चिरागबती) बालेर बाटोको दुवै छेउमा क्रमबद्ध भएर देवीको खटजात्रा सँगसँगै अघि बढ्नु हो । त्यसवेला चिरागबतीको ज्वाला र भजन कीर्तनको संगीतमय गुञ्जनले जात्राको माहौल देदिप्यमान देखिने गर्छ । जात्राको क्रममा सर्वप्रथम देवीलाई मूलदेवगृहबाट तल ल्याई त्यहाँ पहिलेदेखि सिंगारेर राखेको कलात्मक खटमा बसाली विधिवत पूजा गरे पछि अगाडिपछाडि दुवैतिरबाट ८, १० जना मानिसले उचालेर काँधमा बोकेर अघि बढाइन्छ । त्यसअघिल्तिर दाफाभजन, धल्चा भजन,[६३] कीर्तन, बाँसुरी बाजा, धिमे बाजा बजाइ प्रत्येक घर–घरबाट एउटा–एउटा त्वादिवा (चिराग बती) बाली आफ्नो श्रद्धाअनुसार पूजा गरी इन्द्रायणीको खटजात्रालाई टोलको सबै भागमा घुमाएर अन्त्यमा पीठमा पुऱ्याइन्छ । त्यहाँ पुऱ्याएपछि देवीलाई खटबाट ओराली पीठमा विराजमान गराई विधिपूर्वक पूजा गरिन्छ । जात्रासँगै आएका भजन मण्डलहरू त्यहाँ रातभर जाग्राम रही बत्ती बाली भजन गरिरहन्छन् ।[६४]

भोलिपल्ट मेष संक्रान्तिका दिन अपरान्ह इन्द्रायणीलाई पीठबाट खटमा बसाली जात्रा गर्दै लायकू दरबारको मूलद्वार(स्वर्णद्वार)सामु लगेर राखिन्छ । त्यहाँ तलेजुको तर्फबाट गर्नुपर्ने विधिसम्मत पूजागरेपछि तलेजुका मूलपुजारी राजोपाध्याय ब्राम्हणले त्यसको फूल प्रसाद लिएर राजकीय खड्गसहित कुस्लेको मुवाली बाजासहित लावालस्कर मूल जात्रास्थल

[६३] नेवार सांस्कृतिक जीवनमा अनेक प्रकारले भजन कीर्तन गर्ने आफ्नै विशिष्ट मौलिक परम्परा रहेको छ । यस्ता भजनहरूमा दाफा भजन, धल्चा भजन, रास भजन आदि उदाहरणीय छन् । अन्य भजनका तुलनामा दाफा भजन, धल्चा भजनका गीत गाउन र बाजा बजाउन सरल पनि छन् । किनकि अन्य भजनमा जस्तै यसमा द्यःल्हाय् (मंगलाचरण) गर्ने, राग अलाप लिने, भजनियाहरूको निश्चित् संख्याको उपस्थिति अनिवार्य नहुने र सुरुवात मै गाउन मिल्ने हुँदा यो लोकप्रिय छ र टोल–टोलमा यी भजन गुठीहरू सक्रिय छन् । यसमा लालाखिं, पछिमा, तःनामका बाजाहरू प्रमुख मानिन्छन् ।

[६४] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

ल्योसींखेल (लिंगो स्थल) प्रस्थान गर्छ । त्यहाँ पुगेर लिंगोको विधिसम्मत पूजा गरेपछि मात्र लिंगो ढाल्ने जात्रा सम्पन्न गरिन्छ । यसरी बिस्केटपर्वकोक्रममा चैत्र मसान्त र वैशाख संक्रान्तिका दिन हुने यो इन्द्रायणी खटजात्राको निक्कै ठूलो सांस्कृतिक मह□व रहेको पाइन्छ । किनकि यसको फूलप्रसाद लिंगोस्थल(ल्योसींखेल) नपुऱ्याएसम्म विश्वध्वज जात्राको विसर्जन (लिंगो ढाल्ने जात्रा सम्पन्न) गरिँदैन ।[६५]

इन्द्रायणीको त्वादिवा जात्रा जस्तै वाराही अजिमाको तिंप्वा जात्रा पनि निक्कै प्रसिद्ध छ । तन्त्र विद्या अनुरूप भक्तपुरमा स्थापित अष्टमातृकामा वाराहीको निक्कै मह□वपूर्ण स्थान छ । राजा आनन्ददेवले भक्तपुरलाई राजधानी नगरको रूपमा स्थापना गर्दा तान्त्रिक दृष्टिकोणबाट भक्तपुरलाई सुरक्षित राख्न समग्र भक्तपुर नगरलाई यन्त्राकार वृत्तभित्र पारी त्यसको वरिपरि अष्टमातृकाको पीठ प्रतिस्थापन गराएका थिए, जसमध्ये पश्चिमतिर वाराही पीठ अवस्थित छ ।[६६] यसको मूलदेवगृह नगरभित्र तेखाचो टोलमा रहेको छ । वाराही न्हयसः त्वाः (सात सय टोल ?) का पूज्यनीय देवी हुन् । यसको गुठी आज पनि आर्थिक रूपले सम्पन्न रहेको छ । यस कुराको पुष्टि मन्दिर वरिपरि निर्माण भएका भौतिक पुर्वाधारहरूले गर्दछ ।

चैत्र मसान्तका दिन बिहान वाराही द्यःछेँ (मूलदेवगृह) का पुजारी आचाजुले सर्वसाधारणले चढाउन ल्याएको पूजा चढाइ आफूले गर्नुपर्ने तान्त्रिक विधिबमोजिमको पूजा गरी निराहार व्रत बस्ने गर्छन् । यहाँनेर ध्यान दिनुपर्ने कुरा के छ भने त्वादिवाजात्रा लिंगो नउभिए पनि गर्न मिल्छ भने वाराहीको तिंप्वा जात्रा गर्न मिल्दैन ।[६७] यसैले ल्योसींखेलमा लिंगो नउभिएसम्म अथवा वाराही अजिमाको खटजात्रा सम्पन्न नभएसम्म वाराही देवगृहका आचाजु(पुजारी)ले केही नखाइकन निराहार नै रहनुपर्छ ।

चैत्र मसान्तका दिन साँझपख ल्योसींखेलमा लिंगो उभिएपछि यतातिर तेखाचोमा वाराही देवताको जात्राका लागि देवगृह बाहिर सिंगारपटार गरेर राखिएको कलात्मक खटमा देवीको प्रतिमालाई बसाली तिंप्वा जात्रा गरिन्छ । यो जात्रा तेखाचो टोलबाट क्रमशः नासमना, मंगलाछे, थुचो हुँदै तल मंगलतीर्थ नदी पारी वाराही पीठसम्म लाने गरिन्छ ।

---

[६५] (क) वर्ष ८३ का रत्नराज राजोपाध्याबाट मिति २०६५।५।२५ गते प्राप्त जानकारीको आधारमा ।
(ख) इन्द्रायणीलाई गरेको पूजाको फूलप्रसाद जात्रा स्थलमा रहेको भैरवनाथलाई नचढाइकन राजाले भैरवनाथको दर्शन गर्नुहुँदैन र राजाले भैरवको दर्शन नगरिकन लिंगो ढाल्ने जात्रा सम्पन्न गर्न मिल्दैन भन्ने धारणा अनुरूप राजप्रतिनिधिको प्रतीक शाही तरवार (खड्ग) रथमा आरोहण गरेपछि लिंगो ढाल्ने जात्रा सम्पन्न गरिन्छ । -वर्ष ६८ का गोविन्द्र मल्लसँग मिति २०६५।०३।१२ मा भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[६६] रवर्ट आइ. लेभी, *मेसोकज्म,* दिल्ली : मोतीलाल बनारसी दास पब्लिसर्स, ई.सं. १९९२, पृ. १६६ ।

[६७] वाराही भजनगुठीका गुठीयार वर्ष ७० का गणेशबहादुर धोंजुबाट मिति २०६५।१२।२९ गते प्राप्त जानकारीको आधारमा ।

बालकदेखि वृद्धसम्मले तिंप्वा (निगालोको मुठा) बालेर, दाफाभजन, धल्चाभजन, कीर्तन, धिमेबाजा, नायखिंबाजा, बाँसुरीबाजा आदि बजाउँदै अगाडि पछाडिबाट २०, २२ जनाले देवीको खटलाई बोकेर जात्रा गर्दै मंगलतीर्थ पारीको पीठमा पुऱ्याई जात्रा सम्पन्न गरिन्छ । त्यसअवसरमा देवीको प्रतिमालाई खटबाट ओराली पीठको देवतासँगै राखिन्छ ।[६८] यसपछि जात्रासँगै आएका पुजारीले विधिपूर्वक गर्नु पर्ने पूजा गरी फलाहार गर्छन् । यसक्रममा देवगृहका देवता र पीठका देवता दुवैलाई रातीसँगै राखी निवस्त्र पारी नित्यपूजा गरिन्छ । यो पूजा कसैले पनि हेर्नुहुँदैन भन्ने मान्यता अद्यावधि पाइन्छ । किनभने देवगृह र पीठका देवता वर्षको एकपटक त्यसैदिन राती दम्पतीका रूपमा निवस्त्र भई संभोग गर्ने हुनाले हेर्न हुँदैन भनिएको हो ।[६९] पूजारीले नित्यपूजा सम्पन्न गरेपछि यदि त्यसवेला न्हेयस त्वाः मा रहने बासिन्दामध्ये कसैले सर्वप्रथम त्यहाँ बस्त्र चढाउन ल्यायो भने त्यसको मनोकांक्षा पूरा हुन्छ भन्ने जनविश्वास पनि पाइन्छ । रातभरिमा त्यहाँ पाँच भाग पूजा चढाइन्छ । जात्रासँगै आएका विभिन्न भजन गुठीका गुठीयारहरू, श्रद्धालु भक्तजनहरू रातभर जाग्राम बसी बत्ती बाली भजन कीर्तन गरिरहन्छन् ।[७०]

मेष संक्रान्तिका दिन साँझपख जब ल्योसींखेलमा लिंगो ढाल्ने जात्रा सम्पन्न गरिन्छ तब वाराही देवतालाई पनि पीठबाट खटमा राखी अघिल्लो राती झैं जात्रा गरी देवगृहतिर फर्काइन्छ । यसरी फर्काइँदा आफ्नो क्षेत्रको २४ वटै टोलमा देवीको खटलाई घुमाएर पूजा थाप्ने कार्य गरिन्छ । यस क्रममा घरका झ्याल झ्यालबाट स्थानीयवासीले चतामरी रोटी चढाएर पूजा गर्छन् । कतिपय गृहिणीले घर बाहिर खटमै गएर पनि पूजा गर्छन् । अन्त्यमा तेखाचोको देवगृह प्राङ्गणकै सिंहासनमा राज गराइन्छ । वैशाख ५ गते अर्थात् बिस्केट पर्वको अन्तिम दिन "द्यः थाहाँ बिज्याकिगु" सांस्कृतिक कार्यसँगै वाराही देवीलाई पनि देवगृहको मूल स्थानमा विराजमान गराइन्छ । त्यसअवसरमा "बिचाः पूजा" चढाइन्छ ।[७१]

यसरी भक्तपुरमा नौ दिनसम्म मनाइने बिस्केट पर्वको सांस्कृतिक गतिविधिमा विशेष गरेर ल्योसींखेलमा विश्वनाथ भैरवको लिंगो उभिएपछि अर्थात् विश्वध्वजोत्थान भएपछि

---

[६८] स्थलगत अध्ययन र प्रतयक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[६९] वर्ष ५२ का आचाजु रामकुमार कर्माचार्यसँग मिति २०६५।१२।३० गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[७०] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[७१] वाराही गुठीका वर्ष ७० का गणेशबहादुर धोंजुबाट प्राप्त जानकारीको आधारमा ।

त्यसको सम्मानमा गरिने विभिन्न विधिविधानहरूमध्ये एउटा मह□वपूर्ण विधान वाराही अजिमाको तिंप्वा जात्रा पनि हो भन्ने कुरा थाहा लाग्दछ ।

## ८.५ घासापालु (जोगीचक्र पूजा)

नेवारहरूको सामाजिकसंस्कारमा आफ्नो परिवारभित्र यदि कसैको मृत्यु भएमा त्यसरी मृत्यु भएको व्यक्तिको आत्माले मुक्ति पाओस्, पिशाच भएर भटकिइरहन नपरोस् भनेर मरेको पाँचौ वा सातौं दिनमा ङानुमा, न्हेनुमा संस्कार गर्ने चलन छ तर कतिपय मानिसहरू, जो विभिन्न दुर्घटना वा प्राकृतिक प्रकोप, दैवी विपत्ति जस्ता कारणले मृत्यु भएका हुन्छन्, जसको ङानुमा, न्हेनुमा संस्कार गरिएको हुँदैन, त्यसरी मरेका मानिसहरूको आत्मा पिशाच भई वायुको रूपमा भटकिरहेको हुन्छ भन्ने धारणा यहाँका नेवारहरूको छ । अतः त्यसरी मरेका मानिसहरू, जसको ङानुमा, न्हेनुमा गरिएको हुँदैन, तिनको आत्माको शान्ति र प्रेतयोनीबाट मुक्तिका लागि राज्यको तर्फबाट वर्षको एकपटक बिस्केट पर्वका अवसरमा गर्ने संस्कार नै घासापालु (जोगी चक्र पूजा) हो ।[७२] अर्थात् मानिस अकालले मऱ्यो र मरेका मानिसको काजकिरिया वा मृत्यु संस्कार गरिदिएन भने त्यस्ता मानिसहरू अगति पर्छन । अगति पऱ्यो भने राज्यमा अशान्ति छाउँछ, अनिकाल आउँछ भनेर त्यस्तो अशान्ति, अनिकाललाई पन्छाउनका निम्ति जोगीचक्र पूजा गर्ने, राहु ख्वाउने संस्कार परापूर्वकालदेखि चलिआएको हो । वास्तवमा मानिस मर्दा काजकिरिया संस्कार गरिदिने सामर्थ्य सबैको हुन्छ नै भन्ने छैन । त्यस्ता मृतकको आत्मालाई मुक्ति दिलाउनका निम्ति राज्यले यस्तो चलन चलाइराखेको हो । यसअतिरिक्त नौ दिनसम्म चल्ने बिस्केट जात्राको सिलसिलामा रथ तान्दा रथले च्यापेर, किचेर, लागेर अनि लिंगो उभ्याउँदा र ढाल्दा लिंगो भाँचेर वा थिचेर मरेकाहरूको आत्माको शान्ति र उद्धार गर्नका लागि पनि यो जोगीचक्र पूजा प्रचलनमा ल्याइएको हो ।[७३]

यसरी यो जोगीचक्र पूजा राज्यद्वारा ती अनाथ र असहाय प्रजाहरू, जसले आफ्नो मृत्युपछि दश किरिया वा संस्कार नपाएर अगति परिराखेका हुन्छन्, तिनको आत्माको शान्ति र मुक्तिका लागि गरिदिने संस्कार विधि हो ।[७४] यो विधि तन्त्रबाट गरिन्छ । बिस्केट जात्राका

---

[७२] तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट मिति २०६४।१२।१५ गते प्राप्त जानकारीको आधारमा ।

[७३] भैरवनाथ मन्दिरका आचाजु (पुजारी) गणेश कर्माचार्य (वर्ष ८६) सँग मिति २०६५।३।१५ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[७४] जोगीचक्र पूजा गर्ने कनफट्टा जोगीहरू गोरख सम्प्रदायका हुन् । चक्र पूजा गर्दा अबीर, केसरी, चामलको पीठोको रेखी हालेर त्रिशुल र चक्रको आकार बनाइन्छ र जाँडले भरिएका घ्याम्पाहरू राखेर भैरवको आराधना साथ रांगो आदि पशुबलि दिई तान्त्रिक पद्धतिले पूजा गरिन्छ । यस्तो पूजाको प्रचलन काठमाडौं र पाटनमा पनि रहेको तथ्य क्रमशः पाटनको रातो मच्छेन्द्रनाथ जात्रा, काठमाडौंको सेतो मच्छेन्द्रनाथजात्रा, कुमारी जात्राका अवसरमा कनफट्टा जोगीहरूद्वारा यस्तो विधि गरेबाट थाहा हुन्छ । -हरिराम जोशी, "कनफट्टा", *खोपृङ,* वर्ष १६, अंक १४ (वि.सं २०६४), पृ. ७१ ।

प्रमुख विधिविधानहरूमा यस पूजाको ठूलो सांस्कृतिक मह□व रहेको छ । यो जात्रा ३ दिनसम्म हुने गर्छ, त्यसमा पनि विशेष गरेर वैशाख संक्रान्तिका दिन अपरान्ह तलेजु मूलचोकको स्नेहमण्डपमा गरिने यस पूजाको मह□व निक्कै छ । किनकि पूजा सम्पन्न गरी जोगी (दर्शनधारी) हरूलाई भोज भाग वितरण गरिसकेपछि मात्र त्यस दिनको मुख्य जात्रा (लिंगो ढाल्ने जात्रा) को समापनका लागि तलेजुबाट गुरूपुरोहित ब्राम्हणहरू राजकीय खड्गसहित जात्रास्थल प्रस्थान गर्ने गर्छन् ।[७५] यसरी लिंगो जात्राको प्रारम्भका लागि मात्र नभइ समापनका लागि समेत यस पूजाको मह□व रहेको देखिन्छ ।

कर्णाटवंशी राजा विश्व मल्लले सर्वप्रथम यो पूजा प्रचलनमा ल्याएका हुन् । उनले यस पूजाका निम्ति टौमढी चोकमा भैरवनाथको मन्दिर सामु डबली (मण्डप) समेत बनाउन लगाए, जहाँ हरेक वर्ष चैत्र मसान्तका दिन जोगीचक्र पूजा हुने गर्छ ।[७६] यो पूजा चलाउनका निम्ति आउने कनफट्टा जोगीहरू बस्नका लागि त्यहाँ एउटा सत्तल पनि बनाइएको छ, जसलाई ऐंसामढी सत्तल भनिन्छ । बिस्केटको अवसरमा कनफट्टा जोगीहरूले त्यस सत्तलमा बसेर ठूलो आकारको रोटी "ऐंसामढी" पकाएको हुनाले त्यस सत्तलको नाम ऐंसामढी सत्तल हुन गएको हो ।[७७] साथै ठूलो आकारको रोटी पकाएको ठाउँ भएको हुनाले समग्र त्यसक्षेत्रको नामसमेत "तःमारी" भएको र तःमारीकै अपभ्रंशबाट टौमढी हुन आएको हो ।[७८]

जोगीचक्र पूजा सर्वप्रथम चैत्र मसान्तका दिन टौमढीको भैरवनाथको मन्दिर सामुको डबली (मण्डप) मा गरिन्छ, जहाँ १२ वटा माटाका घडाहरूमा जाँड, रक्सी आदि वस्तु राखी बोका, कुखुरा, हाँसको बलि दिएर कनफट्टा जोगीहरूद्वारा पूजा गराइन्छ । त्यस्तै मेष संक्रान्तिका दिन लायकू दरबार परिसर जस्तो सिंहध्वाका दरबार अघिल्तिर १३ वटा माटाका गाग्रीहरूमा जाँड, रक्सी, चिउरा, रातो जाँड सबै एकै ठाउँमा राखेर तान्त्रिक विधिपूर्वक हाँस बलि चढाइ पूजा गरिन्छ । त्यस्तै ठूलो घण्टा मुनिको लामो ढुंगे पाटीमा १७ वटा माटाका गाग्रोहरूमा जाँड, रातो जाँड, चिउरा र चामल भरि राखेर सबै गाग्रोहरूमा फूलमाला लाइदिएर तान्त्रिक विधिअनुसार कनफट्टाजोगीहरूलाई रांगाको बलि दिन लगाइ पूजा

[७५] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[७६] लीलाभक्त मुनंकर्मीबाट मिति २०६४।८।१६ मा प्राप्त जानकारीको आधारमा ।

[७७] चतुष्कोण आकारको दुईतल्ले यस सत्तलको दृश्यचित्र परिशिष्ट नं. ज चित्र संख्या २२ मा दिइएको छ ।

[७८] जोशी, पा.टि.नं. ७४, पृ. ७१ ।

गराइन्छ । मेष संक्रान्तिकै दिन तलेजु मूलचोकको स्नेह मण्डपमा पनि यो पूजा गरिन्छ ।[७९] यस्तै पूजा वैशाख २ गते दत्तात्रय चोकमा पनि गरिन्छ[८०] तर हिजोआज यो जोगी चक्र पूजा गर्ने परम्परागत संस्कृति मासिँदै गएको देखिन्छ । यो पूजा चलाउनका निम्ति २४ रोपनी खेत गुठी राखिदिएको तथ्य वत्सलादेवी मन्दिर पछाडिको राजा जगत प्रकाश मल्लको ने.सं. ७८२ को अभिलेखबाट थाहा हुन्छ ।[८१] लायकू दरबारभित्र र टौमढीमा सामान्य किसिमले पूजा गराई परम्परागत संस्कृतिलाई जोगाएर राखिएको छ ।[८२]

यस जोगी चक्र पूजाको सांस्कृतिक महत्व के छ भने समग्र भक्तपुर नै तान्त्रिक पद्धतिमा आधारित शहर भएकाले यहाँ कुनै पनि महान् कार्य गर्दा दुष्ट आत्मा र अदृश्य शक्तिहरूद्वारा विविध किसिमका वाधा व्यवधान उत्पन्न हुन सक्ने संभावना भएकाले त्यस्ता बिघ्नवाधा पन्छाउन यस्तो पूजा कार्य सम्पन्न गर्नु आवश्यक ठानिन्छ । त्यसो भने जस्तै बिस्केटजात्रा जस्तो महान् पर्व सम्पन्न गर्दा पनि अनेक किसिमका दुष्ट आत्मा र अदृश्य शक्तिद्वारा बिघ्नवाधा उत्पन्न नगरोस्, शान्तिपूर्वक कार्य सम्पन्न होस्, सिद्धि प्राप्त होस् भन्नाका निम्ति भैरव जस्तो महाशक्तिलाई रक्षकको रूपमा साधना गरिने पूजा नै जोगी चक्र पूजा (घासापालु) हो । यसैकारण अघोरपन्थी नाथ सम्प्रदायका कनफट्टा योगीहरूद्वारा गरिने यस पूजा विधानमा अबीर, केसरी, चामलको रेखी हालेर त्रिशुल र चक्रको आकार बनाइन्छ र जाँडले भरिएका नौ वटा माटाका घ्याम्पाहरू राखेर भैरवको आराधना साथ पशुबलि दिई तान्त्रिक पद्धतिले पूजा गरिन्छ ।[८३] यसरी गरिएको पूजाको प्रसाद सम्बन्धित मूल जात्रास्थल ल्योसींखेलमा पुऱ्याएपछि मात्र विश्वध्वज जात्रा सम्पन्न गर्ने परम्परा रहि आएको छ ।

## ८.६ खः ल्वाकिगु जात्रा (रथ जुधाउने जात्रा)

मेष संक्रान्तिका दिन जात्रास्थल ल्योसींखेलनेर हनुमन्ते नदी किनारको चुपींघाटमा स्नान गर्नाले रोगव्याधि सबै हरण भई आरोग्य र सुस्वास्थ्य प्राप्त हुने जनविश्वास अनुरूप

---

[७९] लीलाभक्त मुनंकर्मीबाट मिति २०६४।८।१६ गते प्राप्त जानकारी ।

[८०] जोशी, पा.टि.नं. ७४, पृ. ७१ ।

[८१] राजा जगतप्रकाश मल्लले ने.सं. ७८२ (वि.सं. १७१९) वैशाख संक्रान्तिका दिन अघि आफैंले बनाएको स्नेह मण्डपमा वर्षको तीनपटक (बिस्केट, दशैं, घोडेजात्रामा) बत्ती बाल्न र बिस्केटको उत्सवमा जोगी चक्र (चक्र पूजा) आदि गराउन २४ रोपनी जग्गा गुठी राखिदिएको कुरा उल्लेख भएको अभिलेखको मूलपाठ परिशिष्ट नं.ज चित्र संख्या ५७ मा हेर्नुहोला ।

[८२] यस अध्ययनकर्ताले वि.सं. २०६४, ६५, ६६ साल गरी ३ वर्षसम्म हरेक वर्ष चैत्र मसान्त, वैशाख संक्रान्ति र त्यसको भोलिपल्टको स्थलगत अध्ययनको क्रममा वैशाख संक्रान्ति एक दिन मात्र त्यो पनि तलेजु मूल चोकभित्र स्नेहमण्डपमा यो जोगी चक्रपूजा (घासापालु) सम्पन्न गरेको देख्यो । त्यसदेखि बाहेक उल्लेखित अन्य स्थानहरूमा यो पूजा सम्पन्न भएको देखिएन । यसबारे स्थानीय बासिन्दासँग सोध्दा अनभिज्ञता प्रकट गरे ।

[८३] जोशी, पा.टि.नं. ७४, पृ. ७१ ।

त्यसदिन बिहानदेखि नै भक्तपुरका स्थानीयबासिन्दाहरू चुपींघाटमा स्नान गरी चोखो भइ भद्रकाली पीठमा रहेका देवी भद्रकाली र च्यासीमण्डपमा विराजमान शिर मात्रको भैरवनाथको पूजा अर्चना गरी दर्शन गर्दछन् । यसपछि ल्योसिंगामा अघिल्लो दिन साँझ उभ्याइएको विशाल विश्वध्वजासहित लिंगोको दर्शन र प्रसाद ग्रहण गर्दछन् ।[८४] नयाँ वर्षको पहिलो सुर्योदय अर्थात् मेष संक्रान्तिका दिन बिहान उक्त घाटमा स्नान गरी विश्वकेतु (विश्वध्वजा) को दर्शन गर्ने प्रचलन छ । सो दिन नियमपूर्वक स्नान गर्नाले मधुसुदन भगवान् प्रसन्न हुने शास्त्रीय मान्यता रहेको छ ।[८५] तर हनुमन्ते नदी ज्यादै प्रदुषित बन्नपुगेकोले उक्त घाटमा स्नान गर्ने परम्परा हाल विलुप्त प्रायः भइसकेको छ ।

बिस्केट जात्रा शत्रुहन्ता जात्रा नामले पनि प्रसिद्ध छ । किनकि यो जात्रा हेर्नाले शत्रु नाश भएर जाने छ भन्ने बलियो जनविश्वास पाइन्छ । यसैकारण त्यस दिन यो जात्रा हेर्न जात्रास्थल ल्योसींखेलमा स्थानीय बासिन्दाकासाथै वरपरबाट आएका असंख्य नरनारीको भीड लागेको हुन्छ ।

संस्कृतिबिद् तेजेश्वरबाबु ग्वंगका अनुसार मेष संक्रान्तिको यो जात्रा प्रतीकात्मक अर्थमा भैरव र भैरवी (भद्रकाली) बीचको यौन समागम हो । समागमको बेला जहिले पनि नारी तल र पुरुष माथि रहने हुन्छ । यौन समागमको यो प्राकृतिक नियम सबै जीवमा लागु हुन्छ । यसमा पनि भद्रकालीको योनी (भेलःगा) मा भैरवनाथको लिंगो ठड्एिको हुन्छ । यसरी यो रतिक्रियात्मक जात्रा नै विश्वध्वज जात्रा हो ।[८६] यसबाट देश र जनताको कल्याण हुन्छ । वास्तवमा लिंग र योनी यी दुई नै सृष्टिको मूल रहस्य हो । पुरुष र स्त्रीको पारस्परिक संयोग विना सृष्टि प्रभृति हुन सक्दैन । शिव र शक्ति, ईश्वर र माया, पुरुष र प्रकृति चाहे

---

[८४] "सुथ न्हापां दना वने ।
चुपिंगाले मोल ल्हुये ।
भैरव दरशन याय ॥"
बिस्केटका अवसरमा भक्तपुरवासीले गुनगुनाउने यस पुरानो नेवारी भजन/गीतले पनि चुपींघाटमा नुहाइ भैरवनाथको दर्शन गर्नुपर्दछ भन्ने बोध गराउँछ । मेष संक्रान्तिका दिन उक्त चुपिंघाटमा नुहाउँदा स्वास्थ्य लाभ हुने कुरालाई संस्कृतिविद् हरिराम जोशीज्यू यसरी प्रस्तुत गर्नुहुन्छ- भक्तपुरमा बिस्केट जात्राको लिंगो ठड्याउने ल्योसिंखेल समीपको खोला, चुपिंघाटमा मिल्न आउने एक सानो खोला, जसलाई "काँल्हाचा खुशी" भनिन्छ, मा नुहाउँदा रक्तविकारजन्य रोग निको हुने जनविश्वास अझै पनि रहेको छ । -हरिराम जोशी, *नेपालका चाडपर्व*, ललितपुर : जोशी रिसर्च इन्स्टिच्यूट, वि.सं. २०६०, पृ. २३ ।

[८५] वैशाख सकलं मासंमेषसंक्रमणे रबेः ।
प्रातः सनियमः स्नास्ये प्रीयतां मधुसूदनः ।
-सुदामा मिश्र शास्त्री, *धर्मसिन्धु*, बाराणसीः चौखम्बा संस्कृति संस्थान, वि.सं. २०४८, पृ. ८६ ।

[८६] भक्तपुरका स्थानीय संस्कृतिविद् साहित्यकार तेजेश्वरबाबु ग्वंगसँग मिति २०६६ चैत्र ४ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

जुनै नाम लिए पनि सर्वत्र नै यी दुई मूल शक्तिको पारस्परिक संघर्षबाट नै सृष्टि कार्य सम्पन्न हुने गर्दछ ।[८७] वास्तवमा बसन्त ऋतु बासनाले परिपूर्ण ऋतु भएकोले बोटविरुवा, रुखपात मात्र नभएर मानिसका मनमा समेत एक किसिमको बासन्ती उमङ्गका पालुवा पलाउने गर्छ । यस्तो ऋतुको चरम उत्कर्षका अवसरमा मनाइने बिस्केट जात्रामा घातु लयमा आधारित यो लोक गीत गाइन्छ ।[८८]

थथिंजागु रसरंग तोलताव हरि जि गन वने ॥ धु ॥
मचा वेलस रस जिन मसियाव
चान्हंन्हिन म्हितल जि जुया ॥ १ ॥
बइस जि जासे वल सह याय मफया
पासा छम्ह मदयाव दुःख ॥ २ ॥
माम बुबां बियु धका हर्षन चोना जिन
माम बुबां बिचालन मयाक ॥ ३ ॥
करमस चोसे हल जोगिनी जुय माल
गने मते माम बुबा न जित ॥ ४ ॥
पुनसया जन्मस धर्म जि याना मदु
पापिनीन थुलि दुःख सियमाल ॥ ५ ॥
चाया चच्छि न्हिया न्हिच्छि सपनास केनेहल
चाया चच्छि खोयाव चोना जि ॥ ६ ॥

---

[८७] महामहोपाध्याय गोपीनाथ कविराज, *भारतीय संस्कृति और साधना,* पटना : विहार राष्ट्र भाषा परिषद्, वि.सं. २०१९, पृ. ५०८ ।

[८८] यस्तो भरपुर रसरंग छाडेर म कहाँ जाऊँ, हरि ॥
बच्चा बेला रस मैले जानिन
बैंस मेरो हुर्की आयो सहनै नसक्ने गरि
साथी एउटा नभएर निक्कै दुःख भयो ॥ २ ॥
..............................................
पुर्वजन्ममा धर्म मैले गरिन
पापिनी मैले यति धेरै दुःख पाउनु पऱ्यो ॥ ५ ॥
..............................................
कहाँ जाऊँ कहाँ बसु ठाउँ छैन
पुरुषको रस एउटा छैन ॥ ८ ॥

ठाकुरलाल मानन्धर (संकलक), *पुलांगु म्ये* (प्राचीन गीति संग्रह), काठमाडौं : नेपाल भाषा परिषद्, ने.सं. १०८८, पृ. ३६-३७ ।

"थथिंजागु रसरंग तोलताव हरि जि गन वने" बोलको घातुलयमा आधारित यस लोकप्रिय गीतका मूलरचनाकार राजा रणजित मल्ल हो । तर यहाँ माथि उद्घृत गीतको भावार्थले यो गीत बैंशको पीडा सहन नसकेकी एउटी केटीको मनभित्रको बह भएको बुझिन्छ । साथै उक्त गीतको अन्तिम लाइनमा राजा पृथ्वीवीर विक्रम शाहको नाम आएकोले यो गीत पछिल्लो राणा कालतिर लेखिएको देखिन्छ ।

नययात मगामखु तिययात मगामखु

रस छता मदयाव दुःख ॥ ७ ॥

गन बने गन चोने वने थास मदु प्रभु

पुरुषया रस छता मदु ॥ ८ ॥

नेपालया छत्रपति पृथ्वी वीर विक्रम शाह

प्रजायात प्रतिपाल याव ॥ ९ ॥

मेष संक्रान्तिका दिन अपरान्ह ४ बजेतिर तलेजुमा गर्नुपर्ने सम्पूर्ण विधिविधानहरू सम्पन्न गरे पश्चात् राजकीय खड्गसहित गुरु पुरोहित, भैलः नायोहरू कुस्लेहरूको मुवाली बाजा अघि लगाएर जात्रास्थल ल्योसींखेल आईपुग्छन् । त्यहाँ विधिपूर्वक विश्वध्वजको पूजा सम्पन्न गरेपछि अब त्यस दिनको जात्रा सुरु हुन्छ, जसलाई नेवारीमा ल्योसीं (योसीं) कोथलिगु जात्रा (लिंगो ढाल्ने जात्रा) भनिन्छ तर यसअघि त्यहाँ भैरव, भद्रकालीको प्रतिमालाई पंचोपचारले पूजा गरी पीठबाट आ-आफ्नो रथमा आरोहण गराइन्छ । त्यसपछि लिंगो अडाउन बाँधेको डोरी फुकाली वरिपरि तान्दै हल्लाइन्छ । निंद्रा लागेको जस्तो अवस्था दर्शाउन दुई, तीन पटक हल्लाउँदै लिंगोलाई झुलाइन्छ । यी सबै दृश्य आ-आफ्नो रथबाट भैरव भद्रकालीले हेरिरहेको विश्वास गरिन्छ । यो जात्रा हेर्न त्यहाँ हजारौंको संख्यामा जनसमुदाय उपस्थित भएका हुन्छन् । जसरी अघिल्लो दिन साँझ लिंगो उभ्याउँदा डोरीले पूर्वतिर तानेर उभ्याइएको हो, त्यसैगरी उक्त दिन लिंगो ढाल्दा लिंगोका आठवटै डोरीको सन्तुलन मिलाएर बिस्तारै पश्चिमतिर ढालिन्छ ।[८९]

यसरी विश्वनाथ भैरवको यो लिंगो पूर्वतिर तानेर उभ्याउने र पश्चिमतिर ढाल्ने भएकाले यसलाई प्रतीकात्मक रूपमा सूर्य भगवानको रूपमा पनि लिने गरिन्छ । किनभने सूर्य जहिले पनि पूर्वबाट उदाउने र पश्चिमतिर अस्ताउने गर्छ । अर्को विचारणीय कुरा यहाँनेर के देखिन्छ भने प्राचीन हिन्दु धर्म संस्कृतिमा ध्वज ढालेको हेर्नुहुँदैन भन्ने कथन छ । यसैले मानिसहरू इन्द्रध्वज विसर्जन गर्न लगेको, गौको प्रसव, नक्षत्रको अधःपतन, महान् आत्माहरूको अवनति भएको हेर्ने गर्दैनन्[९०] तर भक्तपुरको बिस्केट जात्रा ध्वज ढालेर नै खुसीयालीपूर्वक मनाइने जात्रा भएकोले यो जात्रा हेर्न जात्रास्थलमा सो दिन हजारौंका संख्यामा सबैतिरका नरनारी, युवायुवती, बालक वृद्धहरू एकत्रित भएका हुन्छन् किनकि

---

[८९] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[९०] "इन्देप्पवाहि अन्ते, गोप्पसवे संक्रमं च तालाणं ।
शुपुलिश -पाण -पिपत्ता चत्तालि इमे ण दट्टव्वा ॥ ७ ॥" -मृच्छकटिकम, दशमोऽ -जोशी, पा.टि.नं. ८४, पृ. १६ ।

यसले नयाँ युग वा समय उदय हुनु पूर्वको पुरानो युगको प्रतीक रूपमा रहेको ध्वजलाई ढालेको सांकेतिक अर्थ बोध गराउँछ । सही मानेमा भन्ने हो भने भक्तपुरको लोकजीवनमा विश्वध्वज लिंगो ढाले पछि नै पुरानो वर्ष अन्त्य भएको मान्ने परम्परा छ । यसैकारण जात्रामा उपस्थित जनसमुदाय ढालेको लिंगोको साजसज्जा बिगार्न तत्काल लागी पर्छन् ।[९१] पुरानो वर्ष सकिएर नयाँ वर्ष प्रारम्भ भएको प्रतीक मानी लिंगो ढाल्ने प्रचलन यहाँ परापुर्व कालदेखि नै चल्दै आएको पाइन्छ ।[९२] यसको अर्थ साविक वर्षका उल्झनहरू नयाँ वर्ष लागेपछि हटेर जाउन भन्ने हो ।

विश्वध्वज जात्रा विसर्जन पश्चात् भैरव र भद्रकालीको रथलाई ल्योसींखेलबाट तानेर गा:हिटी ल्याइन्छ, तर त्यसअघि त्यहाँ रथ तान्ने कुरामा पानी नचल्ने स्थानीय द्य:ला जाति (पोडेहरू) र किसानहरू बीच विवाद हुन थाल्छ । द्य:लाहरूले रथका पछिल्तिरका डोरी तानेर रथलाई सकेसम्म आफै कहाँ (ल्योसीं खेलमा) राख्न खोज्छन् भने ज्यापू किसानहरूले रथको अघिल्तिरका डोरी समाएर रथलाई गा:हिटीतिर तानेर लान खोज्छन् । यसरी भैरवनाथको रथ तान्ने कुरामा त्यहाँ दुई जाति बीच खिचातानी सुरु हुन्छ । अन्त्यमा ज्यापूहरूको संख्या बढ्दै जान्छ । यसले गर्दा रथलाई गा:हिटीतर्फ ल्याइन्छ । अल्पमतमा परेका द्य:लाहरू आ-आफ्नो घरतिर लाग्छन् ।[९३] यस घटनाले भैरवनाथको रथ नगर सीमाभित्र प्रवेश गरेको संकेत दिन्छ ।[९४] भैरवको रथ पछि भद्रकालीको रथ पनि तानेर गा:हिटी ल्याई पुऱ्याइन्छ ।

यसरी "ल्योसीं (योसीं) कोथलिगु जात्रा" पश्चात् भैरवनाथको रथलाई ल्योसींखेलबाट तानेर गा:हिटी ल्याई पुऱ्याइन्छ । त्यहाँ उक्त रथलाई उत्तर फर्काएर निर्दिष्ट स्थानमा राखिन्छ । यसरी भैरवनाथको रथलाई ठीक ठाउँमा राखिसकेपछि भद्रकालीको रथलाई त्यहाँस्थित जंगममठ अगाडिको नरसिंहमन्दिर घुमाई दक्षिण फर्काएर भैरवनाथको रथको ठीक सामुन्ने पारिन्छ । यहाँनेर ध्यान दिनुपर्ने कुरा के छ भने एकत्रित जनसमुदायले होस्से हइँस्सेको बुलन्द आवाजका साथ रथ तान्दा पनि यदि केही गरी रथ तानिएन अथवा रथ अगाडि पछाडि कतै हलचल भएन भने त्यतिवेला जंगम मठभित्रबाट वीरशैव तान्त्रिक विधिले भैरवनाथको रथतिर दही चिउरा छरेर पूजा गर्ने चलन छ । यस्तो पूजा गरेपछि रथ

---

[९१] गडम्यान, पा.टि.नं. ४७, पृ. ४५ ।

[९२] नयनाथ पौडेल, *राजा यक्ष मल्ल र उनको समय,* (अप्रकाशित विद्यावारिधि शोधग्रन्थ), मानविकी तथा सामाजिक शास्त्र संकाय, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०६६, पृ. २८८ ।

[९३] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७।४।२३ गते प्राप्त जानकारीको आधारमा ।

[९४] लेभी, पा.टि.नं. ६६, पृ. ४८६ ।

तान्न सजिलो हुन्छ भन्ने जनविश्वास पाइन्छ ।[९५] जेहोस् उक्त दिन गाःहिटीमा भैरवनाथको रथ तलतिर र भद्रकालीको रथलाई माथिल्लो स्थानमा राखिसकेपछि भद्रकालीको रथलाई पछाडिबाट ठेलेर पठाइन्छ जसले गर्दा उक्त रथ भिरालोमा गुडेर भैरवनाथको रथसँग जुध्न पुग्छ । यसरी भैरव भद्रकालीको रथ जुधाउने कार्य तीन पल्टसम्म गरिन्छ । यसलाई भैरवनाथ र भद्रकालीबीच समागम भएको प्रतीक अर्थमा लिने गरिन्छ र यस जात्रालाई स्थानीय भाषामा "खः ल्वाकेगु जात्रा" भनिन्छ । यस जात्राकाबेला टौमढी टोलको दाफाभजन, धल्चाभजनको समूह भजन गाइरहेका हुन्छन् भने धिमेबाजा समूह धिमे बजाएर जात्राको वातावरणलाई शोभायमान बनाइरहेका हुन्छन् ।

यो "खःल्वाकेगु जात्रा"को सांस्कृतिक मह□व के छ भने वर्ष दिनसम्म भैरव र भद्रकाली छुट्टिएर बस्ने र वर्षको एकपटक बिस्केटका अवसरमा यसै दिन मात्र दुवै बीच समागम हुने गर्छ । दुवै बीचको यस समागमले सर्वत्र उत्साह र उमङ्ग फैलिन्छ भन्ने जनविश्वास रहेको छ । साथै भैरव भद्रकालीको यस रथ जुधाउने जात्रा सम्पन्न नगरिकन बिस्केटका अन्य सांस्कृतिक कार्यहरू जस्तैः- भोलाछेँको महाकाली-महालक्ष्मीको खटजात्रा, बोलाछेँको बटुकभैरव र जेठागणेशको जात्रा, थनेको ब्रम्हायणी-महेश्वरीको जात्रा, चोछेँको छुमा गणेश जात्रा आदि जात्राहरू सम्पन्न गरिँदैनन् । तर हाल यो परम्परा कायम रहेको पाइँदैन । यसैकारण निर्धारित दिनमा यो जात्रा सम्पन्न हुन नसकेपनि त्यसपछिका अन्य जात्राहरू हुने गरेका छन् ।

रथ जुधाउने जात्रा सम्पन्न भएपछि भद्रकालीको रथलाई नासमना टोलको घट्खा लगेर रथको माझको ढोकाबाट देवीलाई लसकुस गर्दै ओरालेर इच्छुको आफ्नै देवगृहमा विराजमान गराइन्छ ।

यस रथ जुधाउने जात्रा सम्बन्धमा स्थानीय जनसमुदायमा अनेक किसिमका किम्बदन्ती प्रचलित रहेको पाइन्छ । जस्तैः-भैरव र भद्रकाली दुवै पति पत्नी भएकाले दुवैको रथ जुधाउने भनेको दुवै दम्पत्ति बीचको यौन समागम गर्ने हो, तर यसरी संभोग गरिरहँदा गाःहिटी माथि नरसिंह मन्दिरको छेवैमा रहेका सभुंगा भैरवले हेरिरहेको र सभुंगा भैरवलाई देखेर भद्रकाली रिसाइ फन्केर आफ्नो माइती जाने भन्ने भनाइ अद्यावधि पाइन्छ । रिसाएर

[९५] यसरी दही चिउरा छर्दा बढ्ता खान पाउने आशले पांग्रा वरपर आएर बस्ने भूत प्रेतहरूले पांग्रा समात्न छाडी छरेका दही चिउरा खाने हुनाले रथ तान्न सजिलो हुन्छ भन्ने धारणा प्रचलित रहेको बुझिन्छ । -पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग,* (अप्रकाशित विद्यावारिधि शोधग्रन्थ), त्रि.वि., कीर्तिपुर, वि.सं. २०५०, पृ. ९७ ।

गएकी भद्रकालीलाई मनाउनको निम्ति रथ जुधाएको तेस्रो दिन (वैशाख ३ गते) भैरवनाथले चोलो राखेर सगुन दिन जाने भन्ने भनाइ पनि छ ।[९६] यसरी भैरवनाथले पठाएको सगुन स्वीकार गरी भद्रकालीको रथ टौमढीतिर फर्काइ तानेर ल्याई बहताल (भुजिंकोखा) को सत्तलमा वैशाख ४ गते सर्वसाधारण स्थानीयवासीहरूको समेत सगुन भाग ग्रहण गर्न विराजमान हुन्छिन् ।

## ८.७ विविध स्थानीय जात्रा र सांस्कृतिक क्रियाकलापहरू

बिस्केटको सांस्कृतिक पर्वको दौरानमा खःल्वाकिगु (रथ जुधाउने) जात्रा पश्चात् भक्तपुरमा प्रत्येक दिन विभिन्न जात्राहरू हुने गर्छन् । यो क्रम वैशाख ५ गते "द्यः थाँहा बिज्याकिगु" जात्रा सम्पन्न नभएसम्म भई नै रहन्छ ।

यसै सिलसिलामा वैशाख २ गते बिहान ९, १० बजेतिर बोलाछेँमा बटुकभैरव र जेठा गणेशको खट जुधाउने जात्रा, अपरान्ह ४, ५ बजेतिर भोलाछेँ र थालाछेँमा महाकाली र महालक्ष्मीको खट जुधाउने जात्रा हुने गर्छ । त्यसो त त्यसैदिन भक्तपुर नगर भन्दा बाहिर दक्षिण–पश्चिमतिरको कटुन्जे गाउँमा पनि सुशील भैरवको खटजात्रा हुने गर्छ तर यो जात्रा भक्तपुरको बिस्केट जात्राको सांस्कृतिक परम्पराभित्र पर्न आउँदैन अर्थात् बिस्केटको अवसरमा सुशील भैरवको पनि जात्रा हुने भए पनि बिस्केट जात्रासँग यसको कुनै सम्बन्ध छैन तर पनि कटुन्जेमा नेवार समुदायका घर बस्ती निक्कै भएको र उनीहरूले पनि बिस्केट चाड मनाउँदै आएको परिप्रेक्ष्यमा आफ्नो गाउँ ठाउँमा नेवार संस्कृति र सांस्कृतिक परम्परा अनुरूप कुनै पनि जात्रा गर्ने परम्परा नभएकोले त्यहाँका सबै नेवार समुदाय आपसमा मिलेर आफ्नो पुर्खाले परम्परादेखि संरक्षक देवताको रूपमा मान्दै आएको भैरव देवतालाई वर्षको एकपटक किन जात्रा गरी नमनाउने भनेर बिस्केटको अवसर पारेर उक्त दिन सुशील भैरवको जात्रा गर्ने परम्परा सुरु गरिएको हो । यसैले यो जात्रा स्थानीय गाउँवासीहरूको आर्थिक सहयोगद्वारा सञ्चालन हुने गर्छ । जेहोस् उक्त दिन पेगोडा शैलीको बिमान खटमा सुशील भैरवको धातुको मूर्तिलाई राखी विधिपूर्वक पूजा गरिसकेपछि उक्त खटलाई ८/१० जना मानिसहरूले अगाडि र पछाडिबाट उठाएर काँधमा बोकी झल्लरी छाता ओढाएर खट जात्रा प्रारम्भ गरिन्छ । साथमा भजन कीर्तनसहित असंख्य मानिसहरू जात्राको पछि–पछि

[९६] वर्ष ८३ का रत्नराज राजोपाध्यायसँगको मिति २०६५।५।२५ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

लागेका हुन्छन् । गाउँका प्रमुख ठाउँहरू घुमाएपछि अन्त्यमा मन्दिर सामु ल्याएर जात्रा समापन गरिन्छ ।[९७]

यस अतिरिक्त यसैदिन थिमी, बोडे, नगदेशमा पनि क्रमशः बालकुमारी जात्रा, महालक्ष्मी जात्रा र सिद्धीगणेशको जात्रा हुने गर्छ । ती जात्राहरूको विश्लेषणात्मक अध्ययन सम्बन्धित अध्यायमा गरिएको छ ।

नौ दिनसम्म चल्ने बिस्केट पर्वका विविध सांस्कृतिक क्रियाकलापहरूमा विशेष गरेर जात्राका प्रमुख देवता भैरव–भद्रकालीको रथ जुधाउने जात्रा पश्चात् बिस्केटको दोस्रो चरणको सास्कृतिक गतिविधि सुरु हुन्छ । यसमा मुख्यतः नगरका टोल–टोलमा हुने विविध देवीदेवताका स्थानीय जात्राहरू, "द्यः सगं बियेगु", "ल्हा मरु ल्योसीं कोथलिगु", "द्यः थाँहा बिज्याकिगु"जस्ता साँस्कृतिक क्रियाकलाप पर्दछन् । तत्पश्चात सो वर्षको बिस्केट जात्रा सम्बन्धी सम्पूर्ण सांस्कृतिक कार्यको समापन हुन्छ ।

वैशाख २ गते बिहान बोलाछेँबाट बुलुचा भैलः द्यः (बटुक भैरव) र तालाक्वेबाट जेठा गणेशको खटजात्रा प्रारम्भ हुने गर्छ[९८], यी दुवै आफ्ना क्षेत्रका निक्कै प्रसिद्ध देवता मानिन्छन् । दुवै देवताको यो खटजात्रा मल्लकालदेखि प्रचलित जात्रा हो । जात्राको क्रममा सर्वप्रथम तालाक्व (कुम्हाले टोल) मा अवस्थित जेठा गणेशको मन्दिरबाट देवतालाई सिंगारिएको खटमा आरोहण गराइ विधिपूर्वक पूजाआजा गरेपछि सम्बन्धित गुठीयारहरूले खटलाई अगाडि र पछाडिबाट उठाएर काँधमा बोकी घट्खातिर ल्याउँछ । खटलाई ठूलो झल्लरी छाता ओढाइएको हुन्छ । साथमा दाफाभजन, धल्चाभजन गाउनेहरू, धिमेबाजा, काँयबाजा बजाउनेहरू, चिरागबत्ती लिने श्रद्धालु भक्तजनहरू अघि–अघि लागेका हुन्छन् । जात्रा घट्खा चौबाटो आइपुगेपछि देवता सवार खटलाई केही पश्चिमतर्फ लगेर नासमना टोलको नासःद्यः मन्दिरको सम्मुख पारेर "नासःद्यः"को दर्शन गराइन्छ । त्यसपछि सिधै पूर्वतिर फर्काएर बोलाछेँतिर लगिन्छ । ढुंगेधारानेर पुगेपछि उत्तरतिरको बुलुचा गल्लीभित्र बटुकभैरवको खट

---

[९७] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[९८] यी दुवै देवताका मन्दिर र देवगृह सम्बन्धित स्थानहरूमा अवस्थित रहेका छन् । वर्षको एकपटक उक्त दिन दुवै देवताको जात्रा एक साथ हुने गर्छ । जात्राको समापन दुवै देवता सवार खटलाई आपसमा ३ पल्टसम्म जुधाएर गरिन्छ । यसबाट विचारणीय कुरा के देखिन आउँछ भने यदि खट जुधाउने जात्राहरूलाई सम्बद्ध देवीदेवता बीच यौन समागम भएको तान्त्रिक अर्थमा लिने हो भने यहाँनेर पुलिङ्गी पुलिङ्गी देवता सवार खट जुधाउने तान्त्रिक परम्परामा यौन समलिङ्गीको पनि स्थान रहेको देखिन आउँछ । यसरी एकातिर यस जात्रामा पुलिङ्गी देवताको खट जुधाएर जात्रा सम्पन्न गरिन्छ भने अर्कोतिर स्त्रीलिङ्गी देवता सवार खट जुधाउने जात्रा पनि गरिन्छ भन्ने कुरा बिस्केटकै क्रममा हुने महाकाली–महालक्ष्मी जात्रा र ब्रम्हायणी–महेश्वरी जात्राले देखाउँछ । जेहोस् समलिङ्गी यौनको चलन देवीदेवतामा पनि थियो भन्ने भाव यसले दर्शाउँछ ।

मन्दिर बाहिर सिंगारपटार गरिरहेको हुन्छ । यसैले जेठागणेशको यो पहिलो जात्रा बटुकभैरवलाई निम्तो दिन आएको रे भन्ने भनाइ पनि पाइन्छ ।[९९]

यसरी जेठा गणेशको यो जात्रा तालाक्वबाट घट्खा, घट्खा चोकबाट क्रमशः बोलाछेँ हुँदै राम मन्दिर झर्ने बाटोतिर मोडी चकुन्चाछेँ हुँदै अघि बढ्छ । देवता सवार खटलाई टोल, चोक, गल्ली घुमाउँदा घर–घरबाट गृहिणीहरूले बाहिर आइ खटमा सवार देवतालाई धुपबतीसहित श्रद्धापूर्वक पूजाआजा गर्छन् । लाकोलाछेँ जाने गल्ली आएपछि सँगैको बोलाछेँ मठसम्म पुगी त्यसपछि तालाक्वचोक हुँदै आफ्नै स्वस्थान अर्थात् जेठा गणेश मन्दिर अगाडि पुगेपछि केही समय विश्राम गराइन्छ । खटलाई भुइँमा राखेपछि भजन गाउनेहरू, धिमे बाजा बजाउनेहरू गानबजानमा व्यस्त हुन्छन् । यो जेठा गणेश जात्रा सम्पूर्ण टोलवासी विशेष गरेर स्थानीय तालाक्वटोलका प्रजापतिहरूको सक्रियतामा चल्दै आएको देखिन्छ । यो जात्राको सञ्चालनका लागि मल्लकालमा हाकुदेव प्रजापति (सत्यराम प्रजापति) भन्ने एक जना कुम्हालेले जग्गा गुठी राखी दिएर त्यसै गुठीको आयस्ताले यो जात्रा वर्षैपिच्छे चल्दै आएको हो । राज्यको तर्फबाट भने यसका लागि आजसम्म कुनै खर्च प्राप्त भएको छैन ।[१००] अर्कोतिर यसवेलासम्म पनि बटुकभैरवको खटजात्रा प्रारम्भ भएको हुँदैन । बटुकभैरव (बुलुचा भैलः द्यः) कहाँ भैरवको प्रतिमालाई देवगृहबाट बाहिर ल्याई खटमा सवार गराएपछि कोही पूजा भाग लिएर पूजा गर्न आउने, कोही दर्शन गरी फूलपाती ग्रहण गर्ने तर स्थानीय एउटा जोशी परिवारले भने विधिपूर्वक न्याङ सम्हेय्बजी चढाएर भैरवको पूजा गरी प्रसादको रूपमा सम्हेय्बजी बाँड्ने प्रचलन छ । मन्दिरसँगै धिमे, झ्याली, तुँ बाजासहित दाफा भजन गाउनेहरू हुन्छन् । एकैछिनमा बटुकभैरव (बुलुचा भैलः द्यः) को जात्रा पनि प्रारम्भ हुन्छ । देवता सवार खटलाई पछाडिबाट झल्लरी छाता ओढाउने, दाँया बाँया चमर पंखा हम्काउने, डमरु बजाउने अघिल्तिर परम्परागत बाजा बजाउने, भजन गाउनेहरूको लस्कर लागेको हुन्छ ।

यो जात्रा बुलुचागल्लीबाट निस्केर बोलाछेँ मूलबाटो हुँदै पूर्वतिर बढ्छ । जेठा गणेशको जात्रामा जस्तै यस जात्रामा पनि भैरवदेवता प्रति सम्मान दर्शाउन घर–घरबाट महिला, बुढापाकाहरू पूजा गर्न आउँछन् । यो जात्रा टौमढी सभुंगा भैरवस्थानसम्म पुगेर फर्की राम मन्दिरको बाटो हुँदै तालाक्वे चोकमा पुग्छ । यसरी बुलुचा भैरवको जात्रा आफू कहाँ आइपुगेको देखेपछि विश्राम लिइरहेको जेठा गणेशको खटजात्रा पनि पुनः प्रारम्भ हुन्छ ।

---

[९९] जात्राको अवसरमा लिइएका दृश्यचित्रहरू परिशिष्ट नं. ज मा दिइएको छ ।

[१००] ७४ वर्षका प्रजापति गुठीका सदस्य दुर्गाप्रसाद प्रजापतिसँग २०६५।१।२ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

अब तालाक्व (कुम्हाले टोल) को खुल्ला ठाउँमा पश्चिमतिरबाट जेठा गणेशको खट र पूर्वतिरबाट बुलुचाभैरवको खटलाई अन्दाजी २०, २५ मीटरको समदुरीमा राखी सम्बद्ध मानिसहरूले बोकेर हुत्याएर ल्याई दुवै खटलाई आपसमा जुधाइन्छ । खट जुधाउँदा श्रद्धालु भक्तजनहरूले रातो अबीर, फूल र चतामरी आदि छरेर दुवै देवतालाई स्वागत गर्छन ।[१०१] यसो गर्नुको खास तात्पर्य दुवै देवताको समागमलाई अरुले नदेखोस भन्नाका लागि हो । यसरी तीनपल्टसम्म जुधाइ सकेपछि दुवैले उसले उसलाई उसले उसलाई फूल प्रसाद लिने दिने गर्दछ । त्यसपछि जेठागणेशको खटजात्रा राम मन्दिरको ओरालोबाट ताहामला हुँदै अन्त्यमा आफ्नै स्वस्थान अर्थात् जेठागणेश मन्दिरमा ल्याएर समापन गरिन्छ भने अर्कोतिर बुलुचा भैरवको जात्रा पनि तालाक्वबाट घट्खा निस्केर "नासःद्यः" दर्शन गरी आफ्नै स्वस्थान अर्थात् बुलुचा भैरव मन्दिर अगाडि ल्याएर सम्पन्न गरिन्छ । यसरी यो जात्रा २, ३ घण्टाको समयावधि भित्र सम्पन्न हुने गर्छ ।[१०२] बुलुचा भैरवको जात्रा संचालन गर्न उहिल्यै गुठीको व्यवस्था गरी राखेको भए पनि हाल त्यस्तो कुनै आयस्ता नभएकोले स्थानीयबासिन्दाकै सहयोगले मात्र यो जात्रा चल्दै आएको छ ।[१०३]

बिस्केटको नौ दिनसम्म चल्ने सांस्कृतिक पर्व अन्तर्गत वैशाख २ गते नै हुने अर्को प्रसिद्ध जात्रा महाकाली र महालक्ष्मीको खट जुधाउने जात्रा पनि हो । यो जात्रा उक्त दिन अपरान्ह ४, ५ बजेतिर भक्तपुरको भोलाछैं र थालाछैं टोल इलाकाहरूमा हुने गर्छ । यस जात्रामा पनि स्थानीयवासी लगायत वरपरबाट आएका दर्शनार्थी र श्रद्धालु भक्तजनहरूको ठूलो घुइँचो लागेको हुन्छ ।

महालक्ष्मी जात्रा महालक्ष्मीस्थान (द्यःछैं) थालाछैंबाट र महाकाली जात्रा महाकाली स्थान (द्यःछैं) भोलाछैंबाट प्रारम्भ हुन्छ । जात्राको क्रममा दुवै पक्षका सहभागीहरू अर्थात् महालक्ष्मी खटजात्रा पक्षकाले पहेंलो र महाकाली खटजात्रा (पक्ष) समूहले रातो बस्त्र लगाएका हुन्छन् ।[१०४] यो जात्रा सर्वप्रथम महालक्ष्मी देवीको देवगृह थालाछैंबाट देवीको प्रतिमालाई तल ल्याएर सजाइएको खटमा आसिन गराई विभिन्न किसिमका गरगहनाद्वारा सिंगारेर विधिपूर्वक गर्नुपर्ने पूजाआजा सम्पन्न गरेपछि खटलाई अगाडि पछाडि दुबैतिरबाट

[१०१] दुवै खटलाई परबाट हुत्याएर ल्याइ आपसमा ठोक्काउँदा चारैतिरबाट रातो अबीर माथितिर छर्ने गरिन्छ । दुवै देवताको समागमलाई अरुले नदेखोस् भनेर छेकेको प्रतीक अर्थमा यो अबीर छर्ने कार्यलाई लिइन्छ । -दुर्गाप्रसाद प्रजापतिबाट प्राप्त जानकारी ।

[१०२] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१०३] वर्ष ६६ का स्थानीयबासिन्दा कृष्णभक्त न्हेम्हाफुकीसँग २०६५।१।२ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[१०४] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

८/१० जना मानिसहरूले काँधमा उठाएर सुरु गरिन्छ । यो जात्रा भोलाछेँतिर बढ्छ र भोलाछेँको महाकाली देवगृह आइपुगेपछि त्यहाँ पहिलेदेखि सजाएर राखिएको महाकालीको खटलाई पनि स्थानीय बासिन्दाले बोकेर जात्रा सुरु गर्छन् । त्यसपछि अघि आएकै बाटोबाट जात्रा फर्कन्छ । महाकालीको खटजात्रा पनि पछि–पछि आएको हुन्छ । यसरी अघि–अघि महालक्ष्मी र पछि–पछि महाकालीको जात्रा सुरु हुन्छ । यो जात्रा महाकाली द्यःछेँबाट सुरु भइ क्रमशः भोलाछेँ, महालक्ष्मीस्थान, थालाछेँ, नागपोखरी, याछेँ, लालाछेँ, कुम्पाख जाने बाटो हुँदै अन्त्यमा पहिलेकै ठाउँ भोलाछेँ चोकमा पुगेपछि दुवै देवीको खटलाई एकले अर्कोलाई अबीर छर्केर आपसमा जुधाउने कार्य हुन्छ । यसलाई "खः ल्वाकेगु जात्रा" भनिन्छ ।[१०५] तत्पश्चात् दुवै देवीहरूलाई स्वस्थानमा फर्काइन्छ । यसरी जात्रा सम्पन्न हुन्छ ।

यस जात्राको सम्बन्धमा अनुश्रुति के रहेको पाइन्छ भने महाकाली र महालक्ष्मी दुवैजना याछेँ गणेशका दिदी बहिनी अनि याछेँगणेश चाहिँ काठमाडौँकी कुनै चेली, जो विवाह गरेर भक्तपुर आउँदा दाइजोको साथमा आएका देवता भएकोले येंछेँ बाट अपभ्रंश भइ याछेँ गणेश भएको हो । अनुश्रुतिअनुसार नयाँ ठाउँ, नयाँ परिवेशमा चिनेजानेका कोही पनि हुँदैनन् । परिचित कोही पनि नभएपछि पहिलेदेखि प्रतिस्थापित महाकाली र महालक्ष्मीलाई दिदी बहिनी सम्झेर आफ्नो भन्दै मानी आएको हो ।

याछेँ गणेशले दिदी बहिनी दुवैलाई भोज खान निम्तो दिएकोले भोज खानका लागि हिँड्ने कार्य नै यो जात्रा हो । महालक्ष्मी दिदी र महाकाली बहिनी भएकोले दिदीले बहिनीलाई भोजमा सँगै जान बोलाउनु पर्ने भएकोले सर्वप्रथम महालक्ष्मीको खटजात्रा महाकाली स्थान भोलाछेँ आउने गरेको हो । यहींबाट दुवै दिदी बहिनीको जात्रा अघि बढ्छ । तर साह्रै नै ढिलो भइसकेकोले अब दिदीहरू आउँदैनन् भन्ने सोचेर याछेँ गणेश आफ्नो देवगृहको गुह्य स्थानमा प्रवेश गरिसकेका हुन्छन् । भाइकहाँ भोज खान भनेर आएका महाकाली, महालक्ष्मी भाइ याछेँ गणेश नभेटेर भोज खान नपाए पछि नबोलाइकन घरबाट ननिस्कने तिमी र अबेर घरबाट निस्केकाले भोज खान नपाएको भन्दै बाटो भरि झगडा गरी भोलाछेँ र थालाछेँ टोलको बीचमा पर्ने चोकमा पुगेपछि खुबसँग झगडा गर्छन् । दिदी बहिनी झगडा गरेको देखेर टोलवासीले दुवैलाई आपसमा शान्त पार्न बलिपूजा गरी फूल, अबीर छरेर घरका झ्याल–झ्यालबाट चतामरी छरी दिई पूजा गर्छन् । टोलवासीको यस्तो श्रद्धा र भक्ति देखेर दुवै दिदी बहिनी अति नै खुसी हुँदै आ-आफ्नो स्वस्थानमा फर्केपछि यो

---

[१०५] *ऐजन* ।

जात्रा सम्पन्न भएको मानिन्छ ।[१०६] यसबाट यो जात्रा याछैं गणेशसंग पनि सम्बन्धित रहेको तथ्य थाहा हुन्छ । जात्राकोबेला दुवै देवीहरूको खटजात्रा याछैं गणेशस्थान आइपुग्नुले पनि यो कुरा स्पष्ट पार्दछ ।

महाकाली जात्राको निम्ति भोलाछैं टोलका स्थानीय कक्षपतिहरूले गुठीको व्यवस्था गरि दिई आफैले देखरेख गर्दै आएको भएपनि स्थानीय टोलवासीहरूले पनि आफ्नो गाउँ ठाउँको जात्रा भनेर सक्दो सहयोग पुऱ्याउँदै आएको छ । राज्यको तर्फबाट भने आजसम्म कुनै सहयोग प्राप्त छैन तर महालक्ष्मी जात्राको निम्ति भने बिस्केट जात्रालाई झैं अथवा भैरव–भद्रकाली जात्रा, लिंगो उभ्याउने जात्रा, वाराहीको तिंप्वा जात्रालाई झै राज्यको तर्फबाट खर्च (आयस्ता) को व्यवस्था बाँधी दिएको छ । साथै महालक्ष्मी देवीको दैनिक र नैमित्तिक पूजा सञ्चालन गर्न आचाजुको पनि व्यवस्था छ तर पनि गुठी मासिंदै गएको वा गुठीको आयस्ता नाम मात्रको हुन पुगेको परिप्रेक्ष्यमा स्थानीय टोलवासीहरूकै सहयोग मह□वपूर्ण रही आएको छ ।[१०७]

चाड आफ्नो घर परिवारका सदस्यहरू मात्र बसेर मनाउने भए पनि जात्राका बेला भने देवीदेवताको पूजासमेत हुने भएकोले आफन्त, ईष्टमित्र विशेष गरेर बिहा गरेर दिइसकेका चेलीबेटी, भान्जा भान्जीलाई नखःत्या बोलाई चाड मान्ने गरिन्छ । यसबाट चाडको वातावरण उल्लास र उमङ्गमय बन्न पुग्छ । यसै अनुरूप महाकाली–महालक्ष्मी जात्राको अवसर पारेर वैशाख २ गते भोलाछैं र थालाछैं टोलका बासिन्दाहरूले आफ्ना चेलीबेटीहरूलाई बोलाई टोलको जात्रालाई चाडको रूपमा मान्दै आएको देखिन्छ ।

पहिले–पहिले यसजात्राको दुईदिन अघि अर्थात् चैत्र मसान्तका दिन महालक्ष्मी देवीको पीठ अगाडि पनि लिंगो उभ्याएर जात्रा गर्ने परम्परा थियो ।[१०८] तर अहिले यो परम्परा मासिसकेको छ ।[१०९]

बिस्केटको सांस्कृतिक पर्वको क्रममा भक्तपुरका टोल–टोलमा हुने विभिन्न देवी देवताका जात्राहरूमा ब्रम्हायणी र महेश्वरीको जात्रा पनि प्रसिद्ध जात्रा मानिन्छ । यो जात्रा

---

[१०६] वर्ष ६७ का स्थानीय बासिन्दा कृष्णप्रसाद दथुपुथेसँग मिति २०६५।१।२ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

[१०७] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१०८] मुनंकर्मी, पा.टि.नं. ५२(ख), पृ. १३ ।

[१०९] यहाँ लिंगो उभ्याउने जात्रा प्रचलित थियो भन्ने मात्र सुनिन्छ तर आजसम्म लिंगो उभ्याएर जात्रा गरेको देख्न पाएको छैन । -कृष्णप्रसाद दथुपुथेबाट प्राप्त जानकारी ।

वैशाख २ र ३ गते भक्तपुरको तौलाछे, दत्तात्रय चोक अनि इनाचो टोल इलाकाहरूमा हुने गर्छ । २ गते महेश्वरी देवीको द्यःछैं (देवगृह) इनाचोका द्यःपालाहरूले महेश्वरी देवीको खट जात्रा ल्याउन लाग्यौं भनेर जसरी तौलाछैंका ब्रम्हायणी देवीलाई सूचित गराउने उद्देश्यले फूल प्रसाद चढाउन लाने गरिन्छ । त्यसैगरी ३ गतेको दिन ब्रम्हायणीदेवीका द्यःपालाहरूले पनि ब्रम्हायणी देवीलाई खटजात्रा गरेर ल्याउन लाग्यौं भनेर महेश्वरीदेवी कहाँ फूल चढाउन लगिन्छ ।

वैशाख ३ गते तौलाछैंबाट ब्रम्हायणीदेवीको खटजात्रा र इनाचोबाट महेश्वरी देवीको खटजात्रा एकसाथ जात्रा गरेर दत्तात्रय चोकमा ल्याइन्छ ।[११०] त्यहाँ पुगेपछि दुवैतिरका देवी सवार खटलाई ३ पटकसम्म आपसमा जुधाइन्छ । यसरी ब्रम्हायणी र महेश्वरीदेवीको खट जुधाउने बेला दुवै खटका झल्लरी छाता फनफनी घुमाइन्छ, जुन दृश्य निक्कै मनमोहक र आकर्षक देखिन्छ । जब दुवै देवीको खट आपसमा भेट हुन्छ, तब दुवै खटको फूल, प्रसाद, चिरागवत्तीहरू आपसमा साटासाट गर्ने चलन पाइन्छ ।[१११]

यसरी खट जुधाउने जात्रा सम्पन्न भएपछि दुवै देवी सवार खटलाई आ-आफ्नो स्थानमा फर्काइन्छ । ब्रम्हायणीदेवीलाई जात्रा गरेर ल्याउँदा तौलाछैं टोलका घर–घरबाट एउटा–एउटा मुस्यांप्वा (चिराग बती) हातमा लिएर बुढादेखि बच्चासम्म जात्रामा सहभागी हुन आउँछन् । यिनीहरू पंक्तिबद्ध भएर बाटोको दुबै छेउबाट अघि बढ्ने गर्छन् । यसको पछिल्तिर धिमे बाजा, बाँसुरी बाजा, भजन खलकहरू हुन्छन् । त्यसभन्दा पछि देवीको खटजात्रा हुन्छ ।

ब्रम्हायणी जात्राको निम्ति तौलाछैं टोलवासीले गुठीको व्यवस्था गरी जात्रा चलाउँदै आएको छ[११२] तर महेश्वरीदेवीको जात्रा सञ्चालनको निम्ति भने त्यस्तो कुनै परम्परागत गुठीको व्यवस्था छैन । यसैले स्थानीय टोलवासीहरूले आपसमा मिलेर आर्थिक सहयोग जुटाएर प्रत्येक वर्ष जात्रा सञ्चालन गर्दै आएका छन् । दुवै जात्राको निम्ति राज्यको तर्फबाट कुनै प्रकारको सहयोग प्राप्त भएको पाइँदैन ।

---

[११०] अन्य जात्रामा जस्तै यसमा पनि देवी सवार खट अघि–अघि थरी–थरीका बाजा बजाउनेहरू,दाफाभजन गाउनेहरूको समूह हुन्छन् । जात्राकोक्रममा खटलाई एकै चोटी हुत्याएर अघि लाने, फेरि पछाडि ल्याउने अनि तलमाथि हल्लाउने गरिन्छ । देवीको खटजात्रालाई अघि बढाउँदै लाँदा घर–घरबाट श्रद्धालु भक्तजन गृहिणीहरूले फूल अक्षताले स्वागत गर्छन् ।

[१११] मुनंकर्मी, पा.टि.नं. ५२(ख), पृ. ६० ।

[११२] वर्ष ४६ का स्थानीय बासिन्दा बद्रीराम छुस्याबागबाट मिति २०६६।३।१७ गते प्राप्त जानकारीको आधारमा ।

यस जात्राको अवसरमा यो भेकका अधिकांश घरहरू नखःत्या भोजमा आमन्त्रण गरिएका पाहुनाहरूले भरिएका हुन्छन् । वास्तवमा स्थानीय टोलवासीहरूले बिस्केट जात्राको ठूलो चाड भनेर यसै दिनलाई मान्ने गर्छन् ।[११३]

बिस्केट जात्राकै क्रममा मेष संक्रान्तिको चौथो दिन (वैशाख ४ गते) भक्तपुर चोछैं टोलमा छुमा गणेशको खटजात्रा हुने गर्छ । भक्तपुरका गणेशहरूमा छुमा गणेश शक्तिशाली मानिन्छ । यसैले लायकू दरबारबाट जुनसुकै शुभकार्य प्रारम्भ गर्दा विशेष गरेर राज्यका तर्फबाट धार्मिक कार्य गर्दा छुमा गणेशलाई पूजा भाग पठाउने चलन आज पनि छ ।[११४] यसरी राजदरबारको मूलदेवता भएकै कारणले गर्दा मल्ल राजाहरूका पालादेखि नै बिस्केटजात्रामा खटजात्रा सम्पन्न गरेर सबै देवीदेवता आ-आफ्नो देवगृह(स्वस्थानमा) प्रवेश गरेपछि मात्र अन्तीममा छुमा गणेश आफ्नो देवगृहको मूलस्थानमा विराजमान हुन जान्छन् भन्ने भनाई छ ।[११५] वस्तुतः नौ दिनको बिस्केट पर्वमा भैरव–भद्रकालीको रथजात्रा, विश्वध्वज जात्रा, टोल–टोलमा हुने देवीदेवताको खटजात्रा सम्पन्न गरेर सबै देवीदेवताहरू यथास्थानमा फिर्ता भइसकेपछि पनि बिस्केट जात्रा सम्पूर्ण रूपमा सम्पन्न भइसकेको हुँदैन । किनभने तान्त्रिक विधि र शास्त्रोत्त परम्परा अनुसार आफूले मान्नुपर्ने, आफूभन्दा ठूला देवताहरूको यथास्थानमा फिर्ति नभइकन आफू स्वस्थानमा विराजमान हुन जाँदा मानमर्यादा तलमाथि पर्न जाने भएकोले बिस्केटको अन्तिम दिन हुने रथयात्रा सम्पन्न गरेर भैरवभद्रकाली आ-आफ्नो देवगृहको मूलस्थानमा विराजमान हुन गएपछि मात्र छुमा गणेश आफ्नो देवगृहको प्रागणबाट माथि मूलस्थानमा विराजमान हुन जान्छन् । त्यसबेला तिनको बिचापूजा गर्ने परम्परा छ ।[११६] यसरी स्वस्थान फर्कनेक्रममा अघिल्लो दिनमा जस्तै पुनः एकपल्ट जात्रा गर्ने गरिन्छ ।

पूर्वमध्यकालका राजा आनन्ददेवले भक्तपुरलाई राजधानी नगरको रूपमा विकास गरेपछि देश र जनताको शान्ति अनि सुरक्षाका निम्ति, बाह्य आक्रमण र दैवी विपत्ति नआओस् भन्नाका लागि ठाउँ–ठाउँमा अष्टमातृका, अष्टभैरव, अष्टसिद्धि, अष्टगणेशका साथमा त्रिकुण्ड गणेशको स्थापना गरेर भक्तपुर नगरलाई वरिपरिबाट वास्तु यन्त्राकारको

---

[११३] मुनंकर्मी, पा.टि.नं. ५२(ख), पृ. ६० ।

[११४] *ऐजन,* पृ. ६०-६१ ।

[११५] वर्ष ८१ को बद्रीदास राजभण्डारीबाट मिति २०६५।६।२ गते प्राप्त जानकारीको आधारमा ।

[११६] वर्ष ८३ का रत्नराज राजोपाध्यायबाट मिति २०६५।५।२५ गते प्राप्त जानकारीको आधारमा ।

रूप दिइराखेको बुझिन्छ । त्यही अष्टगणेश मध्येको एउटा गणेश छुमागणेश हो । यसैले बिस्केटको सांस्कृतिक पर्वमा छुमा गणेशको अहम् भूमिका रहेको पाइन्छ ।

बिस्केट जात्राको आठौं दिन वा वैशाख संक्रान्तिको चौथो दिन भक्तपुरका सम्पूर्ण देवीदेवताले आमनगरवासीले चढाउन ल्याएको सगुन ग्रहण गरेपछि आ-आफ्नो देवगृहहरूमा विराजमान हुन जाने गर्छन् तर यसरी सगुन ग्रहण गरे पनि चोछेँका छुमा गणेश भने आफ्नो देवगृहमा विराजमान (द्यःथाहां बिज्याकेगु) हुन जाँदैनन् । यसदिन साँझपख उनको खटजात्रा गरिन्छ ।

जात्राको क्रममा सजाइएको खटमा गणेशजीलाई आरोहण गराएपछि खटको अगाडि पछाडि दुवैतिरबाट १०, १२ जनाले बोकेर स्थानीयटोलका सबै मिलेर दाफाभजन, धल्चाभजन, कीर्तन, धिमेबाजा, बाँसुरीबाजा बजाएर जात्रा गरिन्छ । यसरी जात्रा गरेर देवता ल्याउँदा हरेक घर–घरका बासिन्दाले सम्हेय् चढाएर, पशुबलि दिएर अनि झ्याल–झ्यालबाट चतामरी छरेर पूजा गर्छन् । उक्त दिन जात्रा सम्पन्न भएपछि देवताको प्रतिमा चोछेँको सत्तलमा विराजमान गरिराखिन्छ र स्थानीयवासीहरू रातभर भजन कीर्तन गाएर, बत्ती बालेर त्यहाँ जाग्राम बस्छन् ।

यसरी उक्त दिनको प्रमुख सांस्कृतिक कार्य "द्यः सगं बियेगु" को समापन पश्चात् चोछेँ टोलमा छुमा गणेशको जात्रा गरिन्छ । साथै भोलिपल्ट अर्थात् बिस्केटको अन्तिम दिन फेरि पनि जात्रा गरेर बिचाः पूजा गरी द्यः थाहाँ बिज्याकेगु (देवतालाई स्वस्थानमा फर्काउने) गरिन्छ ।

भक्तपुरको चोछेँ टोल इतिहास प्रसिद्ध ठाउँ हो । यहाँ अनेक ऐतिहासिक घटनाहरू भएका थिए । यसैले गोपालराज वंशावलीका अनेक पत्रहरूमा चोछेँको उल्लेख हुन आएको छ ।[११७] चोछेँ टोलकै मध्यबिन्दुमा अवस्थित छुमा गणेशको उत्पत्ति भक्तपुर नगरको निर्माणसित सम्बन्धित छ । जस्तोः राजा आनन्ददेवले भक्तपुर नगर निर्माण गर्ने क्रममा नगरको सीमाङ्कन गरिरहेको बेला यसै स्थानमा एउटा मूसाले विरालोलाई खेलाउनसम्म खेलाएर अन्त्यमा मुखमा च्यापेर एउटा रुख माथि चढेर लुप्त हुन पुगे । राजाले त्यो मूसालाई यताउति खोजे तर भेटाउन सकेनन् तर त्यतिनै बेला त्यस ठाउँमा श्री गणेश भगवान प्रकट हुनुभयो । राजाले गणेशजीको ठूलो सेवा गरे,जसबाट प्रसन्न भएर गणेशजीले

[११७] वज्राचार्य र मल्ल, पा.टि.नं. ६२, पृ. ३६ ख पत्र, ३८ क पत्र, ४१ ख पत्र, ४३ ख पत्र, ४९ ख पत्र, ५१ क पत्र ।

राजालाई आँटेको कुरा पूरा हुने आशिष दिए ।[११८] यसपछि राजाले १२ हजार घर बनाइ भक्तपुर शहर बसाले । गणेशजी प्रकट भएको ठाउँमा मन्दिर बनाए, जसलाई छुम्हःगणेश मन्दिर भनिन्छ ।

## ८.८ द्यः सगं बियगु (देवतालाई सगुन चढाउने)

जात्रा, मेला आदि भर्दा वा कर्म गर्दा खुसीयालीका साथ त्यसको समापन सिन्दुर जात्रा, सगुन आदि दिएर गर्ने चलन नेवार सांस्कृतिक जीवनमा रहँदै आएको पाइन्छ । अतः उक्त प्रसङ्गमा लिंगो उभ्याउनु चार दिन अघि आरम्भ भएको बिस्केट जात्रा सो लिङ्गो ढाली चार दिनपछि समाप्त हुनुभन्दा एक दिन अघि वा जात्रा समापनको पूर्व सन्ध्यामा देवगृह वा स्वस्थानमा पुनः प्रवेश गराइने देवदेवीलाई सांस्कृतिक जुलुस वा यात्राकै रूपमा नगरवासीहरूले वैशाख ४ गतेका दिन धौसगं (दहीको सगुन), ख्यें सगं (फुलको सगुन) आदि चढाइ दर्शन पूजन गर्छन् ।[११९] यही सांस्कृतिक मेला "द्यःसगं बियेगु" नामले चर्चित रहेको छ । यो चलन नेवार बाहुल्य अन्य स्थानहरूमा पनि देख्न सकिन्छ । जस्तै– बनेपामा चण्डेश्वरी जात्राको समापन हुनु अघि त्यहाँ पनि देवतालाई "द्यःसगं बियेगु" चलन रहेको पाइन्छ ।[१२०]

वैशाख ४ गते भक्तपुर नगरवासीहरू अष्टमातृका लगायत नगरमा परापूर्वकालदेखि प्रतिस्थापित जति पनि देवदेवीहरू छन्, ती स्थानहरूमा गएर सगुन दिन जाने गर्छन् । पहिले पहिले भए चौबिस देवतालाई मात्र सगुन दिने प्रथा थियो तर पछि गएर नेवारसंस्कृतिले विकसित रूप लिने क्रममा ती चौबिस देवीदेवताका साथै नगरमा स्थापना गरिराखेका धेरैजसो देवताहरूलाई पनि सगुन दिने गरिएको हो ।[१२१]

"द्यः सगं" दिने पूजामा जाने श्रद्धालु भक्तजनहरू, गृहिणीहरूको मुख्य ध्येय आफ्नो वैयक्तिक भलाइका निम्ति भन्दा समग्र जीव र जगतकै कल्याणका निमित्त हो भन्ने देखिन्छ । यसदिन नगर भित्रका मात्र नभएर नगर बाहिरका नेवारहरू समेत बाजागाजा सहित सगुन दिनको निमित देवीदेवता राखेका ठाउँहरूमा जाने गर्छन् । सगुन दिने क्रममा

---

[११८] लेभी, पा.टि.नं. ६६, पृ. ४८९ ।

[११९] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरको नवदुर्गा गण,* भक्तपुर : बबिता श्रेष्ठ, वि.सं.२०६०, पृ. १४० ।

[१२०] जोशी, पा.टि.नं. ८४, पृ. ४२ ।

[१२१] वर्ष ८३ का रत्नराज राजोपाध्यायसँग मिति २०६५।५।२५ गते भएको कुराकानीबाट प्राप्त जानकारीको आधारमा ।

दही सगुन, फुल सगुन मात्र नभएर नेवार जनजीवनमा प्रचलित रहेका मिष्ठान्न, परिकारहरू समेत राखेर सगुन दिने गरिन्छ, जसलाई "बो छ्वायगु" भनिन्छ ।[१२२]

बिस्केट जात्राको क्रममा देवगृहबाट तल ओर्लेर दलान, छिंडी, डबलीमा विराजमान भइरहेका देवदेवीहरूलाई द्यःसगं बियेगु (सगुन चढाउने) कार्य सम्पन्न गरेपछि फेरि देवदेवीलाई स्वस्थानमा फर्काउने अर्थात् "द्यः थाहाँ बिज्याकिगु" कार्यका निम्ति खटजात्रा गरी बिचाः पूजा सम्पन्न गर्नुपर्ने हुन्छ ।

"द्यः सगं बियेगु" कार्यको ठूलो सांस्कृतिक मह□व के देखिन्छ भने बिस्केट जात्राको क्रममा हुने विभिन्न जात्राहरू आफ्नो निश्चित् स्थान र इलाकाहरूमा मात्र सीमित हुने गर्छन । जस्तै– लिंगो उभ्याउने र ढाल्ने जात्रा ल्योसींखेलमा मात्र हुन्छ, त्यस्तै रथजात्रा र खटजात्राहरू पनि निश्चित् इलाका वा क्षेत्रभित्र मात्र हुने गर्छ तर यो "द्यः सगं बियेगु" सांस्कृतिक पर्वकार्य सो दिन सम्पूर्ण नगरभरि नै चलेको हुन्छ ।

## ८.९ द्यः थाँहा बिज्याकिगु (जात्राको समापन)

यद्यपि प्राचीन कालमा बिस्केटजात्रा दुई दिनको मात्र हुने गर्दा वैशाख संक्रान्तिका दिन साँझपख विश्वनाथ भैरवको ध्वजा विसर्जन पश्चात् अर्थात् लिंगो ढालेपछि यो जात्रा पूर्ण रूपमा समापन हुने गर्थ्यो । तर मल्लकालमा आएर यस जात्राले विस्तृत रूप धारण गरेपछि अर्थात् नौ दिनसम्म मनाउनुपर्ने गरिए पछि वैशाख ५ गते जात्राका मूल देवता भैरवनाथ आफ्नो स्वस्थान फर्किने सांस्कृतिक कार्य, जसलाई "द्यः थाहाँ बिज्याकिगु" भनिन्छ, सँगै समाप्त हुन्छ ।

यसप्रकार वैशाख ५ गते बिस्केट जात्राको समापन "द्यः थाहाँ बिज्याकिगु" नामक सांस्कृतिक कार्यसँगै सम्पन्न हुन्छ । यसैदिन बिहान तालाक्वे (कुम्हाले टोल) मा चैत्र मसान्तका दिन ठड्याइ राखिएको जेठा गणेशको लिंगो, जसलाई "ल्हाःमदु ल्योसींद्यः" भनिन्छ, लाई ढाल्ने कार्य पनि सम्पन्न गरिन्छ ।

नेवार सामाजिक जीवनमा जति पनि सांस्कृतिक पर्व वा जात्राहरू हुने गर्छन्, त्यसको समापन "द्यः थाहाँ बिज्याकिगु" कार्यसँगै सम्पन्न गरिन्छ । यसक्रममा जात्रा गरिएका देवतालाई खट वा रथबाट विधिवत रूपमा ओरालेर लसकुस गरी सम्बन्धित

---

[१२२] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

देवगृहको मूल बासस्थानमा विराजमान गराइन्छ । यसपछि वर्ष दिनसम्म अर्थात् आउँदो वर्षको जात्रासम्म देवता आफ्नो देवगृहकै सिंहासन वा गुप्त स्थानमा रहन्छन् ।

यस दिन गाःहिटीमा उत्तरतर्फ फर्काइएको भैरवनाथको रथलाई तानेर पश्चिमतर्फ फर्काइ रथका तीनवटा झ्यालमध्ये माझको झ्याल भैरवनाथ विराजमान भइरहेको विशेष देवगृह लाकोलाछेँ चपाल जाने बाटो सम्मुख भयो भने त्यसलाई "खः थाते लागू" भनिन्छ, किनभने यसो गर्नाले भैरवनाथको प्रतिमालाई रथारोहण गराउन सुविधा पुग्ने हुन्छ ।

अन्तिम दिन "द्यः थाहाँ बिज्याकिगु" जात्राकानिम्ति भैरवनाथको रथलाई गाःहिटीदेखि पूर्व फर्काएर तानेर जात्रा गरिन्छ । रथजात्रा गरिने थःने, क्वःने लागा (माथिल्लो टोल र तल्लो टोल इलाका) भन्नाले टौमढी चोकदेखि पूर्व थःने र त्यसदेखि पश्चिम क्वःने भनेर बुझिन्छ । यहाँनेर ध्यान दिनुपर्ने कुरा के छ भने चैत्र २७ गते "द्यः क्वाहाँ बिज्याकिगु" जात्राकानिम्ति भैरवनाथको रथलाई क्वःनेतिर फर्काइएको हुन्छ भने ५ गतेको "द्यः थाहाँ बिज्याकिगु" जात्राको अवसरमा भने रथलाई थःने अथवा पूर्वतिर फर्काइ तानेर जात्रा गरिन्छ ।

यसरी निक्कै उत्साह, उमङ्ग र जोशजाँगरका साथ विशुद्ध मनोरञ्जन लिँदै दुवै पक्षका पक्षधरहरूले आ-आफूतिर रथ तान्ने प्रयत्न गर्न थाल्छन् । रथमा पहिलो दिनको जात्रामा जस्तै राजकीय खड्गसहित गुरु पुरोहित, भैलः नायोहरू र अन्य पदाधिकारीहरू रथको यथास्थानमा सवार भएका हुन्छन् । "हप्पा" (निर्देशन) दिनेले[१२३] होस्से भन्ने बित्तिकै डोरी तान्ने जात्रालुहरूले हैंस्से भनेर बुलन्द आवाज निकाल्दै रथ तान्ने जात्रा सुरु गर्छन् ।

यसरी जात्रा गर्दा माथिकाले क्वाछेँ टोलको मयजु देवलसम्म र तलकाले बोलाछेँ टोलको बुलुचासम्म मात्र चलाउने परम्परागत रीति थियो तर यो रीति हाल कायम रहेको छैन ।[१२४] सम्भवतः ९० सालको महाभूकम्पपछि बाटो फराकिलो भएर यो परम्परा कायम

---

[१२३] (क) भैरवनाथको रथजात्रा सञ्चालन गर्न रथमा बसेर हप्पाः(निर्देशन) दिनेलाई माहाँ भनिन्छ । यस्ता माहाँ दुईजना हुन्छन्, जो जात्राकोबेला रथको अगाडि–पछाडि रहेका हुन्छन् । यिनीहरू पनि परम्परागत पोशाक हाजिलँ, गुजिलँ मा सजिएका हुन्छन् । -माहाँ हरिबहादुर चगुठी (वर्ष ७५) बाट मिति २०६७।४।३० गते प्राप्त जानकारीका आधारमा ।
(ख) बिस्केटको रथमा बसेर रथ संचालनका निम्ति निर्देशन दिने यी माहाँहरू चगुठी र मुगुठीहरू हुन् । यी दुई मध्यमवर्गीय ज्यापू समाजभित्र पर्ने थर हुन् । यो माहाँ शब्द पुरानो नेवारी शब्द "महाथ" को अपभ्रंश भई आएको शब्द हो । "महाथ" को अर्थ-"सैन्य कमाण्डर" हुन्छ, जुन मल्लकालमा निक्कै मह□वपूर्ण सैन्य पद मानिन्थ्यो । -ठाकुरलाल मानन्धर, *अ ब्रिफ नेवारी अंग्रेजी डिक्सनरी* (अप्रकाशित ग्रन्थ), काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, ई.सं. १९७६, पृ. ४४४।

[१२४] प्रजापति, पा.टि.नं. १९, पृ. २७ ।

गर्न नसकेको अनुमान गर्न सकिन्छ । यसैले हाल यो जात्रा पूर्वमा तचपाल टोलको भीमसेन स्थानसम्म र पश्चिमतर्फ गएर इचाडोलसम्म लैजान सकिन्छ ।

यसप्रकार "द्यः थाहाँ बिज्याकिगु" को दिन अपरान्ह रथ तान्ने जात्रा पाँचतल्ले मन्दिर र भैरवनाथ मन्दिरको बीच बाटोमा पुगेपछि रथ तान्नेहरू र जात्रा हेर्नेहरू निक्कै उत्साह र उल्लासमय वातावरणमा मनोरञ्जन लिँदै एक अर्कासँग हातेमालो गर्दै "ज्वजलपा" गर्दछन् । रथ तानेको थकाइ मेट्नका लागि राजा रणजीत मल्लले लेखेको "थथिं जागु रस रंग...." भन्ने गीत गाउँदै रथ ठाउँमा पुऱ्याउने कार्य सम्पन्न गरिन्छ । रथबाट देवतालाई ओराल्नका लागि रथको माझको ढोकालाई श्री भैरवनाथको देवलको उत्तरपट्टिको आँखीझ्याल सामुन्ने गर्नुपर्दछ ।[१२५] यसपछि तान्त्रिक विधि र शास्त्र मुताविक गर्नुपर्ने पूजा गरी भैलः नायोहरूले देवतालाई मूलमन्दिरभित्र लान्छन् तर भैरवनाथ मन्दिरका पुजारीले देवतालाई एकैचोटी सीधै देवगृह (मन्दिर) भित्र पस्न दिँदैनन् । आठ रात नौ दिनसम्म देवगृहबाट बाहिर गई जथाभावी खाई, जहाँसुकै गएर, जोसुकैसँग लसपस गरी सुतेर आएको हुनाले तिमीलाई घर हुल्ने छैन भनेर बाटो छेकेर राखिन्छ । यसरी बाहिर गई जथाभावी खाइ, जोसुकैसँग सुतेर आएको हुनाले नयाँबुहारीलाई घर भित्र्याउने बेलामा गरे झैं गर्नुपर्ने विधिअनुसारको लसकुस पूजा गरेपछि मात्र भैरवनाथ (देवता) लाई आफ्नो देवगृहभित्र भित्र्याउने गरिन्छ । यसै सांस्कृतिक कार्यलाई "द्यः थाहाँ बिज्याकिगु" भनिन्छ ।[१२६] यो विधान ज्यादै रोचक छ । दिनभरि डुलेर हिंड्ने छोरालाई एउटा बाबुले राती घर हुल्नु भन्दा पहिले जसरी गाली गर्ने गरिन्छ, त्यसैगरेर यहाँ पनि भैरवनाथलाई मुख्य पुजारीबाट बालकलाई झैं बाटो छेकेर गाली गर्ने काम हुन्छ । भक्तपुरवासीका आराध्यदेव, त्यत्रो शक्तिशाली देवता पनि यतिबेला आचाजु पुजारीका सामु काम बिगार्ने बालक झैं लुरुक्क परेको हुन्छ । आचाजुले जे–जे भन्छ, त्यो चुपचाप सुनेर बस्छ । अन्त्यमा आचाजुले स्वीकृति दिएपछि मात्र भैरवनाथ लुरुलुरु मन्दिरभित्र प्रवेश गर्छन् ।

यहाँनेर स्मरणीय कुरा के छ भने "द्यः थाहाँ बिज्याकिगु" जात्रा सम्पन्न भइसकेर पनि बिस्केट जात्रा पूर्णरूपमा सम्पन्न भएको मानिंदैन । किनकि जबसम्म चोछेँका छुमा गणेशलाई जात्रा गरेर गणेशजीको "द्यः थाहाँ बिज्याकिगु" कार्य सम्पन्न गरिंदैन, तबसम्म चैत्र २७ गते प्रारम्भ भएको ९ दिन लामो बिस्केटजात्रा पूर्ण रूपमा समापन भएको

---

[१२५] *ऐजन*, पृ. ३५ ।

[१२६] तलेजुका पुजारी रत्नराज राजोपाध्यायबाट मिति २०६५।५।२५ गते प्राप्त जानकारीको आधारमा ।

मानिंदैन । यसैकारण छुमा गणेश सबभन्दा अन्तीममा स्वस्थान फर्किए पछि मात्र बिस्केट जात्रा पूर्णरूपमा समापन भएको मानिन्छ ।[१२७]

यसप्रकार अनेक सांस्कृतिक क्रियाकलाप र विधिविधानले सम्पन्न भक्तपुरको बिस्केट पर्वको सांस्कृतिक पक्ष निक्कै मह□वपूर्ण पाइन्छ ।

**निष्कर्ष**

कला र संस्कृतिले सम्पन्न ऐतिहासिक नगर भक्तपुरको सबैभन्दा प्रमुख जात्राको रूपमा रहेको विश्वयात्रा (बिस्केट जात्रा) ले यो देशको सांस्कृतिक इतिहासमा ठूलो मह□व राख्दछ । नौ दिनको लामो समयावधिसम्म चल्ने तथा विक्रम संवत्को नयाँ वर्षको अवसरमा पर्ने यस जात्राको बेग्लै मह□व छ । किनकि यहाँको सांस्कृतिक जीवनका प्रायः सबैजसो जात्रा पर्वहरू चान्द्रमान तिथिअनुसार मनाइने गरिन्छ तर अपवादका रूपमा यो बिस्केट जात्रा एउटा भने सौर्यमान तिथिअनुसार चैत्र मसान्त र मेष संक्रान्तिलाई आधार मानेर मनाइँदै आएको छ । यसबाट वर्तमान समयमा राष्ट्रिय संवत्को रूपमा रहेको विक्रम संवत्ले मध्यकालमा नै भक्तपुर राज्यमा मान्यता पाइसकेको थियो भन्ने थाहा हुन आउँछ ।

अर्को कुरा, इतिहासको कुनै कालखण्डमा समग्र नेपालमण्डलको राजधानीको रूपमा विकसित हुन पुगेको भक्तपुर अनि यहाँ राज्य गर्ने कर्णाटवंशी मल्लराजाहरूले यस जात्राको सांस्कृतिक उत्थानका निम्ति अनेक मह□वपूर्ण भूमिका खेलेका थिए । जसको फलस्वरूप सुरुमा दुई दिन मात्र अर्थात् लिंगो उभ्याउने र ढाल्ने जात्रामा सीमित रहेको यस जात्राको सांस्कृतिक गतिविधि विस्तार हुन गई आठ रात नौ दिनसम्म चल्न पुग्यो ।

यसरी बिस्केट जात्राको संरक्षण, सम्बर्द्धन र उत्थानका निम्ति मल्लराजाहरू सदैव प्रयत्नशील थिए भन्ने तथ्य ऐतिहासिक प्रमाणहरूबाट थाहा हुन्छ । त्यसमाथि राजाहरू स्वयं जात्राका बेला रथमा सवार भइ जात्रालाई अघि बढाउने निर्देश दिई जात्राको गरिमा बढाउने गर्दथे भन्ने तथ्य अद्यावधि जात्रामा तलेजुका मूल पुरोहित राजोपाध्याय ब्राम्हणले राजाको प्रतीक खड्ग लिई प्रस्तुत हुने गरेबाट थाहा हुन्छ ।

यद्यपि यस जात्राका मुख्य देवता भैरव र उनकी शक्ति भैरवी (भद्रकाली) हुन् तर त्यसो भएपनि बिस्केटको क्रममा विभिन्न गणेशहरू, विभिन्न भैरवहरू र विभिन्न देवी

---

१२७ *ऐजन*।

(भगबती)हरूको पनि पूजाआजा हुने गर्दछ तर सम्झनुपर्ने कुरा के छ भने बिस्केटमा भक्तपुरका प्रख्यात अन्य देवीदेवताहरू जस्तो नवदुर्गा, दत्तात्रय, तलेजु, नारायण, महादेव, लक्ष्मी आदिको पूजा उपासना, जात्रा हुने गर्दैन ।[१२८] किनकि यो जात्रा भैरवतन्त्रमा आधारित रहेको छ । हुनतः भैरव नै महादेव हो । शास्त्रमा महादेवको रौद्र रूप भैरव मानिएको छ तर पनि बिस्केट जात्राका सम्पूर्ण विधिविधानहरू तान्त्रिक पद्धति र शास्त्रबमोजिम सञ्चालन हुने गर्दछ । यस जात्राका विविध पूजा पद्धतिबारे लेखिएका असंख्य हस्तलिखित ग्रन्थहरू अद्यावधि राष्ट्रिय अभिलेखालय, काठमाडौँमा संग्रहित रहेका छन् । जुन पूजा विधानहरूको आ-आफ्नै सांस्कृतिक मह□व रहेका छन् ।

विश्वध्वज लिंगो उभ्याएर जात्रा गर्ने परम्परा भक्तपुर एक ठाउँमा बाहेक अन्त कहीँ पनि रहेको पाइँदैन, यद्यपि वैदिक कालमा इन्द्रध्वजोत्सवको कुरा त्यसवेलाका ग्रन्थहरूमा उल्लेख भएको पाइन्छ ।

बिस्केटको क्रममा सर्वप्रथम लिंगो वनबाट छानेर ल्याएको, कतै खोट नभएको, नाङ्लो आकारको फेद भएको, सीधा र सग्लो सल्लाको रुखलाई काँटछाँट गरी शुद्ध पारीसकेपछि तान्त्रिक विधिबाट जीवन्यास दिई भगवानको रूपमा पूजापाठ गरेपछि त्यसलाई विधिसम्मत ढंगले डोरीले तानेर उभ्याइन्छ । यो कार्य प्रत्येक वर्ष चैत्र मसान्तको दिन साँझपख गरिन्छ । रातभर, दिनभर उभ्याइसकेपछि मेष संक्रान्तिका दिन साँझपख अघिल्लो दिनमा झैं विधिसम्मत ढंगले ढाल्ने (विसर्जन गर्ने) कार्य गरिन्छ । यस्तो किसिमको संस्कृति भक्तपुर एक ठाउँमा बाहेक नेपालमा अन्त कहीँ पनि पाइँदैन । भारतमा पनि छैन । यसमा कुनै किसिमको यन्त्र (मशीन) को सहयोग लिइँदैन, केवल तन्त्र, मन्त्र, जन्त्रको सहयोगबाट यो जात्रा सम्पन्न हुँदै आएको छ । यसैले नेवार संस्कृतिमा लिंगो जात्राको ठूलो मह□व रहेको देखिन आउँछ ।

यसैगरी बिस्केट पर्वकै दौरानमा हुने भैरव र भद्रकालीको रथजात्रामा पनि मौलिक नेवारी परम्परा र तन्त्रको प्राधान्यता रहेको पाइन्छ । विशाल पांग्रावाल रथ विशुद्ध काठबाट बनेका हुन्छन् । पांग्रामा चित्रित त्रिनेत्र भैरवका ३ अलग रूपको प्रतीक अर्थमा लिने गरिन्छ अर्थात् भैरवनाथ, नृत्यनाथ र महादेवका रूपमा हेर्ने गरिन्छ ।[१२९] काठदेखि बाहेक रथमा

---

[१२८] प्रजापति, पा.टि.नं. १९, पृ. २८ ।

[१२९] भक्तपुरको बिस्केट जात्राका प्रमुख देवता श्री ३ आकाश भैरव हुन् । भैरवले आवश्यकता र शुभ मुहुर्त हेरेर श्री विश्वनाथ महादेव, श्री ३ आकाश भैरव र श्री ३ नृत्येश्वरको रूप लिने गर्दछ ।-प्रजापति, पा.टि.नं. १९, पृ. ३२ ।

फलामका किल्ला काँटी ठोक्ने, यन्त्र जडान गर्ने जस्ता कार्य गरिँदैन । परम्परागत शीप र शैलीमा काठैकाठबाट यो रथ निर्माण गरिन्छ । गजुर, छाना धातुको हुनु बाहेक रथका सम्पूर्ण अवयवहरू काठका हुन्छन्, जसलाई बेतको डोरीले बाँधी मजवुत बनाइन्छ । यो रथको निर्माण गुह्य तन्त्रको प्रतीक श्री यन्त्रको आधारमा गरिन्छ ।[१३०] यो जात्राको सञ्चालन पनि तन्त्र, मन्त्र, जन्त्रकै आधारमा हुने गर्छ । यसैले जात्राको दौरानमा जात्रालुहरूले रथ तान्दा तान्न मुश्कील पऱ्यो भने तान्त्रिक विधिले दही चिउरा छरेर पूजागर्ने गरिन्छ । यसपछि रथ तान्न सजिलो हुन्छ भन्ने जनविश्वास रहेको छ ।[१३१] त्यस्तै लिंगो वनबाट खोलाको किनारैकिनारबाट लिंगो ल्याउँदा कुनै ठाउँमा लिंगो तान्न सकिएन भने त्यहाँ पनि तान्त्रिक विधिले न्याङ, सम्ह्ेय बजी चढाएर पूजा गर्ने गरिन्छ ।[१३२] त्यसपछि लिंगो तानिन्छ । यसप्रकार विविध विशेषताले युक्त भक्तपुरको प्रसिद्ध जात्रा बिस्केट अनेक मौलिक परम्परा र तान्त्रिक विधि विधानमा आधारित रहेको छ । यसैले यसको सांस्कृतिक पक्ष निकै गहन र मह□वपूर्ण पाइन्छ ।

[१३०] एण्डरसन, पा.टि.नं. २४, पृ. ४४ ।
[१३१] श्रेष्ठ, पा.टि.नं. ९३, पृ. ९७ ।
[१३२] प्रजापति, पा.टि.नं. १९, पृ. ४२ ।

# अध्याय नौ

# बिस्केटजात्राको तुलनात्मक अध्ययन

## ९.१ परिचय

यस जात्राको प्राचीन रूप विश्वध्वज जात्रा हो अर्थात् प्रत्येक वर्ष चैत्र मसान्तका दिन ध्वजा सहितको लिंगो ठड्याएर त्यसको भोलिपल्ट ढाल्ने जात्रा नै बिस्केट हो । यसरी परापूर्वकालमा यो जात्रा दुई दिन मात्र हुने गर्थ्यो ।[१] यसदेखि बाहेक यसको प्राचीनताबारे स्पष्ट शब्दमा बोल्न सकिने आधार स्रोतहरू प्राप्त छैनन् । उपत्यकाका अन्य जात्राहरू जस्तै यो जात्रा पनि यसै बेलादेखि प्रारम्भ भयो भनेर किटानसाथ भन्न सकिने प्रमाणहरू उपलब्ध छैनन् । तर त्यसो भएपनि हिन्दु परम्परामा ध्वजाको मह□व पौराणिककालदेखि नै रहेकोले यहाँका प्राचीन देवमन्दिरहरूका छानामा होस् वा मुद्रामा वा यात्राका अवसरमा ध्वजालाई स्थान दिएको पाइन्छ ।[२] यसैकारण ध्वजाउत्थान गरी जात्रा गर्ने चलन पनि प्राचीनकालदेखि नै प्रचलित थियो भन्ने देखिन्छ । अनेक पौराणिक ग्रन्थहरूमा समेत ध्वजा यात्राका बारे उल्लेख भएको पाइन्छ । भविष्य पुराणमा इन्द्रध्वज यात्राको विधिविधानबारे यस्तो उल्लेख भएको पाइन्छ – यो उत्सव मनाउनाले राज्यमा यथेष्ट वृष्टि हुने, मृत्युदेखि भय नहुने, शत्रुमाथि विजय प्राप्त गरी चीरकालसम्म राज्यभोग गर्न पाउने आदि ।[३] यसरी हिन्दु परम्परामा ध्वजा यात्रा गर्ने प्रचलन पौराणिक कालदेखि चल्दै आएको थाहा हुन्छ ।

ध्वजा उत्थान गरी जात्रा गर्ने चलन यहाँ निक्कै पुरानो रहेको बुझिन्छ । प्राप्त लिच्छवीकालीन अभिलेखहरूको अध्ययनले समेत यस तथ्यलाई स्पष्ट पार्दछ । नेपालमा हालसम्म प्राप्त भएका अभिलेखहरूमा सबभन्दा पुरानो लिच्छवी राजा मानदेव प्रथमको

---

[१] बिस्केटको पूर्व रूप "विश्वयात्रा" हो । यसैलाई पचाङ्गहरूमा विश्वध्वज जात्रा भनेर उल्लेख गरिएको हुन्छ । यस सम्बन्धमा आजसम्म पाइएका अभिलेखहरूमा सर्वप्राचीन अभिलेख ने.सं.५६१ को टौमढीचोकको अभिलेख हो । जसमा "विश्वयात्रा" भन्ने उल्लेख छ ।

[२] (क) भक्तपुर तचपाल टोलस्थित भीमभैरव मन्दिरको छानामाथिको शीर्ष भागमा रहेका ७ वटा गजुरहरूको दाँया बाँया धातुको त्रिकोणात्मक ध्वजाहरू, भक्तपुर दरबार परिसरको स्वर्णद्वारमाथिका ध्वजाहरू, त्यस्तै भक्तपुर भैरव मन्दिर, काठमाडौँको तलेजु मन्दिर लगायत उपत्यकाभित्रका धेरै मन्दिरहरूमा यस्तो ध्वजा (झण्डा) देख्न सकिन्छ । – स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारी ।

(ख) हरिराम जोशी, *उत्तर प्राचीनकालीन मुद्रा,* काठमाडौँ : साझा प्रकाशन, वि.सं. २०३३, पृ. २२ ।

(ग) प्राचीनकालमा जात्राकाबेला ध्वजा समेत गाड्ने प्रचलन थियो भन्ने कुरा नरेन्द्रदेवको अनन्तलिङ्गेश्वर अभिलेखबाट थाहा हुन्छ । त्यसअभिलेखमा गोयुद्ध उत्सव हुँदा ध्वजा (झण्डा विशेष) पनि गाड्ने गरिन्थ्यो भन्ने उल्लेख पाइन्छ ।– हरिराम जोशी, *नेपालको प्राचीन अभिलेख,* काठमाडौँ : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३०, पृ. ४८१–८२ ।

[३] ज्वालाप्रसाद चतुर्वेदी (सं.), *भविष्य पुराण,* हरिद्वार : रणधीर प्रकाशन, ई.सं. १९९५, पृ. ५४३ ।

संवत् ३८६ को चाँगुनारायणको अभिलेख हो । सो अभिलेख कुँदिएको शिलास्तम्भलाई गरुडस्तम्भ भनिन्छ किनकि त्यसको टुप्पोमा मन्दिरतर्फ हात जोडेर स्तुति गरिरहेको गरुडको मूर्ति आसिन छ । राजा मानदेवले पूर्व र पश्चिमका सामन्त शासकहरूको विद्रोहलाई दमन गरेर फर्केर आएपछि आफ्नी आमा राज्यवतीका साथ हर्षोल्लासले चाँगुनारायण आएर आफ्नो विजय वर्णन भएको गरुडध्वज स्थापना गरे ।[४] विश्वध्वजा जस्तै गरुडध्वजा स्थापना गरेर विजय उत्सवकासाथ जात्रा गर्ने चलन त्यतिबेलै थियो भन्ने तथ्य यसबाट पनि पुष्टि हुन्छ । त्यस्तै शिवदेव अंशुवर्माको संवत् ५२६ को लेले अभिलेखमा अनेक नामका गोष्ठीको साथमा ध्वजगोष्ठीको पनि उल्लेख हुनआएको छ ।[५] ध्वजाको बन्दोबस्तको लागि ध्वजगोष्ठी बनेको आधारमा लिंगोमा ध्वजा फहराई जात्रा गर्ने चलन त्यसबखत निक्कै लोकप्रिय थियो भन्ने देखिन्छ । अंशुबर्माको संवत् ३० को हाँडीगाउँ अभिलेखमा जात्रालाई राम्ररी सञ्चालन गर्न ध्वजमनुस्य (ध्वजा उत्थान गर्ने मानिस) लाई २ पुराण २ पण दिने भनिएको छ ।[६] यसबाट पनि त्यसबेलादेखि नै यहाँ ध्वजा स्थापना गरी जात्रा गर्ने चलन निक्कै लोकप्रिय रहेको थाहा हुन आउँछ । ध्वजा फहराई जात्रा मनाउनुको मूल अभिप्रायः चारैतिर सुख, शान्ति र समृद्धि फैलिरहोस्, समस्त जीव र जगतको कल्याण भइराखोस् भन्ने देखिन्छ । गोपालराज वंशावली अनुसार ने.सं. ४१४ (वि.सं. १३५१) मा युवराज्ञी विरमदेवीले इन्द्रकूट बनाइन् । तिनका छोरा जयशक्तिदेवले इन्द्रध्वज आरोहण गरे भनिएको छ ।[७] त्यसैबेलादेखि भक्तपुरमा लिंगो ठड्याउने वा ध्वजोत्थान गर्ने गरिएको भनिन्छ । गौतमी तन्त्रमा विश्वध्वज जात्राबारे यस्तो उल्लेख भएको पाइन्छ- जसले चैत्र मसान्तका दिन विश्वध्वजा फहराउँछ र मेष संक्रान्तिका दिन सो उत्सव समाप्त गर्छ, त्यसको सबै दुःख हट्छ, शत्रु नाश हुन्छ ।[८]

यसरी यो जात्रा प्राचीनकालदेखि प्रचलनमा रहेको थियो भन्ने देखिन आउँछ । मल्लकालमा आइपुग्दा यस जात्रालाई अझ भव्यता र सजधजका साथ मनाउन थालियो । विशेषगरेर भक्तपुरका राजा जगज्योतिर्मल्लको पालामा आएर यस जात्रालाई व्यापक रूप दिई धुमधामले मनाउन यसमा भैरव भद्रकालीको रथयात्रा समेत समावेश गरी दुई दिनबाट

[४] धनवज्र वज्राचार्य, *लिच्छवीकालका अभिलेख,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३०, पृ. १०–१३ ।

[५] *ऐजन,* पृ. २८३ ।

[६] *ऐजन,* पृ. ३०२ ।

[७] धनवज्र वज्राचार्य र के.पी. मल्ल, *दि गोपालराज वंशावली,* काठमाडौं : नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, पृ. २७ क पत्र ।

[८] "वर्षक्रिया", राष्ट्रिय अभिलेखालय, काठमाडौं, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म संख्या वी ४३७/१५, पत्र १ ।

लम्ब्याएर नौ दिनसम्म चल्ने जात्रामा परिणत गरियो । यसैले कसै–कसैले यस जात्रालाई जगज्योतिर्मल्लले प्रारम्भ गरे पनि भनिएको पाइन्छ[९], तर वास्तविकता यो होइन । एकथरीको भनाइ यस्तो पनि पाइन्छ– यहाँ नकिंजु अजिमा (भद्रकाली) को जात्रा आदिमकालदेखि प्रचलित थियो । यसमा भैरवनाथको रथजात्रा पछि मात्र थपिएको हो । काशीका विश्वनाथ भैरव मानिसको भेषमा यो जात्रा हेर्न यहाँ आउँदा उनलाई चिनेर यहीं स्थापना गरिएपछि नै यहाँ उनको जात्रा सुरु भएको हो । यसर्थ बिस्केट जात्रा मूल रूपमा नकिंजु अजिमा (भद्रकाली) को जात्रा हो ।[१०] यसैकारण यसलाई मातृसत्तात्मक समाजको अवशेषको रूपमा पनि लिने गरिएको छ र मातृसत्तात्मक समाजमा स्त्री शक्तिको प्राधान्यता रहेकोले अद्यापि यहाँ देवी भगवती, मातृका गण आदिको पूजा उपासना गर्ने परम्परा चल्दै आइरहेको छ । समयको गतिसँगै कालान्तरमा आएर मात्र यसमा भैरव, गणेश, अष्टमातृका आदि देवदेवीहरूको जात्रा थपिएको हो । जे होस् प्रकारान्तरले यसमा "द्यः थाहाँ बिज्याकिगु", "द्यःक्वहाँ बिज्याकिगु", "द्यः सगं बियेगु", "खः ल्वाकेगु" आदि जात्राहरू थपेर मूलजात्राको स्वरूप विस्तार गरियो ।

तात्कालीन घटनाक्रमलाई अध्ययन गर्दा मल्लकालीन सशक्त शासक यक्षमल्लको मृत्यु पश्चात् उनका छोराहरूको कलहपूर्ण नीतिले गर्दा शक्तिशाली उपत्यका राज्य तीन वटा स्वतन्त्र राज्यहरूमा विभाजित हुन पुग्यो । यसरी उपत्यकाको विभाजन पश्चात् तीनवटै राज्यहरूमा आपसी शत्रुता पनि बढ्दै गयो । यसैको फलस्वरूप यी राज्यहरूबीच विभिन्न क्षेत्रमा तँ भन्दा म के कम भन्ने प्रतिस्पर्धापूर्ण भावना बढ्न थाल्यो । जसमध्ये सांस्कृतिक प्रतिस्पर्धा पनि एक थियो । यसै सन्दर्भमा काठमाडौँ उपत्यकाका अन्य दुई राज्यहरू कान्तिपुर र पाटनमा प्रख्यात जात्राहरू क्रमशः इन्द्रजात्रा र मच्छेन्द्रनाथ जात्राको प्रचलन धेरै पहिले देखि थियो ।[११] तर उपत्यका विभाजन पश्चात् भक्तपुर राज्यको आफ्नो त्यस्तो कुनै छुट्टै भव्य रथयात्रा थिएन । भक्तपुर राज्यका लागि यो प्रतिष्ठाको कुरा थियो । अतः भक्तपुर राज्यका तात्कालीन राजाहरूले आफ्नो राज्यमा पनि त्यस्तै एउटा छुट्टै तर भव्य रूपको जात्रा सञ्चालन गर्न प्रबन्ध मिलाउन थाले । यसका लागि राज्यभित्र परम्परादेखि चल्दै आएको विश्वध्वज जात्रालाई राजकीय जात्राको रूपमा स्वीकार गरी

---

[९] (क) देवीप्रसाद लम्साल, *भाषा वंशावली, भाग २,* काठमाडौँ : नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ५४ ।
(ख) सूर्यविक्रम ज्ञवाली, *नेपाल उपत्यकाको मध्यकालीन इतिहास,* काठमाडौँ : रोयल नेपाल एकेडेमी, वि.सं. २०१९, पृ. १०५ ।

[१०] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७) बाट मिति २०६७/४/२४ गते प्राप्त जानकारी ।

[११] वज्राचार्य र मल्ल, पा.टि.नं. ७, पृ. २३ क पत्र १, २३ क पत्र ४, २६ ख पत्र ४ ।

यसमा भैरव–भद्रकालीको रथजात्रा गर्ने परम्परा समेत समावेश गरेर बिस्केट जात्रालाई विस्तृत रूप प्रदान गरे । यस कार्यमा विशेष गरेर विश्वमल्ल, जगज्योतिर्मल्ल, भूपतीन्द्र मल्ल आदि राजाहरूको नाम उल्लेखनीय रहेको पाइन्छ ।

## ९.२ बिस्केट जात्रा – विगतमा

विगतकालमा भक्तपुरमा बिस्केट जात्रा बडो धुमधामसँग मनाइने गरिन्थ्यो । त्यसबेला यो जात्रा आठ रात नौ दिनसम्म विविध सांस्कृतिक क्रियाकलाप (देवदेवीको पूजापाठ, भजनकीर्तन, नाचगान, रथजात्रा, ध्वजोत्थान, खटजात्रा आदि) सञ्चालन गरेर विस्तृत रूपमा मनाइन्थ्यो ।

यो जात्रा भक्तपुरका प्रख्यात देवता भैरवनाथ र उनकी शक्ति भद्रकालीको जात्रा हो । भैरवनाथ साक्षात महादेवको रौद्र रूप हो । उनी तन्त्र शक्तिका मूल आधार हुन् ।[१२] उनी बल, बुद्धि र ऐश्वर्यका प्रतीकका साथै खेतीपातीका देवता भएकाले उनीप्रति स्थानीय किसान समुदायको अगाध भक्ति र श्रद्धा रहेको बुझिन्छ ।[१३] यसैले यो जात्रा मनाउनाले बेलामा पानी पर्ने, खेतबाली सप्रिने, सबैतिर सुखशान्ति फैलिने, शत्रु क्षय हुने जस्ता बलियो जनविश्वास यहाँको समाजमा अद्यापि रहेको पाइन्छ । अनि यसमा समाजका सबै वर्गका मानिसहरूको व्यापक जनसहभागिता रहन्थ्यो । जात्रामा सहभागी भएमा धर्म र पुण्य प्राप्त हुन्छ भन्ने धार्मिक विश्वास एकातिर थियो भने अर्कातर्फ स्वस्थ मनोरन्जन पनि हुने हुनाले स्थानीय बासिन्दाका अतिरिक्त वरपरका गाउँबस्तीका मानिसहरू समेत यसबेला जात्रा हेर्न भक्तपुर आउने गर्दथे । वस्तुतः आजको जस्तो मनोरन्जनका विविध साधनहरू त्यतिबेला थिएनन् । अतः रात दिनको खेती किसानी कामबाट थाकेका जनसमुदायले रमाइलो गर्ने मुख्य साधन भनेको बिस्केट जात्रा जस्तो जात्रापर्व नै थियो, जसमा सबैले आफ्ना पीर व्यथा भुलेर आनन्द लिन पाउँथे । यसैकारण बिस्केट जात्रामा जनसहभागिताको उपस्थिति विशाल हुन्थ्यो । तात्कालीन समयका मल्ल राजाहरू पनि आफ्नो राज्यको धार्मिक सांस्कृतिक तथा कलाको क्षेत्रमा विकास गर्न निक्कै सौखिन थिए । त्यसैकारण एउटै जात्रामा अनेक उपजात्रा र विधिविधानहरूको उत्थान मात्र नगरेर त्यसको संरक्षण, सम्बर्द्धन अनि नेतृत्व समेत गर्दथे ।

---

[१२] (क) सी.एम. श्रीवास्तव (सं.), *भैरव तन्त्र सिद्धि,* दिल्ली : मनोज पब्लिकेसन्स, ई.सं. २००९, पृ. ५ ।
(ख) तन्त्र, रहस्य र दैवी शक्तिले सम्पन्न भैरव अति शक्तिशाली देवता हुन्, जसले महादेवको उग्र र डरलाग्दो स्वरूपको प्रतिनिधित्व गर्दछ । – मेरि एम. एण्डरसन, *दि फेष्टिबल्स अफ नेपाल,* लण्डनः जर्ज एलेन एण्डवीन, ई.सं. १९७१, पृ. ४३ ।

[१३] वीणा पौडेल, *काठमाडौं उपत्यकाका प्रमुख उमामहेश्वर र भैरव मूर्तिहरू,* काठमाडौं : साझा प्रकाशन, वि.सं. २०६०, पृ. ६० ।

यसको ज्वलन्त उदाहरण जात्राकाबेला राजा आफै औपचारिक पोशाकमा रथमा सवार भएर जात्रा सञ्चालन गर्ने निर्देशन दिनुलाई लिन सकिन्छ ।[१४] वास्तवमा भक्तपुरमा मल्ल राजाहरूको शासन कायम रहुन्जेलसम्म बिस्केट जात्रा लगायतका सबै सांस्कृतिक गतिविधिले प्रोत्साहन पाएको थियो । जात्रा, उत्सव, चाडपर्वको उत्थानमा मल्ल राजाहरू दत्तचित भएर लाग्ने गर्दथे ।[१५]

राज्यमा वर्षभरि चल्ने अनेक थरी चाडपर्व, जात्रा उत्सवहरू मध्ये बिस्केट जात्रा विविध विशेषताहरूले युक्त विस्तृत रूपको जात्रा थियो । त्यसबेला यस जात्राले राज्यमा राजकीय मान्यता पाएको थियो । राज्यका सर्वोच्च व्यक्ति राजा आफै जात्रामा सहभागी भएपछि मात्र औपचारिक रूपमा जात्रा शुभारम्भ हुने गर्दथ्यो । यस जात्रा सम्बन्धी पूजाविधानहरू भक्तपुर राजदरबार भित्रको मल्ल राजाहरूका इष्टदेवी तलेजु मन्दिरमा पनि त्यहाँका मूलाचार्य (जोशी, ब्राम्हण, कर्माचार्य) हरूले विधिसम्मत ढंगले सम्पन्न गर्ने परम्परा अद्यापि कायम रहेबाट मल्लकालमा यो जात्रा राजकीय मान्यता प्राप्त जात्रा थियो भन्ने थाहा हुन आउँछ ।[१६]

त्यस्तै सोही अवसरमा मल्ल राजाहरूले मान्ने देवी दुमाजुको पूजा र जात्रा, मृत आत्माहरूको शान्तिको लागि राज्यको तर्फबाट वर्षको एकपटक गरिने जोगीचक्र पूजाहरू पनि भव्य रूपमा सम्पन्न गर्ने गरिन्थ्यो । अनि यी पूजा र जात्राहरू अनन्तकालसम्म निर्वाध रूपमा चलिरहोस् भनेर मल्ल राजाहरूले त्यसको सम्बर्द्धनका लागि गुठीको समेत व्यवस्था गरेर गए ।[१७]

---

[१४] अद्यावधि मल्लकालीन राजाको भूमिकामा तलेजुका पुजारी राजोपाध्याय ब्राम्हणले हातमा खड्ग लिएर रथमा सवार भएपछि नै बिस्केट जात्रा औपचारिक रूपमा प्रारम्भ हुने वस्तुगत तथ्यबाट यो कुरा स्पष्ट हुन आउँछ । – प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१५] यस सम्बन्धी उनीहरूले राखेर गएका अनेक शिलालेख, ताम्रपत्र जस्ता ऐतिहासिक सामग्रीहरूको अध्ययनबाट यस कुराको जानकारी मिल्दछ ।

[१६] बिस्केट जात्राको अवसरमा भक्तपुर तलेजु मन्दिरभित्र पनि बिस्केट जात्राको पर्वपूजा चलाउनु पर्ने परम्परा अद्यावधि रहेको पाइन्छ । त्यसक्रममा तलेजुका मूलपुरोहित ब्राम्हण, जोशी, कर्माचार्यहरूले यसको संकल्प वाक्य उच्चारण गर्दा “विश्वयात्रा महापावने” भनेर गर्नुपर्ने विधान रहेको छ । – तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यबाट मिति २०६४/१२/१५गते प्राप्त जानकारीको आधारमा ।

[१७] (क) मल्ल राजा रणजीत मल्लले दुमाजुदेवीको पूजा, नित्यपूजा, पर्व पूजा र जात्रा चलाउनको निम्ति राखेर गएका विभिन्न सामग्रीहरू मध्ये चाँदीको जलपात्रमा उत्कीर्ण अभिलेखमा “श्री ३ दुमाजुदेवी प्रति श्री रणजित मल्लले यो उलायन (पात्र) ने.सं. ८४९ वैशाख बदि ४ मा चढायूँ भनी उल्लेख गरेको छ । त्यस्तै देवीको जात्रा गरिने विमान खटमा उत्कीर्ण अभिलेख यस्तो छ – “ॐ स्वस्ति” श्री ३ दुईमाजु या खट ........ कन श्री श्री जय रणजित मल्ल देव सन सूवर्ण वृक्षया तोरण ..... (हटकर) देव व देवस । – लीलाभक्त मुनंकर्मी, *बिस्केट जात्राको संस्कृति,* भक्तपुर: भक्तपुर नगरपालिका, वि.सं. २०५३, पृ. २२ ।

(ख) बिस्केट उत्सवमा जोगीचक्र पूजा चलाउन राजा जगतप्रकाश मल्लले २४ रोपनी जग्गा गुठी राखेर गएका थिए भन्ने कुरा दरबार परिसरको वत्सलादेवीको मन्दिरको भित्तामा रहेको शिलालेखमा उल्लेख छ । यसको मूलपाठ परिशिष्ट नं. ज चित्रसंख्या ५७ मा दिइएको छ ।

पछिल्लो मल्लकालमा टिपिएको "वर्षकृति" नामक एउटा थ्यासफू अनुसार कान्तिपुर भक्तपुरबाट स्वतन्त्र राज्यको रूपमा छुट्टिएर गएपनि पछिसम्म यस राज्यले भक्तपुरमा हरेक वर्ष हुने गरेका बिस्केट लगायतका अन्य प्रमुख सांस्कृतिक पर्वका अवसरमा पूजा भाग पठाउने गर्दथ्यो भन्ने कुरा थाहा हुन्छ ।[१८] यसबाट कान्तिपुरका साथै अन्य मल्लराज्यहरू भक्तपुरबाट अलग भएर गएपनि मल्लराजाहरूको मूल सांस्कृतिक केन्द्र पछिसम्म भक्तपुर नै रहेको थियो अर्थात् भक्तपुरका जात्रा पर्वप्रति ती राज्यका राजाहरूको पनि सम्मानपूर्ण दृष्टिकोण रहेको बुझिन्छ ।

वस्तुतः मल्लकालदेखि प्रचलनमा आएको यो भैरव–भद्रकालीको रथजात्राले गर्दा नै बिस्केट जात्रालाई धार्मिक भावनासित सम्बद्ध गराएको देखिन्छ । साथै यसजात्राले नगरवासीलाई स्वस्थ र रोमान्चकारी मनोरन्जन पनि दिलाएको पाइन्छ । यसजात्राको अवसरमा समग्र नगरवासीहरू भौगोलिक रूपमा दुई परस्पर समूहमा विभक्त हुने गर्थे । नगरको मध्यभाग– टौमढी चोकबाट जात्रा प्रारम्भ हुँदा यो जात्रा एकदम भव्य र रोमान्चकारी लाग्ने गर्थ्यो । अपार जनसमुदायको माझमा सञ्चालन हुने यस जात्राले गर्दा सबैमा हर्ष, उत्साह, उमङ्ग र खुसीयाली छाएको हुन्थ्यो ।

कसै–कसैले यस जात्राको सार्थकतालाई यसरी पनि प्रस्तुत गर्ने गरेको पाइन्छ । जस्तो– भक्तपुरको नगरीकरण पूर्व यहाँ मुख्यरूपमा दुईवटा बस्तीहरू थिए,[१९] जो परस्परमा कलहले भरिएका थिए । राजा आनन्ददेवले भक्तपुरलाई राजधानी नगर बनाउँदा यी दुई बस्तीहरू पनि समावेश गरिए । तर तिनको परम्परागत द्वेष कायमै रह्यो । त्यही परम्परागत द्वेषलाई नाटकीय ढंगले पछिसम्म पनि सामुहिक स्मृतिमा राखी राख्नको निम्ति यो जात्रा चलाइएको हो । किनकि यसजात्रामा देवता सवार रथलाई माथिल्लोटोल (थने)काले माथितिर नै र तल्लोटोल (क्वने)काले तलतिर नै तान्ने प्रतिस्पर्धापूर्ण सांस्कृतिक क्रिया अद्यापि हुँदै आएको छ ।[२०]

---

[१८] धनवज्र वज्राचार्य, "वर्षकृति : एक अप्रकाशित थ्यासफू," *कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज,* अंक १४, नं. १, (डिसेम्बर १९८६), पृ. ७६ ।

[१९] राजधानी नगरको रूपमा स्थापना हुनुपूर्व भक्तपुर तात्कालीन समयमा दुई भिन्नाभिन्नै गाउँहरूमा विभक्त थियो । यस तथ्यलाई शिवदेव, अंशुवर्माको वि.सं. ६५१ को भक्तपुर गोलमढी टोलको अभिलेख र वि.सं. ६५१ कै भक्तपुर तालाक्वः टोलको अभिलेखहरूले स्पष्ट पार्दछ । एउटै समयका यी दुई अभिलेखहरूमा भक्तपुरलाई भिन्नाभिन्नै नामबाट सम्बोधन गरिएको छ । जस्तो – गोलमढी टोलको अभिलेखमा जुन हाल भक्तपुरको माथिल्लो टोलमा पर्दछ, त्यसमा त्यसभेगलाई माखोपृङ भनिएको छ भने तालाक्व टोलको अभिलेख जुन तल्लो टोलमा पर्दछ, त्यसमा त्यसभेगलाई माखोदुलुं भनिएको छ । – वज्राचार्य, पा.टि.नं. ४, पृ. २४९ र २३१ ।

[२०] (क) नील गुत्सो र वर्नहार्ड कोल्वर, *भक्तपुर,* वेसवडेन : कमीशन्स भर्लाग फ्रान्ज स्टेनर, ई.सं. १९७५, पृ. १६ ।
(ख) रवर्ट आइ. लेभी, *मेसोकज्म,* दिल्ली : मोतीलाल बनारसी दास पब्लिसर्स, ई.सं. १९९२, पृ. १६८–१७४ ।

तर्क र विचार आ–आफ्ना हुन सक्छन् तर मूल कुरा के हो भने यहाँको नेवार समाज प्राचीनकालदेखि जात्राप्रधानसमाजको रूपमा रही आएको छ । किनकि यहाँको उन्नत कृषिवाली अनि विकसित व्यापार व्यवसायले समग्र राज्यको आर्थिक अवस्थालाई समृद्धशाली बनाएको थियो । यसै पृष्ठभूमिमा यहाँका बासिन्दाले अनेक थरीका चाडपर्व, जात्रा उत्सव, नाचगान, भोजभतेर आदि गरेर रमाइलो गर्न सके । अनि यी सब सांस्कृतिक क्रियाकलाप धर्मकर्ममा आधारित थियो । यस्ता जात्राहरूमा बिस्केट पनि एउटा प्रमुख जात्रा थियो । वास्तवमा यहाँको समाज धर्मभीरु चरित्रको समाज भएकोले देवीदेवताप्रति यहाँका बासिन्दाको अथाह श्रद्धा र भक्ति रहनु स्वाभाविक पनि देखिन्छ । यसर्थ आफ्ना क्षेत्रका प्रसिद्ध देवीदेवताको वर्षको कम्तीमा एकपटक जात्रा गर्ने परम्परा आमरूपमा देख्न सकिन्छ । त्यस्ता देवता व्यापक मान्यताका भए तिनको रथजात्रा नै सम्पन्न गरिन्छ, नभए स्थानीयस्तरमा खटजात्रा मात्र गरिन्छ ।[२१]

बिस्केट जात्राका प्रमुख देवता विश्वनाथ भैरव हुन् । उनी व्यापक मान्यताका देवता हुन् अर्थात् उनी शैव, बौद्ध, शाक्त आदि विविध धर्म सम्प्रदायद्वारा पुजिएका देवता हुन् । यसैकारण भक्तपुर नगरको माझमा अर्थात् टौमढी टोलको खुल्ला चोकको पूर्वतर्फ उनको मन्दिर अवस्थित छ । यहींबाट भक्तपुर नगर क्षेत्रगत आधारमा माथिल्लो टोल (थने:) र तल्लो टोल (क्वने) गरी दुई प्रमुख टोलमा विभाजित छ । बिस्केटजात्राको प्रारम्भ पनि यही खुल्लाचोकबाट हुने गर्छ । जात्राकोक्रममा देवता सवार रथलाई माथिल्लो टोलका बासिन्दाले पछाडिबाट र तल्लो टोलका बासिन्दाले अगाडिबाट तानेर आ–आफ्नो क्षेत्रतिर लाने प्रयत्न गर्दथे । यो रथ तान्ने जात्रा तीव्र प्रतिस्पर्धापूर्ण भएपनि, धार्मिक यात्रा भएकोले यसमा कुनै किसिमको रिस, राग, द्वेष, इर्ष्या र शत्रुताको भावना हुँदैनथ्यो । जीत हार जसको भएपनि आखिर दुवै पक्षका जात्रालुहरूबीच पूर्णरूपले समझदारी, सहिष्णु, सौहार्दताको भावना र मित्रवत् व्यवहार प्रदर्शित हुने गर्दथ्यो । तात्कालीन समाज धर्मकर्ममा आधारित समाज भएकोले आफुले मान्दै आएको देवता सवार रथलाई आफ्नो टोल इलाकातिर तानेर ल्याउन सकियो भने आउँदो वर्ष सुखद् रहने बलियो जनविश्वास रहेको पाइन्थ्यो । यसैकारणले गर्दा जात्राको बेला दुवै पक्षका बासिन्दाले रथका मोटा–मोटा डोरी समातेर रथलाई आफू कहाँ लैजान ठूलो प्रयास गर्दथे । "होस्से हँइस्से" भन्दै दुवैतर्फकाले आ–आफ्नो शक्ति प्रर्दशन गर्दथे । रथ तानातानकोक्रममा दुवैपक्षका मानिसहरूमा कहिलेकाहीँ तनाव, उत्तेजना अनि

---

[२१] बलदेव जुजु र सुरेन्द्रमान श्रेष्ठ, *नेपाःया तान्त्रिक द्यः व तान्त्रिक पूजाविधि,* काठमाडौं : लेखकद्वय, ने.सं. ११०५, पृ. ३२ ।

मनमुटाव पनि उत्पन्न हुने गर्थ्यो, तर त्यो क्षणिक मात्र रहन्थ्यो । सबै मिलिजुली जात्राको समापन सुखद रूपमा हुने गर्थ्यो ।[२२]

तात्कालीन समाजका मानिसहरूमा तन्त्रमन्त्र र दैवीयशक्ति सम्बन्धी धारणामा ठूलो विश्वास रहेको थियो । यो जात्रा पनि तान्त्रिक विधि र ज्योतिष शास्त्र बमोजिम सञ्चालन हुने जात्रा भएकोले यसमा त्यो मत्यो (गर्न हुने, नहुने काम कुराहरू) को खुबै ख्याल गरिन्थ्यो । जात्राकोबेला कहीं कतै गएर रथ गुड्न नसकी अड्क्यो भने तत्काल खोजीनीति गरि तान्त्रिक विधिबाट क्षमापूजा गरिन्थ्यो । क्षमापूजा गर्दा रथ रोकिएको ठाउँमा नायखीं बाजा बजाई सम्हेय्बजी चढाइन्थ्यो । यसपछि मात्र रथ तान्न सजिलो हुने आमधारणा व्याप्त थियो । यसैकारण त्यसबेला सम्हेय्बजी चढाउने दाफाहरूको व्यवस्था गरिएको हुन्थ्यो । तर आजभोलि यो प्रथा टुटिसकेको छ ।[२३]

प्रारम्भिक समयमा यसरी बिस्केट जात्राको बेला तानिने भैरवको रथ आजको जस्तो विशाल रूपको थिएन, सानो आकारको थियो । हालको ठूला–ठूला पांग्रा सहितको विशाल रथ बनाई तान्ने जात्राको प्रचलन राजा भूपतीन्द्र मल्लको पालादेखि सुरु भएको हो । यसका लागि उनले रथ गुड्ने बाटोमा ढुंगा बिछ्याएर पक्की बाटो बनाउनुको साथै रथ गुड्न सजिलो होस् भनेर बाटोको दाँया,बाँया ढुंगाकै ढल (Track) समेत बनाउन लगाए ।[२४] भक्तपुरमा अझै पनि के भनाइ सुन्न पाइन्छ भने – पहिले–पहिले यसरी जात्रा गरिने भैरवनाथको सानो आकारको रथको निर्माण हालको खौमा टोलमा गर्ने गरिन्थ्यो । त्यसबेला खौमा टोलबाट खट (नेवारीमा खः) जात्रा सुरु गरिने भएकोले त्यसटोलको नाम नै खःमा वा खौमा हुन गएको हो भन्ने भनाइ स्थानीय बुढापाकाहरूको रहेको छ ।[२५]

रथजात्राका निम्ति रथका अगाडिपट्टि ६ वटा र पछाडिपट्टि चारवटा लामा र मोटा धागोको डोरी हालिएको हुन्थ्यो ।[२६] त्यसबेला ती डोरीलाई तन्त्रको आधारमा दशनारी अथवा दश पीङ्गला बंगलाको संज्ञा दिइन्थ्यो ।[२७]

---

[२२] विगत ६ पुस्तादेखि परम्परागत रूपमा भैरवनाथ गुठीको नाइकेको पदभार ग्रहण गर्दै आएका स्थानीय लाकोलाछें टोल निवासी मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१७ गते प्राप्त जानकारी । यो जानकारी उहाँलाई सानै छँदा उहाँको हजुरबुबाबाट प्राप्त भएको हो ।

[२३] मुनंकर्मी, पा.टि.नं. १७ (क), पृ. ४३ ।

[२४] ठूलो आकारको रथका प्रथम निर्माणकर्ता राजा भूपतीन्द्र मल्लको नाम उल्लेख भएको ने.सं. ८२१ फागुण शुदि द्वादशी मिति अंकित जीर्ण छानाको मुठल र छाना आजपनि देख्न सकिन्छ । साथै यसरी रथ ठूलो र विशाल आकारको बनाइसकेपछि त्यसलाई तानेर मुख्यजात्रास्थल (विश्वध्वजोत्थान गर्ने स्थान) मा लैजाँदा रथका विशाल पांग्राहरू यताउति जान नपाउने गरी गाःहिटी टोलबाट जात्रास्थलसम्म पांग्रा गुड्ने ढुंगाको खाल्डो बाटो (Track) बनाउन लगाए । – *ऐजन,* पृ. ४०–४१ ।

[२५] भैरव नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारी ।

[२६] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ (वर्ष ७७)बाट मिति २०६७/४/२४ गते प्राप्त जानकारी ।

[२७] मुनंकर्मी, पा.टि.नं. १७ क, पृ. ३९ ।

बिस्केटको रथ तान्ने प्रतिस्पर्धापूर्ण जात्रामा देशवासीहरूलाई सरिक हुन राज्यको तर्फबाट जात्रा सुरु हुनुभन्दा केही दिन अघिबाटै आह्वान गरेर जात्रालाई सकेसम्म रोमान्चकारी, उत्साहपूर्ण बनाउने प्रयास गरिएको हुन्थ्यो ।[२८]

यसबाट जात्रामा बढी भन्दा बढी जनसहभागिता जुटोस्, जात्रा समयमा नै सम्पन्न होस् भन्ने मनसाय राज्य वा तात्कालीन शासक वर्गको रहेको बुझिन्छ । मनोरन्जनका अन्य साधनहरू उपलब्ध नभएको तात्कालीन समाजमा यस्ता जात्रा उत्सवहरूमा बढी संख्यामा स्थानीय बासिन्दाहरूलाई सहभागी गराएर जात्रा समयमा नै सम्पन्न गराई मनोरन्जन दिनु र दिलाउन खोज्नु अस्वाभाविक त लाग्दैन तर त्यसभन्दा पनि मह□वपूर्ण र गम्भीर कुरा के अनुमान गर्न सकिन्छ भने त्यसबेला यहाँको ठूलो जनशक्ति भनेको किसान समुदाय नै थियो, अझै छ । तिनीहरू सदैव खेतीकिसानी मै व्यस्त हुने गर्थे । खेतीपातीको काम सकिएपछि तिनीहरू अन्य कुराहरूमा नलागोस् खासगरेर राजनैतिक कुराहरूमा नफसुन, सहज किसिमले शासन (राज्य) चलाउन सकियोस् भनी समाजको ठूलो जनशक्तिको रूपमा रहेको किसान समुदायलाई धर्मको आड लिई यस्ता सांस्कृतिक क्रियाकलापमा व्यस्त राख्नु पर्ने जरुरत राज्य वा शासक वर्गमा रहेको सहज अनुमान गर्न सकिन्छ । यसैकारण जात्राका निम्ति राज्यमा रहने हरेक वर्गलाई एउटा–एउटा जिम्मेवारी सुम्पिएको हुन्थ्यो । जहाँसम्म छिमेकी राज्यका जनताको यस जात्रामा सहभागिताको प्रश्न छ, त्यसमा के देखिन्छ भने आफ्ना आफन्त, नातेदार कहाँ बिस्केट चाड मान्न वा जात्रा हेर्न यस अवसरमा वरपरका राज्य वा नेवार बस्तीका बासिन्दाहरू भक्तपुर आउने गर्दथे र रमाइलोसँग जात्रा मानेर फर्कने गर्दथे । तर कहिलेकाहीं के हुन्थ्यो भने यदि राजनैतिक मामलामा एउटा राज्य र अर्को राज्यबीच अर्थात् मल्ल राजाहरूबीच परस्परमा बैमनस्यता र शत्रुता चलेको छ भने त्यसबेला अप्ठेरो स्थिति पनि आइपर्ने गर्दथ्यो । आफन्तकहाँ बिस्केट चाड मान्न आउने वा जात्रा हेर्न आउने छिमेकी राज्यका जनतालाई भक्तपुर प्रवेशमा कुनै प्रकारको रोकटोक त गरिंदैनथ्यो तर शत्रु राज्यका मानिस भन्ने थाहा पाएपछि थुनेर राखी दुःख दिने गरिन्थ्यो भन्ने कुरा ऐतिहासिक सामग्रीहरूबाट थाहा हुन आउँछ ।[२९] यससन्दर्भमा मल्लकालको

---

[२८] बिस्केटजात्रासँग सम्बन्धित मानन्धर गुठीका नाइके पद्मबहादुर मानन्धर (वर्ष ७६) बाट मिति २०६७/४/४ गते प्राप्त जानकारी ।

[२९] (क) चुन्दा वज्राचार्य, *मल्लकालया छुं संस्कृति,* काठमाडौं : काशीनाथ तमोट, ने.सं. ११०५, पृ. २४ ।
(ख) कान्तिपुर र भक्तपुरका स्थानीय जात्राहरू वा चाडपर्व हुँदा त्यसअवसरमा चाड मान्न एक राज्यका जनताहरू अर्को राज्यमा जाने गर्दथे । तर कहिलेकाहीं राजा–राजाहरूको आपसी वैमनस्यता हुँदा यस्ता जात्रा वा चाडमा भाग लिन गएका जनताहरूले समेत दुःख भोग्नु पर्दथ्यो । – चुन्दा वज्राचार्य, *जितामित्र मल्लकालीन धरपौ,* काठमाडौंः नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५३, पृ. ६६ ।

अन्तिम समयतिर घटेको एउटा घटना यहाँ उल्लेख गर्नु प्रासंगिक हुनेछ । एकपल्ट कान्तिपुरका केही युवाहरू नववर्षको अवसरमा भक्तपुरको बिस्केट जात्रा हेर्न भक्तपुर आएछन् । तर राजा रणजीत मल्लले तिनलाई आफुले लगाएको लुगा र गहनाको साह्रै अभिमान भएको दोष लगाई पक्रेर थुनामा राखे । तर पछिबाट जयप्रकाश मल्लले रिसाएर भक्तपुरमाथि आक्रमण गर्ने धम्की दिएपछि ती केटाहरू थुनामुक्त गरिए । यसघटनाको बदला स्वरूप ७ महिनापछि जय प्रकाशमल्लले पनि बालाचतुर्दशी पर्वकाबेला सद्बीज छर्न पशुपति आएका केही भक्तपुरेलाई पक्रेर थुनीराखेका थिए । पछि भक्तपुरले क्षतिपूर्ति तिरेपछि तिनलाई थुनामुक्त गरियो ।[३०] यसरी मल्ल राजाहरूको आपसी बैमनस्यताले गर्दा तात्कालीन परिस्थितिमा जात्रा पर्व मान्न आउने/जाने सर्वसाधारणजनताले समेत दुःख पाउने गर्दथे भन्नेकुरा यताबाट थाहा पाइन्छ ।

त्यस्तै मल्ल राजाहरूबीच संग्राम पर्दाखेरि पनि यस जात्रामा प्रत्यक्ष असर पारेको थियो भन्ने तथ्य ने.सं. ७८३ को बिस्केट जात्राको घटनाले पुष्टि गर्दछ । भक्तपुर निवासी श्री ज्ञानकर वज्राचार्यको संग्रहमा रहेको टिपोट (थ्यासफू) अनुसार उक्त वर्ष कान्तिपुर र पाटन मिलेर भक्तपुरमाथि आक्रमण गर्दा गढ पर्खाल (नगर) भित्रका जति सबै बाँचे । बाँकी जम्मै सखाप भयो । श्री ३ आकाशभैरवको रथ विश्वजात्रामा तानेर लान लाग्दा रथको छाना तल खस्यो । त्यतिबेला खोलापारी बसेका प्रताप मल्ल र श्रीनिवास मल्लको आज्ञा नभएसम्म जात्रा गर्न पाइँदैन भनेर बाधा पुऱ्याए । यसैले देवता रातभर गाःहिटी मै राज भयो । ब्राम्हण, प्रमान (प्रधानमन्त्री), सिपाही, सेना प्रहरी, सैनिक आदि राखेर बन्दूक समातेर देवताको पहरा दिइयो । संक्रान्तिका दिनमा भैरव कहाँ गाःहिटीमा श्री उपाध्या, आचाजु, ब्राम्हण जम्मा भइ देव(को नाममा) गुच्चा रथैमा छान्न लगाई लिंगो नउभ्याउँदा पनि हुने गुच्चा आएर थुगलमै राजा सवारी भएर खट तानेर लिंगो नउभ्याईकन खाल्डोमा गाडेर राखेर देवतालाई खटबाट तल झिकेर रागेश्चाको घरको पेटीमा विराजमान गराई त्यस दिनको चाहिने जति काम गरेर आचाजु नायक र घोडा आए फर्केर, देवभित्र सवारी गराइयो, चौंथो दिनमा राजाले पूजा गरे । भैरव कहाँ देशमा राँगो नभएर बोका एक काटियो र सबैलाई सम्ह्य दिइयो । नकिंजु (भद्रकाली) कहाँ पूजामा बोका एक चढाइयो । संवत् ७८३ वैशाख शुक्ल १ ॥ ॥[३१]

---

[३०] (क) एण्डरसन, पा.टि.नं. १२ (ख), पृ. २०६ ।
(ख) लम्साल, पा.टि.नं. ९ (क), पृ. ११७ ।

[३१] भक्तपुर निवासी ज्ञानकर वज्राचार्यको संग्रहमा रहेको ने.सं. ७२३ देखि ने.सं. ९३६ सम्मका बिस्केट जात्रासँग सम्बन्धित अनिष्ट, दुर्घटना र तिनको शान्ति गर्दाका प्रक्रियाका बारेमा विवरण परेको थ्यासफूको पत्र संख्या ६, ७ र ८ ।

यहाँ स्पष्ट हुनुपर्ने कुरा के छ भने बिस्केटको लिंगोजात्रा खास नगर भन्दा बाहिर चुपींघाट (ल्योसींखेल) मा हुने गर्छ । तर त्यतिबेला नगरबाहिर अर्थात् खोलापारी पाटन र कान्तिपुरका राजाहरू आफ्ना फौज लिएर बसेका थिए । यसैले लिंगो उभ्याउन सकिएन । भैरवको रथ पनि लिंगो जात्रास्थल पुऱ्याउन सकिएन । गा:हिटी (जात्रामार्ग) मै देवतालाई तल झिकेर व्यक्ति विशेषको घरको पेटीमा राखेर पूजा गरियो । फेरि कान्तिपुर र पाटनको फौजको घेरावन्दीले गर्दा बाहिर जान नसकिएको र देशभित्र (नगरभित्र) राँगो नभएकोले बोका बलिदिई सम्हेय् बजी ख्वाइएको कुरा यस टिपोटबाट थाहा हुन्छ ।

वि.सं. १९९० सालको महाभूकम्प भन्दा अघिसम्म भक्तपुरका बाटाघाटाहरू आजका जस्ता चौडा र फराकिला थिएनन् । यसर्थ भैरवनाथको रथयात्रा गरिने जात्रामार्ग पनि साँघुरा नै हुन्थे । यसैकारण यो रथ तान्ने जात्रा पनि यहाँका निश्चित् टोल इलाकासम्म मात्र हुने गर्थ्यो अर्थात् टौमढी टोलको आसपास जस्तो पूर्वमा हालको क्वाछें टोलको मयजु देवलसम्म र पश्चिममा बोलाछें टोलको बुलुचासम्म मात्र रथ तानेर लान सकिन्थ्यो ।[३२] जात्राकाक्रममा दुवैतिरबाट रथ तान्दा रथका पांग्राबाट "घिरिङ्ग किरिङ्ग, घिरिङ्ग किरिङ्ग" को भीषण आवाज निस्कने गर्थ्यो र किम्बदन्ती के छ भने त्यो आवाज काशीसम्म पुग्ने गर्थ्यो । रथ तान्ने प्रतिस्पर्धाले गर्दा रथका पांग्रा भुइँमा जोटिंदा भुइँबाट आगो समेत निस्कने गर्थ्यो ।[३३] बिस्केटको यो प्रतिस्पर्धापूर्ण रथतान्नेजात्रा जात्राको पहिलो र अन्तिम दिन मात्र हुने गर्थ्यो, जसलाई "द्य:क्वहाँ बिज्याकिगु"(देवता तल सवारी हुने) र "द्य: थाहाँ बिज्याकिगु" (देवता माथि सवारी हुने) भन्ने गरिन्थ्यो । यद्यपि रथ तान्ने सांस्कृतिक क्रिया चैत्र मसान्त र मेष संक्रान्तिका दिन पनि हुने गर्थ्यो तर त्यतिबेलाको रथ तनाइ केवल गन्तव्य स्थलतर्फ लक्षित हुन्थ्यो । जस्तो– मसान्तका दिन गा:हिटीबाट ल्योसींखेल र संक्रान्तिका दिन ल्योसींखेलबाट गा:हिटी अर्थात् त्यसबेला रथ एकातर्फ मात्र तानिन्थ्यो । भैरवनाथको रथजात्रा जस्तै बिस्केटमा भद्रकालीको पनि रथजात्रा हुने गर्थ्यो । तर बिस्केटको प्रमुख आकर्षण र भव्यता भनेको भैरवको रथजात्रा नै थियो, भद्रकालीको रथ जात्रा भैरवको पाश्र्व भागमा मात्र सीमित रहेको हुन्थ्यो । सम्पूर्ण जात्राअवधिभरि भैरवकी शक्तिको रूपमा भद्रकाली भैरवको पछि–पछि लागेकी हुन्छिन्[३४] तर मेष संक्रान्तिका दिन विश्वध्वजोत्थान जात्रा विसर्जन पश्चात् दुवै देवदेवीको रथलाई तानेर गा:हिटी टोलमा ल्याइ पुऱ्याएपछि त्यहाँ

---

[३२] मुनंकर्मी, पा.टि.नं. १७ (क), पृ. ४१ ।

[३३] भैरव नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारी ।

[३४] रवर्ट आई. लेभी, "बिस्केट जात्राको अर्न्तकथा", *पासुका,* वर्ष १, अंक ८, (वैशाख २०५४), पृ. ५ ।

दुवै रथलाई तल माथि पारेर आपसमा जुधाउने जात्रा भने बिस्केटको मह□वपूर्ण पक्ष मानिने गरिन्थ्यो । किनकि यस सांस्कृतिक क्रियालाई भैरव र भद्रकाली बीच आपसमा समागम भएको प्रतीक अर्थमा लिने गरिन्थ्यो र यसक्रियाबाट समस्त जीव र जगतको कल्याण हुने शास्त्रीय मान्यता रहेको पाइन्छ । अनि यो रथ जुधाउने जात्राको प्रचलन राजा जगज्योतिर्मल्लले प्रारम्भ गरेका थिए ।[३५] भैरव–भद्रकालीको रथ जुधाउने जात्रा दुवै बीचको आपसी समागम भएको र त्यस समागमबाट लिंग भेद अन्त्यको सन्देश दिएको प्रतीक अर्थमा पनि यसलाई लिने गरिन्थ्यो ।[३६]

तथापि बिस्केट सँग जोडिएका किम्बदन्तीहरूले भद्रकालीलाई नै मुख्य चरित्र मानेको, नगरको जुन भागमा जात्रा केन्द्रित हुन्थ्यो, त्यो उनकै ठाउँ भएको, बिस्केट उनकै जात्रा थियो भन्नेहरू पनि प्रशस्त भेट्टिन्छन् । उनकै आग्रहले जात्रा हेर्न आएका मानवरूपी भैरवलाई पक्रेर यहाँ बसालिएको त्यसपछि वर्षेनी बिस्केटमा उनको जात्रा शुभारम्भ गरिएको हो ।[३७] तर यथार्थमा पुरुष देवता भैरवले नै यसजात्रामा मुख्य भूमिका खेल्ने गरेको र भद्रकालीको उपस्थिति उनकै पार्श्व भागमा, त्यो पनि धमिलो रूपमा मात्र देखिने गर्दथ्यो । यसरी यी देवीलाई किम्बदन्तीभित्र सीमित राखेको देखिन्छ । ती किम्बदन्तीहरूले व्यवस्थित नगरको स्थापना पूर्वको अवस्था वर्णन गर्दछ । जात्राकोक्रममा रथमा सवार भैरव र राजा दुवैले आ–आफ्नो ढंगले तात्कालीन नगरको दृश्यावलोकन भ्रमण गरिरहेको बेला भद्रकाली चाहिं त्यस सामाजिक व्यवस्थाको एक किनारमा बसिरहेकी हुने गर्थिन् ।[३८] यसैगरेर चैत्रमसान्तका दिन उत्थान गरिने विश्वध्वज लिंगोलाई आधुनिक धारणा अनुरूप विश्वेश्वर वा विश्वनाथ भैरवको प्रतीक रूपमा मान्न थालेपछि भद्रकालीको स्थिति अझै गौण हुन पुगेको देखिन्छ । यद्यपि बिस्केटलाई भैरव र भद्रकालीको जात्रा मान्ने गरिन्छ । तर त्यसो भए पनि जात्राको भव्यता भैरवनाथसँगै सम्बन्धित रहेको अथवा जात्रामा मह□वपूर्ण भूमिका भैरवनाथकै रहने गरेबाट यो जात्रा मूल रूपमा भैरवनाथकै जात्रा हो भन्नेमा अत्युक्ति नहोला ।

---

[३५] भक्तपुरमा कालीदेवीकन रथारोहण गराई भैरवनाथकन अन्य शक्ति विषये गमन इच्छा गरिलियाको लीलाभावले कालीका रथ र भैरवको रथ परस्पर प्रहार गराया । – लम्साल, पा.टि.नं. ९ (क), पृ. ५४ ।

[३६] लेभी, पा.टि.नं. ३४, पृ. ५ ।

[३७] भैरव गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ्ग (वर्ष ७७) बाट मिति २०६७/४/२३ गते प्राप्त जानकारी ।

[३८] लेभी, पा.टि.नं. ३४, पृ. ५ ।

अर्को कुरा "बर्षकृति" थ्यासफू अनुसार मल्लकालमा यो बिस्केट जात्रा भक्तपुरमा मात्र नभएर कान्तिपुरमा पनि विशेष रूपमा गरिन्थ्यो भने कुरा थाहा पाइन्छ ।[३९] विशेष गरेर त्यसबेला हनुमानढोका मूलचोक काठमाडौंमा दुमाजुदेवीको खटजात्रा हुने गर्दथ्यो । अभिलेखमा यसजात्रालाई "विश्वयात्रा" भनिएको र काठमाडौंका स्थानीय मानन्धरहरूद्वारा लिंगो गाड्ने र ढाल्ने काम पनि यस जात्रामा हुने हुनाले दुमाजुको यो जात्रा बिस्केटजात्राकै एउटा रूप हो भन्ने देखिएको छ । बिस्केट जात्रा र यो जात्रा वैशाख संक्रान्तिकै दिन सम्पन्न गरिने हुनाले पनि यस कुराको पुष्टि हुन्छ ।[४०] यसरी हाल काठमाडौंमा विश्वजात्रा सामान्य रूपमा गरिए पनि मल्लकालमा भने त्यहाँ यो जात्रा विशेष रूपमा गरिन्थ्यो भन्ने कुरा थाहा लाग्दछ । साथै यस तथ्यबाट अर्को कुरा के थाहा लाग्दछ भने बिस्केटकाक्रममा दुमाजु देवीको खटजात्रा भक्तपुरमा मात्र हुने नभएर काठमाडौंमा पनि हुने रहेछ भन्ने कुरा पनि स्पष्ट हुन आउँछ ।

यसदेखि बाहेक यहाँनेर अर्को एउटा विचारणीय प्रश्नमाथि पनि छलफल गर्नु आवश्यक देखिन्छ, त्यो के भने यो बिस्केट जात्रा प्रारम्भदेखि आजकै जस्तो सौर्यमान पात्रो अनुसार मनाइदै आएको हो त ? यो बडो गम्भीर प्रश्न हो । सबैलाई थाहा भएकै कुरा हो, यो जात्रा मेष संक्रान्तिलाई केन्द्रविन्दु बनाएर मनाइने जात्रा हो । यसैले यसलाई विक्रम सम्वत्सँग जोडेर विक्रम संम्वत् अनुसारको नववर्षको उपलक्ष्यमा गरिने जात्रा भनेर पनि भन्ने गरिएको पाइन्छ ।

तर मल्लकालमा टिपिएको एउटा ऐतिहासिक घटनावली हेर्दा पहिले–पहिले यो बिस्केट जात्रा सौर्यमान पात्रो अनुसार नभै चान्द्रमान पात्रो अनुसार मनाइने जात्रा हो कि जस्तो लाग्दछ । मल्लकालको मध्यतिर बिस्केटमा भक्तपुरमा लिंगो उठाउने र भैरवको रथ तान्ने जात्रा समेत चैत्र शुक्ल पूर्णिमाको दिन गर्ने गरिन्थ्यो भन्ने कुरा त्यस घटनावलीको अध्ययनबाट बुझिन्छ । किनकि त्यस घटनावलीमा नेपाल संवत् ७४१ चैत्र शुक्ल पूर्णिमा अंगारबारको दिन भैरवको रथलाई टोल–टोलमा तानेर लाने क्रममा क्वाठछेंय (वर्तमान क्वाछें) मा भैरवको रथ भाँचिएपछि त्यहाँदेखि देवतालाई छोपेर ल्याई पुनः लिंगो उभ्याएर रथ यात्रा गरियो । जात्रा हुँदै गर्दा कुनै ठूलो बिघ्न बाधा आयो भने विघ्न पन्छाउन पूजा गर्ने

[३९] वज्राचार्य, पा.टि.नं. १८, पृ. ७७ ।

[४०] गौतमवज्र वज्राचार्य, *हनुमानढोका राजदरबार,* काठमाडौं : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं. २०३३, पृ. १५५ ।

चलन थियो र त्यसैअनुसार भैरवनाथको जुन ढंगले भव्य पूजा गर्नुपर्ने हो त्यो नगरी केवल राजाको मात्र पूजा भएकोले देवता कोपभाजन भएको मानेर पछिबाट गुठीको राँगो, टोलको राँगो एउटा–एउटा राखी पूजा गरेपछि मात्र भैरवनाथको कोप शान्त भयो भन्ने कुरा त्यस घटनावलीमा उल्लेख पाइन्छ । यो ऐतिहासिक घटनावली नेपाल राष्ट्रिय अभिलेखालयस्थित हस्तलिखित ग्रन्थ लगत नं. १६९६ माइक्रोफिल्म नं. ए.३०१ को १२ प.सं.२ मा वर्णित छ, जसलाई चुन्दा वज्राचार्यले "मध्यकालया छुं घटनावली: छगू अध्ययन" शीर्षक दिएर पुस्तकका रूपमा प्रकाशित गर्नुभएको छ ।[४१]

बिस्केट जात्राको तात्कालीन घटना समेत वर्णन भएको त्यस ऐतिहासिक घटनावलीमा मिति उल्लेख गर्दा विक्रम संवत् उल्लेख नहुनाले यो जात्राको सम्बन्ध कतै विक्रम संवत् अथवा सौर्यमानसँग नभएको हो कि जस्तो लागेको हो, तर वास्तवमा मल्लकालका अधिकांश स्रोतसामग्रीहरूमा नेपाल संवत्कै प्रयोग ज्यादा भेटिन्छ । यस घटनावलीमा पनि नेपाल संवत्कै तिथि मिति (ने.सं.७४१ चैत्र शुक्ल पूर्णिमा) उल्लेख भएको छ । यहाँनेर विचार गर्नुपर्ने कुरा के छ भने उक्त साल लिंगो उभ्याउने सौर्यमानको चैत्र मसान्तको दिनमा संयोगले चान्द्रमानको चैत्र शुक्ल पूर्णिमा परेको हुन सक्छ । यसैलाई आधार मानेर चुन्दा वज्राचार्यले मल्लकालमा बिस्केट जात्रा चान्द्रमान तिथि अनुसार (चैत्र शुक्ल पूर्णिमाका दिन) मनाइने गरिन्थ्यो भनेर जुन कुरा भन्नु भएको छ, त्यो सरासर गलत देखिन्छ । किनकि त्यसबेला (मल्लकालमा) पनि यो जात्रा सौर्यमान अनुसार चैत्र मसान्त र वैशाख संक्रान्तिका दिन मनाइने गरिन्थ्यो भन्ने कुरालाई निम्न तथ्यहरूबाट स्पष्ट पार्न सकिन्छ ।

भक्तपुर साकोठा टोल निवासी ज्ञानकर वज्राचार्यज्यूको संग्रहमा ने.सं. ७२३ देखि ने.सं. ९३६ सम्मका बिस्केट जात्रासँग सम्बन्धित अनिष्ट, दुर्घटना र तिनको शान्तिस्वस्ति गर्दाका प्रक्रियाबारेमा विवरण परेको एउटा थ्यासफू छ । त्यस थ्यासफूमा पनि यो जात्रा सौर्यमान अनुसारकै निर्धारित दिनहरूमा हुने गर्दथ्यो भन्ने कुरा उल्लेख छ ।[४२] यस थ्यासफूको पूर्ण विवरण परिशिष्टमा दिइएको छ । डिल्लीरमण रेग्मीले प्रस्तुत गर्नु भएको एउटा थ्यासफूमा पनि यो जात्रा सौर्यमान पात्रो अनुसार नै हुने गर्दथ्यो भन्ने उल्लेख पाइन्छ । थ्यासफूको मूल पाठ यस्तो छ :–

---

[४१] चुन्दा वज्राचार्य, *मध्यकालया छुं घटनावली : छगू अध्ययन,* यें: सफू धुकू, ने.सं. ११०७, पृ. २४ ।

[४२] भक्तपुर ज्ञानकर वज्राचार्यको संग्रहमा रहेको बिस्केट जात्राको दुर्घटना र अनिष्ट र त्यसको शान्ति गर्दा बारेको थ्यासफू । यसको मूलपाठ परिशिष्ट नं. च मा दिइएको छ ।

"सं. ८२८ चैत्र कृष्ण : ॥ तृतियां आदित्यवार ॥ थ्वकुन्हु खप्वस मेष संक्रान्तिया एवसि थेङावेरस, एंवसिन चियाओ, न्हेसम्हसिक, घारम्ह २१ शिकं दयं थथे जुव ॥"[४३] यसको भावानुवाद यस्तो हुन्छ – ने.सं. ८२८ (वि.सं. १७६४) चैत्र कृष्ण तृतीया आईतवार । यस दिन भक्तपुरमा मेष संक्रान्तिको लिंगो उठाउँदा लिंगोले थिचेर सात जनाको मृत्यु र २१ जना घाइते भयो । यो साल यस्तो भयो ॥ यहाँ स्पष्ट शब्दमा मेष संक्रान्तिको लिंगो उल्लेख हुन आएकोले यो जात्रा यसबेला पनि सौर्यमान पात्रो अनुसार नै हुने गर्दथ्यो भन्ने थाहा लाग्दछ । अझ यस भन्दा पनि मह□वपूर्ण कुरा पौराणिक ग्रन्थहरूमा नै यो (बिस्केट) जात्रा चैत्र मसान्त र मेष संक्रान्तिका दिनमा सम्पन्न गर्नुपर्ने कुरा उल्लेख छ । गौतमी पुराण र मनुवचन ग्रन्थहरूमा वर्णित निम्न श्लोकबाट यस तथ्यलाई स्पष्ट पार्न सकिन्छ –

"चैत्रेच विश्वयात्रायां ध्वजस्योत्स्थान कंचरेत् ॥
सर्व दु:खानिनश्यन्ति सर्वशत्रुक्षयायच ॥
ध्वज भंजनं पश्चात् क्रियतेसंक्रमेदिने ॥ दुर्भिक्षनाशनं..."[४४]

अर्थात् चैत्र मसान्तको दिन ध्वजा उत्थान गरी विश्वजात्रा मनाउँदा दु:ख नाश भई शत्रु क्षय हुने र सो ध्वजालाई मेष संक्रान्तिका दिन भञ्जन (ढाल्ने काम) गर्नाले दुर्भिक्ष अन्त्य हुने बताइएको छ । यसरी शास्त्रमा समेत चैत्र मसान्तको दिन विश्वध्वज लिंगो ठड्याउने र संक्रान्तिका दिन लिंगो ढाल्ने र त्यसको मह□वबारे उल्लेख भएबाट यो जात्रा प्राचीनकालदेखि सौर्यमान अनुसारकै निर्धारित दिनमा हुँदै आएको हो भन्ने कुरा स्पष्ट हुन्छ । पछिबाट मल्लकालमा आएर त्यसैलाई केन्द्रविन्दु बनाएर अन्य विविध जात्राहरू थपेर आठ रात नौ दिनको विस्तृत रूप दिइयो । जात्राको विस्तृतताको क्रममा अष्टमातृकाहरूको आ–आफ्ना अलग–अलग इलाका हुने हुनाले टोल–टोलको जात्रा वा चाडमा समयकालको एकरूपता रहँदैनथ्यो तर सम्बन्धित टोल विशेषको चाडलाई छोडी वैशाख १ गतेको दिन भने भक्तपुरका सम्पूर्ण नेवार बासिन्दाले सामुहिक रूपमा बिस्केट चाड मान्ने आम प्रचलन आजसम्म पनि रहँदै आएको पाइन्छ ।[४५]

---

[४३] डि.आर.रेग्मी, *मिडियभल नेपाल, भाग ४,* कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ३४१ ।

[४४] "वर्षक्रिया", हस्तलिखितग्रन्थ, राष्ट्रिय अभिलेखालय, माइक्रोफिल्म संख्या वी ४३७/१५, पत्रसंख्या १ । गौतमीतन्त्रमा आधारित विश्वजात्राको उपादेयतामाथि प्रकाश पारी रचना गरिएको यस श्लोकको मूलपाठको प्रतिलिपि परिशिष्ट नं. क मा दिइएको छ ।

[४५] केदारनाथ प्रधान, "भक्तपुरको बिस्केट जात्रा र यसको प्राग ऐतिहासिक मह□व", *प्राचीन नेपाल,* संख्या १०९, (पुस–माघ २०४५), पृ. १६ ।

बिस्केट जात्राको मुख्य दिन मेष संक्रान्तिलाई यहाँका नेवारहरू “खाइ सल्हुँ” पर्वका रूपमा पनि मान्ने गर्दथे । त्यसअवसरमा स्थानीयवासीहरूले मूला, केराउ, निमको पात, चामलको पिठो, मुगी दाल आदि मिलाएर बनाइएको तीतो क्वाथ (सर्वत) पिउने गर्दथे । यो क्वाथ बनाउने विधि योग तन्त्रबाट लिइएको हो ।[४६] जुन मानव स्वास्थ्यका लागि निकै उपयोगी मानिन्छ ।

मल्लकाल पश्चात् बिस्केट जात्रामा मह□वपूर्ण परिवर्तनहरू देखा पऱ्यो । पहिले मल्ल राजाहरू आफैं जात्रामा सरिक भई जात्रा सञ्चालन गर्न निर्देशन दिइ जात्रालाई व्यवस्थित र मर्यादित ढंगबाट सम्पन्न गर्ने गरिन्थ्यो तर अब भक्तपुर स्वतन्त्र राज्य नरहेपछि यस जात्राको सञ्चालन केन्द्र (राजधानी काठमाडौँ) बाट हुन थाल्यो । गोरखाका राजा पृथ्वी नारायण शाहको उपत्यका विजय पश्चात् समग्र नेपालको राजधानी काठमाडौँ र राजदरबार हनुमानढोका बन्न पुग्यो । यसपछि भक्तपुरमा वर्षेनी हुने यस जात्रामा राजाको प्रतीक स्वरूप मान्य खड्गलाई हनुमानढोका दरबारबाट भक्तपुर पठाउन थालियो । त्यही राजकीय खड्गले जात्राका प्रमुख विधिविधानहरूमा राजाको प्रतिनिधित्व गर्ने परम्परा प्रचलनमा आउन थाल्यो ।[४७] यसका साथै यसजात्रासँग सम्बन्धित देवदेवीका पूजाआजामा पहिले मल्ल राजाहरू स्वयं सहभागी हुने गर्दथे ।[४८] अब त्यो परम्परा पनि रोकियो । मुख्य मह□वपूर्ण कुरा मल्लकालमा यो जात्रा जसरी र जुन विधिले सञ्चालन हुने गरेको हो सोही मुताविक मात्र गर्ने गराउने निर्देशन दिइयो । यसबाट के कुरा स्पष्ट हुन्छ भने उपत्यकाको नेवार कला संस्कृति आफ्नो नभएकोले त्यसको प्रवर्द्धन र समुन्नतिमा पनि शाह राजाहरूले खासै दिलचस्पी देखाएको पाइँदैन ।[४९] यसैअनुरूप यसजात्राप्रति तिनको विशेष चाख पनि थिएन,

[४६] डि.आर. रेग्मी, *मेडियभल नेपाल, भाग २,* कलकता : के.एल. मुखोपाध्याय, ई.सं. १९६६, पृ. ६४९ ।

[४७] विजय अभियानको अस्थिर राजनीतिक परिस्थितिमा आफू कहिले कता कहिले कता दौडि रहनु पर्ने अनि भर्खर स्थापित नवीन नेपालको राजधानी माथि सदैव कडा नियन्त्रण र निगरानी नराखेमा आफ्ना विरोधीहरूले टाउको उठाउन सक्ने भएकाले पृथ्वीनारायण शाहले भौगोलिक रूपमा काठमाडौँदेखि पर रहेको भक्तपुरको स्थानीय जात्रामा आफ्नो प्रतीक स्वरूप तरवार मात्र पठाइने गरेको हो भन्ने देखिन्छ । साथै अर्को अर्थमा राज्य संप्रभुको प्रतीक मानिने यस तरवार ( खड्ग) को उपस्थितिले जात्रामा राज्यको पनि सहमति र स्वीकृति छ भन्ने कुरा अनुमोदन गर्दछ ।

[४८] मल्लकालमा बिस्केट पर्वका बेला देवदेवीका पूजाआजा हुँदा मल्ल राजाहरू आफै उपस्थित भइ पूजा गर्ने गर्दथे भन्ने तथ्य जितामित्र मल्लकालीन धरःपौमा उल्लिखित निम्न टिपोटबाट हुन्छ ।
“श्री ३ इलिमास बिस्क्यातम पूजा याङा, श्री ३ सिद्धिगणेशायनमः॥
श्री श्री सुमति जय जितामित्र मल्ल देवसन (पूजा याङा धरोट जुरो,
सं. ८०४ चैत्र बदि १२” – वज्राचार्य, पा.टि.नं. २९ (क), पृ. ३० ।

[४९] यद्यपि मल्ल राजाहरू पनि नेवार थिएनन्, बाहिरबाट आएका कर्णाटवंशी थिए, तथापि यहाँको नेवार कला, संस्कृति, परम्परालाई अवलम्वन गरेर नेवार चाडपर्व, जात्रा अनि अन्य चलनहरू समेत अनुसरण गर्दै अगाडि बढाउँदै लगे । तर मल्ल राजाहरूले जस्तो शाह राजाहरूले यहाँको कला संस्कृतिलाई आफ्नै संस्कृति सम्झेर यसको सम्बर्द्धन र प्रवर्द्धनमा कहिले ध्यान दिएनन, केवल परम्परागत चलनहरूलाई निरन्तरता मात्र दिए । यसैले यसपछि यहाँ सांस्कृतिक विकासको क्रम रोकियो ।

विरोध पनि थिएन भन्ने कुरा थाहा लाग्दछ । तर त्यसो भएपनि उपत्यकाका अन्य प्रमुख जात्राहरूमा जस्तै भक्तपुरमा वर्षेनी हुने बिस्केटजात्राको सांस्कृतिक परम्परालाई थामेर राख्ने कुरामा शाहवंशीय राजाहरूले पनि केही योगदान दिएका थिए भन्ने कुरा ऐतिहासिक प्रमाणहरूले स्पष्ट पार्दछ । उदाहरणार्थ बिस्केट जात्रामा फहराइने विश्वध्वजा वा वीरध्वजा पुरानो भएर जीर्ण हुँदा नयाँ ध्वजा फेर्ने कार्य, भैरव–भद्रकालीको रथ निर्माणका लागि आवश्यक पर्ने काठपात उपलब्ध गराउने, भूकम्प लगायतका कारणबाट जात्राका प्रमुख देवता भैरवनाथको मन्दिर पुरानो भई भत्किंदा त्यसको मर्मत सम्भार, जीर्णोद्वार, पुनःनिर्माण आदि कार्यहरू गर्ने, समग्र बिस्केट जात्राको सञ्चालन गुठी व्यवस्था मार्फत गर्ने जस्ता कामहरू शाहकाल (राणाकाल) मा पनि भएका थिए भन्ने तथ्यहरू भैरवनाथ मन्दिरमा रहेका शाहराजाहरूका स्वर्ण पत्र, ताम्रपत्र, ध्वजा अभिलेखहरूबाट थाहा हुन आउँछ ।[५०]

विक्रम संवत् १८२४ को इन्द्रजात्राको दिन कान्तिपुर विजय गरी त्यहाँको गद्दी आरोहण गरिसकेपछि गोरखाका राजा पृथ्वीनारायण शाहले सो जात्रा उत्सव नरोकी पूर्ववत रूपमा नै चलाउन दिएर पराजित नेवार जनताको सांस्कृतिक परम्परालाई निरन्तरता दिए ।[५१] यसबाट उनमा रहेको वृहत राष्ट्रिय एकताको भावना प्रदर्शित हुन्छ । उनीपछिका राजाहरूले पनि स्थानीय नेवार जनताको धर्म, कला संस्कृतिप्रति वैरभाव नराखी सद्भाव नै कायम राखेको कारणले गर्दा नै आजसम्म उपत्यकाको मल्लकालीन कला संस्कृति, रीतिरिवाज, परम्परा आदि कुराहरू जीवित रहन सकेका हुन् ।

---

[५०] मल्लकाल पश्चात् श्री आकाशभैरवको दैनिक पूजा, पर्व पूजा, जात्रा र मन्दिरको रेखदेख, सुरक्षा आदि सबै कार्यहरू शाह राजाहरूका पालामा पनि भएका थिए । पूर्वकालको संस्कृतिको जिम्मेवारी लिइ भइरहेका गुठीहरूको संरक्षण र भैरवनाथको पूजा र जात्राको संचालनको निम्ति छुट्टै गुठी व्यवस्था गरिएको देखिन्छ । उदाहरणार्थ राजा राजेन्द्रविक्रम शाहले भैरवनाथ मन्दिर ज्यादै जीर्ण हुँदा त्यसको पुननिर्माण गराइ दक्षिणी प्रवेशद्वारमा अष्टदश भैरव, त्यसको मुनि कलश र गणेशका मूर्तिहरू कोर्न लगाइ स्थापना गर्न लगाए । त्यसको ५ वर्षपछि श्री ५ राजेन्द्र र श्री ५ सुरेन्द्र दुवैको नाम अंकित नेपाल भाषा लिपिमा उत्कीर्ण सुनको जलप लगाएको ने.सं. ९४५ को ताम्रपत्र भैरवनाथ मन्दिरको पूर्वाभिमुख प्रवेशद्वारको दाँयाबाँया भित्तामा राख्न लगाए, जुन अद्यावधि देख्न सकिन्छ । त्यसपछि राजा गीर्वाणयुद्ध विक्रम शाहले श्री आकाशभैरवकहाँ विधिसम्मत ढंगले पूजा चढाइ हरेक वर्ष गाईजात्राका भोलिपल्ट खटमा भैरवनाथको मूर्ति विराजमान गराई देश परिक्रमा गरी जात्रा चलाउने व्यवस्था गरे, जुन जात्रालाई गीवार्ण जात्रा नामले पनि सम्बोधन गरिन्छ । त्यस्तै वि.सं. १९९० साल माघ २ गतेको महाभूकम्पले भक्तपुर भैरवनाथ मन्दिर भत्किदाँ तात्कालीन राणा प्रधानमन्त्री श्री ३ महाराज जुद्ध शम्शेरले जगदेखि नै निर्माण गराएका थिए । यसमा मोरु ६५,०००/– खर्च लागेको थियो । यसको निर्माण पुरानै शैलीमा गरिएको थियो र यो निर्माण कार्य छेभडेल अड्डाको तत्वावधानमा सम्पन्न भएको थियो । तत्पश्चात् नेपालका प्रमुख देवदेवीहरूको नित्य पर्व पूजा लगायत जात्रा संचालन गर्ने जिम्मेवारी गुठी संस्थानलाई दिइएपछि बिस्केट जात्राका प्रमुख देवता भैरवनाथ मन्दिरको रेखदेख, पूजापाठ, जात्राहरू सो संस्थानबाट संचालन हुँदै आइरहेको छ । – मुनंकर्मी, पा.टि.नं. १७ (क), पृ.३५–३६ ।

[५१] टि.आर.वैद्य, *पृथ्वी नारायण शाहः दि फाउण्डर अफ मोडर्न नेपाल,* न्यू दिल्ली : अनमोल पव्लिकेसन्स, ई.सं. १९९३, पृ. २६४ र ३८६ ।

यसरी नेपालमा शाहवंशीय राजाहरूको शासन सत्ता कायम भएपछि पनि भक्तपुरको बिस्केट जात्रा पहिले जस्तै (मल्लकालमा जस्तै) हरेक वर्ष निर्धारित दिनहरूमा बिना अड्चन सम्पन्न हुँदै आएको देखिन्छ ।

मल्लकाल पश्चात् बिस्केटजात्रामा देखापरेको अर्को महत्वपूर्ण पक्ष गुरुजुको पल्टन हो । विशेष गरेर बिस्केटको लिंगो उठिसकेपछि गुरुजुको पल्टनले चार पटक बन्दुक पड्काउने नयाँ चलन देखा पर्‍यो ।[५२] यो पल्टन कालो रंगको दौरा सुरुवाल, कपडाको जुत्ता, कालै रंगको बिर्के टोपीमा सजिएर जात्रास्थलमा उपस्थित हुने गर्थ्यो । यो पल्टन नेवार गुरुजु (वज्राचार्य) को पल्टन नभएर पृथ्वीनारायणशाहसँगसँगै प्रचलनमा आएको एउटा नयाँ परम्परा थियो । एकथरी आलोचकहरूको भनाई के पनि छ भने उपत्यका विजय पश्चात् गोरखाका राजा पृथ्वीनारायण शाहले यहाँका स्थानीय नेवार बासिन्दालाई आफ्नो नियन्त्रणमा राखीराख्न अथवा नेवारहरूलाई सांस्कृतिक र मनोवैज्ञानिक रूपमा पराजित र पराधिनताको भावना जगाई राख्नको निम्ति उपत्यकाभित्र प्रचलित विविध नामका जात्रा, पर्व, परम्परा, संस्कृतिभित्र गुरुजुको पल्टनलाई पनि सहभागी बनाइएको हो ।[५३] यसैकारण भक्तपुरको बिस्केट जात्रामा मात्र नभएर काठमाडौँको इन्द्रजात्राको बेला कुमारीको रथजात्रामा समेत पृथ्वीनारायण शाहको सेनाको प्रतीकको रूपमा गुरुजुको पल्टनलाई कुमारीको रथ सँग–सँगै अद्यावधि घुमाउने गरिन्छ ।

तर यथार्थमा बिस्केटको ध्वजारोपण (लिंगो उभ्याउने) कार्यलाई शास्त्रीय मान्यता अनुरूप सुखद् र सौभाग्यको प्रतीक अर्थमा लिन सकिन्छ र त्यस खुसीयालीमा बन्दुक पड्काउनु स्वाभाविकै लाग्दछ । यसमा अन्यथा सोच्नु पर्ने आवश्यकता देखिँदैन । किनकि चैत्र मसान्तकादिन साँझपख जब मुख्य जात्रास्थल (ल्योसींखेल) मा विश्वध्वजा सहितको लिंगो उभिन्छ, तब त्यसखुसीयालीमा भक्तपुर नगरभरिका टोल–टोलका गणेश, भैरव, अष्टमातृका आदि देवदेवीहरूलाई मूलदेवगृहबाट बाहिर ल्याएर विधिपूर्वक खटजात्रा गर्ने परम्परा भक्तपुरमा आज पनि देख्न सकिन्छ । जे होस् जात्राको अवसरमा गुरुजुको पल्टनले बन्दुक पड्काउने नयाँ चलन देखिन थाल्यो । तर हाल आएर यो चलन टुटिसकेको देखिन्छ ।

---

[५२] संस्कृतिविद् लीलाभक्त मुनंकर्मी (वर्ष ८२)बाट मिति २०६४/८/१६ गते प्राप्त जानकारी ।

[५३] संस्कृतिविद् शंकरमान तुलाधरका अनुसार गुर्जुको पल्टन भनेको वज्राचार्यको अथवा नेवार गुर्जुको पल्टन नभएर पृथ्वीनारायणशाहसँगसँगै प्रदर्शनमा ल्याइएको एउटा परम्परा हो । ज्यापू महागुठीका प्रमुख दिपेन्द्र महर्जनका अनुसार यस पल्टनले नेवारहरूलाई सांस्कृतिक र मनोवैज्ञानिक रूपमा पराजित र पराधिनताको भावना जगाइ राखेको छ । – *झिगु स्वनिगः,* वर्ष ७, अंक ४१,(२०६५ भाद्र २२), पृ. ७ ।

त्यसबेला भक्तपुरदेखि बाहिरका ग्रामीण भेकका नेवारेत्तर समाजका मानिसहरू समेत बिस्केट जात्रा हेर्न भक्तपुर आउने गर्थे । यसक्रममा तिनीहरू मेषसंक्रान्तिका दिन बिहान सबेरै बाग्मतीको उद्‌गम बाग्द्वार र टोखा नजिकको सपनतीर्थमा गई स्नानदानादि पुण्यकार्य गरेर मध्यान्ह बिस्केट जात्रा हेर्न भक्तपुर आउने गर्थे । यसरी जात्रा हेर्न आउँदा लौरोको टुप्पो–टुप्पोमा लालीगुराँस फूल सिउरेर भैरवको प्रतीक लिंगो देवतालाई चढाउन ल्याउने गरिन्थ्यो । धर्म र पुण्य प्राप्तिकालागि फूल चढाएर देवताको दर्शन गर्नु सामान्य कुरा हो, तर यहाँनेर कहाँ–कहाँदेखि आएर लौरोको टुप्पोमा फूल सिउरेर जात्राका मुख्य देवतालाई चढाउन ल्याउनुको खास अभिप्राय धर्म र पुण्यकासाथै मृत्युपश्चात् स्वर्ग प्राप्ति होस भन्ने रहेको बुझिन्छ । यताबाट यो जात्रा केवल स्थानीय नेवार समाजले मात्र मान्ने रहेनछ , नेवार बाहेकका अन्य जातजातिले पनि जात्राका मुख्य देवतालाई श्रद्धापूर्वक दर्शन–पूजन गर्ने रहेछ भन्ने थाहा हुन्छ । तर अहिले यो चलन लोप भइसकेको छ । अर्को कुरा, त्यसबेला भक्तपुरमा ठूलो संख्यामा सिपाहींहरू बस्ने गर्दैनथे । तिनीहरू बस्नको लागि आजको जस्तो ब्यारेकको व्यवस्था पनि थिएन । कोत गारतकालागि केही सीमित सिपाहींहरू मात्र भक्तपुर बस्दथे । अतः जात्राका दिन मध्यान्हतिर काठमाडौंबाट सिपाहींहरूको लामो पल्टन ब्याण्डबाजाका साथ भक्तपुर आउने गर्थ्यो । यसरी आउनुको उद्देश्य जात्राको शोभा बढाउनुका अतिरिक्त जात्रालाई व्यवस्थित पार्नु रहेको बुझिन्छ । यो राणाकालको अन्तीम समयतिरको कुरा हो । यो परम्परा पनि हाल हटिसकेको छ ।

यसप्रकार विगतकालमा विविध मान्यता, परम्परा आदिले सज्जिएको यो बिस्केट जात्रा धर्मको साथसाथै मनोरञ्जन पनि मिल्ने अनि स्थानीय समाजमा रहेका विभिन्न थरीका मानिसहरू बीच परस्परमा मेलमिलाप, सामाजिक सद्‌भाव, आपसी एकता अनि राजनैतिक रूपमा शान्ति र स्थिरता, अमनचैन पनि कायम राख्ने एउटा बलियो माध्यम बनेको थियो ।

## ९.३ बिस्केट जात्रा–वर्तमानमा

बिस्केट जात्रा ऐतिहासिक मह□वले भरिएको भक्तपुरको एक प्रख्यात जात्रा हो । यसलाई यहाँ ज्यादै ठूलो चाडको रूपमा मनाइन्छ । सौर्यमान पात्रो अनुसार यो चाड वा जात्रा हरेक वर्ष चैत्र २७ गतेदेखि वैशाख ५ गतेसम्म बडो धुमधामका साथ मनाइन्छ । यी नौ दिन भित्र यहाँ अनेक देवीदेवताको पूजाअर्चना, रथजात्रा, खटजात्राका साथै लिंगो गाड्ने, ध्वजा फहराउने आदि क्रियाकलापहरू सञ्चालन गरिन्छ । बिस्केट जात्राका यी नौ दिन

मध्ये पनि विशेषतः चैत्र मसान्त र वैशाख संक्रान्तिका दिन यो जात्रा बडो धुमधामसँग मनाइन्छ, जुन दिन मुख्य जात्रास्थल ल्योसींखेलमा विश्वध्वज लिंगो उठाएर त्यसको भोलिपल्ट (२४ घण्टापछि) ढालेर जात्रा सम्पन्न गरिन्छ । बिस्केटजात्राको मूल रूप पनि यही हो ।[५४] विक्रम संवत्को नववर्षका दिन, मेष संक्रान्तिमा यो जात्रा हुने भएकोले खगोलशास्त्रीय दृष्टिले पनि यसको विशिष्ट मह□व रहेको छ ।[५५] यसैकारण यसमा सहभागी हुन वा जात्रा हेर्न जात्रास्थल वरिपरि स्थानीय बासिन्दाका साथै वरपरका गाउँ बस्ती अनि टाढा–टाढाबाट समेत असंख्य नरनारीहरूको ओइरो लागेको हुन्छ । किनकि यो जात्रा हेर्नाले शत्रु नाश हुने, सुख शान्ति र आरोग्य प्राप्त हुने जस्ता शास्त्रीय कथन र परम्परागत मान्यता रहेको पाइन्छ ।[५६]

बिस्केट जात्राको आदि र अन्त्य क्रमशः “द्यः क्वहाँ बिज्याकिगु” र “द्यः थाँहा बिज्याकिगु” नामको रथजात्राबाट हुन्छ । भैरवनाथ सवार हुने रथ विशाल र बोझिलो पांग्रामाथि निर्मित तीन तल्ले सुनको जलप लगाइएको धातुको छाना सहितको रथ हो भने भद्रकालीको रथ त्यसभन्दा अलि सानो दुई तल्ले छाना भएको रथ हो । दुवै रथको बनौट पेगोडा शैलीको मन्दिर आकारमा रहेको हुन्छ । जात्राकोबेला दुवै रथलाई कलात्मक र सुन्दर ढंगले सजाइएको हुन्छ । विशेषतः जात्राका प्रमुख देवता भैरवनाथ भएकोले उनी सवार हुने रथलाई आकर्षक ढंगले सजाइएको हुन्छ ।[५७] रथको अगाडि पछाडि दुवैतिर ४०, ४५ हातका लामा बलाखिपः नामका चार चार वटा मोटा डोरीहरू बाँधेर राखिएका हुन्छन् ।[५८] जुन डोरी समाएर तल्लो टोल र माथिल्लो टोलका बासिन्दाले क्रमशः अगाडि पछाडिबाट रथ तान्ने जात्रा प्रारम्भ गर्छन् । यो रथ तान्ने जात्रा स्वस्थ मनोरन्जनात्मक र तीव्र प्रतिस्पर्धापूर्ण खेल

---

[५४] यस लिंगो जात्रालाई विद्वानहरूले अनेक प्रतीकात्मक अर्थ दिएर आ–आफ्ना धारणा, दृष्टिकोण प्रस्तुत गर्ने गरेको पाइन्छ । (हेर्नुहोस् अध्याय पाँचको बिस्केट जात्राको परिचय र परिभाषा)

[५५] विक्रम संवत्सरको नववर्ष मेष संक्रान्तिमा पर्ने भएकोले र उक्त दिन खगोलशास्त्रीय सिद्धान्त मुताविक सूर्य पृथ्वीको भूमध्यरेखामा वा विषुवत्‌रेखामा पर्ने भएकोले त्यसदिन दिन र रात बराबर हुने गर्दछ र ज्योतिषीय मान्यता अनुसार उक्त दिन जात्रा उत्सव मनाउनाले सुख, शान्ति, समृद्धि र आरोग्य पाइने विश्वास गरिन्छ ।

[५६] “वर्षक्रिया”, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म संख्या बी ४३७/१५, पत्र संख्या १ ।

[५७] सबैभन्दा माथिल्लो तल्लाको छानामाथिको टुप्पोमा सुनको ठूलो गजुर राखिएको हुन्छ । पांग्रादेखि माथिल्लो तल्ला त्यसै खाली राखिएको हुन्छ । त्यसभन्दा माथिल्लो तल्लामा मात्र भैरवनाथलाई विराजमान गराइन्छ । प्रत्येक तहको छाना वरिपरि रातो कपडाको झल्लर र मसिना घण्टहरू झुण्ड्याइएको हुन्छ । चारैतिर तीनमुखे सःझ्याल जस्तो देखिने कलात्मक झ्यालहरू, प्रत्येक झ्यालमाथि कलात्मक काठको तोरण, प्रत्येक तोरणमा भैरव, गणेश र कुमारका कलात्मक सुन्दर मूर्तिहरू कुँदिएको पाइन्छ । छाना अड्याउनको लागि ४ सुरमा टुँडाल प्रयोग गरिएको पाइन्छ । ती टुँडालमा पनि सुन्दर मूर्तिहरू कुँदिएका पाइन्छन् । रथको अग्रभागमा बांगिएर माथि उठेको मोटो काठको खाम्बो हुन्छ । यसको शीर्ष भागमा भैरवनाथको बाहन बेताल विराजमान गराइन्छ । यसैले त्यसलाई बेतासीं भनिन्छ । – स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[५८] भैरवनाथको रथ तान्ने डोरीलाई स्थानीय जनजिब्रोमा “वँलः” भन्ने गरेको पाइन्छ ।

भएकोले ज्यादै रोमान्चकारी देखिन्छ । रथ तान्ने र जात्रा हेर्नेहरूको यसबेला जात्रास्थलमा ठूलो घुइँचो लागेको हुन्छ । यसैले एकजना विदेशी विद्वानले यसजात्रालाई "अथाह समुद्रको छालमा परेको पानीजहाज" को संज्ञा दिएका छन् ।[५९] हुन पनि जात्राको बेला मानवरूपी छालले गर्दा जहाजरूपी भैरव सवार रथ कहिले कता कहिले कता हुट्टिन पुग्छ ।

यो रथजात्रा निर्धारित दिनको शुभ साइतमा दरबार परिसरको तलेजु मूलचोकबाट राजकीय प्रतीक रूपमा मान्य खड्ग[६०] लिएर गुरूपुरोहित, भैरवनाइकेहरूको लस्कर जात्रास्थल टौमढी आगमन पश्चात् देवतालाई मूलदेवगृहबाट विधिपूर्वक रथमा विराजमान गराएपछि प्रारम्भ हुन्छ । देवता सँगसँगै गुरु पुरोहित,नाइकेहरू पनि रथमा सवार हुन्छन् । यी गुरु पुरोहितहरू नाइकेहरूले यसबेला प्राचीन शैलीको नैनसुट कपडाको मुजा–मुजा परेको जामा, सुरुवाल, भोटो र पगरी गुथेको हुन्छ । यसलाई हाजिलँ–गुजिलँ भनिन्छ । मुख्य पुजारीले सेतो र अन्य पुजारीले रातो रङ्गको पगरी लगाएको हुन्छ ।[६१] काशीबाट विश्वनाथ देवता जात्रा हेर्न भक्तपुर आउँदा यस्तै पहिरन लगाएको हुनाले पुजारीहरूलाई यस्तै पोशाक लगाउने नियम बाँधिएको हो । सबै नाइके पुजारीहरू काशीबाट नै ल्याइएको हो भन्ने भनाइ छ ।[६२] यसदिनको जात्रा रथलाई निर्दिष्ट स्थान गाःहिटी टोलमा[६३] पुऱ्याएपछि सम्पन्न भएको मानिन्छ । यसअघि तल्लो र माथिल्लो टोलका बासिन्दाबीच रथलाई आ–आफ्नो क्षेत्रतिर तानेर लाने होडबाजी चल्दछ ।

---

[५९] स्टेभेन एम. पेरिस, *हाइरार्की एण्ड इटस डिसकन्टेन्टस,* दिल्ली : अक्सफोर्ड युनिभर्सिटी प्रेस, ई.सं. १९९३, पृ. २० ।

[६०] यो खड्ग मल्ल राजाहरूको खड्ग हो भन्ने भनाइ पाइन्छ । जात्राका प्रमुख विधिविधानहरूमा यसको उपस्थिति आवश्यक मानिन्छ । यसले राजा वा राज्यको संप्रभुशक्तिको प्रतिनिधित्व गर्दछ । जात्रा सम्पन्न भएपछि सो खड्ग पुनः तलेजु फर्काइन्छ र अर्को दिनको जात्रामा फेरि ल्याइन्छ । अरु बेला यो खड्ग हनुमानढोका दरबार काठमाडौँमा रहन्छ । बिस्केट जात्राको एकदिन अघि यो खड्ग भक्तपुर नगरबाहिरको सल्लाघारीसम्म ल्याएर तलेजुका पुजारीलाई विधिपूर्वक हस्तान्तरण गरेर दिइन्छ । त्यसपछि बाजागाजा लावालश्कर सहित उक्त खड्ग तलेजु मूलचोक प्रवेश गराइन्छ ।

[६१] परम्परागत पोशाक "हाजिलँ गुजिलँ"मा सज्जिएर जात्राको शुभारम्भको प्रतीक्षामा रहेका राजाको प्रतीक खड्ग लिएका र मन्त्रीका प्रतीक दुई जना तलेजुका पुजारी ब्राम्हणहरूका साथमा भैलः नायोहरूको चित्रफलक (तस्बिर) परिशिष्ट नं. ज चित्र संख्या १७, १८ मा दिइएको छ ।

[६२] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ्ग (वर्ष ७७) बाट मिति २०६७ श्रावण २३ गते प्राप्त जानकारी ।

[६३] बिस्केटको पहिलो दिनको जात्रा "द्यः थाते लाकेगु" अर्थात् भैरवकोरथ गाःहिटीटोलको निर्दिष्ट स्थानमा ल्याइ पुऱ्याएपछि सम्पन्न भएको मानिन्छ । त्यो निर्दिष्ट स्थान भनेको गाःहिटीटोलस्थित पश्चिम फर्केको आँखीझ्याल भएको घर हो । त्यो घर रत्नभक्त सिख्वा नामक स्थानीयवासीको हो । "द्यः थाते लाकेगु" गर्दा भैरवनाथको रथको अग्रस्थानमा रहेको बेताललाई त्यसघरको आँखीझ्याल ठीक सम्मुख पारेर राखिन्छ । यसरी थातेलाकेगु कार्य हुनासाथ त्यो आँखीझ्याल भएको कोठाभित्रबाट एकजनाले विधिसम्मत ढंगले पूजा गरी एउटा भाले बलि दिने परम्परा छ । यस सम्बन्धमा यदि यसरी पूजा नगरेको खण्डमा त्यस घरको कुनै न कुनै व्यक्तिको तत्काल मृत्यु हुन्छ भन्ने जनविश्वास पाइन्छ । यो पूजा सकेपछि भैरवनाथलाई रथबाट झिकेर लाकोलाछें टोलस्थित चपालमा राख्न लगिन्छ । – बलराम कायस्थ, *भक्तपुर शहरमा मनाइने केही ऐतिहासिक चाडपर्व,* (अप्रकाशित स्नातकोत्तर तहको शोधग्रन्थ), वि.सं.२०५०, इतिहास केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, पृ. २९ ।

यो रथतान्ने जात्रा विगतमा सबैको सहयोग, सद्भाव लिएर शान्ति, समझदारी र सौहार्दपूर्ण वातावरणमा सम्पन्न हुँदै आइरहेको निश्चित् रूपमा हो, तर त्यसो भएपनि केही दशक यतादेखि भने जात्राको नाममा अनेक उच्छृङ्खल गतिविधिहरू हुन थालेका छन्, विकृतिजन्य संस्कृतिको रूपमा यो जात्रा देखिन थालेको छ । भक्तपुरको ढुङ्गा हान्ने जात्राको रूपमा यसले दुर्नामी कमाएको छ ।[६४] ढुङ्गा हान्ने, तोडफोड गर्ने, धनजनमाथि क्षति पुऱ्याउने जस्ता खराब क्रियाकलापले गर्दा यस जात्रामा प्रत्यक्ष असर पुऱ्याइरहेको छ । बाहिरबाट जात्रा हेर्न आउनेहरूको आगमनमा मात्र यसले असर पारेको नभएर स्थानीयवासीहरूकै उत्साहमा पनि कमी देखा परेको छ । यसरी एकातिर यस जात्रालाई भक्तपुरको गौरवमय सांस्कृतिक परम्परा भनेर विश्व सम्पदा सूचीमा सूचीकृत गर्ने प्रयास हुँदैछ भने अर्कोतिर जात्राको नाममा आफु आफु बीचमै सदैव मारामारीको वातावरण सृजना भैरहेको छ । जात्रामा झगडा गर्ने, ढुङ्गा हान्ने, सार्वजनिक सम्पतिको तोडफोड गर्नेहरू कोही पनि बाहिरबाट आएका हुँदैनन्, यहीँका स्थानीयवासी भक्तपुरे नै हुन्छन् ।

यो ढुङ्गा हान्ने क्रियाकलाप बिस्केटमा पनि विशेष गरी "द्यःक्वँहा बिज्याकिगु" र "द्यः थाँहा बिज्याकिगु" जात्रा अर्थात् बिस्केटको पहिलो दिन र अन्तिम दिनको जात्रामा हुने गर्दछ । यी दुई दिनको रथ तान्ने जात्रा भनेको माथिल्लो टोल र तल्लो टोलका बासिन्दाबीच प्रतिस्पर्धापूर्ण ढङ्गले रथलाई तानेर आ–आफ्नो क्षेत्रतिर लाने जात्रा हो । यस प्रतिस्पर्धामा केही दवाव र तनाव उत्पन्न हुनु अस्वाभाविक त होइन, तर पनि यसअवसरको फाइदा उठाएर केही संकीर्ण विचार भएका स्वार्थी त□वहरूले जात्राको बेला जात्राको हुलमा पसेर गडबडी फैलाउने गर्दछ र जसको फल सबैले भोग्ने गर्दछ । परिणाम हरेक पल्टको बिस्केट जात्रामा धनजनको ठूलो क्षति भइरहेको छ । यसरी पुर्खाको आस्था र मनोरन्जनको मूर्त रूप यसजात्राका गतिविधिहरू कसैको नियन्त्रणमा नरहेको देखिन थालेको छ । यद्यपि यो विकृतिजन्य क्रियाकलापलाई रोक्न स्थानीय प्रशासनले भरपूर प्रयत्न गर्दछ । जात्राकोबेला शान्ति सुव्यवस्था कायम राखी परम्परागत ढङ्गले जात्रा सञ्चालन गर्न जात्रा सुरु हुनुभन्दा केही दिन अघिबाटै प्रमुख जिल्ला अधिकारीको संयोजकत्वमा जिल्लाका सुरक्षा प्रमुखहरू, नगरका गण्यमाण्य व्यक्तिहरू, जनप्रतिनिधिहरू, संस्कृतिविद्हरू, पूजारीवर्ग, गुठी नाइकेहरूलाई राखेर छलफल गरिन्छ, विभिन्न समितिहरू गठन गरिन्छ,[६५] तर त्यसको

---

[६४] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[६५] प्रमुख जिल्ला अधिकारीको कार्यालय, भक्तपुरका प्रशासन फाँटका खरिदार कर्मचारी हिरालाल डाँगी (वर्ष ४०) बाट मिति २०६६/५/१५ गते प्राप्त जानकारीको आधारमा ।

बावजूद जात्रामा ढुङ्गामुढा हुने कुरा रोकिएको छैन, सार्वजनिक सम्पत्ति तोडफोड हुने कार्य रोकिएको छैन । यसैकारण बिस्केट जात्रा आउन थाल्यो कि सम्बन्धित जात्रा क्षेत्रका बासिन्दाहरू डर, त्रास, भयले आतंकित हुन थाल्छन् । उनीहरूका लागि यो जात्रा स्वस्थ मनोरन्जनात्मक र धार्मिक आस्थाको जात्रा नभएर विपत्ति बाहक सुनामी जस्तै भइरहेको छ । अतः जात्रा आउनु भन्दा केही दिन अघिबाट आफ्ना, घर, पसल, पेटी, पाली, छाना आदिको सुरक्षाकालागि विशेष प्रयत्न गर्न थालिन्छ । यस क्रममा सिमेन्टीका खाली बोरामा बालुवा भरेर त्यसको पर्खाल बनाई आफ्नो घरको पेटी, भित्ता (गारो) आदि जोगाउने प्रयास गरिन्छ । विशेष गरेर यो कार्य शहरका (जात्रामार्गका) मोड मोडमा घर, पसल हुनेहरूले गर्दछन्, ताकि रथ तानातानको क्रममा रथका पांग्रा गुडेर आई घर पेटी भत्काउने/बिगार्ने काम नहोस् । त्यसैगरेर रथजात्राकोक्रममा बत्ती गएको मौका पारी जात्राको हुलले आफ्नो घर पसल नलुटियोस् भनेर विशेष सजकता र सावधानी हरेकले अपनाउनु पर्ने हुन्छ । जस्तो – कसैले जात्रा अवधिभर आफ्नो पसल खाली पारेर राख्ने (विशेषतः ऐँसामढी सतलमा रहेको “क्याफे दि न्यातापोल” जात्राको बेला खाली पारिन्छ) त्यस्तै कसैले आफ्ना पसल कवलहरूमा बाहिरबाट फलामका बाक्लो पाता ठोकेर बलियो र मजबुत पार्ने प्रयास गर्छन् ।[६६] व्यक्तिका घरका झ्यालका सिसा, पसलबाहिरको पाली, सार्वजनिक बाटो, पेटीका ईटाहरू, छानाका झिँगटीहरू, ऐतिहासिक ढुङ्गेधारा, देवदेवीका मूर्तिहरू आदि सबै ढुङ्गामुढा (ईटा) आक्रमणको मारमा पर्छन् । जात्राको भोलिपल्ट बिहान टौमढी चोक र त्यस वरपरको क्षेत्र युद्धपछिको मैदान जस्तो देखिन्छ । जताततै तोडफोडले क्षति पुऱ्याइएका भग्न दृश्यहरू मात्रै देखिन्छन् । भैरवनाथको २५ फुटे अग्लो रथ आफै पनि अघिल्लो दिनको जस्तो सही हालतमा रहेको हुँदैन ।[६७] ईटा उप्काएर कुरूप बनाइएका बाटा, चोक, पेटीहरू, छाना झरेका पाटीहरू, सिसा फुटाइएका घरका झ्यालहरू, रथद्वारा ठोक्काइएका घरका भित्ता (गारो) हरू, क्षतविक्षत बनाइएका बाटामा पर्ने प्राचीन कला सम्पदाहरू अनि बाटा चोक भरि छरिएका ईटा टुक्रा, रगतका टाटाहरूले वास्तवमै यो जात्रा भक्तपुरेहरूका लागि अभिशाप नै हो कि भन्ने सोच्न कर लाग्दछ ।

---

[६६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनका आधारमा प्राप्त जानकारीको आधारमा ।

[६७] धातुका छाना र काठैकाठबाट बनेको विशुद्ध नेपाली शिल्प र पेगोडा शैलीको मन्दिर आकारको यो भैरवनाथको रथ, जुन अघिल्लो दिनमात्र विशेष रूपले सज्जाएर जात्रामा प्रस्तुत गरिएको हुन्छ, त्यो रथ जात्राकोक्रममा भएको विध्वँसले गर्दा भोलिपल्ट बिहान कुरूप अवस्थामा देखा पर्दछ, जसको एकापट्टिको छाना तल झरेको, टुँडाल, तोरण आफ्नो ठाउँबाट तल झुण्डिएको, पांग्रा पनि एकातिर ढल्केको, डोरी चुँडिएको आदि भएको हुन्छ । यसरी यो रथ अघिल्लो दिनको जस्तो सही हालतमा रहेको हुँदैन । यसको चित्रफलक परिशिष्ट नं. ज को चित्रसंख्या २७, २८ मा दिइएको छ ।

बिस्केटजात्रामा ढुङ्गा (ईटा) हान्ने विकृतिको सुरुवात कसरी र कहिले देखि हुन थाल्यो भन्ने सम्बन्धमा स्थानीय संस्कृतिविद्, भद्र सज्जनहरूको भनाइ यस्तो छ – कुनै बेला बिस्केट जात्राका नायक मानिने वरिष्ठ संस्कृतिविद् तथा साहित्यकार तेजेश्वरबाबु ग्वंगका अनुसार पहिले–पहिले यसजात्रामा ढुङ्गा हान्ने संस्कार बिल्कुलै थिएन । सबै मिलेर राम्रैसँग जात्रा सञ्चालन हुने गर्थ्यो । वि.सं. २०२३ सालपछि मात्र यसजात्रामा ढुङ्गा हानाहान गर्ने प्रवृत्तिको विकास भएको हो ।[६८] स्थानीय तुलाछें निवासी नेपाल भाषाका सह–प्राध्यापक रामकृष्ण श्रेष्ठको भनाई अनुसार त्यसबेला तल्लो टोलका एक जना कपिल भन्ने व्यक्तिलाई माथिल्लो टोल (तुलाछें, सुकुलढोकातिर) का हरूले जात्राको बेला कुटपिट गरेर पठाएपछि नै हरेक सालको यस जात्रामा माथिल्लो र तल्लो टोलका बीच ढुङ्गा हानाहान गर्ने विकृतिको सुरुवात भएको हो ।[६९] हुँदाहुँदा हाल आएर यस जात्रालाई माथिल्लो र तल्लो टोल बीच झगडा गर्ने, पहिले देखिको रीस फेर्ने, सार्वजनिक सम्पति माथि तोडफोड गर्ने, लुटपाट गर्ने माध्यम वा अवसरको रूपमा लिने गरेको पाइन्छ । यति मात्र नभएर हाल आएर त यस जात्रालाई राजनीतिक रंग दिएर कांग्रेस र कम्युनिष्ट बीच संघर्ष गर्ने थलो वा अवसरको रूपमा समेत उपयोग गर्न थालिएको छ । यसमा माथिल्लोटोल कम्युनिष्ट र तल्लोटोल कांग्रेस भन्ने आरोप प्रत्यारोप लगाएर दुवै बीच संघर्ष हुने गर्दछ ।[७०] यसरी स्थानीय बासिन्दा बीचको आपसी कलह, द्वेष, शत्रुताको बदला लिने अवसर वा माध्यम बन्न गएको छ – यो ऐतिहासिक बिस्केट जात्रा ।

वर्तमानमा बिस्केटजात्राकाबेला देखिने अर्को विकृति वा विसंगति यस्तो रहेको छ – रथजात्राकोबेला देवतासँगसँगै रथमा गुरु पुरोहित, पुजारी नाइके लगायत अन्य निश्चित् पदाधिकारीहरू रथका निर्दिष्ट स्थानमा सवार हुनुपर्ने परम्परा रहेको छ । यी पदाधिकारीहरू जात्राको बेला शुद्ध र चोखो भइ जुत्ता नलगाई रथमा बस्ने गर्दछन् । त्यसदेखि बाहेक अन्य व्यक्तिले रथमा कुल्चेको खण्डमा पंच महापाप लाग्छ भन्ने जनविश्वास छ ।[७१] तर आजको युगमा कसले भनेको कसले टेर्ने हो र ? दुनियाँभरका मुन्द्रे, जगल्ते, ट्याप्पे, गँजडी, जँड्याहा आदि सबैको रमाइलो गर्ने थलो बन्न पुगेको हुन्छ – जात्रामा देवता सवार पवित्र

---

[६८] संस्कृतिविद् तथा साहित्यकार तेजेश्वरबाबु ग्वंगबाट मिति २०६६ चैत्र ४ गते प्राप्त जानकारीको आधारमा ।

[६९] भक्तपुर तुलाछें निवासी नेपाल भाषाका सह–प्राध्यापक रामकृष्ण श्रेष्ठबाट मिति २०६६/१२/४ गते प्राप्त जानकारीको आधारमा ।

[७०] भक्तपुर इताछें निवासी राजनीति शास्त्रका सह–प्राध्यापक पुरुषोत्तमभक्त रायबाट मिति २०६६/३/१४ गते प्राप्त जानकारीको आधारमा ।

[७१] सत्यनारायण प्रजापति, "बिस्केट जात्रा", *नेपाली संस्कृति,* वर्ष ६, अंक १, (वि.सं. २०४६), पृ. ३० ।

भैरवनाथ रथ । त्यसै त यो रथ भारीभर्कम र बोझिलो ढंगले बनेको हुन्छ, त्यसमाथि सयौं बरालिएर हिंड्ने केटाहरू चढ्ने, झुण्डिने, हल्लिने गरेपछि रथ सीधा गुड्नुको बदला दाँया, बाँया ढल्कने, रथका पांग्रा फुस्कने, ओसीं काठ (एक्सल) भाँचिने, बेतासीं (च्यासिस) भाँचिने जस्ता दुर्घटनाहरू हुने सम्भावना बढ्नु अस्वाभाविक लाग्दैन ।[७२] यी कारणले गर्दा पनि जात्रा व्यवस्थित ढंगले सञ्चालन गर्न ज्यादै मुस्किल परिरहेको देखिन्छ । वास्तवमा धर्मकर्मप्रति मानिसका आस्था, विश्वास कम हुँदै जानु जस्ता कारणले गर्दा पूर्णरूपले देवदेवीको नाममा सञ्चालन हुने यस्ता जात्रालाई केवल मनोरन्जनात्मक दृष्टिले मात्र लिनु र यसको धार्मिक पक्षलाई त्यति मह□व नदिनुले वर्षेनी जात्राको बेला उपद्रो र दुर्घटनाहरू हुने गरेका हुन भन्ने भनाइलाई यसले पुष्टि गर्दछ । युवावर्गमा आफ्नो धर्मकर्मप्रतिको आस्था, विश्वास कम हुँदै जानु, आममानिसमा व्यक्तिवादी दृष्टिकोण र भौतिकवादी चिन्तनले प्रश्रय पाउँदै जानु, मनोरन्जनका अनेक विद्युतीय माध्यमहरूको विकास हुन थाल्नु, जात्रा पर्व सञ्चालनका लागि पुर्खाले राखेर गएका गुठी जग्गाहरू मासिँदै जानु, आदि यी यस्ता अनेक कारणहरूले गर्दा वर्तमानमा आएर यो बिस्केटजात्रा र यससँग सम्बन्धित विधिविधानहरू संकटमा पर्न थालेको अनुभव हुन्छ । यसैकारण विगतको जस्तो भव्यता, सजधज र हर्षोल्लासका साथ यो जात्रा सञ्चालन भइरहेको पाइँदैन, केवल परम्परा थाम्ने उद्देश्यले मात्र यो जात्रा चलेको देखिन्छ । बिस्केट पर्वको दौरानमा गरिनु पर्ने कतिपय क्रियाकलाप वा परम्पराहरू आज देखिन छाडिसके । जात्रासँग सम्बद्ध देवीदेवताका विधिविधान र पूजा उपासना सम्बन्धी प्रक्रियाहरू पनि केवल औपचारिकता पूरा गर्न मात्र गरिएका हुन् कि जस्तो लाग्दछ । यसप्रकार बदलिंदो परिवेश र परिस्थितिका कारणले गर्दा भक्तपुरको एउटा प्रख्यात जात्राको रूपमा रहेको बिस्केट र यससँग सम्बद्ध परम्पराहरू विविध समस्याहरूले ग्रस्त छन् । यसको संरक्षण र सम्बर्द्धन गर्नतिर यदि समयमा नै ध्यान नदिने हो भने एक दिन यो जात्रा इतिहासमै सीमित हुन बेर लाग्ने छैन ।

यथार्थमा यो जात्रा धार्मिक आस्थाको जात्रा हो । भैरवनाथ भक्तपुरवासीका प्रमुख देवता हुन् । उनकै सम्मानमा यो जात्रा गरिन्छ । सहकाल, शत्रुनाशक, ग्रहदशा शान्त पार्ने, दोष निवारण गर्ने, मनोवान्छित ईच्छा पूर्ति गरिदिने आदिका प्रतीकका रूपमा पुजिने सर्वशक्तिमान तान्त्रिक देवता भैरवनाथलाई आफ्नो टोल इलाकामा ल्याउन सकेमा आगामी

[७२] बिस्केट जात्राका बेला दुर्घटनाग्रस्त हुन पुगेका भैरवनाथ रथका दृश्य चित्रहरू परिशिष्ट नं. ज को चित्रसंख्या २७, २८ मा दिइएको छ ।

वर्ष सुखद रहने छ भन्ने जनविश्वासकै कारणले गर्दा जात्रामा भैरवको रथ तान्न स्थानीयवासीहरू उत्साह उमङ्गकासाथ दुई समूहमा विभाजित भएर आउने गर्छन् । होस्से हँइस्सेको बुलन्द आवाज निकाली रथ तान्ने जात्रा प्रारम्भ गर्छन् । समग्र भक्तपुर नगर ऐतिहासिककालदेखि नै थने र कोने (माथिल्लो र तल्लो) टोलमा विभाजित रहेको छ । यसमा टौमढीचोक मध्यबिन्दु र त्यसदेखि उत्तरपूर्वी क्षेत्र माथिल्लो टोल र त्यसदेखि दक्षिणपश्चिमी क्षेत्र तल्लो टोल मानिन्छ । स्थानीयताको यो संकीर्ण भावना जात्राकोबेला दुवैतिरका मानिसहरूमा प्रवल रूपमा देखापर्ने गर्छ । यतिबेलाको जात्राको वातावरण देखेर एकथरी विद्वानहरूले के पनि भन्ने गरेका छन् भने प्राचीन समयमा अर्थात भक्तपुरले राजधानी नगरको स्वरूप पाउनुभन्दा पहिले यस भेकमा दुईवटा मुख्य बस्तीहरू थिए । तिनीहरूबीच सदैव आपसी कलह, द्वेष, झगडाको वातावरण थियो । त्यसैलाई नाटकीय रूपमा देखाउन यो जात्रा गरिएको हो । स्थानीयवासीबीच वर्षेनी बिस्केटका अवसरमा हुने यस झगडाले त्यो भनाई वास्तवमै यथार्थ हो कि जस्तो लाग्दछ । जेहोस पूर्णरूपले देवदेवीका नाममा संचालन हुने यस जात्रालाई दुवै पक्षका मानिसहरूले सौहार्दपूर्ण वातावरणमा मिलेर सम्पन्न गर्नु बुद्धिमानी हुनेछ । देवता सवार रथलाई एकपल्ट माथितिर लाने एकपल्ट तलतिर ल्याउने र अन्तमा निर्धारित स्थान गाःहिटीमा पुर्‍याइ जात्रा सम्पन्न गर्नु पर्ने हो । तर हिजोआज यस्तो भइरहेको पाइँदैन । जस्तोसुकै नीति अपनाएर भएपनि जात्राको शान्तिपूर्ण वातावरण बिथोल्न दुवैतिरका केही अवान्छित समूह लागिपरेका हुन्छन् । रथ तान्ने कार्य पनि इमान्दारीपूर्वक भएको हुँदैन । जात्राकोक्रममा रथ तान्दा एक पक्षले रथलाई तानेर आफूकहाँ लाँदै गरेको छ भने अर्को पक्षले पछाडिबाट डोरीलाई खुकुलो पारेर छोडनु पर्ने हो, रथ रोकिए पछि मात्र अर्को पक्षले रथ तान्दा रथ तान्न सजिलो हुन्थ्यो । पारस्परिक मेलमिलाप, सहयोग र समझदारी जात्रा सम्पन्न गर्नका लागि मह□वपूर्ण मानिन्छ । सामाजिक सद्भाव र समन्वयको भावना दुवैतिरका मानिसहरूमा हुनु आवश्यक देखिन्छ । तर जात्राका अवसरमा जात्रालुहरूमा यी कुराको सर्वथा अभाव रहेको पाइन्छ । यसैकोफलस्वरूप एक पक्षले रथलाई तानेर आफूकहाँ लाँदै गरेको छ भने त्यसलाई रोक्न अर्को पक्षकाले बद्नियतपूर्वक पछिल्तिरका डोरीलाई बंग्याएर लगी नजिकैका सत्तल, पाटीका खम्बामा वा ढुङ्गेधारामा बेरिदिने गर्छन् , यसलेगर्दा एकातिर रथ सीधा गुड्न नसकी बाटोको दायाँ, बायाँ ठोकिन पुग्छ भने अर्कातिर रथसँगसँगै डोरी बेरिएका खम्बा, ढुङ्गेधाराहरू पनि तानिन्छन् र क्षतिग्रस्त हुनपुग्छन् । यस्तैकारणले गर्दा जनधनको क्षति हुनगइ जात्राको

वातावरण बिथोलिन पुग्छ । यस्तै बद्‌मासीपूर्ण क्रियाकलापले गर्दा भक्तपुरको स्थानीय समाज र संस्कृतिलाई बिस्केटले नराम्रो असर पारिरहेको छ ।

## ९.४ बिस्केट जात्रा– विगत र वर्तमान बीचको तुलनात्मक अध्ययन

समाजको विकास सँगसँगै मनोरन्जनका साधन र तौरतरिकामा पनि स्वतः विविधता आउनु स्वाभाविक हो । मल्लकालमा मनोरन्जनका मुख्य साधन वा माध्यम चाडपर्व, जात्रा उत्सवहरू थिए । तर वर्तमानमा चाडपर्व, जात्राहरूमा मात्र मनोरन्जन सीमित रहेको पाइँदैन । समय, काल, परिस्थितिको परिवर्तन सँगसँगै मनोरन्जनका अनेक नयाँ र आधुनिक विकल्पहरू देखा परिरहेका छन्,[७३] जसको प्रभावले परम्परागत ढंगले मनाइने चाड वा जात्राहरूमा मानिसले त्यति सारो चाख दिइरहेको पाइँदैन । यस्तै किसिमका लक्षणहरू बिस्केटजात्रा मनाउने तौर तरिकामा पनि देखिने गरेको पाइन्छ ।

पहिले–पहिलेका मानिसहरूको जीवन पूर्णरूपले कृषिमा निर्भर थियो । उब्जाउ भूमिका कारणले गर्दा कृषि उत्पादन प्रशस्त हुने गर्थ्यो ।[७४] के खाउँ के लाउँको समस्या थिएन । फेरि बाह्रै महिना कृषि कार्यमा व्यस्त रहनु पर्दैनथ्यो । फुर्सदकाबेला आनन्द लिन तिनले देवीदेवतालाई रिझाउने चाडपर्व, जात्राहरूको प्रचलनको विकास गरे, जसको मूल उद्देश्य कृषि बाली राम्रो होस् भन्ने हो । आज पनि यहाँका नेवारहरूका जति पनि चाडपर्व, जात्राहरू छन्, ती कुनै न कुनै रूपमा खेतीपातीसँगै सम्बन्धित रहेको देखिन्छ ।[७५] यसैकारण रोपाइँ कार्यमा व्यस्त रहनुपर्ने हुनाले असारको वर्षायाममा यहाँ कुनै चाडपर्व मनाइँदैन ।[७६] यसरी यहाँका चाडपर्व, जात्राहरू, खेतीपातीसँग सम्बन्धित रहेको पाइन्छ । यससन्दर्भमा भक्तपुरको बिस्केट जात्रा अपवाद रहन सक्दैन ।

---

[७३] समय, काल र परिस्थितिले पनि मनोरन्जन लिने तौरतरिकामा फरक पार्दछ । – टि.आर.वैद्य र अन्य, *सोसल हिष्ट्री अफ नेपाल,* न्यू दिल्ली : अनमोल पब्लिकेशन प्रा.लि., ई.सं. १९९३, पृ. १९६ ।

[७४] यहाँका किसानहरू खेती कार्य गर्न निक्कै सिपालु थिए । उस्तै आकारप्रकारको जग्गामा भारतीय किसानले जति उत्पादन गर्न सक्थ्यो, त्यो भन्दा ज्यादा यहाँका किसानले उत्पादन गर्दथ्यो । एच.बी.हड्सनले गरेको टिप्पणी अनुसार त्यसबेला नेवारहरू एशियाकै सबभन्दा राम्रा किसान थिए । तिनले एउटै खेतबाट वर्षमा दुई मुख्य बाली र दुई सहायक बाली भित्र्याउने गर्दथे । आफ्ना दक्षताका कारणले गर्दा तिनले मिश्रित बाली लगाउने गर्दथे । जस्तो – धान खेतीको सिजनमा धान मुख्य बाली भएतापनि सहायक बालीको रूपमा धान खेतको छेउछाउमा आलु गोलभेंडा आदि सागसब्जीहरू लगाउने गर्दथे । हिउँदमा धान बाली भित्र्याएको लगतै गहुँ छर्ने काम गरिन्थ्यो । सुख्खा खेत (वारी) मा अनेक प्रकारका नगदेबालीहरू लगाउने गरिन्थ्यो । – गोपालसिंह नेपाली, *दि नेवार्स,* बम्बई : युनाइटेड एशिया पब्लिकेसन्स, रिप्रिन्ट, ई.सं. १९८८, पृ. ४४ ।

[७५] चाडपर्व मान्दा सूर्य र चन्द्रमाको गति अनुरूपको आफ्नो दिनचर्या र प्रकृतिसँगको सम्बन्धलाई एकातिर शुक्लपक्ष र कृष्णपक्षको आधार दिइएको छ भने अर्कोतिर खेती कार्य वा कृषि उत्पादनलाई पनि ध्यान दिइएको पाइन्छ । – चुन्दा वज्राचार्य, *नेवाः तजिइ लजिइ नखः चखः,* येंः नेपालभाषा एकेडेमी, ने.सं. ११२०, पृ. ५ ।

[७६] नेवारहरूका वर्षभरिका चाडपर्वहरूको प्रारम्भ श्रावण महिनामा पर्ने गठामुगः(घण्टाकर्ण)पर्वबाट भएर जेठ महिनातिर पर्ने सिठीनखः(कुमार षष्ठी) मा आएर टुंगिने गर्दछ । यसबीचको दुई महिनाको समयमा किन चाडपर्व मनाइँदैन भन्दा त्यसबेला स्थानीय बासिन्दा खेतीपातीको कार्य विशेष गरेर धान रोपाइँ कार्यमा व्यस्त रहनु पर्ने हुनाले हो ।

माथि नै उल्लेख गरिसकिएको छ कि मल्लकालमा यो जात्रा हर्ष उल्लासपूर्वक मनाउने गरिन्थ्यो । यसजात्राका प्रमुख देवता भैरवनाथ खेतीपाती र सहकालका देवता मानिन्छन् ।[७७] भक्तपुरमा जबदेखि भैरवनाथलाई स्थापना गरियो तबदेखि नै यहाँ सहकाल आएको विश्वास गरिन्छ ।[७८] यसरी भक्तपुर किसान बाहुल्य शहर र भैरवनाथ किसानहरूका देवता भएकोले यो जात्रा र यससँग सम्बन्धित क्रियाकलापहरूमा किसानहरू नै सर्वाधिक रूपले सम्बद्ध रही आएका छन् ।[७९]

भक्तपुरको एक प्रख्यात जात्राको रूपमा रहेको यस बिस्केट जात्रा मनाउने तौर तरिकामा परिवर्तित परिस्थितिसँग–सँगै थुप्रै परिवर्तनहरू देखा परिरहेका छन्, जसको तुलनात्मक अध्ययन निम्न अनुसार गरिएको छ ।

पहिले यहाँको समाज पूर्णरूपले कृषिमा आधारित थियो ।[८०] समाजमा विद्यमान संयुक्त परिवार प्रथा, गुठी व्यवस्था, एक अर्को प्रतिको आत्मीयपन, परस्पर सहयोगी भावना, धार्मिक विश्वास, पुरातन सोच आदि कुराहरूले गर्दा त्यसबेला कुनै पनि सामुहिक कार्य सम्पन्न गर्न सहज वातावरण बन्दथ्यो ।[८१] त्यसमाथि अझ बिस्केट जस्तो देवदेवीका धार्मिक पर्व,जात्राहरूमा त समाजका सबै वर्गका मानिसहरूले ठूलो उत्साह, उमङ्गकासाथ सहभागिता जनाउँदथे । खुसीयालीपूर्वक चाड मान्दथे ।[८२] तर आज परिस्थिति बदलिएको छ । खेती गर्ने जमीनमा धमाधम घर बन्दै गएका छन् । मानिसहरू खेतीपातीबाट अन्य पेशातर्फ उन्मुख हुँदै गएका छन् । समाजमा रहने विभिन्न मानिसहरूमा एक अर्कोको कुनै मतलब रहेको हुँदैन । सबै आ–आफ्ना काम धन्दामा लागेका हुन्छन् । कसैलाई कसैको चासो राख्ने फुर्सद नै हुँदैन । यस्तो व्यस्त जीवनको बेफुर्सदी समयको कारणले गर्दा पनि जात्रापर्वप्रति मानिसले ध्यान दिन छाडेको देखिन्छ ।[८३]

---

[७७] पौडेल, पा.टि.नं. १३, पृ. ६० ।

[७८] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरमा तान्त्रिक शक्तिको युग* (अप्रकाशित विद्यावारिधि शोधग्रन्थ), त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, वि.सं. २०५०, पृ. २६२ ।

[७९] नेपाली, पा.टि.नं. ७४, पृ. १८२ र ३०४ ।

[८०] (क) प्रत्येक नेवार बस्ती वा शहरको चारैतिर हराभरा खेतैखेत हुनुले पनि यस कुराको पुष्टि गर्दछ । –ऐ.ऐ. पृ.३८ ।
(ख) तथापि कृषिका अतिरिक्त यहाँ व्यापार, व्यवसाय पनि उन्नत अवस्थाको थियो भन्ने तथ्य अनेक पेशागत जातजातिहरूको उपस्थितिबाट दृष्टिगत हुन्छ । अनि यहाँको व्यवसायको प्रख्याति कुनै समयमा तिब्बत र चीनसम्म फैलेको थियो । – महेशचन्द्र रेग्मी, *अ स्टडी इन नेपलिज इकोनोमिक हिष्ट्री,* न्यू दिल्ली : मंजुश्री पब्लिसिङ्ग हाउस, ई.सं. १९७१, पृ. २३ ।

[८१] गुत्सो र कोल्वर, पा.टि.नं. २० (क), पृ. १३ ।

[८२] *ऐजन,* पृ. १४ ।

[८३] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारी ।

विगत कालका मानिसहरू धर्म र पापको चेष्टा भएका थिए । यसैले तिनीहरू गर्नहुने, नहुने कामकुराहरू प्रति विशेष रूपले सचेत रहन्थे । देवीदेवता रुष्ट होला, त्यसबाट आफू, आफ्नो परिवार र समाजमा अनिष्ट निम्तिएला भनेर खुबै विचार पुऱ्याउँथे । यसरी धर्म विरुद्ध जाने हिम्मत कसैको हुँदैनथ्यो । धर्म र पुण्य कमाउनका लागि हरसंभव प्रयासहरू गरिरहन्थे ।[८४] जात्रामा कुनै बिघ्न उत्पन्न भयो भने त्यसलाई देवता रुष्ट भएको मानेर तत्काल तान्त्रिक विधिले क्षमा पूजा गरिन्थ्यो र जात्रा पूर्ववत रूपमा चल्दथ्यो ।[८५] यसरी यो जात्रा समयमा नै सम्पन्न गर्न सबै तल्लीन रहन्थे तर आज भौतिकवादी सोच र व्यक्तिवादी चिन्तनले चर्को रूप लिंदैछ । जसबाट भक्तपुरको प्रख्यात जात्राका क्रियाकलाप सञ्चालनमा प्रत्यक्ष असर परिरहेको छ ।

विगतकालमा यो जात्रा हर्ष उल्लासमय वातावरणमा खुसीयालीपूर्वक मनाउने गरिन्थ्यो । तर आज यो जात्रा झैंझगडाको पर्याय बन्न पुगेको छ । जात्राकोबेला जनधनको क्षति नभएको वर्ष नै छैन भन्दा पनि हुन्छ । पहिले–पहिले आमोदप्रमोदको मुख्य साधन यस्तै जात्रापर्व थिए । यसैले सबै मिलीजुली रमाइलोसँग यो पर्व मनाइने गरिन्थ्यो । तर आज मनोरन्जनका अनेक नयाँ–नयाँ साधनहरू विकास भइरहेकाले यस्तो जात्रा (चाडपर्व) प्रति मानिसहरूले चाख दिन छाड्दै गए ।

पहिले–पहिले मानिसहरू यो जात्रा कहिले आउला भनेर महिनौ दिन अघिदेखि रमाइलो गरेर चाड मान्न व्यग्र र व्याकुल भइरहन्थे किनकि त्यसबेला यो जात्रा निक्कै भव्य र धुमधामसँग मनाइने गरिन्थ्यो, तर आज परम्परा थाम्ने रीतले मात्र यो जात्रा चलिरहेको हो कि जस्तो लाग्दछ । जात्रासँग सम्बद्ध व्यक्तिहरूमा कुनै जोश जाँगर, उत्साह रहेको पाइँदैन ।[८६]

आर्थिक दृष्टिले पनि पहिले यो जात्रा र यससँग सम्बन्धित गतिविधिहरू संचालन गर्न कुनै समस्या आइपर्दैनथ्यो । किनकि त्यसबेला जात्राका प्रमुख देवदेवीका नाममा राखिएका गुठी जग्गा एउटा भरपर्दो स्रोत थियो । त्यसमाथि सस्तो भाउवेशा, स्वयम्सेवी भावना, आम्दानी भन्दा खर्च कम हुने हुँदा कुनै आर्थिक समस्या आइपर्दैनथ्यो, तर आज गुठीका नाममा राखिएका जग्गाहरू मासिंदै गएकाले जात्रा सञ्चालन गर्न आर्थिक चुनौती

[८४] प्राचीनकालदेखि नै स्थानीयवासीहरूको धर्मप्रति विशेष झुकाव र चिन्तन रहेको देखिन्छ । यसैकारण यहाँको लोकजीवनको कुनै त्यस्तो पक्ष छैन जो धर्मबाट अलग भएको होस् । जीवनका सबै चरण, अध्ययन, जात्रा चाडपर्व आदि सबै नै धर्मबाट अनुप्राणित छ ।

[८५] मुनंकर्मी, पा.टि.नं. १७ (क), पृ. ४३ ।

[८६] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

एउटा ठूलो समस्याका रूपमा देखा परेको छ ।[८७] हाल यो जात्रा संचालन गर्ने प्रमुख आर्थिक आधार गुठी संस्थानले उपलब्ध गराउने वार्षिक बजेट हो,[८८] तर आकाशिंदो महङ्गीका कारणले गर्दा गुठी संस्थानले दिने खर्च भन्दा वास्तविक खर्च निक्कै बढी हुन्छ । यसैकारण जात्राका गतिविधि राम्रोसँग चल्न सकेको देखिँदैन । कतिपय परम्परा लोप पनि भइसके जसमा आर्थिक समस्या एउटा प्रमुख कारण रहेको पाइन्छ ।[८९]

उल्लिखित तथ्यहरूका आधारमा यस जात्रामा सकारात्मक र नकारात्मक दुवै पक्ष रहेका पाइन्छन्, जसलाई निम्न बुँदाहरूमा अध्ययन गरिएको छ ।

### ९.४.१ बिस्केट जात्राका सकारात्मक पक्ष

#### ९.४.१(क) गौरवमय सांस्कृतिक परम्परा

विगतकालमा जस्तै वर्तमानमा पनि यो जात्रा आठ रात नौ दिनको लामो समयावधि भित्र वर्षेनी उही दिन उही स्थानहरूमा परम्परागत ढंगले चल्दै आइरहेको पाइन्छ । यो जात्रा र यससँग सम्बन्धित विविध विधिविधानहरू ऐतिहासिक कालखण्डमा जसरी सम्पन्न गर्ने गरिन्थ्यो, त्यसैअनुरूप आज पनि सम्पन्न हुँदै आइरहेका छन् । यसर्थ यसजात्रा वा पर्व सम्बन्धी क्रियाकलाप भनेका ऐतिहासिक विशेषताका प्रतीकहरू हुन्, जुन आजसम्म पनि हाम्रा सामु देखापरिरहेका छन् । वस्तुतः भक्तपुरको यो बिस्केटजात्रा मात्र नभएर यहाँका प्रायः सबैजसो चाडपर्व, जात्रा उत्सवहरू मल्लकालीन संस्कृतिका उपज हुन् । यसर्थ अहिले यहाँ प्रचलनमा रहेका जात्रा चाडपर्वहरूले मल्लकालीन संस्कृतिको झझल्को दिनु स्वाभाविकै लाग्दछ । मल्लकालीन नेवार संस्कृति मूल रूपमा देवीदेवता र धर्मकर्मबाट अभिप्रेरित रहेको देखिन्छ । यद्यपि त्यसबेला संस्कृतिलाई धर्म, देवदेवी र परलोकसँग जोड्ने चलन संसारव्यापी नै थियो । ती कुरा नजोडिए संस्कृति निस्तो वा खल्लो हुन्छ वा त्यो संस्कृति नै हुँदैन भन्ने जस्तो धारणा त्यतिबेला व्यापक थियो ।[९०] यहाँका नेवारहरू प्राचीनकालदेखि नै देवदेवीप्रति श्रद्धाभक्ति राख्ने, धर्मकर्मप्रति विश्वास गर्ने, तन्त्रमन्त्र र दैवीशक्ति जस्ता कुराहरूमा झुकाव राख्ने भएका हुनाले यहाँको सांस्कृतिक विकासमा धार्मिक परम्पराले ठूलो भूमिका खेलेको पाइन्छ ।

---

[८७] भैरवनाथगुठीका नाइके मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/७/१७ गते प्राप्त जानकारीको आधारमा ।

[८८] गुठी संस्थान कार्यालय, भक्तपुरका प्रमुख अच्युतानन्द पोखरेल (वर्ष ५२) बाट मिति २०६७/७/१८ गते प्राप्त जानकारी ।

[८९] भैरवनाथ गुठीका मूलनाइके ज्ञानबहादुर छुकाङ्ग (वर्ष ७७) बाट मिति २०६७/४/२३ गते प्राप्त जानकारी ।

[९०] मोदनाथ प्रश्रित, "अखण्ड राष्ट्रिय एकता निम्ति शुभकामना", *अन्नपूर्ण पोष्ट,* (२०६६/६/१० शनिवार), पृ. ७ ।

विश्वमानचित्रमा भक्तपुर भौगोलिक दृष्टिले अत्यन्त सानो शहर देखिएपनि कला, संस्कृतिका दृष्टिकोणले एकदम सम्पन्न र विशाल छ ।

यहाँ अनेक किसिमका प्राचीन कला, संस्कृति सम्पदाहरू आजपनि जीवन्त रूपमा प्रस्तुत भइरहेका छन् । देशमा आएका अनेक उथलपुथल र परिवर्तनहरूले समेत त्यति फरक नपारेको यस शहर र यहाँका बासिन्दामा अझै पनि थुप्रै पुराना कुराहरू प्रचलित छन् ।

यसैकारण मध्यकालीन भक्तपुरको नेवार समाजको झझल्को आज पनि यहाँ सजीव रूपमा देख्न सकिन्छ । यसको एउटा ज्वलन्त उदाहरण बिस्केट जात्रा हो । यो जात्रा यहाँको विविध विशेषता र सांस्कृतिक गतिविधिलेयुक्त एउटा प्रख्यात र उल्लेखनीय जात्रा हो । वस्तुतः भक्तपुरे लोकजीवनमा दशैं पछिको सबैभन्दा ठूलो र मह□वपूर्ण चाड भनेको बिस्केट नै हो भन्दा अत्युक्ति नहोला । यसमा एकातिर विशाल ध्वजा सहितको लिंगो ठड्याएर जात्रा गरिन्छ भने अर्कातिर काठैकाठबाट निर्मित मन्दिर आकारको भैरव–भद्रकालीको रथ तान्ने जात्रा पनि हुन्छ । विश्वजात्रा (बिस्केट) को मूल रूप पनि यही हो । यसदेखिबाहेक यसमा अनेक आश्चर्यलाग्दा सांस्कृतिक क्रियाकलाप र धार्मिक गतिविधिहरू पनि हुने गर्छन् । देवदेवीका पूजाआजा, भजनकीर्तन, खट जात्रा, तिंप्वा जात्रा (निगालो बालेर निकालिने जात्रा), म्ये कपः जात्रा (राँगाको टाउको बोकेर गरिने जात्रा), भाजंखचा जात्रा ( मुर्दा खट जात्रा), तान्त्रिक विधिले सम्पन्न गर्ने जोगीचक्र पूजा, रथ जुधाउने जात्रा, खट जुधाउने जात्रा, द्यः सगंः बियेगु (देवतालाई सगुन चढाउने) आदि विधिविधान र सांस्कृतिक क्रियाकलापहरू पनि यसअवसरमा यहाँ प्रस्तुत हुने गर्छन् ।[९१] बिस्केटकैक्रममा भक्तपुर नगरदेखि पश्चिमतिर लगभग ४ कि.मी. को दूरीमा रहेको ऐतिहासिक बस्तीहरू थिमी, बोडे, नगदेशमा पनि क्रमशः बालकुमारी जात्रा, जिब्रो छेड्ने जात्रा र सिद्धी गणेशको जात्रा प्रस्तुत हुने गर्दछ । बिस्केटको क्रममा बोडेमा हुने यो जिब्रो छेड्ने जात्रा यस भेकको लागि मात्र नभएर सारा विश्वकै लागि एउटा आश्चर्यलाग्दो संस्कृति भएको मान्न सकिन्छ ।

उपर्युक्त दृष्टान्तहरूका आधारमा बिस्केटजात्राको संस्कृति भक्तपुरको गौरवमय सांस्कृतिक परम्पराको एउटा उत्कृष्ट नमूना मान्न सकिन्छ । किनकि यसअवसरमा ज्योतिषीय सिद्धान्त र तान्त्रिक पद्धतिका आधारमा गरिने धार्मिक अनुष्ठानहरू, पूजापाठ र सांस्कृतिक क्रियाकलापहरू सबै नै भक्तपुरको मल्लकालीन संस्कृतिका विशिष्ट उदाहरण

---

[९१] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

हुन्, जसमा सम्बन्धित देवदेवीलाई पूजाउपासना र जात्रा गरेर खुसी र सन्तुष्ट तुल्याई त्यसबाट सबैले मनोरन्जन प्राप्त गर्ने भन्ने कुरा बोध हुन आउँछ । मनोरन्जनका अतिरिक्त जात्राप्रतिको श्रद्धाभक्तिबाट मनोकामना पूरा हुने धार्मिक आस्था तथा आपद् विपद् र संकटबाट मुक्ति मिल्ने विश्वासले गर्दा[९२] पनि यसजात्रामा स्थानीयवासीको आत्मीय सहभागिता रहने गरेको पाइन्छ । यसजात्रामा स्थानीयवासी नेवारहरूको मात्र बाक्लो उपस्थिति हुने नभएर बाहिरबाट आउने विविध जातजातिका नेपालीहरू लगायत विदेशी पर्यटकहरूको समेत ठूलो घुइँचो लाग्ने गर्दछ ।[९३] यस अर्थमा यसजात्राले विविध समुदायका मानिसहरूलाई एकै थलोमा ल्याएर तिनीहरू बीच सामाजिक सद्भाव, भातृत्व, पारस्परिक मेलमिलापको भावना जगाउन मद्दत पुऱ्याएको देखिन्छ ।

### ९.४.१(ख) धार्मिक पृष्ठभूमि

अनेक युग फेरिए, थुप्रै काल बिते, मानिसका अनुहारहरू फेरिए, परिवेशहरू बदलिए, तर पनि यो बिस्केटजात्रासम्बन्धी दृष्टिकोण, मान्यता, धारणामा कुनै ठूलो तात्विक अन्तर आएको देखिंदैन । परिवर्तित परिस्थितिका बावजूद यसजात्रा सम्बन्धी हरेक पक्षलाइ धार्मिक दृष्टिले हेर्ने परम्परा आज पनि उतिकै रहेको पाइन्छ । विश्वध्वज लिंगोलाई विश्वनाथ भैरव (योसिं द्यः वा ल्योसिंद्यः) र त्यसलाई उठाउन प्रयोग गरिने आठवटा डोरीलाई अष्टमातृकाको प्रतीक अर्थ मान्ने परम्परा आजपनि स्थानीयवासीमा रहेको भेट्टिन्छ । अनि ती डोरीहरू हावामा हल्लिएर लिंगोमा बेरिन पुग्दा त्यसलाई भैरव र अष्टमातृकाकाबीच समागम भएको प्रतीक अर्थमा लिने गरिन्छ ।[९४] राजा आनन्ददेव (ई.सं. १२०४–१२२४) ले भक्तपुरलाई राजधानी नगरको रूपमा स्थापना गर्दा नगरको वरिपरि आठ कुनामा अष्टमातृका र माझमा भैरवनाथ स्थापना गरे भन्ने वंशावलीको भनाइबाट[९५] पनि बिस्केटजात्राका यी प्रमुख देवदेवीहरू यहाँको सुरक्षा र सुव्यवस्थासँग सम्बन्धित शक्तिशाली देवता हुन भन्ने देखिन्छ । यसदेखिबाहेक भैरव र भद्रकालीको रथ जुधाउने (खः ल्वाकेगु) जात्रालाई पनि दुवै देवदेवीबीचको यौन समागमको अर्थमा लिइने गरिन्छ ।[९६] धार्मिक दृष्टिले यो रथ जुधाउने

---

[९२] जुजु र श्रेष्ठ, पा.टि.नं. २१, पृ. ३० ।

[९३] जात्राको स्थलगत अध्ययनबाट प्राप्त जानकारीको आधारमा ।

[९४] लेभी, पा.टि.नं. २० (ख), पृ. ४७८ ।

[९५] (क) लम्साल, पा.टि.नं. ९(क), पृ. २० ।
(ख) मुनंकर्मी, पा.टि.नं. १७(क), पृ. ३१ ।

[९६] रत्नराज राजोपाध्याय (वर्ष ८३) बाट मिति २०६५/५/२४ गते प्राप्त जानकारी ।

जात्रा निक्कै मह□वपूर्ण मानिन्छ । किनकि भैरव शिव र भद्रकाली शक्ति, त्यस्तै भैरव पुरुष र भद्रकाली प्रकृति । पुरुष र प्रकृति आपसमा एकाकार भएपछि नै समस्त जगतमा शान्ति छाउने बलियो जनविश्वास स्थानीयवासीमा पाइन्छ । त्यस्तै भैरवनाथको रथका चारवटा पांग्रामा अंकित त्रिनेत्रहरूलाई क्रमशः महादेव, भैरवनाथ र नृत्यनाथको प्रतीक रूप मानिन्छ ।[९७] नागनागिनी मारिएको वा अजिङ्गर दम्पति मरेको जस्ता अलौकिक र तिलस्मी घटनाबाट यो जात्रा उत्पति भएको भन्ने किम्बदन्तीय धारणा बहुप्रचलित रहेको भए पनि वस्तुतः यसजात्रासँग सम्बन्धित विधिविधान वा क्रियाकलापहरूको अध्ययन विश्लेषण गर्दा यो जात्रा पूर्णरूपले धार्मिक पृष्ठभूमिमा आधारित रहेको पाइन्छ । जस्तो कि यसजात्राको शुभारम्भ नै "द्यःक्वहाँ बिज्याकिगु" (देवता तल सवारी हुने) बाट हुन्छ अर्थात् जात्राका प्रमुख देवता भैरवनाथ वर्षदिनसम्म स्वर्गमा रहने अथवा मन्दिरकै गुप्त स्थानमा रहने विश्वास गरिन्छ र जात्राकाबेला एकपटक मात्र रथारोहणका लागि तल आउने (सार्वजनिक हुने) गर्छन् । नौ दिनको विविध विधिविधान सहितको जात्रामा प्रमुख भूमिका निर्वाह गरी जात्रा सम्पन्न भएपछि अन्तमा देवता पुनः यथास्थान फर्कने गर्दछन् । यसलाई "द्यः थाँहा बिज्याकिगु" (देवता माथि सवारी हुने) भन्ने गरिन्छ । "द्यः थाँहा बिज्याकिगु" सांस्कृतिक विधिसँगै उक्त वर्षको बिस्केट जात्रा पूर्णरूपमा सम्पन्न भएको मानिन्छ । अनि चैत्र मसान्तका दिन साँझपख जब विश्वध्वज लिंगो अपार जनसमुदायमाझ मानवीय शक्तिको बलमा उभिन्छ तब त्यस खुसीयालीमा नगरभरिका देवीदेवताहरूलाई हर्षोल्लासपूर्वक आ–आफ्ना मूलदेवगृहबाट बाहिर ल्याई सिंगारेर राखिएको खटमा आरोहण गराइ बाजागाजा सहित जात्रा गरी आ–आफ्ना पीठमा लाने गरिन्छ ।[९८] यसरी बिस्केटको दौरानमा मूल देवगृहबाट बाहिर आएका यी समस्त देवीदेवताहरूलाई जात्रा समापनको पूर्व सन्ध्यामा अर्थात् वैशाख ४ गते आ–आफ्नो देवगृह वा स्वस्थानमा पुनः प्रवेश गराइनु अघि सांस्कृतिक जुलुस वा यात्राको रूपमा नगरवासीहरूले सगुन चढाएर दर्शनपूजन गर्दछन् ।[९९] यस कार्यलाई "द्यः सगं बियेगु" भन्ने गरिन्छ ।

### ९.४.१(ग) ज्योतिषीय पद्धति र तान्त्रिक विधिविधान

यी उल्लिखित दृष्टान्तहरूबाट यो बिस्केटजात्रा पूर्णरूपले धार्मिक पृष्ठभूमिमा आधारित रहेको स्पष्ट हुन्छ । यस परिप्रेक्ष्यमा यसजात्रामा ज्योतिषीय सिद्धान्त र तान्त्रिक

---

[९७] (क) प्रजापति, पा.टि.नं. ७१, पृ. २९ ।
(ख) सत्यनारायण प्रजापति, "बिस्केट जात्रा", *नेपाली संस्कृति*, वर्ष ५, अंक ३, पृ. ४४ ।

[९८] जात्राको स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[९९] पुरुषोत्तमलोचन श्रेष्ठ, *भक्तपुरको नवदुर्गा गण,* भक्तपुर : बबिता श्रेष्ठ, वि.सं. २०६०, पृ. १४० ।

पद्धतिको पनि मह□वपूर्ण स्थान रहेको पाइन्छ । वास्तवमा ज्योतिषीय विधिले उचित ठहर्‍याएको शुभ घडी (समय) मा नै जात्राका प्रमुख विधिविधानहरू प्रारम्भ गरिन्छ । अनि ती विधिविधानहरू तान्त्रिक पद्धतिमा आधारित रहेर सम्पन्न गरिन्छ । किनकि यो जात्रा तन्त्रशक्तिका मूल आधार भैरवनाथ र उनकी शक्ति भद्रकालीको जात्रा हो । यसैले यसमा सुरुदेखि अन्त्यसम्मका सम्पूर्ण गतिविधिहरू तान्त्रिक पद्धतिमा आधारित रहेको पाइन्छ । जस्तो कि ज्योतिषले दिएको निश्चित् साइतमा सम्बद्ध गुठीका गुठीयारहरू लिंगो वनमा गएर लिंगो छान्दा तान्त्रिक विधिले पूजा गरेर लगिएको बोकालाई वनमा छाडिन्छ, त्यसबोकाले जुन रुखलाई छुन्छ, त्यही रुख लिंगोका लागि उत्तम ठहऱ्याइन्छ । त्यसपछि त्यस रुखमा विधिपूर्वक पूजा गरी बोका बलि दिएर भोज खाइन्छ । अनि त्यो रुख काटेर खोलैखोलाको बाटो भएर भक्तपुरतिर तानेर ल्याइन्छ । यसरी ल्याउँदा कहीँ कतै लिंगो तान्न अप्ठेरो भयो भने त्यहाँ पनि तान्त्रिक विधिले “न्याङ सम्हेय् बजी” चढाएर पूजा गरिन्छ ।[१००] यसरी पूजा गर्नाले लिंगो मार्गमा बाधा पुऱ्याउने अदृश्य शक्तिहरू पन्छिने र लिंगो तान्न सजिलो हुने विश्वास गरिन्छ । भक्तपुर ल्याइसकेपछि त्यस लिंगोलाई तान्त्रिक विधिले जीवन्यास दिनु आवश्यक मानिन्छ । पूर्ण जीवत्व प्राप्त गरेपछि नै त्यस लिंगोलाई देवताको रूपमा पूजा उपासना गरेर जात्रा गरिन्छ ।

लिंगो उभ्याउँदा कहिलेकाहीँ अनिष्ट वा दुर्घटना निम्तिने गर्दछ । त्यसबेला पनि तान्त्रिक विधिले शान्ति स्वस्ति गरिन्छ । बिस्केट जात्रामा भएका अनिष्ट र दुर्घटना अनि त्यसको शान्ति गर्दा बारे टिपोट गरिएको एउटा थ्यासफू अनुसार ने.सं. ७२३ चैत्रमा लिंगो उठिसकेपछि ढल्यो । त्यसपछि बोका बलि दिएर शान्तिस्वस्ति गरियो । ने.सं. ७५४ को बिस्केट जात्रामा लिंगो भाँचियो र त्यसको शान्ति गरियो, भैरवकहाँ पंचोपचार पूजा गरी बोका १ बलि दिइयो । ने.सं. ७७५ को विश्वजात्रामा रातभरि तान्दा पनि लिंगो नउभिएपछि भोलिपल्ट संक्रान्तिका दिन सखारै अर्को लिंगो ल्याइ उभ्याइयो रातभरि लिंगो नउठनाले राजा, पुजारी, नाइकेहरू रथमै बसे । लिंगो उभ्याउन लगाएपछि राती गर्नुपर्ने कर्म दिउँसो गरियो । यसको क्षमापूजा ४ दिन नटुटाइकन गरियो । यसमा राँगो १, बोका १ बलि दिइयो । यसै प्रसङ्गमा भैरवको रथजात्रामा पनि कहिले रथ नै ढल्ने, कहिले छाना खस्ने, कहिले ओसीं (धुरा) भाँचिने जस्ता अनिष्ट वा दुर्घटना हुँदा त्यसबेला पनि तान्त्रिक विधिले राँगो, भेडा, बोका आदिको बलि चढाएर क्षमापूजा गर्ने गरिन्थ्यो भन्ने कुरा सोही

---

[१००] प्रजापति, पा.टि.नं. ९७ (ख), पृ. ४२ ।

थ्यासफूबाट थाहा हुन आउँछ ।[१०१] यी ऐतिहासिक तथ्यहरूका आधारमा बिस्केट जात्रा सम्बद्ध प्रमुख देवीदेवताका पूजा, क्षमापूजा आदि विधिविधानहरू तान्त्रिक विधि अनुरूप पशु बलि दिएर सम्पन्न गर्ने गरिन्थ्यो भन्ने कुरा स्पष्ट हुन्छ ।

यसप्रकार धार्मिक पृष्ठभूमिमा आधारित रहेको बिस्केटजात्रा र यससम्बन्धी क्रियाकलापहरूमा ज्योतिष शास्त्र र तान्त्रिक पद्धतिको पनि मह□वपूर्ण स्थान रहने गरेको पाइन्छ । यसैकारण बिस्केटजात्राकाबेला रथमा राजा, मन्त्री, गुरु, पुरोहितका अतिरिक्त तान्त्रिक पुजारीका रूपमा १ जना आचाजु (कर्माचार्य) र ज्योतिष साइत हेर्ने १ जना जोशीको पनि उपस्थिति रहेको हुन्छ ।[१०२] वास्तवमा जोशीले ज्योतिषीय पद्धति अनुरूप नक्षत्रादि गतिलाई अध्ययन गरेर उचित ठहऱ्याएको शुभ साइतमा बिस्केटजात्रा प्रारम्भ हुने गर्दछ । यसभन्दा पनि मह□वपूर्ण कुरा के हो भने खगोल तथा ज्योतिष शास्त्रीय सिद्धान्त मुताविक विश्वब्रम्हाण्डको केन्द्रविन्दु सूर्य मेष संक्रान्तिका दिन विषुवत् रेखा (भूमध्यरेखा) मा पर्ने भएकोले त्यसदिन दिन र रात बराबर हुने भएकोले उक्त दिन जात्रा वा उत्सव मनाउनाले आरोग्य, सु–स्वास्थ्य, समृद्धि, सुभिक्ष प्राप्त हुने बलियो धारणा रहेको छ ।[१०३] त्यसै हुनाले त्यस दिन यहाँ यो जात्रा गरिएको हो भन्ने थाहा हुन्छ ।

### ९.४.१(घ) सामाजिक एकता र आर्थिक सम्पन्नताको प्रतीक

यसजात्राले अप्रत्यक्ष रूपमा यहाँको समाजलाई एउटा संगठित स्वरूप प्रदान गर्दै आएको छ । यसअवसरमा गरिने विविध देवीदेवताका पूजापाठ, यात्रा, नाचगान, भजनकीर्तन लगायत अन्य विधिविधानहरूमा समाजमा रहने प्रत्येक जाति वा वर्गका मानिसलाई आफ्नो जातीय पेशा अनुरूपको एउटा–एउटा कामको दायित्व सुम्पिएको हुन्छ, यसबाट जात्राका विधिविधानहरू सफलतापूर्वक सम्पन्न गर्न कुनै मुस्किल पर्दैन । यस्तो दायित्व समाजको उच्च वर्गदेखि तल्लो वर्गका रूपमा रहेको शुद्र जातिले समेत निर्वाह गर्नुपर्दछ । जस्तो– देवस्थलको सरसफाइ पोडेले, बाजा बजाउने कार्य कुस्लेले, फूलपाती वनमालीले, मासुको प्रबन्ध कसाईले, खट बोक्ने, रथ तान्ने, लिंगो उभ्याउने भजन गाउने जस्ता अधिकांश कार्य ज्यापू समुदायले गर्दछन् । त्यस्तै खट वा रथ बनाउने कार्य सिकर्मीले, रंगरोगनको काम चित्रकारले, डोरी बाट्ने र बाँध्ने कार्य मानन्धर जातिले, देवताको (बेतालको) मूर्ति सिंगार्ने

---

[१०१] ज्ञानकर वज्राचार्यको संग्रहमा रहेको थ्यासफू । यसको मूल पाठ परिशिष्ट नं. च मा दिइएको छ ।

[१०२] प्रजापति, पा.टि.नं. ७१, पृ. ३० ।

[१०३] संस्कृतिविद् काशीनाथ तमोटज्यूबाट मिति २०६६/७/२१ गते प्राप्त जानकारीको आधारमा ।

कार्य धौभडेल जातिले, पूजापाठ सम्बन्धी सम्पूर्ण कार्य ब्राम्हण, जोशी, कर्माचार्य जातिले गर्दै आइरहेका छन् ।[१०४] यसरी आफूलाई सुम्पिएको परम्परागत दायित्व बहन गर्नु आवश्यक र अनिवार्य मानिन्छ । यदि यो दायित्व पूरा नगरेमा सम्बन्धित देवता रुष्ट हुने, त्यसको प्रकोपले आफू र आफ्नो परिवारमा अनिष्ट हुने भय अनि मृत्यु पश्चात् पनि नरकबास हुने डरका कारणले गर्दा आफूलाई सुम्पिएको दायित्व पूरा गर्न यहाँका बासिन्दा अग्रसर देखिन्छ । यसरी यसजात्राले यहाँको समाजलाई एउटा संगठित स्वरूप प्रदान गर्दै विविध जातजाति र वर्गबीच आपसी एकता, समन्वय सद्भावना फैलाउन मद्दत पुऱ्याइ आएको छ ।

नेपाल उपत्यकाको एउटा प्रमुख शहर भक्तपुर, जुन प्राचीनकालदेखि आर्थिक रूपमा सम्पन्न र समृद्ध थियो । एकातिर यहाँको कृषि योग्य जमीन, जहाँबाट प्रशस्त अन्नबाली लगायत सागसब्जी, नगदेबालीहरू उत्पादन हुन्थ्यो भने अर्कोतिर उद्योग व्यापारको विकासले गर्दा दैनिक उपभोग्य वस्तुको सहज आपूर्तिका साथै उत्पादित वस्तुहरू बिक्रीको लागि बाह्य बजारमा समेत लगिने गर्थे । यसैले यहाँका बासिन्दाले कहिलेपनि के खाउँ के लाउँको समस्या बेहोर्नु परेन । अर्को मह□वपूर्ण कुरा, कुनै ऐतिहासिक कालखण्डमा ३०० वर्षभन्दा लामो समयसम्म यस ठाउँले समग्र नेपाल मण्डलकै राजधानीको रूपमा विकसित हुने अवसर पाएको थियो ।[१०५]

यसकिसिमको आर्थिक समुन्नति र संगठित राजनीतिक पृष्ठभूमिको आधारशिलामा यहाँका बासिन्दाले अनेक किसिमका चाडपर्व, जात्रा उत्सवहरू मनाउन जाने, जसमध्ये बिस्केट (विश्वयात्रा) एउटा प्रख्यात जात्राको रूपमा अगाडि आयो ।[१०६] प्रारम्भमा दुई दिनमात्र चल्ने यो जात्रा पछिल्लो मल्लकालमा आएर यसलाई अझ भव्यता र धुमधामका साथ मनाउनाको निम्ति यसमा अनेक विधिविधान र उपजात्राहरू थपेर आठ रात नौ दिन सम्म विस्तार गरियो ।[१०७] त्यसैको निरन्तरता आजको बिस्केट जात्रा हो । आर्थिक सम्पन्नता नभइ दिएको भए यस जात्राले विविध विधिविधान सहितको नौ दिने विस्तारित रूप कहिले लिन सक्ने थिएन ।

---

[१०४] प्रयागराज शर्मा, *कुल भूमि र राज्यः नेपाल उपत्यकाको पूर्व मध्यकालिक सामाजिक अध्ययन,* काठमाडौँ : नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५४, पृ. १५१ ।

[१०५] *मेचीदेखि महाकाली, भाग–२,* काठमाडौँ : संचार मन्त्रालय, सूचना विभाग, वि.सं. २०३१, पृ. ६४८–६४९ ।

[१०६] यसलाई पुष्टि गर्ने प्रमुख आधार ने.सं. ५६१ को यक्ष मल्लको भक्तपुर टौमढी चोकको अभिलेख हो, जसमा "विश्व जात्रा" शब्द उत्कीर्ण छ । साथै सो अभिलेखको उठान वाक्यमै विश्वेश्वरायनमः भनिएको हुँदा यो जात्रा विश्वेश्वर देवता अर्थात् विश्वनाथ भैरवसँग सम्बन्धित जात्रा हो भन्ने कुरा यताबाट पनि प्रष्ट हुन्छ र अर्को कुरा विश्व जात्रा नै बिस्केटको प्राचीन रूप हो, जसलाई आजभोलि विश्वध्वज जात्रा, विश्वकेतु जात्रा, बिस्केट जात्रा आदि भन्ने गरेको पाइन्छ ।

[१०७] लम्साल, पा.टि.नं. ९ (क), पृ. ५४ ।

यसप्रकार मल्लकाल आर्थिक रूपमा सम्पन्न थियो र त बिस्केट जात्रालाई धुमधामले मनाउन विस्तारित रूप दिइयो तर हाल आर्थिक अभाव, भरपर्दो स्रोतको कमी जस्ता कारणहरूले गर्दा जात्रा परम्परा धान्न साह्रै समस्या देखिएको छ ।

**९.४.१(ङ) मनोरन्जनको एउटा सशक्त माध्यम**

मल्लकालमा यो बिस्केट जात्रा यहाँको लोकजीवनमा मनोरन्जनको एउटा सशक्त माध्यम बनेको थियो । यद्यपि आज मनोरन्जन लिने अन्य थुप्रै माध्यम वा साधनहरू देखा परिरहेका छन, तर त्यसो भएपनि जात्रामा पाइने मनोरन्जनात्मक पक्षको मह□व आफ्नै ठाउँमा छ ।

यस सांस्कृतिक पर्वको नाम नै बिस्केटजात्रा भएकोले यसअवसरमा यहाँ सुरुदेखि अन्तिमसम्म विविध किसिमका जात्राहरू हुने गर्छन् । जस्तो– लिंगो उभ्याउने र ढाल्ने जात्रा, भैरव र भद्रकालीको रथ तान्ने जात्रा, रथ जुधाउने जात्रा, स्थानीय स्तरका देवदेवीका खटजात्राहरू अनि ती सँग सम्बन्धित अन्य क्रियाकलापहरू जुन छन्, ती सबै यहाँका प्रमुख देवीदेवताका परम्परागत विधिविधानभित्र केन्द्रित रहेर गरिने उपक्रम वा रीतिस्थिति भएतापनि त्यसभित्र मानिसका सदियौंदेखिको भाव, आस्था, विश्वास तथा त्यसबेला उसले गर्ने क्रियाकलापहरू जस्तो– खाने, पिउने, हाँस्ने, गाउने, नाच्ने जस्ता कुराहरूले यहाँका स्थानीयवासीहरू सदैव मनभित्र उकुसमुकुसलाई गुम्साएर मात्र बाँच्दैन, कहिलेकाहीँ उन्मुक्त वातावरणमा रमाइलो पनि गर्ने गर्छन् भन्ने कुरा स्पष्ट हुन्छ । यसरी यो जात्रा मनोरन्जनको सशक्त माध्यम थियो ।

वास्तवमा मनोरन्जनका अन्य वैकल्पिक साधनको अभावमा मानिसले यसकिसिमको जात्रालाई नै मनोरन्जनको मुख्य माध्यम बनाएको देखिन्छ । परापूर्वकालदेखि प्रत्येक वर्ष विक्रम संवत्सरको अवसरमा पर्नेगरी मनाइँदै आएको यो जात्राको परम्परा बाहिरबाट हेर्दा देवीदेवतासँग सम्बन्धित देखिएपनि यथार्थमा यो प्रारम्भदेखि हालसम्म समाजकै मनोरन्जनका लागि हो भन्ने देखिन आउँछ । जस्तो– लिंगो जात्रा सम्बन्धी धार्मिक मत जे जस्तो भएता पनि एउटा बडेमाको काठको लिंगोलाई मोटो–मोटो डोरीद्वारा तानेर उभ्याउने कार्य निक्कै साहसिक, जोखिमयुक्त र चुनौतीपुर्ण कार्य हो । यसकालागि जनसहयोग, सहभागिता र आपसी समभ्रूदारीको जरुरत पर्दछ । यसैले कुनै यन्त्रको सहायता बिना विशुद्ध मानवीय शक्ति र बुद्धिको भरमा डोरी तानेर, बल लगाएर होशियारीपूर्वक निक्कै

बेरको तानातानपछि जब त्यो लिंगो हावामा उठेर गई सीधा आकाशतिर फर्केर उभिन्छ, तब सारा जात्रालु खुसीले झुम्मिछन् मानौं उनीहरूले कुनै प्रतिस्पर्धापूर्ण खेलमा जित हात पारे अथवा सर्वोच्च शिखरको टाकुरामा पुगे जतिको गौरव उनीहरूले यतिबेला गर्छन् ।[१०८] यसरी यो जात्रा मनोरन्जनको एउटा सशक्त माध्यम भएको कुरा थाहा हुन आउँछ । यसैगरेर जब समस्त भक्तपुर नगरलाई क्षेत्रगत आधारमा दुई समूहमा विभाजित गरेर नगरको मध्य वा केन्द्रविन्दु मानिने टौमढी चोकबाट देवता सवार रथ तान्ने जात्रा प्रारम्भ हुन्छ, तब त्यसलाई पनि एउटा स्वस्थ मनोरन्जनात्मक र प्रतिस्पर्धापूर्ण खेलको रूपमा लिन सकिन्छ । किनकि यस जात्रामा तल्लो टोलकाले अगाडिबाट र माथिल्लो टोलकाले पछाडिबाट रथलाई तानेर आ–आफ्नो इलाकातिर लाने प्रयास गर्छन् ।[१०९] खेलरूपी यसजात्रामा कुन पक्ष विजयी होला अर्थात् रथ कतातिर जाला ? भन्ने उत्सकुता वा कौतुहलता आम दर्शक समुदायमा छाएको हुन्छ । रथ तान्नेहरू पनि रथलाई आ–आफ्नो क्षेत्रतिर लैजान ठूलो उत्साह, उमङ्गका साथ लागि परेका हुन्छन् ।[११०] यताबाट धार्मिक/साँस्कृतिक परम्परामा आधारित रहेर गरिने यस जात्राका प्रमुख क्रियाकलापहरू मनोरन्जनको एउटा सशक्त माध्यम पनि हो भन्ने कुरा थाहा हुन आउँछ ।

### ९.४.२ बिस्केट जात्राका नकारात्मक पक्ष

#### ९.४.२(क) व्यर्थको झैंझगडा

चाडपर्व, जात्रा उत्सव संस्कृतिका अमूल्य निधि हुन्, यसमा झैंझगडा मारपीट हुनु हुँदैन, तर वर्तमान समयमा आएर भक्तपुरको बिस्केट जात्रामा यस्ता विकृतिहरू भित्रिएका छन् । विशेष गरेर यस्ता प्रवृत्तितर्फ आकर्षित हुने वर्ग नवयुवा (अल्लारे केटा) हरू हुन् । यस्ता विकृति, विसंगतिहरूको बढ्दो विकासले अवश्य पनि एकदिन सांस्कृतिक सर्वनाश ननिम्त्याउला भन्न सकिँदैन । यद्यपि जहाँसुकैको चाडपर्व, जात्रा, मेलामा पनि मादक पदार्थ सेवन गरेर, अनावश्यक विवाद सृजना गरेर, अरुका छोरी चेलीलाई जिस्क्याएर, होहल्ला गरेर झैंझगडा गर्ने प्रवृति भेटिन्छ ।[१११] तर भक्तपुरको यसजात्रामा भने भक्तपुरका स्थानीयवासीहरू (विशेष गरेर युवाहरू) वर्षैपिच्छे नियमित रूपमा भनेझैं ढुंगा हानाहान

---

[१०८] जात्राको स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१०९] एण्डरसन, पा.टि.नं. १२ (ख), पृ. ४४ ।

[११०] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१११] रमेशराज कुँवर, "होरी फेष्टिबल अफ राना थारुज अफ नेपाल", *भ्वाइस अफ हिष्ट्री,* भोलुम १२, संख्या १, (जुलाई १९९७), पृ. ९६–९७ ।

गरेर आफू–आफू बीच नै शत्रुतापूर्ण व्यवहार प्रदर्शित गरिरहेका हुन्छन् । हुनतः बिस्केटको सुरु र अन्तिम दिनमा हुने यो जात्रा रथ तान्ने जात्रा हो, जसमा भक्तपुरको स्थानीय तल्लो र माथिल्लो टोलवासीहरूले देवता सवार रथलाई अगाडि र पछाडिबाट तानेर आफ्नो टोल इलाकातिर लाने प्रयास गर्छन् । यस प्रतिस्पर्धापूर्ण जात्रामा एक पक्षको जीत र अर्को पक्षको हार त निश्चित् रूपमा हुन्छ नै । यो प्राचीनकालदेखि चल्दै आएको परम्परा हो । तर यसै सवाललाई प्रतिष्ठाको विषय बनाइ अझ भनौं जात्रा नै नटुंगिकन ढुंगा हानेर हिंसामा उत्रनु बुद्धिमानी हुँदैन । किनकि यो जात्रा विशुद्ध रूपको धार्मिक जात्रा हो । यो पवित्र उद्देश्यले चलि आएको जात्रा हो ।[११२] यसैले यसलाई द्वेष, इर्ष्या, स्वार्थ, रीस साध्ने माध्यम बनाइनु हुँदैन तर आज यही भइरहेछ । पंचायतकालमा शान्ति सुरक्षामा खटिएका प्रहरीहरूलाई लक्षित गरी ढुंगा हान्ने गरिन्थ्यो, तर अहिले कांग्रेस, कम्युनिष्टको आरोप प्रत्यारोप लगाइ आपसमै एकले अर्को माथि ढुंगा वर्षाउने गर्दछन् । यो प्रवृत्ति बिस्केट जात्राको सबैभन्दा खराब पक्ष हो । यसले जात्राको ऐतिहासिक मह□व र सांस्कृतिक गरिमालाई नै ठूलो आघात पुऱ्याइरहेको छ । यस जात्राबारे बाहिर राम्रो सन्देश गइरहेको छैन । यसैले मानिसहरू के पनि भन्ने गर्छन् भने भक्तपुरको यो जात्रा ढुंगामुढाको जात्रा हो । टाउको फुटाउनु छ भने मात्र यो जात्रा हेर्न जानु ।

### **९.४.२(ख) जात्रा परम्परा लोप हुने अवस्थातिर**

आर्थिकसमस्या, सम्बद्धनिकायहरूको बेवास्ता, मानिसका व्यस्ततापूर्ण दैनिकी, धर्मकर्मप्रतिको आस्थामा कमी, मनोरन्जनका आधुनिक साधनहरूको विकास जस्ता कारणहरूले गर्दा यसजात्राको संचालनमा प्रत्यक्ष असर परिरहेको छ ।

#### **(अ) आर्थिक समस्या**

पहिले–पहिले यो जात्रा संचालन गर्दा आर्थिक रूपमा कुनै समस्या आइपर्दैनथ्यो । सम्बन्धित देवदेवीका नाममा राखिएका गुठी जग्गा जात्राको निम्ति एउटा भरपर्दो स्रोत हुनुका साथै त्यसैबाट जात्राका सम्पूर्ण गतिविधिहरूको व्यवस्थापन समुचित ढंगले हुने गर्थ्यो । यसैले निर्धारित समयभित्रै जात्रा भव्यताका साथ सम्पन्न हुने गर्थ्यो । प्रमुख जात्राका अतिरिक्त जात्रासँग सम्बन्धित अन्य विधिविधान र उपजात्राहरू सम्पन्न गर्दा कुनै आर्थिक

[११२] जात्राको बेला देवता सवार रथलाई तानेर आफ्नो इलाकातिर ल्याउन सकेमा आगामी वर्ष शुभ रहने जनधारणा अझैपनि स्थानीय बासिन्दामा रहेको पाइन्छ । – गुत्सो र कोल्वर, पा.टि.नं. २० (क), पृ. ४८ । यसैले यो जात्रा दुई टोल इलाका (थने र कोने) मा रहेका बासिन्दाहरूको हारजीतको पर्याय नभएर पवित्र उद्देश्यले चलि आएको विशुद्ध धार्मिक जात्रा भएको मान्न सकिन्छ ।

समस्या नपरोस् भनेर ती प्रत्येक विधिविधान र उपजात्राका नाममा समेत छुट्टाछुट्टै रूपमा गुठी राखिएका थिए भन्ने कुरा जोगीचक्र पूजा सम्बन्धी गुठी र मुर्दा खटजात्रा सम्बन्धी गुठीले पुष्टि गर्दछ ।[११३] तर ती गुठी जग्गाहरू आज मासिइसके । गुठी संस्थानले वार्षिक रूपमा उपलब्ध गराउने एउटा निश्चित् रकम नै यसजात्रा संचालनको मुख्य स्रोत भएको छ । तर यसरी गुठी संस्थानले उपलब्ध गराउने खर्च पनि जात्राकोबेला हुने वास्तविक खर्चभन्दा निकै न्युन हुने गर्छ । यसैले जात्रा जुन भव्यता र रौनकताका साथ सम्पन्न हुनुपर्ने हो, त्यो भइरहेको पाइँदैन ।[११४] जात्राका गतिविधिहरू जसोतसो मात्र अघि बढिरहेका छन् ।

### (आ) सम्बद्ध निकायहरूको बेवास्ता

भक्तपुर नगरपालिका, नेपाल सरकार पुरात□व विभाग जस्ता यहाँको कला संस्कृतिको संरक्षण र सम्बर्द्धन गर्ने जिम्मेवारी पाएको सम्बद्ध निकायहरूले समेत यसजात्राको संस्कृति जगेर्ना गर्नाका लागि आजसम्म खासै चासो लिएको पाइँदैन । वास्तवमा यस जात्राको संरक्षण गर्ने दायित्व गुठी संस्थान एक्लैले मात्र नभएर भक्तपुर नगरपालिका र पुरात□व विभाग, जिल्ला विकास समिति आदिको पनि हो, तर ती निकायहरूले आजसम्म यस जात्राको निम्ति चारपैसा खर्च गरेको पाइँदैन । "पुर्खाले आर्जेको संस्कृति हाम्रो अमूल्य सम्पति" को लोकप्रिय नारा दिने भक्तपुर नगरपालिकाले यस जात्रामा आफुले के कस्तो सहयोग गर्नुपर्छ भनेर एक वचन सोधेको थाहा छैन ।[११५]

### (इ) मानिसका व्यस्ततापूर्ण दैनिक जीवन

जिविकोपार्जनका लागि स्थानीयवासी नेवारहरू व्यस्ततापूर्वक आ–आफ्ना कार्यक्षेत्रमा लाग्नुपर्ने बाध्यताले गर्दा तिनले बिस्केटजात्रा जस्तो कला संस्कृतिले सम्पन्न ऐतिहासिक जात्राको जगेर्ना गर्नतिर ध्यान दिन सकिरहेका छैनन् । एकातिर यस्तो छ भने अर्कोतिर आधुनिक परिवेश, रहनसहनले गर्दा मानिसमा विशेष गरेर युवावर्गमा देवीदेवता,

---

[११३] (क) बिस्केट पर्वका अवसरमा जोगीचक्र पूजा संचालन गर्नको निम्ति राजा जगतप्रकाश मल्लले ने.सं. ७८२ मा २४ रोपनी जग्गा गुठी राखिदिएका थिए भन्ने कुरा भक्तपुर नगरपालिका अगाडिको एक तल्ले रातो बत्सलादेवी मन्दिर पछाडि उत्तराभिमुख शिलालेखबाट पुष्टि हुन्छ । सो शिलालेखको दृश्यचित्र र मूलपाठ परिशिष्ट नं. ज चित्रसंख्या ५७ मा दिइएको छ ।

(ख) संस्कृतिविद् लीलाभक्त मुनंकर्मीका अनुसार चैत्र मसान्तकादिन बहताल टौमढीदेखि जात्रास्थल चुपिंघाटसम्म यो मुर्दाखट जात्रा सञ्चालन गर्नको निम्ति ३७.५ रोपनी जग्गाकोगुठी राखिएको थियो । –मुनंकर्मी, पा.टि.नं. १७ (क), पृ. १८ ।

[११४] जात्रासँग सम्वद्ध गुठीका नाइकेहरू क्रमशः ज्ञानबहादुर छुकाङ्ग (वर्ष ७७) र मोतीबहादुर सुवाल (वर्ष ७९) बाट मिति २०६७/४/२३ र २०६७/७/१८ गते प्राप्त जानकारी ।

[११५] *ऐजन* ।

धर्मकर्मप्रतिको श्रद्धाभक्ति, आस्था, विश्वासमा कमी आउन थालेको देखिन्छ । तिनीहरू परम्परागत रीतिस्थिति मान्न तयार देखिंदैन । यसरी बदलिंदो परिवेशका कारणले गर्दा पनि यो जात्रा सञ्चालनमा अप्ठेरो स्थिति सृजना भइरहेको छ ।

**(ई) मनोरन्जका आधुनिक साधनहरूको विकास**

विगतमा चाडपर्व, जात्राहरू नै मनोरन्जनका मुख्य साधन थिए । यसदेखि बाहेक आमोदप्रमोदका अरु कुनै विकल्प थिएनन् । तर आज परिस्थिति बदलिएको छ । विज्ञान तथा प्रविधिको द्रुतत्तर विकासले गर्दा मनोरन्जनका अनेक नयाँ–नयाँ माध्यम वा साधनहरूको विकास भइरहेको छ । यसले गर्दा अब रमाइलो गर्न चाडपर्व नै पर्खिनु पर्छ भन्ने बाध्यता रहेन । टि.भी., सिनेमा, रेडियो घरभित्रै बसेर हेर्न, सुन्न सकिन्छ । दोहोरी साँझ, गजल गायन, डान्स रेष्टुरेन्ट, डिस्को क्लबहरूमा जुनैबेला पनि जान सकिन्छ । इन्टरनेट प्रविधिले संसारमा भएका यावत नयाँ नयाँ जानकारी घरमै बसेर प्राप्त गर्न सकिन्छ । केवुल लाइनको प्रत्यक्ष प्रसारणले गर्दा कोठामै बसेर जात्रा हेर्न सकिन्छ । अन्य रमाइला कार्यक्रमहरू हेर्न सकिन्छ । यसरी विज्ञानको चमत्कारले गर्दा मानिसलाई बाह्रै महिना, बाह्रै काल, चौबिसै घण्टा मनोरन्जन प्राप्त गर्ने अवसर मिलिरहेछ । तर यसको नकारात्मक असर यहाँको बिस्केटजात्रा जस्तो सांस्कृतिक गतिविधिमा प्रत्यक्ष रूपमा परिरहेको देख्न सकिन्छ । जात्रामा आम जनसमुदायको न्युन उपस्थिति र निर्धारित समयमा नै जात्रा सम्पन्न गर्न कठिनाई उत्पन्न हुनु यसका ज्वलन्त उदाहरणहरू हुन् ।

यसप्रकार माथि उल्लिखित विविध कारणहरूले गर्दा यो जात्रा र यससँग सम्बन्धित कतिपय परम्परा लोप भएर गइसके भने कतिपय लोप हुने क्रममा छन् । प्रचलनमा रहेका जात्रा र त्यसका गतिविधिहरू पनि केवल परम्परा थाम्ने ढंगले मात्र अघि बढिरहेका छन् । जात्राका पुजारी, गुठी नाइके र सम्बद्ध अन्य व्यक्तिहरूमा कुनै उत्साह, उमङ्ग, जोश जाँगर रहेको पाइँदैन । जसको फलस्वरूप आज यो जात्रा निर्धारित समयभित्रै सम्पन्न गर्न ज्यादै मुस्किल परिरहेको देखिन्छ ।

## ९.५ भक्तपुरको बिस्केट जात्रा र अन्य क्षेत्रको बिस्केट जात्राबीचको तुलनात्मक अध्ययन

बिस्केट पर्वका अवसरमा देवीदेवताको जात्रा गरेर चाड मनाउने परम्परा भक्तपुर एक ठाउँमा मात्र नभएर भक्तपुरका अतिरिक्त वरपरका अन्य स्थानहरूमा पनि प्रचलित रहेको पाइन्छ । त्यस्ता स्थानहरूमा विशेष गरेर भक्तपुरकै थिमी, नगदेश, बोडे, काठमाडौँको

टोखा, काभ्रेपलाञ्चोकको सांगा, श्रीखण्डपुर, धुलिखेल आदि मुख्य रहेका छन् ।[११६] यी स्थानहरूमा कतै ध्वजारोहणका साथ स्थानीय देवदेवीका खटजात्रा समेत गरेर चाड मनाइन्छ भने कतै खटजात्रा मात्र गरेर बिस्केट पर्व मनाइन्छ ।[११७] विचारणीय कुरा के छ भने लिंगो उठाएर जात्रा गर्ने प्रचलन अन्यत्र पनि रहेको पाइन्छ, तर विशाल विश्वध्वजा सहितको लिंगो उठाएर जात्रा गर्ने चलन भने भक्तपुर एक ठाउँमा बाहेक अन्यत्र कहीं पनि पाइँदैन । भक्तपुरको बिस्केट जात्राको यो एउटा खास विशेषता हो । अर्को कुरा माथि उल्लिखित बिस्केट जात्रा गरिने सबै स्थानहरू प्राचीन नेवार बस्ती हुन् । यसैले यी स्थानहरूमा यो जात्रा परम्पराको प्रचलन हाल आएर विकास भएको नभएर मल्लकालदेखि प्रचलित थियो भन्ने कुरा थाहा हुन आउँदछ ।

बिस्केट मूलरूपमा भक्तपुरको जात्रा हो । यसमा कुनै विवाद छैन, तर यो जात्रा उपरोक्त स्थानहरूमा पनि मनाउने परम्परा रहेको देखिएबाट इतिहासको कुनै कालखण्डमा विशेष गरेर मल्लकालमा ती स्थानहरू भक्तपुर अधिनस्थ प्रदेशहरू थिए कि भन्ने अनुमान गर्न सकिन्छ । त्यसो त पूर्वमध्यकालमा ३०० वर्ष भन्दा लामो समयसम्म भक्तपुरले समग्र नेपाल मण्डलकै राजधानीको हैसियत राख्दथ्यो ।[११८] तर त्यसो भएपनि बिस्केटलाई विविध क्रियाकलापका साथ भव्य रूपले मनाउने परम्परा भने पछिल्लो मल्लकालमा आएर मात्र प्रारम्भ भएको[११९] र त्यसको प्रतिरूप ती स्थानहरूमा पनि पाइएकोले यो अनुमान गरिएको हो । यस सन्दर्भमा यहाँ भक्तपुरको प्रसिद्ध नवदुर्गा नाचलाई उल्लेख गर्नु प्रासंगिक देखिन्छ । जसरी भक्तपुरको नवदुर्गा नाच भक्तपुर शहरभित्रका टोल–टोलमा मात्र देखाइन्न, वरपरका थिमी, बोडे, टोखा, बनेपा, पनौती, धुलिखेल जस्ता अनेक अरु साना–साना ठाउँमा पनि लगेर देखाइन्छ, तर त्यो नाच वर्षेनी अरु ठाउँमा जस्तै पाटन र काठमाडौंमा देखाइन्न । यसको एउटै अर्थ हुन सक्छ – त्यो नाचको सुरुवात गर्ने राजा (शायद् सुवर्ण मल्ल थिए) ले त्यस नाचलाई आफ्नो राज्यको इलाकाभित्र पर्ने ठाउँमा मात्र प्रर्दशनका लागि पठाउने गरेका थिए ।[१२०] ठीक यसैगरेर बिस्केट जात्रा पनि भक्तपुरको आफ्नो प्रसिद्ध जात्रा भएकोले भक्तपुरका तात्कालीन राजा (संभवत जगज्योतिर्मल्ल)ले आफ्नो राज्य इलाका भित्रका ठाउँहरूमा मनाउनु पर्ने

---

[११६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[११७] धुलिखेलमा बिस्केट जात्रा मनाउँदा खटजात्रा मात्र गरिन्छ । त्यहाँ लिंगो उठाउने चलन छैन । जबकि उल्लेखित अन्य स्थानहरूमा लिंगो उठाएर खटजात्रा मनाउने गरिन्छ ।

[११८] मेचीदेखि महाकाली, भाग २, पा.टि.नं. १०५, पृ. ६४८–६४९ ।

[११९] लम्साल, पा.टि.नं. ९ (क), पृ. ५४ ।

[१२०] गुत्सो र कोल्वर, पा.टि.नं. २० (क), पृ. १० ।

परम्परा बसाली दिए कि ? अर्को कुरा भक्तपुरका बासिन्दाहरू भक्तपुरबाट स्थानान्तरण भएर जहाँ–जहाँ पुगेका छन्, त्यहाँ–त्यहाँ आजपनि बिस्केट चाड मनाइरहेको पाइन्छ । यसआधारमा उल्लिखित स्थानहरूमा बिस्केट जात्राको प्रचलन भक्तपुरबाट बसाई सरेर गएका बासिन्दाबाट पो सुरु भएको हो कि भन्ने अनुमान पनि गर्न सकिन्छ । इतिहासविद् केदारनाथ प्रधानकाअनुसार बनेपामा पनि करीव १०० वर्ष अघिसम्म बिस्केटका अवसरमा लिंगो उभ्याउने र चुपिंग: भन्ने ठाउँमा नुहाउने प्रचलन रहेको थियो । यो परम्परा भक्तपुरका बासिन्दा यहाँ आइ बस्न थाले पछि प्रारम्भ भएको हुन सक्छ । बनेपा दछुटोलका बासिन्दालाई भक्तपुरबाट आइबसेका भनी मानिन्छ र बिस्केटलाई यसै टोलका बासिन्दाले मात्र मान्ने गरेबाट सो कुराको पृष्टि हुन्छ ।[१२१] धनवज्र वज्राचार्यका अनुसार काठमाडौँमा पनि यो जात्रा मनाइन्छ । हाल साधारण रूपमा मात्र मनाउने गरिए पनि मल्लकालमा भने विशेष रूपमा मनाउने गरेको तथ्य “वर्षकृति” नामक एउटा थ्यासफूमा उल्लेख भएको पाइन्छ ।[१२२] बिस्केटका अवसरमा त्यहाँ दुमाजुदेवीको खटजात्रा हुनुका साथै मानन्धरहरूद्वारा लिंगो गाड्ने र ढाल्ने काम पनि गरिन्छ । वैशाख संक्रान्तिकै दिन यो जात्रा सम्पन्न गरिने भएकोले यो बिस्केट जात्राकै एक रूप हो भन्ने देखिन्छ ।[१२३] कान्तिपुरका मल्ल शासकहरू भक्तपुरबाटै छुट्टिएर गएका हुनाले त्यहाँ पनि यो जात्रा परम्परा बसालिएको नहोला भन्न सकिन्न ।

उपर्युक्त तथ्यहरूको आधारमा भक्तपुरको बिस्केट जात्राको प्रभावको फलस्वरूप वरपरका अन्य क्षेत्रहरूमा पनि बिस्केट जात्रा मनाउने परम्परा थालनी हुन गएको देखिन्छ, तर सबैभन्दा मह□वपूर्ण र तर्कसंगत यथार्थता के हुन सक्छ भने कुनै पनि स्थानको संस्कृति कसैको निजी पेवा हुँदैन “एक स्थानको संस्कृतिको प्रभाव त्यसको मह□व र उपयोगिता हेरेर अन्य स्थानमा पनि परेको” थुप्रै उदाहरणहरू पाइन्छन् । त्यसमाथि समान भाषा, धर्म, संस्कृति अंगालेका एउटै जातिका मानिसहरूले राजनीतिक रूपमा मात्र नभएर सांस्कृतिक गतिविधिहरूको समेत केन्द्र मानिने राजधानी शहर भक्तपुरको प्रसिद्ध जात्रालाई आफ्ना गाउँ ठाउँमा पनि मान्ने परम्परा उपर्युक्त स्थानका स्थानीय बासिन्दाका प्राचीन पुर्खाले प्रारम्भ गरेको बुझिन्छ । यसलाई सांस्कृतिक प्रभावको विकसित लहर मान्न सकिन्छ । यसरी भक्तपुरकै बिस्केट जात्राको प्रभावको फलस्वरूप अन्य क्षेत्रमा पनि जात्रा मनाउने परम्परा बस्न गएको देखिन्छ ।

### ९.५.१ भक्तपुरको बिस्केट जात्रा

[१२१] प्रधान, पा.टि.नं. ४५, पृ. १६ ।

[१२२] वज्राचार्य, पा.टि.नं. १८, पृ. ७७ ।

[१२३] वज्राचार्य, पा.टि.नं. ४०, पृ. १५५ ।

बिस्केट भक्तपुरको सबैभन्दा प्रमुख र प्रख्यात जात्रा हो । नेवार समाजमा प्रचलित सबै जात्रा उत्सवहरू तिथि (चान्द्रमान पात्रो) अनुसार सञ्चालन हुने गर्छन्, तर बिस्केट जात्रा एउटा भने विक्रम सम्वत् र (सौर्यमान पात्रो) को आधारमा मनाउने परम्परा छ ।[१२४] यस जात्राका दुई अलग–अलग पक्षहरू छन् – पहिलो भैरव, भद्रकालीको रथजात्रा र दोस्रो लिंगो उभ्याउने जात्रा । यी दुईको समस्टीगत रूप नै विश्वजात्रा हो ।[१२५] यसदेखि बाहेक बिस्केटकै अवसरमा भक्तपुरका टोल–टोलमा सञ्चालन गरिने स्थानीय देवदेवीका खटजात्राहरू पनि मह□वपूर्ण देखिन्छन् ।[१२६]

हरेक साल वर्षको अन्तिम दिन चैत्र मसान्तको साँझ एक जोडी विश्वध्वजा सहितको लिंगोलाई जनसमुदायले तानेर उभ्याउनु र नयाँ वर्षको पहिलो दिन अर्थात् वैशाख १ गते साँझ त्यसलाई विधिपूर्वक ढाल्नु यस जात्राको प्रमुख विशेषता हो ।[१२७] लिंगो उभ्याउनु चार दिन अगाडि भैरवनाथको प्रतिमालाई तीन तल्ले छाना भएको भव्य चार पांग्रे रथमा विराजमान गराई मानिसहरूले तानेर भक्तपुर शहरको "थने" (माथिल्लो टोल) र "कोने" (तल्लोटोल) मा आलोपालो गरी पुऱ्याएर उल्लासमय वातावरणमा रथजात्रा मनाइन्छ । अन्त्यमा सो रथलाई स्थानीय गाःहिटी टोलमा पुऱ्याई सो दिनको जात्रा विसर्जन गरिन्छ । सोही दिन देवी भद्रकालीको प्रतिमालाई पनि अर्को दुई तल्ले छाना भएको सानो चार पांग्रे रथमा आरोहण गराई त्यो रथलाई पनि तानेर त्यहीं गाःहिटी टोलमा (लय्कोमा) पुऱ्याउने परम्परा छ । ती रथको निर्माण "गुह्यतन्त्र" को प्रतीक "श्रीयन्त्र" को आधारमा गरिएको हुन्छ ।[१२८] चैत्र मसान्तको साँझ सो दुवै रथहरूलाई पुनः तानेर लिंगो उभ्याउने स्थान अर्थात् मुख्य जात्रास्थल ल्योसिंखेल (चुपिंघाटको खुल्ला चौर) मा पुऱ्याइन्छ । त्यसपछि मात्र लिंगो उभ्याउने कार्य प्रारम्भ हुन्छ । भोलिपल्ट अर्थात् वैशाख संक्रान्तिका दिन साँझपख सो लिंगो ढाल्ने कार्य समापन पश्चात् ती दुवै रथहरूलाई गाःहिटी टोलमा फिर्ता ल्याई एक आपसमा जुधाएर भैरवको रथलाई सोही स्थानमा राखी भद्रकालीको रथलाई मात्र

---

[१२४] बिस्केट जात्राको यो एउटा खास विशेषता हो । – हरिराम जोशी, *नेपालका चाडपर्व,* ललितपुर : जोशी रिसर्च इन्स्टिच्युट, वि.सं. २०६०, पृ. १४ ।

[१२५] नेपाली, पा.टि.नं. ७४, पृ. ३४४ ।

[१२६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१२७] नेपाली, पा.टि.नं. ७४, पृ. ३४४ ।

[१२८] (क) एण्डरसन, पा.टि.नं. १२ (ख), पृ. ४४ ।

(ख) तन्त्रहरूमा कुण्डलिनी शक्तिप्रति आस्था राख्दै श्रीयन्त्रको पूजा गरेको पाइन्छ । यसप्रकारको पूजालाई अद्धैतवादी उपासनाको मार्ग भनिन्छ । शक्ति विना कुनै पुरुषार्थ सफल हुँदैन । प्रत्येक अणु परमाणुमा पनि शक्ति हुन्छ । पुसंत्व बिनाको पुरुषलाई पुरुष, दाहकत्व शक्तिबिनाको अग्निलाई अग्नि भन्न नमिले जस्तै शक्ति बिना शिवलाई पूर्ण मानिंदैन । शक्ति बिना शिव ईच्छाहीन, ज्ञानहीन र क्रियाहीन मानिन्छ । यसर्थ शिव र शक्ति एक अर्काका पुरक हुन् । – रमा पाण्डे (शर्मा), "शक्ति उपासनाको परम्परा : एक अध्ययन," *रोलम्बा,* अंक १२, संख्या ३, (जुलाई – सेप्टेम्वर १९९२), पृ. १६ ।

तानेर ईच्छु टोलको चार दोबाटो (घट्खा टोल) पुऱ्याइन्छ । वैशाख ४ गते अर्थात् जात्रा समापनको पूर्व सन्ध्यामा जात्रामा सहभागी हुन आएका नगरका समस्त देवदेवीहरूलाई आ–आफ्नो स्वस्थानमा फर्किनु अघि बिदाइ दर्शन जस्तै नगरवासीहरूद्वारा सगुन दिन जाने चलन निक्कै रोचक रहेको पाइन्छ । यसलाई "द्यः सगं बियेगु" अर्थात् देवतालाई सगुन चढाउने भन्ने गरिन्छ । अन्तमा वैशाख ५ गतेका दिन साँझ भैरवनाथको रथलाई सुरुको दिनमा जस्तै माथिल्लो र तल्लो टोलहरूमा पुऱ्याई रथजात्रा मनाएर अन्तमा त्यसलाई टौमढी चोकमा अवस्थित भैरवनाथको मन्दिरको सामुन्ने पुऱ्याएपछि त्यसवर्षको जात्रा विसर्जन हुन्छ ।[१२९] बिस्केटकै क्रममा यहाँ तान्त्रिक विधिविधानलेयुक्त अनेक गतिविधिहरू पनि संचालन हुने गर्छन् । त्यसमा तलेजु मन्दिरभित्र हुने बिस्केट जात्रा सम्बन्धी पूजा विधानहरू मह□वपूर्ण छन् । त्यस्तै दुमाजुदेवीको पूजा र जात्रा, जोगीचक्र पूजाहरू पनि देश र देशवासीको कल्याणका निम्ति मह□वपूर्ण मानिन्छ ।

बिस्केट जात्रामा भैरव र भद्रकालीको रथ तान्ने परम्परा भक्तपुरका राजा जगज्योतिर्मल्लले चलाएका थिए ।[१३०] विश्वध्वज लिंगो जात्रा भने प्राचीनकालदेखि नै अर्थात् भक्तपुरले शहरको रूप लिनु भन्दा पहिलेदेखि नै थियो ।[१३१] वास्तवमा रथ तान्ने जात्रा, रथ जुधाउने जात्रा, स्थानीय खटजात्राहरू लगायत जात्रा सम्बन्धी विधिविधानहरू बिस्केट पर्वलाई भव्यता दिन पछिल्लो मल्लकालमा थपिएका जात्रा परम्पराहरू हुन्, तर लिंगो जात्रा भने त्यसभन्दा शताब्दियौं पहिलेदेखि प्रचलित थियो भन्ने तथ्यलाई ऐतिहासिक सामग्रीले समेत पुष्टि गर्दछ ।[१३२] यक्ष मल्लको ने.सं. ५६१ (वि.सं. १४९८) को टौमढी टोलको धारामाथिको अभिलेखमा "विश्वजात्रा कुन्हु" भन्ने शब्द उल्लेख परेको छ । भक्तपुरको यो प्रख्यात जात्रा हेर्न भारतको काशीबाट विश्वनाथ मानिसको रूप लिई यहाँ आएका थिए । त्यो कुरा थाहा पाई एकजना तान्त्रिकले पक्रन खोज्दा जमीनमा दबेर भाग्न लागेको बेला उनको शिरमात्र बाँकी रहेको हुँदा त्यसैलाई काटेर राखेको थियो । त्यसलाई भैरवको नामबाट पुजिन थालियो ।[१३३] त्यसबेलादेखि बिस्केटमा भैरवको रथजात्रा गर्ने परम्परा रह्यो भन्ने किम्बदन्ती रहेको छ ।

### ९.५.२ अन्य स्थानमा मनाइने बिस्केट जात्रा

---

[१२९] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१३०] लम्साल, पा.टि.नं. ९ (क), पृ. ५४ ।

[१३१] भक्तपुरका स्थानीय संस्कृतिविद् लीलाभक्त मुनंकर्मी (वर्ष ८२) बाट प्राप्त जानकारी ।

[१३२] डि.आर.रेग्मी, *मिडियभल नेपाल, तेस्रो भाग,* कलकता : के.एल. मुखोपाध्यायाय, ई.सं. १९६६, पृ. ६६ ।

[१३३] डेनियल राइट, *हिष्ट्री अफ नेपाल,* न्यू दिल्ली : कस्मो पब्लिकेसन्स, ई.सं. १९८३, पृ. १८० ।

### **९.५.२(क) थिमी, बोडे, नगदेशको बिस्केट जात्रा**

वर्तमान मध्यपुर थिमी नगरपालिका अन्तर्गत रहेका नगर उन्मुख तीन वटा प्राचीन नेवार बस्तीहरू क्रमशः थिमी, बोडे, नगदेश ऐतिहासिक दृष्टिले भक्तपुर जतिकै प्राचीन रहेको थाहा हुन्छ । वंशावली अनुसार यी बस्तीहरूको स्थापना भक्तपुरका राजा सुवर्ण मल्लले गरेका थिए, जसले थिमी, बोडे, नगदेशमा क्रमशः ७००, ५००, ५००, घरहरू बनाई बस्ती बसालेका थिए ।[१३४] तर वास्तवमा यसको इतिहास त्यसभन्दा पनि अझ पुरानो रहेको देखिन्छ । गोपाल राजवंशावलीको अनेक पत्रहरूमा "थ्यमी" को उल्लेख भएको पाइन्छ ।[१३५] साथै थिमीभेकबाट प्राप्त भएका दुईवटा लिच्छवीकालीन अभिलेखहरूको अध्ययनबाट यहाँ लिच्छवीकालमा नै मानिसको बस्ती बसिसकेको थाहा हुन्छ ।[१३६] मध्यकालमा यो क्षेत्र भक्तपुर राज्य अन्तर्गत रहेको थियो[१३७] र वर्तमानमा पनि प्रस्तुत इलाका भक्तपुर जिल्ला अन्तर्गत नै रहेका छन् ।[१३८] ध्यान दिनुपर्ने कुरा के छ भने बिस्केट जात्रा भक्तपुरको मात्र नभएर यस इलाकाको पनि प्रसिद्ध जात्रा हो, जुन हरेक वर्ष वैशाख संक्रान्ति र त्यसको भोलिपल्ट धुमधामले मनाइन्छ । तथापि भक्तपुरको बिस्केट जात्रासँग यहाँको बिस्केट जात्राको कुनै तादाम्यता रहेको पाइँदैन ।

भक्तपुरको बिस्केट जात्राको आरम्भ चैत्र मसान्तको दिन विश्वध्वज लिंगो ठड्याई गरिन्छ र त्यसको भोलिपल्ट अर्थात् वैशाख १ गते त्यसलाई ढाली जात्रा सम्पन्न गरिन्छ । तर, थिमीमा उल्लेख्य रूपले जात्राको आरम्भ वैशाख १ गते गरी वैशाख २ गते सो जात्रा सम्पन्न गरिन्छ ।[१३९] यसैकारण भक्तपुरको जात्रामा सम्मिलित हुन आएका जात्रालुहरू भक्तपुरको लिंगोजात्रा विसर्जन पश्चात् छिटो–छिटो थिमीमा आइ त्यहाँको जात्रामा सहभागी हुन्छन् । थिमी जात्राको प्रमुख देवी बालकुमारी हुन् । यसैले यस जात्रालाई बालकुमारी जात्रा पनि भन्ने गरिन्छ । वंशावली अनुसार यसजात्राको प्रचलन भक्तपुरका

[१३४] योगी नरहरिनाथ (सं.) *देवमाला वंशावली,* काठमाडौँ : श्रीपीरहन्त क्षिपानाथ योगीराज, वि.सं. २०१३, पृ. ८९ ।

[१३५] वज्राचार्य र मल्ल, पा.टि.नं.७, पृ. ५२ (ख)२, ५५ (क), ५५(क)३, ५७ (क)२, ५८ (ख) २ पत्रहरू ।

[१३६] जोशी, पा.टि.नं. २ (ग), पृ. ३५४ र ५४२ ।

[१३७] लम्साल, पा.टि.नं. ९ (क), पृ. ५३ ।

[१३८] *मेचीदेखि महाकाली, भाग २,* पा.टि.नं. १०५ र पृ. ६५५–६५६ ।

[१३९] जोशी, पा.टि.नं. १२४, पृ. १८ ।

राजा जगज्योतिर्मल्लले गरेका हुन् ।[१४०] यसैदिन नगदेशमा पनि प्रतिवर्ष श्री ईनाय गणेशको खटजात्रा हुन्छ ।[१४१]

माथि नै उल्लेख गरिसकिएको छ कि थिमी भेकको जात्रा मूलरूपले वैशाख २ गते हुने गर्छ, तर त्यसो भए पनि त्यसको दुई दिन अघिबाटै जात्रा सम्बन्धी गतिविधि प्रारम्भ हुन थाल्छ । यसक्रममा जात्रामा सम्मिलित हुने थिमी र नगदेशका समस्त देवदेवीहरूलाई आ–आफ्नो देवगृहको मूलस्थानबाट तल दलानमा ल्याइन्छ । ती देवदेवीको सम्मानमा त्यस भेकका प्रत्येक घर–घरबाट पूजाभाग पठाइन्छ । साँझपख सबै देवदेवीलाई खटजात्रा गरी टोल परिक्रमा गराइन्छ । त्यसबेला बालकुमारी मन्दिरका साथै प्रत्येक टोलको मन्दिर अगाडि "गुसीं छोयकेगु" भनेर वनबाट ल्याएको दाउरा बाली धुनी जगाउने र सम्हेय्बजी बाँड्ने परम्परा छ ।[१४२]

वैशाख संक्रान्तिको राती करीब १ देखि ३ बजेसम्म कर्माचार्य आचाजु सहित भक्तजनहरूले अन्य मन्दिरको प्रसाद ल्याइसकेपछि बालकुमारी देवीलाई लाय्कू दरबारबाट बाहिर ल्याई खटमा विराजमान गराइन्छ । तत्पश्चात् त्यस भेकका सबै बासिन्दाले एक–एकवटा चिरागबत्ती बालेर बाजागाजा सहित बालकुमारी देवीलाई कोलाखु मन्दिरमा विराजमान गर्न लगिन्छ । यसदिनको जात्रा हेर्नाले वर्षदिनभरिको पाप नाश हुन्छ भन्ने जनविश्वास रहेकोले अत्यधिक संख्यामा स्थानीयवासीहरू यस जात्रामा सामेल हुने गर्छन् ।[१४३] बालकुमारीलाई मन्दिरभित्र विराजमान गराइसकेपछि चिरागबत्ती लिएका भक्तजनहरू, आचाजुहरू बाजागाजाका साथ श्री दक्षिण वाराही, श्री हरिसिद्धी र अजिमादेवीलाई खटमा राखी जात्रा गर्दै थिमी दधिकोटमा रहेको दक्षिण वाराही मन्दिरलाई पाँच पटक परिक्रमा गरेर ल्याइ बालकुमारी मन्दिरको उत्तर पूर्वमा विराजमान गराइन्छ । यसदिन स्थानीय महिलाहरू व्रत बसी बालकुमारीदेवीको बडो श्रद्धा भक्तिका साथ पूजा–अर्चना गर्छन् भने पुरुषहरूले पनि देवीको सम्मानमा शरीरका मुख्य अंगमा बत्ती बाली पूजा गर्ने प्रचलन रही आएको पाइन्छ । यसदिन बालकुमारी देवीलाई बलि सहित पूजा गरिन्छ । बलिमा निखु दुगु (कालो बोका) नै हुनुपर्ने परम्परा छ । यस पूजापछि कुल भोज ख्वाइन्छ, जसमा ४ जना

---

[१४०] (क) लम्साल, पा.टि.नं. ९ (क), पृ. ५४ ।
(ख) बालचन्द्र शर्मा, *नेपालको ऐतिहासिक रूपरेखा,* वाराणसी : कृष्णकुमारी, वि.सं. २०३३, पृ. १४६ ।

[१४१] नाथ, पा.टि.नं. १३४, पृ. १२३ ।

[१४२] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१४३] स्थानीयवासी भैरवबहादुर श्रेष्ठ (वर्ष ७०) बाट मिति २०६७/१/१ प्राप्त जानकारीको आधारमा ।

बालक र एकजना थकाली (मूली) लाई राखेर देवताको अगाडि सक्दो खान दिइन्छ । यसपछि गुठीघरको छानाबाट पकाइएको योमरी (रोटी) प्रसादको लागि मन्दिरतिर फ्याँकिन्छ । यसरी फ्याँकिएको रोटी बालकुमारी मन्दिरभित्रै छिराउन र सिंगै समाउन सकिएमा छोरा नै पाइन्छ भन्ने धारणा पनि रहेको पाइन्छ ।[१४४] त्यसपछि सरकारी निकाय र सर्वसाधारण जनताले चढाएको बस्त्र, गहना आदि बालकुमारी देवीलाई पहिराइन्छ । यसैदिन दक्षिण वाराही, हरिसिद्धी, अजिमा बाहेक अरु सबै देवतालाई खटमा राखी जात्रा गरिन्छ । विष्णुवीर देवता[१४५] लाई पनि खटमा राखी सोही मन्दिरको ठीक अगाडिको ओरालोमा सी बाजा (मरेको बेला बजाइने बाजा) बजाइ, टोपी फुकाली, मौनधारण गरी कय्कु तंचा (उकाली) सम्म ल्याइन्छ । तर त्यसपछि भने टोपी लगाइ देवबाजा बजाइन्छ । यस सम्बन्धमा जनधारणा के पाइन्छ भने त्यस ओरालीमा देवतालाई समेत खाने पिशाच रहने भएकोले मानिस मरेको बहानामा टोपी फुकालेर मसान बाजा बजाइएको हो ।[१४६] यसप्रकारको जात्रा सकिएपछि सबै देवीदेवतालाई आ–आफ्नो स्थानमा लगिन्छ । यसदिनको जात्रालाई “सन्ध्या जात्रा” भनिन्छ ।

थिमी र नगदेशमा मनाइने मूलबिस्केटजात्रा वैशाख २ गतेका दिन हुन्छ । त्यसदिन बिहान थिमीको विभिन्न टोलका बालकुमारी, सिद्धिकाली, दक्षिणवाराही, हरिसिद्धी, महालक्ष्मी, नारायण, विष्णुवीर, भैरव, ब्रम्हायणी, गणेश आदि देवीदेवताका खटहरू बाजागाजासहित जात्रा गरेर बालकुमारी मन्दिरको प्राङ्गणमा ल्याएर विश्राम गराईन्छ । त्यहाँ सबै खट ल्याइ पुऱ्याएपछि सबै खटहरूमा रहेका देवदेवीलाई बालकुमारी मन्दिरको प्रसाद चढाइन्छ ।[१४७] तत्पश्चात् सामुहिक खटयात्रा प्रारम्भ हुन्छ । हरेक खटमा झल्लर सहितको छत्तरी घुमाइरहेको हुन्छ, जुन बडो आकर्षक देखिन्छ ।[१४८] यस मूलजात्रामा नगदेशका सिद्धीगणेशलाई बालकुमारीको मन्दिरमा अनिवार्य रूपले ल्याउनैपर्दछ किनकि सिद्धीगणेशलाई बालकुमारीको पिखालखु (कुमार) गणेश भनिन्छ । यो गणेश ल्याएपछि मात्र मूलजात्रा सुरु हुन्छ । तर हाल स्थानीयवासीहरूको आपसी विवादले गर्दा यो परम्परा

---

[१४४] स्थानीयवासी रतनलाल श्रेष्ठ (वर्ष ८२) बाट मिति २०६७/१/२ गते प्राप्त जानकारीको आधारमा ।

[१४५] यी देवता वास्तवमा विष्णुवीर देवता नभएर वैष्णवी देवी हुन् । –वर्ष ५२ का कुमारबहादुर श्रेष्ठ (वडाध्यक्ष १३ नं. वडा मध्यपुर थिमी नगरपालिका) बाट २०६७/१/२ गते प्राप्त जानकारीको आधारमा ।

[१४६] *ऐजन* ।

[१४७] गोपाल धौबन्जार, *बिस्केटजात्राः अष्ट प्रदेश उत्सव,* ललितपुर : जोशी रिसर्च इन्स्टिच्युट, वि.सं. २०६५, पृ. ७१ ।

[१४८] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

टुटिसकेको छ ।[१४९] सबभन्दा पछाडि उठाउने खट बालकुमारीको हो । सबै खट उठाइसकेपछि एक साथ भव्य जात्रा गरी बालकुमारी मन्दिरमा तीन पटकसम्म लहरै परिक्रमा गराइन्छ । जात्रामा सम्मिलित व्यक्तिहरू आपसमा रंग छर्केर सिन्दूर जात्रा मनाउने गर्छन् ।[१५०] सो समारोहपछि सबै खटहरू आ–आफ्ना स्थानमा फिर्ता लगिन्छ । सबै देवदेवीलाई खटबाट ओराली स्वस्थानमा पुऱ्याइन्छ । त्यसपछि जात्रा समापन हुन्छ ।

यसरी थिमी र नगदेशको बिस्केट जात्रा भनेको वस्तुतः स्थानीय रूपमा प्रख्यात देवदेवीका खटजात्रा भन्ने देखिन्छ । जस्तो कि नगदेशको सिद्धि गणेश र थिमीको बालकुमारी स्थानीय स्तरमा निक्कै शक्तिशाली र सम्मानित देवदेवीहरू हुन्, जसको सम्मानमा वर्षेनी बिस्केट पर्वका अवसरमा स्थानीयबासिन्दाले भव्य रूपमा जात्रा मनाउने गर्छन् । तर सँगै रहेको बोडे गाउँमा भने यसअवसरमा खटजात्राका अतिरिक्त लिंगो उभ्याउने र जिब्रो छेड्ने जात्राहरू पनि हुन्छन् ।

थिमी र नकदेशमा जस्तै बोडेमा पनि बिस्केटको मुख्य जात्रा वैशाख २ गते हुने गर्छ, जुन जात्रा जिब्रो छेड्ने जात्राको रूपमा प्रसिद्ध छ । यद्यपि जात्राको विधिविधान मेष संक्रान्तिको ४ दिन अघिबाटै सुरु हुने गर्छ । त्यसबेला यहाँ नील वाराही र महालक्ष्मीको विशेषपूजा सम्बद्ध गुठीयारद्वारा गरिन्छ ।[१५१] चैत्र मसान्तका दिन यहाँ पनि लिंगो ठड्याउने गरिन्छ । यसपछि सम्बद्ध गुठीयारद्वारा महालक्ष्मी मन्दिरमा पूजा सहित पित्तलका पाता गाँसेर बनाइएको गहना चढाउँछन् । लिंगो उभिएको खुसीयालीमा कतिपय बोडेवासीहरूले यस दिन पनि भोज खाइ चाड मान्ने गर्छन् । यसैदिन बेलुका गुसीं छोय्केगु भनेर वनबाट ल्याएको काठको मुढा बाल्ने गर्छन् । यो बाल्ने कार्य विशेष गरेर जिब्रो छेड्ने व्यक्ति जुन ठाउँको हो, त्यही ठाउँमा गरिन्छ । यसपछि कर्मी नाइकेले जिब्रो छेडिने व्यक्तिलाई साहस र धैर्य धारण गरेमा केही हुँदैन भनी धुनीको टीका र फूल प्रसाद दिएर सम्हेय्बजी खान दिन्छन् ।[१५२] यसपछि त्यो व्यक्ति शुद्ध र चोखो भइ एक दिन अघिबाट निराहार बस्छ ।[१५३] मेष संक्रान्तिका दिन बिहान महालक्ष्मीस्थानमा "पस्ता थायगु" भनेर बाजागाजा सहित

---

[१४९] तर केही वर्षदेखि थिमी र नगदेशवासी बीचको आपसी विवादले गर्दा नगदेशका सिद्धिगणेशको खटजात्रा थिमी ल्याउने परम्परा बन्द भइसकेको छ । – वडाध्यक्ष कुमारबहादुर श्रेष्ठ (वर्ष ५२) बाट २०६७/१/२ गते प्राप्त जानकारी ।

[१५०] सबै देवदेवीहरूलाई एक ठाउँमा जम्मा गरेपछि त्यस खुसीयालीमा स्थानीयवासीहरू एकआपसमा फुस्रो सिन्दूर छर्केर सिन्दुर जात्रा मनाउने गर्छन् ।– जीम गडम्यान, *गाइड टु इन्जोइङ नेपलिज फेष्टिबल्स,* काठमाडौं : काली प्रेस, ई.सं. १९८१, पृ. ४७ ।

[१५१] सूर्यभक्त श्रेष्ठ (सं), *ऐतिहासिक शहर बोडेः एक परिचय,* भक्तपुर : भ्री पुचः, वि.सं. २०५७, पृ. ५७ ।

[१५२] *ऐजन,* पृ. २० ।

[१५३] गडम्यान, पा.टि.नं. १५०, पृ.४७ ।

भजनकीर्तन हुने गर्छ ।[१५४] रातीको जात्रालाई चान्हेसिया जात्रा भनिन्छ । यो जात्रा बोडेको लाछिटोलस्थित कुमारीस्थानबाट सुरु हुन्छ । यसक्रममा धिमेबाजा, नायखींबाजा आदिका साथमा गणेश, नीलवाराही, महालक्ष्मीका खटलाई बोडेका सम्पूर्ण टोल, चोक, गल्ली घुमाईन्छ ।

वैशाख २ गते जिब्रो छेड्ने जात्राको प्रारम्भ बिहानको १०,११ बजेतिर पाँचो गणेश मन्दिर प्रांगणबाट हुन्छ । नाइके कर्मीले फलामको सुइरो,जुन सुइरो महिना दिन अघिबाट तोरीको तेलमा डुवाएर राखिएको हुन्छ, त्यो जिब्रो छेडिने व्यक्तिको जिब्रोमा छेड्छ । यसपछि त्यस व्यक्तिले अर्धचन्द्राकारको महादीप बाली आफ्नो काँधमा बोकेर बोडे शहरको यात्रा थाल्दछ । यो यात्रा लगभग एकघण्टासम्म चल्दछ । स्थानीय देवदेवीका खटजात्रा पनि पछि लागेको हुन्छ । अन्त्यमा जहाँबाट जात्रा सुरु गरेको हो, त्यहीं आएर समाप्त हुन्छ । नाइके कर्मीले त्यसको जिब्रोबाट सुइरो झिकेर जिब्रोको प्वालमा महालक्ष्मीको माटो थोरै राखिदिन्छन् । खटहरू पनि आआफ्ना मन्दिर फर्कन्छन् । यसरी बोडेको जिब्रो छेड्ने जात्रा सम्पन्न हुन्छ । जिब्रो छेडाए बापत पारितोषिकको रूपमा केही नपाए पनि मृत्युपश्चात् स्वर्ग पाउने धार्मिक विश्वासले[१५५] गर्दा बोडेमा आजसम्म जिब्रो छेड्याउने व्यक्तिको अभाव हुन गएको छैन । यसरी बोडेमा हुने बिस्केट जात्राले एउटा छुट्टै अस्तित्व बोकेको देखिन्छ । यस जात्राको उत्पति सम्बन्धमा एउटा रोचक किम्बदन्ती जोडिएको भएतापनि यथार्थमा एउटा पृथक र रोमान्चक ढंगको प्रस्तुति प्रस्तुत गर्ने क्रममा नै यहाँ जिब्रो छेड्ने परम्परा बस्न गएको देखिन्छ, जसले स्थानीय जात्रामा रौनकता थपेको छ ।

### ९.५.२(ख) साँगाको बिस्केट जात्रा

बिस्केट जात्रा भक्तपुरको भएतापनि त्यस्तै स्वरूपको जात्रा सोही अवसरमा वर्षेनी सांगामा पनि मनाइने गरिन्छ । सांगा काठमाडौँ उपत्यका प्रवेश गर्ने पूर्वको प्रमुख नाका हो । यसैले यसको व्यापारिक र सामरिक मह□व आफ्नो ठाउँमा छ । सांगा पनि प्राचीन नेवार बस्ती हो । संस्कृतिविद् सत्यनारायण प्रजापतिज्यूका अनुसार नेवारहरू गाईलाई “सां” र गाउँलाई “गां” भन्ने गर्छन् र पहिले यस गाउँमा धेरै गाई पाल्ने र त्यहाँ ठूलो गाईगोठ भएको हुनाले यसको नाम सांगा रहन पुग्यो ।[१५६] तर वास्तवमा यो गाउँको नाम तेल पेल्ने

---

[१५४] श्रेष्ठ, पा.टि.नं. १५१, पृ. २०–२१ ।

[१५५] गडम्यान, पा.टि.नं १५०, पृ.४८ ।

[१५६] सत्यनारायण प्रजापति, “साङ्गा भञ्ज्याङ्ग”, *बनेपा सातगाउँ स्मारिका,* संख्या ३, बनेपा : बनेपा नगरपालिका, वि.सं. २०५३, पृ. ८४ ।

कोलबाट रहन गएको देखिन्छ । नेवारहरू तेल पेल्ने कोललाई “सा” र गाउँलाई “गां” भन्ने गर्छन् । प्राचीनकालमा यहाँ तेल पेल्ने काम प्रशस्त हुन्थ्यो भन्ने कुरा सांगामा प्राप्त अंशुवर्माको अभिलेखबाट थाहा हुन्छ, जसमा स्थानीय बासिन्दालाई तेलकर मिनाहा गरेको कुरा उल्लेख भएको छ ।[१५७] यसरी तेल पेल्ने ठाउँ भएकोले यस गाउँको नाम सांगा रहन गएको देखिन्छ । मध्यकालमा यो गाउँ भक्तपुर राज्य अन्तर्गत थियो ।[१५८] तर वर्तमानमा यो काभ्रे जिल्लामा पर्दछ । नासिकाभगवती यस ठाउँको मुख्य देवता हुन् । बिस्केटका अवसरमा यहाँ लिंगो उभ्याउनुका साथै भैरव, गणेशको खटयात्रा र नासिकाभगवतीको पूजा–आराधना गर्ने गरिन्छ ।[१५९] तर भक्तपुरको जात्रासँग तुलना गर्दा यहाँको जात्रा विधिमा अलि भिन्नता देखिन्छ जस्तो कि भक्तपुरमा लिंगो उभ्याउनु भन्दा अघि र लिंगो ढालिसकेपछि पनि भैरव भद्रकालीको रथजात्रा हुन्छ, तर सांगाको बिस्केट जात्रामा लिंगो उभ्याएपछि मात्र खटजात्रा प्रारम्भ गरी लिंगो ढाल्नु पूर्व नै खटजात्रा समाप्त गरिन्छ । यस्तै गरी यी दुई स्थानको लिंगो ढाल्ने समयमा पनि अन्तर छ । भक्तपुरमा वैशाख १ गते लिंगो ढाल्छ, तर सांगामा वैशाख ४ गते मात्र ढाल्ने परम्परा छ, त्यसो त बोडेमा पनि चैत्र मसान्तका दिन उभ्याएको लिंगो वैशाख ५ गते मात्र ढालिन्छ ।

बिस्केटको मह□वपूर्ण पक्ष लिंगो उभ्याउनु हो, जुन काम यहाँ चैत्र मसान्तका दिन हुन्छ । लिंगो उभ्याइसकेपछि खटजात्रा प्रारम्भ हुन्छ । यसक्रममा भैरव, कुमारी र गणेशका प्रतिमालाई मूलदेवगृहबाट आ–आफ्ना मन्दिरमा विराजमान गराउन ल्याइन्छ । त्यसपछि त्यहाँ पशु चौपायाहरूको बलि चढाएर विधिवत् पूजा गरिन्छ । भोलिपल्ट बिहान (वैशाख संक्रान्तिको बिहान) मन्दिरबाट ती देवदेवीलाई आ–आफ्नो खटमा राखी जात्रा गरी गाउँ घुमाइन्छ । खटजात्रा पश्चात् सोही राती पुजारीले श्वेतभैरव र नासिकाभगवतीको मन्दिरमा बत्ती बाल्न जान्छन् । वैशाख २ गते तीनवटै देवदेवीका खटहरू दथु टोलको डबलीमा लगिन्छ । त्यहाँ पुजारी, भक्तजन सबैले एक आपसमा सिन्दूर छर्केर जात्रा मनाउँछन् । त्यसपछि गाउँको मूलडबलीमा लगेर राख्छ । त्यहाँ पनि तिनीहरू आपसमा सिन्दूर छर्केर जात्रा गर्छन् । त्यसबाट सिन्दूर जात्रा थिमीको बिस्केट जात्रामा मात्र नभएर सांगाको बिस्केट जात्रामा पनि हुने रहेछ भन्ने कुरा थाहा हुन्छ । सिन्दूर जात्रा सकिएपछि ती खटहरू कोट

---

[१५७] वज्राचार्य, पा.टि.नं. ४, पृ. ३३७ ।

[१५८] लम्साल, पा.टि.नं. ९ (क), पृ. २० ।

[१५९] प्रधान, पा.टि.नं.४५, पृ. १६ ।

घर अगाडि ल्याएपछि गणेशको खटलाई डबलीमा विश्राम गराएर भैरव र कुमारीको खट जुधाउने परम्परा छ ।[१६०] यसबाट देवता सवार खट परस्परमा जुधाउने परम्परा भक्तपुरमा मात्र नभएर यहाँ पनि हुने रहेछ भन्ने देखिन्छ । वैशाख ३ गते जात्रा सम्बन्धी कुनै क्रियाकलाप नभएता पनि यस दिन यहाँका प्रत्येक घरबाट सबै देवदेवी कहाँ बिचा पूजा गर्न जाने चलन छ ।[१६१] वैशाख ४ गते साँझपख बिस्केट जात्राको समापनको क्रममा चैत्र मसान्तका दिन उभ्याइएको लिंगो विधिपूर्वक ढालिन्छ । तत्पश्चात् भैरव, कुमारी र गणेशको सामान्य पूजा गरी तिनलाई आ–आफ्ना देवगृहमा भित्र्याइन्छ । यसरी यी सांस्कृतिक कार्यक्रमका साथ सांगामा एक सालको बिस्केट जात्रा समापन हुन्छ ।

**९.५.२(ग) श्री खण्डपुरको बिस्केट जात्रा**

श्रीखण्डपुरमा पनि वर्षेनी बिस्केट पर्वका अवसरमा लिंगो उभ्याएर खटजात्रा गरेर चाड मनाउने परम्परा छ । श्रीखण्डपुरलाई नेवार भाषामा “खड्पु” भनिन्छ । जुन काभ्रेको बनेपा बजारबाट २ कि.मी. दक्षिणमा अवस्थित छ । यो पनि सांगा जस्तै प्राचीन नेवार बस्ती हो । मानदेव प्रथमको पालाको देवपाटन शिवलिंग अभिलेखमा उल्लेख गरिएको खैनस्पु प्रदेश खड्पु वा खनपु हुन सक्ने अनुमान संस्कृतिविद् जगदीशचन्द्र रेग्मीले गर्नु भएको छ ।[१६२] वंशावलीमा आनन्ददेवले स्थापना गरेका “सात देश” मध्येको एउटा गाउँ खड्पु भनिएको छ ।[१६३] यहाँ प्राप्त मध्यकालीन अभिलेखहरूमा यस ठाउँको नाम श्री खड्ग पुरी, श्री २ खन्दपुरी, श्री ३ षनपुरदेश आदि उल्लेख भएको पाइन्छ । स्थानीय जनधारणा अनुसार यहाँ श्रीखण्डको वृक्ष पाइने हुनाले समग्र यस गाउँकै नाम श्रीखण्डपुर रहन गएको हो । श्वेतभैरव यहाँका प्रमुख देवता हुन् । यहाँ प्रत्येक वर्ष लिंगो उभ्याएर भैरवका साथै अन्य देवदेवीको खटजात्रा गरेर बिस्केट पर्व मनाउने चलन छ ।[१६४]

यहाँ मनाइने बिस्केट जात्राको स्वरूप थोरबहुत भक्तपुरको बिस्केट जात्रासित मेल राख्छ । यहाँको बिस्केट जात्रामा पनि लिंगो उभ्याउने र भैरवको खटजात्रा गर्ने प्रचलन छ, तर जात्रा संचालन विधि भने भक्तपुर र सांगाको भन्दा केही फरक छ । यहाँ लिंगो उभ्याउँदा एक जोडी ध्वजा झुण्ड्याउने चलन छैन । केवल एउटा लिंगो मात्र ठिङ्गो

---

[१६०] धौबन्जार, पा.टि.नं. १४७, पृ. ८३ ।

[१६१] सांगा निवासी स्थानीय वृद्ध प्रेमलाल श्रेष्ठ (वर्ष ८२) बाट २०६७/१/४ गते प्राप्त जानकारी ।

[१६२] जगदीशचन्द्र रेग्मी, *नेपालको ऐतिहासिक भूगोल,* काठमाडौं : पाठ्यक्रम विकास केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०३९, पृ. ३२ ।

[१६३] लम्साल, पा.टि.नं. ९ (क), पृ. २० ।

[१६४] प्रधान, पा.टि.नं. ४५, पृ. १६ ।

उभ्याउने गरिन्छ ।[१६५] भक्तपुरमा भैरव र भद्रकालीका दुईवटा रथहरू जात्रा गरिन्छ । त्यस्तै सांगामा भैरव, कुमार र गणेशका छुट्टाछुट्टै ३ वटा खटहरू जात्रा गरिन्छ तर यहाँ भने बिस्केट जात्रा मनाउँदा भैरव, कुमार र गणेशको जात्रा गरिन्छ तर खट भने एउटै हुन्छ किनभने यी तीन देवताको मूर्ति एउटै धातुको ढिक्कामा बनेको हुँदा एउटै खटमा राखी जात्रा गर्ने गरेको हो ।[१६६] अर्को कुरा भक्तपुर र सांगामा "द्यः क्वहाँ बिज्याकिगु" कार्यक्रम चैत्र मसान्तको ४ दिन अगाडि हुन्छ र मसान्तको दिन लिंगो उभ्याइन्छ । तर यहाँ भने मसान्तको अघिल्लो दिन लिंगो उभ्याउने र त्यसपछि मात्र "द्यः क्वहाँ बिज्याकिगु" कार्य गरिन्छ । लिंगो ढाल्ने समय पनि अन्त भन्दा फरक छ । यहाँ वैशाख ५ गते मात्र लिंगो ढालिन्छ । लिंगो ढाल्ने काम बोडे र यहाँ (श्रीखण्डपुरमा) एकैदिन हुन्छ । यसरी यहाँको स्थानीय बिस्केट जात्रा प्रत्येक वर्ष चैत्र मसान्तको एक दिन अगाडिदेखि सुरु भएर वैशाख ५ गते सम्म चल्छ । यहाँको जात्रामा पाइने अर्को रोचक पक्ष के छ भने जात्राका प्रमुख देवताका धार्मिक पूजापाठ हिन्दु आचाजु (कर्माचार्य) पुजारीका साथ बौद्ध गुभाजु (वज्राचार्य) पुजारीले पनि गर्दछन् । दुवै धार्मिक सम्प्रदायका पुजारीहरू जात्रामा सँगसँगै सम्मिलित भएर धार्मिक अनुष्ठानहरू सम्पन्न गर्छन् । यसलाई धार्मिक सहिष्णुताको अति सुन्दर नमूनाको रूपमा लिन सकिन्छ, तर यस्तो परम्परा भक्तपुर, थिमी, बोडे, नगदेश, सांगामा रहेको पाइँदैन ।

श्रीखण्डपुरमा जात्राको शुभारम्भ चैत्र मसान्तको अघिल्लो दिन लिंगोलाई पशुबलि दिएर विधिवत् पूजा गरेपछि सबै जनसमुदाय मिलेर हर्षउल्लासका साथ लिंगो उभ्याइन्छ । त्यसको भोलिपल्ट भैरव, कुमार, गणेशलाई मूलदेवगृहबाट तल ल्याई खटमा राखिन्छ । त्यसपछि जात्रा गरेर लिंगोस्थल पुऱ्याइन्छ । यसलाई "द्यः क्वहाँ बिज्याकिगु" भनिन्छ । वैशाख १ गते सम्बद्ध पुजारीहरूले जात्रामा सहभागी देवताहरूको विधिपूर्वक पुजा गर्छन्, जसलाई लसकुस (स्वागत) पूजा भनिन्छ । जात्राको सबैभन्दा मह□वपूर्ण दिन वैशाख २ गते हो । त्यसदिन बिहान भैरवको खटलाई जात्रा गरेर स्थानीय दरबार इलाकाको डवलीमा पुऱ्याइन्छ । त्यसपछि यहाँ सम्बद्ध गुठी लगायत स्थानीय इच्छुक व्यक्तिहरूले कलंदान गर्दछन् । यसमा आफ्नो श्रद्धा र ईच्छा अनुसार विभिन्न खाद्यवस्तुहरू सर्वसाधारणलाई दान दिने गर्दछन् ।[१६७] वैशाख दुई गते खटजात्रा सकिएपछि भैरवलाई मूल देवगृहमा फर्काइन्छ ।

---

[१६५] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१६६] धौबन्जार, पा.टि.नं. १४७, पृ. ८४ ।

[१६७] *ऐजन,* पृ. ८६ ।

तीन र चार गते श्रीखण्डपुरको प्रत्येक घरबाट भैरवकहाँ पूजा गर्न जाने चलन छ । बिस्केट जात्राको समापन वैशाख ५ गते हुन्छ । सो दिन विधिपूर्वक आवश्यक पूजापाठ गरिसकेपछि स्थानीय जनसमुदायमाझ चैत्र मसान्तको अघिल्लो दिन उभ्याइएको लिंगो ढालिन्छ । यसकासाथै एक सालको स्थानीय बिस्केट जात्रा समापन हुन्छ ।

**९.५.२(घ) धुलिखेलको बिस्केट जात्रा**

धुलिखेलको बिस्केट जात्रा थिमी र नगदेशमा झैं केवल खटजात्रामा मात्र सीमित छ । यथार्थमा यहाँ सञ्चालन हुने जात्रासम्बन्धी गतिविधिले कतैबाट पनि बिस्केटको भाव देखाउँदैन, तैपनि बिस्केटजात्रा नै भन्ने गरिन्छ । यहाँ लिंगो उभ्याउने र ढाल्ने चलन छैन, त्यसैले यहाँको बिस्केट जात्रा भक्तपुरको भन्दा भिन्न प्रकारको छ । यद्यपि यहाँको बिस्केट जात्रामा भैरव, काली, सरस्वती, कुमार, गणेशलाई समावेश गरिन्छ तर जात्रामा तिनको खट भने एउटै हुन्छ । यसो हुनुको मुख्य कारण उल्लिखित सबै देवदेवीको मूर्ति एउटै धातुको पातामा कुँदिएकोले हो । यसदेखि बाहेक जात्रामा महादेवको पनि खटजात्रा हुन्छ तर तिनको खट छुट्टै हुन्छ ।[१६८]

धुलिखेल पनि प्राचीन नेवार बस्ती हो । आनन्द मल्लले बसाएको बनेपा, सात गाउँमा धुलिखेलको पनि उल्लेख छ ।[१६९] पछिल्लो मल्लकालमा धुलिखेलभेक भक्तपुर राज्य अन्तर्गत थियो । वंशावलीमा धुलिखेललाई “धरिक्षल” भनिएको छ ।[१७०] ने.सं.८३३ सम्मका ताडपत्रहरूमा धरिक्षलका अलावा यो भेक शिखरपुरीको रूपमा पनि उल्लेख हुन आएको छ ।[१७१] नेवारहरू यसलाई धौखेल भन्छन् । काभ्रेपलाञ्चोक जिल्लाको सदरमुकाम रहेको धुलिखेल वि.सं. २०४३ सालदेखि नगरपालिका भएको छ । यहाँ चैत्र मसान्तको ४ दिन अघिदेखि जात्रा सुरु भई वैशाख ४ गते सम्म चल्दछ ।

पहिलो दिनको सांस्कृतिक कार्यलाई भक्तपुरको बिस्केट जात्रामा झैं “द्यः क्वहाँ बिज्याकिगु” नै भनिन्छ, तर त्यस दिन यहाँ गरिने कार्य अन्य सात स्थानहरूको भन्दा बेग्लै किसिमको हुन्छ । जात्रामा सम्मिलित गराइने भैरव, महाकाली, गणेश, कुमार र वाराही आदि देवदेवीका आकृतिमा गोजाको मूर्ति बनाइ पुजारीको घरबाट कुस्लेको बाजागाजासहित

---

[१६८] *ऐजन,* पृ. ८७ ।

[१६९] लम्साल, पा.टि.नं. ९ (क), पृ. २० ।

[१७०] वज्राचार्य र मल्ल, पा.टि.नं. ७, पृ. १२० ।

[१७१] हरिभक्त खोंजु श्रेष्ठ, *धुलिखेलको सांस्कृतिक सर्वेक्षण: प्रतिवेदन,* कीर्तिपुर : त्रिभुवन विश्वविद्यालय, अनुसन्धान महाशाखा, वि.सं. २०४३, पृ.२४ ।

स्थानीय भक्तजनहरू मिलेर कोटखिल भन्ने ठाउँमा लैजान्छन् । त्यसलाई त्यहीं स्थापना गरिन्छ । यसरी गोजा द्यः लानुको अर्थ जात्रा सञ्चालनको निमन्त्रणा दिनु हो ।[१७२] यहाँ बिस्केटको बेला गोसीं बाली धुनी जगाउने चलन पनि छ । धुनी जगाउनुको खास तात्पर्य रातका बेला उज्यालो छर्नका लागि हो भन्ने देखिन्छ ।

यहाँ लिंगो जात्रा गर्ने प्रचलन नभएतापनि जात्राको मुख्य दिन भनेको भक्तपुरमा जस्तै चैत्र मसान्त र वैशाख संक्रान्ति नै हो । चैत्र मसान्तको साँझपख देवदेवीका मूर्तिलाई सजाइएको खटमा राखेर जात्रा गर्दै उही नवदुर्गा सहितको भैरव मन्दिर भएको कोटखिलमा पुऱ्याइन्छ । त्यहाँ गुभाजु पुजारीले देवदेवीको परम्परागत ढंगले पाठपूजा गरी पाठी बलि दिन्छन् । राती त्यहाँ मृत आत्माको नाममा सम्हेय्बजी छर्ने परम्परा छ ।[१७३] किनकि यो देवस्थल नजिक लहरै ३ वटा चिहानहरू रहेका छन् । जात्राको खुसीयालीमा यस दिन यहाँ भक्तपुरमा भैं भोज खाने चलन छ, जसलाई "कुछिभ्वय" भनिन्छ ।[१७४] भोलिपल्ट बिहान संक्रान्तिका दिन धुलिखेलका प्रत्येक घरबाट त्यहाँ राखिएका देवदेवीकहाँ पूजा गर्न जाने परम्परा छ । यसैदिन गोखुरेश्वरबाट महादेवलाई पनि खटमा राखी जात्रा गर्दै ल्याइन्छ । यस्तै गरी अघिल्लो दिन कोटखिल लगिएका देवदेवीलाई खटमा राखेर पुनः जात्रा गरी फिर्ता ल्याइन्छ । फिर्ता ल्याउँदा बालकुमारीनेर आइपुगेपछि शास्त्रोक्त विधिले पूजा गरी ७ वटा जिउँदो माछा छाड्नु पर्ने परम्परा छ ।[१७५] जात्राकोक्रममा त्यहाँ महादेव र भैरवको खट जुधाइन्छ । त्यसपछि भैरवको खटलाई जात्रा गर्दै धुलिखेल बजार परिक्रमा गराइन्छ । जात्राकोक्रममा ठाउँ–ठाउँमा खटमा सवार देवतालाई पूजा गर्ने गरिन्छ । महादेवको खटलाई पनि जात्रा गर्दै बजार परिक्रमा गराइन्छ । जात्राको कार्यक्रम सकिएपछि देवतालाई आ–आफ्नै स्थानमा लगेर राखिन्छ ।[१७६] वैशाख २ र ३ गते जात्रा सम्बन्धी कुनै कार्य हुँदैन । तर ४ गते भैरवलाई पुजारीको घरबाट पुनः तल ल्याई खटमा राखेर जात्रा गरिन्छ । महादेवको पनि खटजात्रा गरिन्छ । साथै पुनः खट जुधाउने कार्य पनि हुन्छ । यसपछि देवदेवीका प्रतिमालाई आ–आफ्नै स्थानमा राखेर लगिन्छ । विडम्बनाको कुरा के छ भने अन्य स्थानमा

---

[१७२] *ऐजन,* पृ.२२ ।

[१७३] धौबन्जार, पा.टि.नं. १४७, पृ. ८८ ।

[१७४] "कुछि भ्वय" को शाब्दिक अर्थ कुरुवा भोज हुन्छ, यो भोज नेवार समुदायमा विशेष गरेर दशैंका अवसरमा महाअष्टमीको दिन बेलुकीपख खाइने गरिन्छ । तर धुलिखेलमा बिस्केट चाड मनाउँदा चैत्र मसान्तका दिन खाने भोजलाई कुछि भ्वय भन्ने गरिएको पाइन्छ ।

[१७५] खोंजुश्रेष्ठ, पा.टि.नं. १७१, पृ.८२ ।

[१७६] स्थलगत अध्ययन र प्रत्यक्ष अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

झैं यहाँको जात्राका प्रमुख देवीदेवताका आफ्ना देवगृह पनि छैन, मन्दिर पनि छैन, यसैले देवताहरू पूजारीकै घरमा राखिन्छ । अर्को कुरा जात्रामा यी देवीदेवताको पूजाआजा आचाजुले नभै गुभाजुले गर्दछन् । यी गुभाजु पनौतिबाट झिकाइएका हुन्छन् ।[१७७]

### ९.५.२(ङ) टोखाको बिस्केट जात्रा

बिस्केट जात्रा काठमाडौँको टोखामा पनि मनाइन्छ भन्दा धेरैलाई विश्वास नलाग्न सक्छ तर यथार्थमा त्यहाँ पनि हरेक वर्ष बिस्केटमा जात्रा गरी चाड मनाउने परम्परा रही आएको छ । यसक्रममा त्यहाँ लिंगो उभ्याएर ढाल्ने, स्थानीय देवदेवीका खटजात्रा गर्ने अनि सपनतीर्थमा स्नान गर्ने यी तीनवटा पक्षहरू त्यहाँको बिस्केट जात्रामा पाइन्छ ।

टोखा पनि प्राचीन नेवार बस्ती हो । टोखा नेवारी शब्द “तुखा” को अपभ्रंश शब्द मान्न सकिन्छ । नेवारीमा “तु” को ऊखु र “खा” को खाल्डो वा प्रदेश अर्थ लगाएको पाइन्छ ।[१७८] त्यसभेकमा ऊखुको उत्पादन प्रशस्त हुने हुनाले यसलाई टोखा भनिएको हो । वर्तमानमा पनि उखुबाट बन्ने चाकुका लागि टोखा प्रख्यात छ । मध्यकालको उत्तरार्द्धका दुई दर्जन भन्दा बढी अभिलेखहरूमा यसलाई टोखादेश, टोखाग्राम भनिएका छन् भने कतै जयपुरीग्राम, जयपुलीदेश पनि ।[१७९] यथार्थमा मध्यकालमा कुनै एउटा प्रदेशको नाम जनभाषा र संस्कृतभाषामा बेग्लाबेग्लै राखिने चलन थियो । यसैअनुरूप टोखाको नाम जनभाषामा “टोखा” र संस्कृतमा “जयपुर” रहेको देखिन्छ ।[१८०] त्यसबेला नुवाकोट धुन्चे हुँदै भोटसँग व्यापार गर्ने प्रमुख मार्ग यही टोखा थियो ।

टोखाको बिस्केट जात्रामा भक्तपुरमा झैं लिंगो उभ्याउने परम्परा रहे पनि त्यो चैत्र मसान्तका दिन नभएर पासाचह्रे (चैत्र कृष्ण चतुर्दशी) का दिन उभ्याउने गरिन्छ । लिंगो उभ्याएर जात्रा गर्ने नेवार संस्कृतिमा कतै लिंगो मात्र उभ्याउने, कतै जोडी ध्वजासहित लिंगो उभ्याउने गरिन्छ,[१८१] तर यहाँ भने लिंगो उभ्याउँदा एउटा मात्र ध्वजा लिंगोका साथ फहराइन्छ । यसरी पासाचह्रेका दिन यहाँ लिंगो उभ्याए पनि बिस्केट जात्राका प्रमुख

---

[१७७] खोंजुश्रेष्ठ, पा.टि.नं. १७१, पृ.७२ ।

[१७८] ठाकुरलाल मानन्धर, *नेवारी – इंगलिस डिक्सनरी,* दिल्ली : अगम प्रकाशन, ई.सं. १९८६, पृ. ९४ र ३८ ।

[१७९] टेकबहादुर श्रेष्ठ, *टोखाको ऐतिहासिक सर्वेक्षण* (अप्रकाशित प्रतिवेदन), नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, वि.सं. २०५१, पृ. ५१ ।

[१८०] टेकबहादुर श्रेष्ठ, “टोखाः एक ऐतिहासिक चर्चा”, कन्ट्रिव्युसन्स टु नेपलिज स्टडीज, भोलुम २३, नं. १ (जनवरी १९९६), पृ २८६ ।

[१८१] बिस्केटका अवसरमा भक्तपुरमा एक जोडी ध्वजा सहित लिंगो उभ्याइन्छ । तर श्रीखण्डपुरको बिस्केटमा केवल एउटा लिंगो मात्र उभ्याउने परम्परा छ ।

सांस्कृतिक कार्य भने अन्यत्र झैं चैत्र मसान्तकै दिनबाट प्रारम्भ हुन्छ । पंचाङ्ग पात्रो अनुसार चान्द्रमानको पासाचह्रे र सौर्यमानको चैत्र मसान्तबीच धेरै दिनको अन्तर देखिँदैन । यहाँ पासाचह्रेकै दिन लिंगो उभ्याउनुको कारण चाहिं के हो भने पासाचह्रे र त्यसको भोलिपल्टको घोडाजात्रा काठमाडौँवासी नेवारहरूको प्रमुख चाड हो । यसैले यो लिंगो उभ्याउने कार्य उक्तदिन काठमाडौँ भद्रकालीमा पनि हुन्छ र त्यसको भोलिपल्ट घोडाजात्राको समापन पश्चात् विधिवत् ढालिन्छ । तर टोखामा उभ्याइएको लिंगो भने बिस्केट जात्राको समापन अर्थात् वैशाख ५ गते मात्र ढालिन्छ । यसबाट के कुरा थाहा हुन्छ भने टोखावासीमा काठमाडौँ र भक्तपुर दुवैतिरका अलग–अलग संस्कृतिलाई सँगसँगै मान्ने परम्परा रहेछ भन्ने थाहा हुन्छ ।

चैत्र मसान्तका दिन टोखाका स्थानीय देवदेवीहरू (महादेव, गणेश, काली, चण्डेश्वरी र सरस्वती) का प्रतिमालाई मन्दिरमा ल्याएर राखिन्छ । चण्डेश्वरी, सपनतीर्थ गणेश र कालीलाई छुट्टाछुट्टै खटहरूमा राखी जात्रा गरिन्छ भने अन्य देवदेवीलाई ढक्कीमा राखेर ल्याइन्छ ।[१८२] भोलिपल्ट वैशाख १ गते नजिकैको सपनतीर्थ नदीमा स्नान गरी मेला भर्ने परम्परा छ । त्यसदिन सो नदीमा स्नान गर्नाले अशक्त व्यक्तिहरू पनि स्वस्थ हुने मान्यता प्रचलित छ । देवदेवीका खट जात्रा २, ३ र ४ गते पनि हुन्छ अन्त्यमा ४ गतेका दिन देवदेवीलाई स्वस्थानमा फर्काइ जात्रा समापन गरिन्छ । तर त्यसभन्दा पहिले सबै देवदेवीलाई त्यहाँ उभ्याइराखेको लिंगो परिक्रमा गराउने परम्परा छ । लिंगो जात्राको विसर्जन भने वैशाख ५ गतेका दिन बिहान हुन्छ ।

यसप्रकार उपर्युक्त तथ्यहरूका आधारमा बिस्केट जात्रा भक्तपुरमा मात्र नभएर वरपरका अन्य ऐतिहासिक बस्ती वा प्रदेशहरूमा पनि मनाइन्छ भन्ने कुरा थाहा लाग्दछ, तर यो जात्रा विविध स्थानमा मनाउने गरिए पनि तिनमा सांस्कृतिक एकरूपता रहेको पाइँदैन । जस्तो – कतै खटजात्रा मात्र गरिन्छ भने कतै लिंगोजात्राका साथ खटजात्रा पनि गरिन्छ । वस्तुतः आ–आफ्नो स्थान विशेषका प्रख्यात देवदेवीका सम्मानमा यो जात्रा गर्ने गरिएको बुझिन्छ । जस्तो कि थिमीमा बालकुमारी, नगदेशमा सिद्धिगणेश, बोडेमा महालक्ष्मी, सांगामा नासिका भगवती आदि ।

### ९.५.३ समानता र भिन्नताहरू

[१८२] धौबन्जार, पा.टि.नं. १४७, पृ. ९३ ।

भक्तपुर र अन्य स्थानमा मनाइने बिस्केटजात्राहरू बीच तुलनात्मक रूपमा अध्ययन गरेर हेर्दा यसमा केही कुरामा समानता र केही कुराहरूमा भिन्नता रहेको पाइन्छ, जसलाई निम्न अनुसार उल्लेख गर्न सकिन्छ ।

भक्तपुर लगायत माथि उल्लिखित सातवटै स्थानहरूमा मनाइने बिस्केट जात्राका स्वरूपलाई दृष्टिगत गर्दा यो जात्रा विशुद्ध रूपको धार्मिक जात्रा हो भन्न सकिन्छ । स्थानीय रूपमा प्रख्यात देवदेवीका सम्मानमा यो जात्रा गर्ने गरिएको छ । जस्तो कि भक्तपुरको सन्दर्भमा भैरव, भद्रकाली, थिमीमा बालकुमारी, नगदेशमा सिद्धिगणेश, बोडेमा महालक्ष्मी, सांगामा नासिकाभगवती, श्रीखण्डपुरमा श्वेतभैरव, धुलिखेलमा भैरव, काली, महादेव, टोखामा मसानकाली, सपनतीर्थ गणेश आदि आ–आफ्ना इलाकाका शक्तिशाली देवता मानिन्छन् । बिस्केट पर्वका अवसरमा तिनै देवदेवीका जात्रा स्थानीयस्तरमा गरिन्छ । यसरी बिस्केटमा यी देवदेवीलाई विधिपूर्वक खटमा राखेर बाजागाजासहित धुमधामले जात्रा गर्नुको अर्थ सम्बन्धित देवदेवीलाई सन्तुष्ट तुल्याई तिनको संरक्षण आफू, आफ्नो परिवार, गाउँबस्ती र सिंगो राज्यलाई नै प्राप्त भइराखोस् भन्ने हो ।[१८३] एउटा कुरा के भने नेवार समाजमा कुनै पनि शुभ कार्य गर्दा गणेशलाई मह□वपूर्ण स्थान दिइन्छ अर्थात् सर्वप्रथम गणेशको पूजा नगरी अरु देवदेवीको पूजा गर्दा फल प्राप्त हुँदैन भन्ने मान्यता पाइन्छ ।[१८४] यसैकारण उल्लेखित सबै ठाउँका बिस्केट जात्रामा पनि स्थानीय रूपमा प्रख्यात देवदेवीको जात्रा गर्दा सँगसँगै गणेशको समेत खटजात्रा गर्ने परम्परा रही आएको छ ।

यस अवसरमा भक्तपुरमा वर्षको अन्तिम दिन अपार जनसमुदाय माझ लगभग ५५ हात लामो र नाङ्लो जत्रो फेद भएको जोडी ध्वजा सहितको विशाल लिंगो उभ्याएर त्यसको भोलिपल्ट ढाल्ने परम्परा छ । तर त्यस्तो परम्परा उल्लिखित सबै स्थानका बिस्केटजात्रामा रहेको पाइँदैन । विशेष गरेर थिमी, नकदेश, धुलिखेल जस्ता इलाकाको बिस्केटजात्रामा लिंगो उभ्याउने प्रचलन छैन । लिंगो उभ्याउने परम्परा भएका ठाउँमा पनि समानता वा एकरूपता भेटिंदैन । कतै ध्वजाविहिन लिङ्गो मात्र, कतै एउटा मात्र ध्वजा सहितको लिंगो,

---

[१८३] (क) भूतप्रेत, पिशाच जस्ता अदृश्य शक्तिले दुःख नदेओस्, रोगव्याधि नफैलियोस्, प्राकृतिक प्रकोप, दैवी विपति जस्ता घटना नहोस्, कृषि फसल राम्रो होस्, आगामी वर्ष सबैका लागि सुखद् होस् भन्ने जस्ता कुराहरूको कामना गर्दै देवदेवीका जात्राहरू गरिन्छन् ।
(ख) शर्मा, पा.टि.नं. १०३, पृ. १५२ ।

[१८४] गणेशको पूजा गर्नाले कुनै पनि शुभ कार्य निर्विघ्न सम्पन्न हुन्छ भन्ने धारणा अनुरूप देवकार्यको थालनी गर्दा सर्वप्रथम "श्री गणेशाय नमः" भनेर उनको पूजाबाटै कार्य सुरु गर्ने धार्मिक परम्परा आज पनि रहेको देखिन्छ । गणेशलाई मुख्यतः विद्या, बुद्धि एवं धन र बिघ्न या दुष्टहरूको दमनकर्ताको रूपमा पुजिदैं आएको छ । –प्रमिला अर्याल, "नेपाली संस्कृतिमा गणेशको महिमा", *रोलम्बा* ,अंक १६, संख्या ३, (जुलाई–सेप्टेम्वर १९९६), पृ. १९ ।

कतै जोडी ध्वजासहितको लिंगो उभ्याउने जस्ता ठाउँ पिच्छेका फरक फरक चलन रहेको देख्न सकिन्छ । उदाहरणार्थ श्रीखण्डपुरको बिस्केट जात्रामा ध्वजाविहिन केवल एउटा लिंगो मात्र उभ्याइन्छ, टोखामा एउटा मात्र ध्वजा भएको लिंगो उभ्याइन्छ भने बोडे र सांगामा जोडी ध्वजासहितको लिंगो उभ्याउने चलन रहेको देख्न सकिन्छ । अनि लिंगो उभ्याउने र ढाल्ने समय तालिकामा पनि एकरूपता पाइँदैन । कतै चैत्र मसान्तका दिन उभ्याएर वैशाख संक्रान्तिका दिन ढालिन्छ कतै ४ गते, कतै ५ गते ढाल्ने परम्परा रहेको पाइन्छ । टोखामा त चान्द्रमान तिथि अनुसार चैत्र कृष्ण चतुर्दशी (पासाचह्रे)कै दिन बिस्केटको लिंगो उभ्याउने गरिन्छ । यसरी सबैतिरको बिस्केटमा लिंगो उभ्याउने र ढाल्ने समय तालिकामा समानता पाइँदैंन ।

बिस्केटको खटजात्रा सम्बन्धमा पनि समानता भेटिंदैन । बलदेव जुजुका अनुसार काठमाडौँ उपत्यका र उपत्यका वरपरका नेवार गाउँ बस्तीहरूमा वार्षिक रूपमा गरिने देवदेवीका खटजात्रामा प्रयोग गरिने खट (खः) हरू निर्माणशैलीका आधारमा मुख्यतः दुई प्रकारको हुन्छन् । जस्तो :– चक्रयान र नरयान । चक्रयान भन्नाले पांग्रा सहितको रथ भन्ने बुझिन्छ, जसलाई डोरीद्वारा तानेर गुडाइन्छ । यसको विपरीत मानिसले बोकेर जात्रा गरिने सानो–सानो मन्दिर आकारको खट, जसमा देवता विराजमान गराइ जात्रा गरिन्छ, त्यसलाई नरयान भनिन्छ ।[१८५] यसदेखि बाहेक देवता सवार हुने अर्को सानो खालको खट पनि हुन्छ, जसलाई वायुयान वा विमानखट भनिन्छ । भक्तपुरको बिस्केटमा भैरव–भद्रकालीका विशाल पांग्रावाल रथलाई प्रतिस्पर्धापूर्ण ढंगले तानेर जात्रा मनाइन्छ । तर यस्तो पांग्रावाल रथ तान्ने जात्रा अन्य स्थानको बिस्केट जात्रामा पाइँदैन । केवल मानिसले बोकेर गरिने खटजात्रा मात्र हुन्छ ।[१८६] अर्को कुरा भक्तपुरको बिस्केट जात्रामा जुन प्रकारको वैभवता, शालीनता, भव्यताका साथ विविध गतिविधिहरू सञ्चालन गरेर जात्रा मनाइन्छ त्यस्ता विविधता र भव्यता अन्य क्षेत्रका जात्रामा पाइँदैन । वस्तुतः भक्तपुरको यो जात्रा राज्यस्तरिय मान्यता प्राप्त जात्रा हो । यसैकारण यसको सञ्चालन, नियन्त्रण, रेखदेख आदि सबै परम्परागत गुठीका अतिरिक्त सरकारी निकायहरूबाट समेत हुने गर्दछ । अझ यसभन्दा पनि मह□वपूर्ण कुरा के छ भने राजाको प्रतीकस्वरूप रहेको राजकीय खड्ग केन्द्र (काठमाडौँ)

[१८५] जुजु र श्रेष्ठ, पा.टि.नं. २१, पृ. ३५ ।

[१८६] यसमा खास कारण के छ भने भक्तपुर राजधानी शहर भएको हुनाले यहाँका बाटाहरू चौडा र फराकिला भएकाले ठूलठूला पांग्रासहितका भैरव–भद्रकालीका रथजात्राको चलन प्रारम्भ गरिएको देखिन्छ । तर वरपरका अन्य गाउँबस्तीहरूमा बाटाघाटाहरू साँघुरा हुने हुनाले त्यहाँ मानिसले बोकेर गर्ने खटजात्राको चलन चल्न गएको देखिन्छ ।

बाट भक्तपुर नल्याइकन यो जात्रा प्रारम्भ गरिंदैन । नेवार सांस्कृतिक गतिविधिको मूलकेन्द्र मानिने तलेजु मन्दिरबाटै यसजात्राको संचालन हुने, तलेजुमै पनि यस अवसरमा विश्वजात्रा सम्बन्धी पूजा अनुष्ठान हुने, तलेजुकै पुजारी ब्राम्हणहरूले क्रमश: राजा र मन्त्रीको भूमिकामा हातमा खड्ग लिएर रथमा सवार नभएसम्म जात्रा प्रारम्भ नहुने जस्ता दृष्टान्तहरूले यो जात्रा यथार्थमै राज्यस्तरिय मान्यता प्राप्त जात्रा हो भन्ने कुरा स्पष्ट हुन्छ ।[१८७] तर अन्य स्थानका स्थानीय बासिन्दाले आफ्ना क्षेत्रका प्रसिद्ध देवीदेवताको जात्रा गरेर यो बिस्केट पर्व मनाउने गरेको भए पनि भक्तपुरको जस्तो भव्य रूपको जात्रामय वातावरण अन्य स्थानमा पाइँदैन ।

बिस्केटजात्राका अवसरमा भक्तपुरमा मृतआत्माको शान्तिकालागि तान्त्रिक विधियुक्त पूजा–अनुष्ठानहरू पनि सम्पन्न गरिन्छ, जसलाई घासापालु वा जोगीचक्र पूजा भनिन्छ । तर यस्ता पूजाहरू अन्य स्थानका बिस्केट जात्रामा देख्न सकिंदैन तर पनि धुलिखेलको बिस्केट जात्रामा भने स्थानीय खटजात्रा कोटखिल डाँडामा पुगेपछि स्थानीय भक्तजनहरूले मृतआत्माको नाममा सम्हेय्‌बजी छर्ने परम्परा छ ।

खटजात्राकोक्रममा भक्तजनहरूबीच एक आपसमा सिन्दूर छर्केर होली खेल्ने परम्परा भक्तपुरको बिस्केट जात्रामा देखिँदैन । तर यस्तो परम्परा थिमी र सांगाको बिस्केट जात्रामा देख्न सकिन्छ । साथै थिमी, नगदेश, बोडे जस्ता इलाकाको बिस्केट जात्रामा जात्राको पूर्व सन्ध्यामा देवदेवीका मन्दिर सामु "गुसीं छोयकेगु" भनेर वनबाट ल्याएको दाउरा बालेर धुनी जगाउने परम्परा छ । तर त्यस्तो परम्परा भक्तपुरमा पाइँदैन ।

यसक्षेत्रकै सबभन्दा रोमान्चक जात्राको रूपमा रहेको "बोडेको जिब्रो छेड्ने जात्रा" बिस्केटको एउटा मह□वपूर्ण पक्ष हो, जुन बोडेमा मात्र हुने गर्छ, यद्यपि यस्तो जिब्रो छेड्ने परम्परा वर्षको एकपटक इन्द्रजात्राको भोलिपल्ट थिमीमा पनि पाइन्छ ।[१८८] तर पनि बोडेको जिब्रो छेड्ने जात्राकै ख्याति चारैतिर फैलिएको छ ।

भक्तपुरमा यो जात्रा परापूर्वकालदेखि स्थापित विविध किसिमका गुठी व्यवस्थाको माध्यमबाट सञ्चालन हुँदै आएको छ भने अन्यत्रका बिस्केट जात्रामा जात्रा सञ्चालनका

[१८७] प्रत्यक्ष अध्ययन अवलोकनबाट प्राप्त जानकारीको आधारमा ।

[१८८] जोशी, पा.टि.नं. १२३, पृ. १९ ।

लागि यस्तो व्यवस्थित गुठी रहेको पाइँदैन । स्थानीय जनसहयोग र सहभागिताबाट नै जात्रा सम्पन्न हुने गर्छ ।

**निष्कर्ष**

यसप्रकार उल्लिखित तथ्यहरूका आधारमा यो बिस्केट जात्रा भक्तपुरमा मात्र नभएर वरपरका अनेक गाउँबस्तीहरूमा पनि मनाउने गरेको पाइन्छ । भक्तपुरमा यो जात्रा मूलरूपले भैरवभद्रकालीको सम्मानमा मनाउने गरिन्छ । तर अन्यत्र यस्तो परम्परा पाइँदैन । अन्यत्र यसअवसरमा स्थानीय रूपमा प्रख्यात देवीदेवताको सम्मानमा यो जात्रा गरिन्छ । साथै जुन भव्यता र रौनकताका साथ यो जात्रा भक्तपुरमा संचालन गरिन्छ, त्यस्तो कभव्यता अन्य स्थानहरूमा गरिने जात्रामा रहेको पाइँदैन । यसको मुख्य कारण बिस्केट जात्राको उद्गम थलो नै भक्तपुर हुनाले हो । भक्तपुर भक्तपुर राज्यको मात्र नभएर कुनै समयमा समग्र नेपाल मण्डलकै राजधानीको रूपमा स्थापित थियो । राजधानी जस्तो ठाउँको जात्रा भएको हुनाले यसले भब्य रूप लिनु अस्वाभाविक पनि लाग्दैन ।

यसप्रकार बिस्केट जात्राको मूल विशेषता भनेको लिंगो उभ्याएर ढाल्ने अनि देवदेवीको रथजात्रा र खटजात्राहरू सम्पन्न गर्ने भन्ने बुझिन्छ तर भक्तपुरकै जस्तो रूपले अन्य स्थानमा यो जात्रा मनाएको पाइँदैन, यद्यपि एउटै समयमा मनाइने यस जात्रालाई सबैतिर बिस्केट जात्रा नै भन्ने गरिएको छ । जे होस् केही समानता र भिन्नताहरू बीच भक्तपुर र त्यस वरपरका विभिन्न गाउँ बस्ती, इलाकाहरूमा यो बिस्केट जात्रा संचालन हुदै आएको छ ।

# अध्याय दश

# उपसंहार

विश्वयात्रा (बिस्केट) नेपाल उपत्यकाको एउटा प्राचीन नगर भक्तपुरमा वर्षेनी मनाइंदै आइरहेको एउटा प्रसिद्ध जात्रा हो । यस जात्राका प्रमुख देवता विश्वनाथ भैरव हुन, जो भक्तपुर शहरको टौमढी चोकमा अवस्थित मन्दिरमा निवास गर्दछन् । यी भैरवलाई आकाश भैरव, नृत्यनाथ आदि नामले पनि सम्बोधन गरिन्छ । भक्तपुरलाई राजधानी नगरको रूपमा स्थापना गर्ने संस्थापक शासक आनन्ददेव (ई.सं. १२०४-१२२४) ले नगर निर्माण गर्दा तान्त्रिक रूपमा नगरको रक्षार्थ नगरवरिपरि आठ कुनामा अष्टमातृका र माझमा भैरवनाथ स्थापना गरेको वर्णन वंशावलीमा पाइन्छ । यसैकारण नगरवासीहरू आजपनि यिनलाई आफ्ना संरक्षक देवताको रूपमा मान्दछन् ।

भैरव नै महादेव हुन् । महादेवको रौद्र रूपलाई नै भैरव भन्ने गरिन्छ । पौराणिक आख्यान अनुसार भगवान विष्णुले राम र कृष्णको अवतार लिनुको मुख्य उद्देश्य आसुरी प्रवृत्तिलाई नाश गर्नका लागि थियो भने महादेवको भैरव अवतारको मुख्य उद्देश्य भने अहंकारी ब्रम्हालाई दण्ड दिनका लागि थियो । यसरी भैरव स्वयं महादेवका अर्का रूप हुन् भन्ने थाहा हुन्छ । बिस्केट जात्राका प्रमुख देवता पनि भैरव नै हुन् । यसैले हिन्दुतन्त्र विशेष गरेर शैवमतको पूर्ण प्रभाव परेको भएपनि स्थानीय समाजका प्रत्येक वर्ग, जाति, समुदायको यस जात्राप्रति ठूलो श्रद्धा, भक्ति रहेको पाइन्छ । स्थानीय अल्पसंख्यक बौद्ध नेवारहरू समेत यस जात्राप्रति सद्भाव राख्दछन् । उनीहरू अजाजु द्यः भनेर भैरवलाई पुज्दछन् । पंचबुद्ध मध्येका अक्षोम्य बुद्धका सन्ततिका रूपमा भैरवलाई मान्ने परम्परा बौद्धतन्त्रमा पाइन्छ । यसैकारण मानन्धर, चित्रकार, रंजितकार, ताम्राकार जस्ता बौद्ध धर्मावलम्बी वा बौद्ध धर्मसँग निकट सम्बन्ध भएका नेवारहरू पनि बिस्केट जात्रा संचालन गर्ने परम्परासँग आबद्ध रही आएका देखिन्छन् । वास्तवमा शताब्दीयौं शताब्दीदेखि यो जात्रा कुनै वाधा व्यवधान बिना प्रत्येक वर्ष निर्वाध रूपमा सम्पन्न हुँदै आउनुको पछाडि यहाँ बसोबास गर्ने अनेक थरीका मानिसहरूको प्रत्यक्ष वा परोक्ष सहयोग, सक्रियता र सहभागिता मुख्य कारण रहेको थाहा हुन्छ । तन्त्रशक्तिका मूलआधार भएका हुनाले भक्तपुरमा भैरवनाथ र उनकी शक्ति भद्रकालीको सम्मानित स्थान रहेको पाइन्छ । यसैकारण चैत्रमसान्तका दिन साँझपख

मूलजात्रा स्थलमा जब भैरवनाथकै प्रतीक स्वरूप रहेको विशाल काठको लिंगो उभ्याइन्छ, तब त्यस खुसीयालीमा उनीप्रति सम्मान दर्शाउन नगरभरिका समस्त देवी–देवताका खटयात्रा निकाल्ने गरिन्छ । यस तथ्यबाट पनि उनको मह□व, गरिमा र स्थान कतिसम्म उच्च छ भन्ने थाहा हुन्छ । साथै भक्तपुरमा मनाइने प्रायः सबैजसो चाडपर्व, जात्रामा अनिवार्य रूपले उनको पनि पूजा, जात्रा गर्नु पर्ने परम्परा रहेबाट पनि यो तथ्य अझै स्पष्ट हुन्छ । उनी नगरसंरक्षकका अलावा सहकालका प्रतीक पनि हुन् । उनी भक्तपुरमा रहन थालेदेखि नै यहाँको उब्जनी दोब्बर वृद्धि भएको जनविश्वास पाइन्छ । यथार्थमा भक्तपुर कृषिप्रधान शहर हो । यहाँका अधिकांश बासिन्दा किसान हुन् । समयमा पानी परोस, कृषिबाली सप्रियोस्, रोगब्याधि नफैलियोस्, कुनै किसिमको दुर्भिक्ष नहोस्, सबैतिर सुख, शान्ति र समृद्धि फैलियोस् भन्ने कामनार्थ हरेक वर्ष वर्षारम्भ हुनु अघि सहकालका देवता आकाश भैरव र उनकी शक्ति भद्रकालीलाई सदा खुसी र सन्तुष्ठ पार्नका लागि नै यो लिंगो जात्रा गर्ने प्रचलन प्रारम्भ भएको देखिन्छ । बिस्केट जात्रासँग सम्बन्धित प्रमुख गुठीहरूमा नेतृत्वदायी भूमिका किसान वर्गकै रहेबाट पनि यो कुरा स्पष्ट हुन्छ । वास्तवमा भैरवनाथ किसानहरूकै देवता हुन । यसैले उत्तर भारतपछि भैरवलाई ज्यादा पुज्ने ठाउँ भनेको उपत्यकाको भक्तपुर नै हो । यहाँका प्रत्येक टोल, चोक, गल्लीमा अनेक नामका भैरव भेट्टिन्छन् । यी भैरव अनेक रूपमा भेट्टिन्छन् । जस्तैः- कुनै मानवको रूपमा, कुनै जनावरको रूपमा, कुनै हिमालयको रूपमा, कुण्डको रूपमा, यन्त्रको रूपमा, भाँडाबर्तनको रूपमा, यहाँ सम्म कि पेयपदार्थको रूपमा समेत भैरव भेट्टिन्छन् । तर यी समस्त भैरवहरूमा मुख्य भैरव टौमढीटोलका आकाशभैरव नै हुन्, जसलाई स्थानीयवासीहरू काशी विश्वनाथको रूपमा पुज्दछन् । तलेजु मन्दिरमा भक्तपुरको संकल्प वाक्य पढ्दा "तुलजा आकाश भैरव विराजित भक्त पतने महानगरे" भनेर पढिन्छ । यसबाट भक्तपुरका प्रमुख देवता भैरव नै हो भन्ने कुरामा कुनै शंकाको ठाउँ रहँदैन । यसर्थ भैरवनाथको सम्मानमा वर्षको एक पटक भक्तपुरमा बिस्केट जात्रा मनाउने गरिएको हुनाले यस जात्राका मुख्य देवता पनि भैरवनाथ नै हुन् भन्ने कुरामा कसैको दुइमत हुन सक्दैन । "द्यः क्वहाँ बिज्याकिगु", "द्यः थाहाँ बिज्याकिगु", "द्यः थाते लाकिगु", "द्यः सगं बियेगु" आदि सबै विधिविधान देवी-देवतासँग सम्बन्धित छन् । जात्रामा कुनै किसिमको गडबडी वा व्यवधान उत्पन्न भएमा त्यसलाई देवता रुष्ट भएको सम्झेर तत्काल तान्त्रिक विधिले पशुबलिसहित क्षमापूजा गरी पुनः जात्रा अघि बढाउने परम्परा पाइन्छ । भक्तपुरमा पाइएको एउटा थ्यासफुमा ने.सं. ७२३ देखि ने.सं.

९३६ सम्मको अवधिमा बिस्केट जात्राहरूमा उत्पन्न भएका व्यवधानहरू र तिनको शान्तिस्वस्ति गर्दाको प्रक्रियाबारे उल्लेख भएको पाइन्छ ।

यद्यपि नागनागिनी मारिएको वा अजिंगर दम्पति मरेका जस्ता अलौकिक र तिलस्मी घटनाबाट यो जात्रा उत्पति भएको भन्ने किम्बदन्तीय भनाइ धेरैको रहेको पाइन्छ, तर त्यसो भएतापनि यस जात्रासंग सम्बन्धित विधिविधान वा क्रियाकलापहरूको अध्ययन विश्लेषण गर्दा यो जात्रा पूर्ण रूपले धार्मिक पृष्ठभूमिमा आधारित र तान्त्रिक विधिले सम्पन्न हुने जात्रा रहेको तथ्य स्पष्ट हुन आउँछ । यस जात्राका मुख्य नायक भैरव हुन । अभिलेखीय प्रमाणका आधारमा पनि यो जात्रा भैरवकै हो भन्ने थाहा हुन्छ । किनकि यदि यो जात्रा नागनागिनीको जात्रा भएको भए नागनागिनीको प्रतीक मानिएको जोडी ध्वजामा त्यससम्बन्धी कुनै संकेत पाइनु पर्ने थियो तर ध्वजामा त्यस्तो कुनै चिन्ह भेट्टिंदैन, बरु त्यसमा अष्टमंगलको प्रतीक चिन्हकासाथ आकाशभैरवको मूर्तिचित्र अंकित रहेको पाइन्छ । वि.सं. १८५४ र वि.सं. २००४ का शाहकालीन दुईवटा ध्वजा अभिलेखमा पनि लिंगोलाई स्पष्ट शब्दमा आकाश भैरव र ध्वजा (पताका) लाई वीरध्वजा सम्बोधन गरिएको पाइन्छ । अर्को कुरा, जात्राको बेला लिंगोको टुप्पातिर प्रतीकात्मक रूपमा रहेको शिर र हातमा बेरिने ३२ हाते नीलो कपडाले पनि लिंगो भैरव कै प्रतीक हो भन्ने थाहा हुन्छ, किनकि भैरवको रूप वर्ण अक्सर गरी नीलै हुन्छ । यसैले भैरवको पूजा गर्दा नीलो बस्त्र चढाउने परम्परा आज पनि पाइन्छ । साथै भैरवनाथ गुठीले नै विश्वध्वज लिंगो जात्रा संचालन गर्दै आएकोले पनि यो जात्रा भैरवकै जात्रा हो भन्ने थाहा हुन्छ । यी उल्लिखित तथ्यहरूबाट यो जात्रा टौमढीका आकाश भैरवको जात्रा हो भन्ने बुझिन्छ । आकाश भैरव नै विश्वनाथ भैरव हुन । विश्वनाथ भैरवको ध्वजा भएकोले यसलाई विश्वध्वजा र त्यससम्बन्धी जात्रा भएकोले यसलाई विश्वजात्रा वा विश्वध्वज जात्रा भनिएको हो । अब यहाँनेर स्मरणीय कुरा के छ भने काशीबाट जात्रा हेर्नका लागि आएका मानवरूपी विश्वनाथ भैरवलाई यहीं प्रतिस्थापन गरेदेखि मात्र यस जात्राको परम्परा थालनी भएको जस्तो देखिए पनि वास्तवमा त्यसभन्दा अघिदेखि नै यहाँ यो जात्राको प्रचलन थियो, तर त्यतिखेर भद्रकाली (नकिंजु अजिमा)को मात्र जात्रा हुने गर्दथ्यो । मातृशक्तिको पूजा गर्ने परम्परा आदिमकालदेखि प्रचलित रहेको सन्दर्भमा यहाँ यो जात्रा चलेको देखिन्छ, तर पनि यसलाई विविध प्रकारले भव्यताकासाथ मनाउने परम्पराको थालनी भने भैरवनाथ भक्तपुरमै रहन थाले देखि मात्र हो ।

मेष संक्रान्ति (वैशाख १ गते)लाई केन्द्रविन्दु बनाएर मनाउने गरेको जात्रा भएको हुनाले यो जात्रा विक्रमसंवत्संग सम्बन्धित जात्रा हो कि जस्तो लाग्दछ, तर वास्तवमा त्यसभन्दा पनि मह□वपूर्ण कुरा के देखिन्छ भने सौर्यमानको कालगणना पद्धति यस संसारमा प्राचीनकालदेखि चल्दै आएको पद्धति हो । यसमा प्रत्येक महिनाको प्रथम दिनलाई संक्रान्ति भन्ने गरिन्छ । संक्रान्तिका दिन सूर्य एक राशिबाट अर्को राशिमा सर्ने गर्दछ । प्रत्येक संक्रान्ति देवकार्यकालागि पवित्र मानिन्छ । त्यसमाथि विक्रमसंवत्को नववर्षको पहिलो दिन पर्ने "मेष संक्रान्ति" धार्मिक दृष्टिले मात्रै नभएर खगोलीय दृष्टिले पनि अझै मह□वपूर्ण देखिन्छ, किनकि खगोल तथा ज्योतिष पद्धतिअनुसार यस दिन सूर्यले वर्षभरि बाह्र राशिको यात्रा निर्विघ्नतापूर्वक सम्पन्न गरेर पुनः मेष राशिमा योग गर्न पुग्ने दिन हो । यसै दिन सूर्य पृथ्वीको भूमध्यरेखा (विषुवत् रेखा)मा आएर बस्ने हुनाले यसलाई विषुवत् संक्रान्ति पनि भनिन्छ । यसैले उक्त दिन जात्राउत्सव मनाउनाले सर्वत्र सुख, शान्ति, संमृद्धि फैलिने विश्वासले गर्दा यहाँ यस किसिमको जात्रा परम्पराको थालनी भएको बुझिन्छ । यहाँका प्रायः सबैजसो जात्राहरू चान्द्रमान अनुसार मनाइने गरेको परिप्रेक्षमा यो बिस्केट जात्रा एउटा भने सौर्यमान अनुसार प्रत्येक वर्ष मेष संक्रान्तिका दिन मनाउनुका पछाडि यही मुख्य कारण रहेको देखिन्छ । यस दृष्टिले यो जात्राको धार्मिक, सांस्कृतिक रूपमा मात्र नभएर प्राकृतिक रूपमा पनि ठूलो मह□व रहेको कुरा स्पष्ट हुन आउँछ । यसैकारण शास्त्रमा समेत चैत्र मसान्तका दिन ध्वजा उत्थान गरेर मेष संक्रान्तिका दिन भञ्जन गर्नाले अनेक लाभ प्राप्त हुने कुरा उल्लेख पाइन्छ ।

बिस्केट जात्रा विविध विशेषता र सांस्कृतिक गतिविधिले युक्त एउटा प्रख्यात र उल्लेखनीय जात्रा हो । वस्तुतः भक्तपुरको स्थानीय लोकजीवनमा दशैं पछिको सबभन्दा ठूलो र मह□वपूर्ण चाड भनेको बिस्केट नै हो भन्दा अत्युक्ति नहोला । यसमा एकातिर विशाल ध्वजा सहितको लिंगो ठड्याएर जात्रा गरिन्छ भने अर्कातिर काठैकाठबाट निर्मित मन्दिर आकारको भैरव, भद्रकालीको रथ तान्ने जात्रा पनि हुन्छ । यसदेखि बाहेक यसमा अनेक आश्चर्यलाग्दा सांस्कृतिक क्रियाकलाप र धार्मिक गतिविधिहरू पनि हुने गर्दछन् । बिस्केट जात्राकै माध्यमबाट भक्तपुरमा आजपनि मध्यकालीन नेवार संस्कृतिको झझल्को सजीव रूपमा देख्न सकिन्छ । यस पर्वका अवसरमा गरिने धार्मिक अनुष्ठान, पूजापाठ र सांस्कृतिक क्रियाकलापहरू सबै नै भक्तपुरको मल्लकालीन संस्कृतिका विशिष्ट उदाहरण हुन्, जसमा सम्बन्धित देवदेवीलाई पूजा उपासना र जात्रा गरेर खुसी र सन्तुष्ठ तुल्याई त्यसबाट सबैले मनोरन्जन प्राप्त गर्ने भन्ने कुरा बोध हुन आउँछ । मनोरन्जनका अतिरिक्त जात्राप्रतिको श्रद्धा

भक्तिबाट मनोकामना पुरा हुने धार्मिक आस्था तथा आपदविपद र संकटबाट मुक्ति मिल्ने विश्वासले गर्दा पनि यस जात्रामा स्थानीयवासीको उल्लेख्य सहभागिता रहेको देखिन्छ ।

स्थानीय समाजका अनेकथरीका मानिसहरूकै सहयोग र सक्रियतामा एकातर्फ यो जात्रा निर्वाध रूपमा चल्दै आएको छ भने अर्कातर्फ यसैजात्राको माध्यमले यहाँको परम्परागत समाजलाई परोक्ष रूपमा संगठित र मजबुत बनाई राख्न पनि ठूलो सघाउ पुर्‍याएको देखिन्छ । सम्बद्ध गुठीद्वारा जात्रा र त्यस सम्बन्धी गतिविधि संचालन हुने र गुठीमा स्थानीयवासीकै बाहुल्यता हुने हुनाले तिनीहरूबीचको सम्बन्धलाई मजबुत र बलियो बनाई राख्न यसले मद्धत पुर्‍याएको देखिन्छ । यस अतिरिक्त जात्राका अवसरमा घर–घरमा आयोजना हुने भोज, नखःत्या भोज जस्ता सांस्कृतिक क्रियाकलापले छरिएर रहेका साथीभाइ, इष्टमित्रहरूलाई एकै ठाउँमा जमघट गराएर तिनीहरूवीचको सामाजिक सम्बन्धलाई अझ निकट र सुमधर बनाउन यसले अप्रत्यक्ष रूपमा मद्धत पुर्‍याएको देखिन्छ । यस दृष्टिले यसजात्राको धार्मिक, सांस्कृतिक मात्र नभएर सामाजिक पक्ष पनि उच्चकोटीको रहेको थाहा पाइन्छ ।

बिस्केट जात्रा भक्तपुरमा मात्र नभएर वरपरका अन्य गाउँबस्तीहरूमा पनि आ–आफ्नो ढंगले मनाउने प्रचलन रहेको छ । भक्तपुरमा यो जात्रा मूलरूपले भैरव–भद्रकालीको सम्मानमा मनाउने गरिन्छ, तर अन्य स्थानहरूमा भने स्थानीयरूपमा प्रख्यात देवदेवीको सम्मानमा यो जात्रा मनाउने गरिन्छ । यसरी ती जात्रा र भक्तपुरको जात्राबीच कुनै सम्बन्ध रहेको पाइँदैन । तर त्यसोभएपनि ती सबै ठाउँका जात्रालाई बिस्केट नै भन्ने प्रचलन रहेको पाइन्छ । यस तथ्यबाट ती सबै जात्राहरू भक्तपुरकै बिस्केट जात्राको प्रतिरूप भएको थाहा हुन आउँछ ।

भक्तपुरको यस प्रख्यात जात्रामा हालका दिनमा आएर केही समस्या, विकृति विसंगतिहरू देखा पर्न थालेका छन् । यसमा आर्थिक समस्या सबैभन्दा जल्दोबल्दो समस्याका रूपमा देखिएको छ । किनकि जात्राका प्रमुख देवताका नाममा रहेका गुठी जग्गा मासिंदै गएकाले गुठी संस्थानले वार्षिक रूपमा उपलब्ध गराउने एउटा निश्चित् रकम नै यस जात्रा संचालनको मुख्य आधार स्रोत भएको छ । तर आकाशिंदो बजार भाउका कारणले गर्दा यसरी उपलब्ध गराउने खर्च पनि वास्तविक खर्च भन्दा ज्यादै न्यून हुन्छ, जसको फलस्वरूप जात्राका गतिविधिहरू जसोतसो मात्र अघि बढ्न सकिरहेका छन् ।

अर्को कुरा यस जात्रामा स्थानीय भक्तपुरवासीहरू (विशेष गरेर युवाहरू) वर्षैपिच्छे नियमित रूपमा भनेझैं आपसमा ढुंगा हानाहान गरेर आफू–आफूबीच नै शत्रुतापूर्ण व्यवहार

प्रदर्शित गरिरहेका हुन्छन् । बिस्केट जात्राको  यो सबैभन्दा खराव पक्ष हो । बिस्केटको सुरु र अन्तीम दिनमा हुने रथजात्रा तल्लो र माथिल्लो टोलका बासिन्दाबीच हुने प्रतिस्पर्धापूर्ण जात्रा हो । यसमा एक पक्षको जीत र अर्को पक्षको हार त निश्चित् रूपमा हुन्छ नै । यो प्राचीनकालदेखि चल्दै आएको परम्परा हो । तर यसै सवाललाई प्रतिष्ठाको विषय बनाइ अझ भनौं जात्रा नै नटुंगिकन ढुंगा हानेर हिंसामा उत्रनु बुद्धिमानी हुँदैन । किनकि यो जात्रा विशुद्ध रूपले धार्मिक जात्रा हो । यो पवित्र उद्देश्यले चलि आएको जात्रा हो । यसैले यसलाई द्वेष, इर्ष्या, स्वार्थ, रिस साध्ने माध्यम बनाइनु हुँदैन, तर आज यही भइरहेछ । पंचायतकालमा शान्ति सुरक्षामा खटिएका प्रहरीहरूलाई लक्षित गरी ढुंगा हान्ने गरिन्थ्यो तर अहिले कांग्रेस, कम्युनिष्टको आरोप प्रत्यारोप लगाइ आपसमै एकले अर्को माथि ढुंगा वर्षाउने गर्दछन् । यसले जात्राको ऐतिहासिक मह□व र सांस्कृतिक गरिमालाई नै ठूलो आघात पुऱ्याइ रहेको छ । यसरी हाल आएर यस जात्रालाई राजनैतिक रंग दिएर आपसमा संघर्ष गर्ने थलो वा अवसरको रूपमा समेत उपयोग गर्न थालिएको छ ।

धार्मिक दृष्टिले धर्म र पापको ख्याल नराखिदिंदा, गर्न हुने, नहुने कामकुराप्रति बेवास्ता गरिदिंदा वर्षेनी जात्राकाबेला अनेक अनर्थ र अनिष्टका घटनाहरू दोहोरिरहेका छन् । उदाहरणको रूपमा जात्राकोबेला सम्बद्ध पदाधिकारीहरू मात्र शुद्ध र चोखो भई जुत्ता नलगाई रथमा बस्ने परम्परा रहेकोमा हाल आएर दुनियाभरका मुन्द्रे, जगल्टे, ट्याप्पे, गजडी, जँड्याहा आदि सबैको रमाइलो गर्ने थलो बन्न पुगेको हुन्छ- देवता सवार भैरवनाथको रथ । त्यसै त यो रथ भारी र बोझिलो ढंगले बनेको हुन्छ । त्यसमाथि सयौं बरालिएर हिंड्ने केटाहरू चढ्ने, झुण्डिने, हल्लिने गरेपछि रथ सीधा गुड्नुको बदला दाँया बाँया ढल्कने, पांग्रा फुस्कने, ओसीं काठ (एक्सल) भांचिने जस्ता दुर्घटनाहरू हुने संभावना बढ्नु अस्वाभाविक लाग्दैन । यसकारणले पनि यो जात्रा व्यवस्थित ढंगले संचालन गर्न मुस्किल परिरहेको देखिन्छ । तर यसो भएपनि यो जात्रा विविध विशेषताले भरिएको यस भेककै एउटा प्रख्यात जात्रा भएको थाहा हुन आउँछ । यसमा भक्तपुरको मध्यकालीन कला, संस्कृति, परम्पराहरू समावेश भएको पाइन्छ । यो जात्रा भक्तपुरको गौरवमय सांस्कृतिक परम्पराको उत्कृष्ट नमूना हो । यसले बहुधार्मिक, बहुभाषिक, बहुसांस्कृतिक नेपाललाई विश्वसामु प्रस्तुत गर्न मह□वपूर्ण भूमिका खेल्दै आएको छ । नौ दिनसम्म चल्ने यसका विविध साँस्कृतिक गतिविधिहरू सारा संसारकै लागि अनुपम रहेको छ । त्यसैले यस जात्राको संरक्षण, सम्बर्द्धनमा सबैको सहयोग आवश्यक छ । अन्यथा पछि गएर यो जात्रा एकदिन इतिहासमा मात्र सीमित नहोला भन्न सकिँदैन ।

# परिशिष्ट (क)

"नेपाल वर्षक्रिया", राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म नं. बी ४३७/१५ पत्र संख्या १ को प्रतिलिपि ।

साभार –राष्ट्रिय अभिलेखालय, पुरातत्व विभाग, काठमाडौं ।

प्रस्तुत ग्रन्थको यस मूलपाठमा गौतमीतन्त्रमा आधारित विश्वयात्राको महत्व र उपादेयता माथि प्रकाश पारिएको छ । जसअनुसार विश्वजात्रा मनाउँदा अनेक लाभ प्राप्त हुने कुरा वर्णन गरिएको छ । जस्तै- चैत्र मसान्तका दिन ध्वजा फहराएर मेष संक्रान्तिका दिन सो ध्वजा ढालेर जात्रा सम्पन्न गर्नाले सर्वत्र सुख, शान्ति र खुसीयाली फैलिनुका साथै शत्रु क्षय हुनेछ भनी यस जात्राको महत्व बारे उल्लेख गरिएको छ ।

–अनु. विनोदराज शर्मा, भक्तपुर इपाछें ।

॥वर्ष॥ श्रीगणेशायनमः॥ अथवर्षक्रिया॥ बुद्धिदाशारदांदेवींपुस्तवीणाधरांपरां॥
॥१॥ वरदाभयशोभाढ्यांवंदेतांकरुणामयीम्॥ तंत्रश्रुतिंचयोगाणांवर्षक्रियादिकंतथा॥
वीक्ष्यग्रंथप्रमाणांचदृष्ट्वाग्रंथंतनोम्यहं॥ अथचैत्रकृत्यं॥ गार्ग्ये॥ वासंतीयमहापूजा॥
शारदीयवदाचरेत्॥ तत्फलंचाश्वमेधस्यफलंप्राप्नोतिमानवः॥ रामनवमीआश्वि
नवत्घटस्थानादिचारणापर्यन्तंकृत्य॥ नीवादिकाथ॥ राजमार्त्तण्डे॥ मत्स्येनीवयत्रंच
योत्तिमेषगतेरवौ॥ सर्वरोगाःविनश्यंतिलभतेवांछितंफलं॥ गौतमीये॥ चैत्रेचविश्व
यात्रायांध्वजस्योत्थानकंचरेत्॥ सर्वदुःखानिनश्यंतिसर्वशत्रुक्षयायच॥ योसिथनेख्या
तस्य॥ तत्रव्यनुवचनं॥ ध्वजभंजनंपश्चात्क्रियतेसंक्रमेदिने॥ दुर्भिक्षनाशनंचैव॥ ॥राम:॥
शत्रुपक्षक्षयायच॥ योसिंकोंधेख्यातस्य॥ गांधर्व॥ दमनारोपनंचैत्रेत्रयोदश्यांवि॥ ॥१॥

शेषतः॥ दमनारोहनेपूजांक्रीयतेवार्षिकीक्रियां॥ इतिचैत्रकृत्यं॥ अथवैशाषकृत्यं॥ काल
प्रदीपे॥ वैशाषशुक्लपतिपाद्देवमेकिंशुकंफलं॥ घृत्वापिवतिवालानांकृमिकीटविनाशनं
॥ वैशाषेयोघटंपूर्णंशक्तकंगुडकंतिलं॥ गुनिकांवोर्द्धसंस्थाप्यपूजयेद्विधिवन्मुदा॥ विशेषत
स्तृतीयायांयोदद्याद्ब्राह्मणेषुच॥ वाक्यंकृत्वाततोसर्वंशीतलंजलकुंभजं॥ वाक्य॥ ॐएषध
र्मघटोदत्तोब्रह्मविष्णुमहेश्वराः॥ अस्यप्रदानात्सकलाममसंतुमनोरथा॥ आदित्यपुराणे
॥ शक्तुशर्करयामिश्रान्दद्यात्सजलगर्गरीम्॥ भविष्ये॥ सर्वतीर्थफलंचैवसर्वदानफलं
तथा॥ महादुःखविनिर्मुक्तःसयातिपरमांगतिं॥ वाराहीतंत्रे॥ वैशाषस्येष्टदेवायपूजन
मुत्तमंफलं॥ एवंचवार्षिकीपूजाक्रीयतेप्रतिवत्सरं॥ नभवेद्ग्रहजंदुःखंसांवत्सरशुभंभवे
त्॥ पंचोपचारपूजांचछागंवलिमाचरेत्॥ वाक्य॥ अद्यादि॥ स्वेष्टदेवताप्रीतिप्रतिवत्सरप्र
स्य

# परिशिष्ट (ख)

“विश्वयात्रा निमन्त्रण विधि”, राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म नं. बी १९२९/६ को मूलपाठको प्रतिलिपि ।

साभार – राष्ट्रिय अभिलेखालय, पुरातत्व विभाग, काठमाडौं ।

बिस्केट जात्रामा सहभागी हुन सम्बद्ध देवतालाई आह्वान गर्ने विधिबारे यस ग्रन्थमा उल्लेख गरिएको छ । जात्रापूर्व जात्राका प्रमुख देवीदेवताहरू आ–आफ्नो मन्दिरको गुह्य स्थानमा अथवा स्वर्गमा रहने विश्वास गरी जात्राको बेला(एकपटक मात्र) सार्वजनिक हुने भएकोले तिनलाई निमन्त्रणा दिनको निम्ति विविध कर्मकाण्ड गर्नुपर्ने आवश्यकता अनुरुप यो पूजाविधान चलाइएको हो । प्रस्तुत ग्रन्थमा यस सम्बन्धी विवरण उल्लेख भएको छ ।

–अनु. विनोदराज शर्मा, भक्तपुर इपाछें ।

# परिशिष्ट (ग)

"विश्वयात्रा कुलुक्यात पूजाविधि", राष्ट्रिय अभिलेखालय, हस्तलिखित ग्रन्थ, माइक्रोफिल्म नं. ई. १९२९/८ को मूलपाठको प्रतिलिपि ।

साभार – राष्ट्रिय अभिलेखालय, पुरातत्व विभाग, काठमाडौं ।

बिस्केट पर्वका क्रममा लिंगो उभिनु अघि र लिंगो उभिएपछि पनि भक्तपुर लायकू दरबार भित्रको तलेजु मूलचोकदेखि उत्तर पश्चिममा अवस्थित दुमाजुदेवी कहाँ पनि तान्त्रिक विधिपूर्वक पूजापाठ गर्ने, महादीप बाल्ने, दोपाया, चौपाया पशु बलि चढाउने, देवीको जात्रा गर्ने जस्ता बिस्केट सम्बन्धी सांस्कृतिक कार्यहरू सम्पन्न गरिन्छ । यसलाई कोलुक्यात जात्रा भनिन्छ । त्यस सम्बन्धी गरिने पूजाविधिको वर्णन यसमा विस्तृत रुपले गरिएको छ । वास्तवमा चैत्र मसान्तका दिन अपरान्ह दुमाजुदेवी कहाँ विश्वयात्रा सम्बन्धी पूजा सम्पन्न भएपछि नै राजकीय प्रतीक स्वरुप मान्य खड्ग (शाही तरवार) विधिपूर्वक मूलजात्रा स्थल ल्योसींखेल पुऱ्याए पछि मात्र लिंगो उभ्याउने जात्रा प्रारम्भ गरिन्छ ।

–अनु. विनोदराज शर्मा, भक्तपुर, इपाछें ।



